# शाहकालका अभिलेख

[पहिलो भाग]

ग्रन्थकार
धनवज्र वज्राचार्य
टेकबहादुर श्रेष्ठ



प्रकाशक
नेपाल र एशियाली अनुसन्धान केन्द्र
त्रिभुवन विश्वविद्यालय
काठमाडौं, नेपाल

# विषयसूची

पृष्ठ

पृष्ठ

पृष्ठ

पृष्ठ

पृष्ठ

# वक्तव्य

राष्ट्रिय जागरण, एकताको भावना, राष्ट्रविकासको लागि अगाडि बढ्ने प्रेरणा ल्याउने तत्त्वमध्ये इतिहास र संस्कृति पनि प्रमुख मानिएका छन् । यस कारण नेपालको इतिहास र संस्कृतिको अनुसन्धानकार्यमा शुरुदेखि नै नेपाल र एशियाली अनुसन्धानकेन्द्रले ध्यान दिंदै आएको छ । विगत केही वर्षको प्रयासले यस क्षेत्रमा केही उल्लेखनीय उपलब्धि हासिल गर्न पनि यो अनुसन्धानकेन्द्र सफल भएको छ; यो कुरा यस प्रसङ्गमा स्मरणीय छ ।

नेपालको सर्वाङ्गीण इतिहास तयार गर्ने उद्देश्यले सबभन्दा पहिले अधिराज्य-भरिका अभिलेख आदि प्रामाणिक सामग्रीको खोजकार्यमा यस अनुसन्धानकेन्द्रले जोड दिएको छ । तदनुसार 'लिच्छविकालका अभिलेख' निकै अगाडि प्रकाशित भइसकेको छ । 'मल्लकालका अभिलेख' को सम्पादनकार्य निकै अंशमा पूरा भइसकेको छ । त्यसै क्रममा 'शाहकालका अभिलेख' (पहिलो भाग) अहिले भागको रूपमा प्रस्तुत गरिएको छ । अरू भाग पनि क्रमशः प्रकाशित गर्दै जाने विचार अनुसन्धानकेन्द्रले राखेको छ । यसै गरी नेपालको इतिहाससम्बन्धी अरू केही ग्रन्थ पनि प्रकाशोन्मुख छन् । तिनलाई पनि क्रमशः जनताको सामुन्ने ल्याउने प्रयास यस अनुसन्धान केन्द्रले गर्दै जानेछ ।

आशा छ; हाम्रो यस प्रयासले नेपालको इतिहास र संस्कृतिको अनुसन्धान-क्षेत्रमा रहेको कमीलाई पूरा पार्नामा केही मात्रामा भए पनि मद्दत गर्नेछ ।

—नेपाल र एशियाली अनुसन्धान केन्द्र

# प्रस्तावना

इतिहास, संस्कृतिबारे जानकारी दिने ऐतिहासिक सामग्रीहरूमा शिलापत्र, ताम्रपत्र आदि अभिलेखहरूको पनि प्रमुख स्थान रहेको छ । लिच्छविकालको नेपालको इतिहास र संस्कृति जान्ने प्रमुख सामग्री त अभिलेखहरू नै हुन् भनी भन्न सकिन्छ; मध्यकालको पनि इतिहास जान्ने स्रोतमा अभिलेखको प्रमुखता रहेको छ । शाहकालका भने लालमोहर, शिलापत्र, टिपोट, वंशावली आदि ग्रन्थ धेरै जति लेखिए पाइन्छन् तापनि तात्कालिक कुरा बुझ्न अभिलेखको पनि कम महत्त्व रहेको छैन । विशेष गरी तात्कालिक धार्मिक सामाजिक आर्थिक कुरामा अभिलेखहरूबाट बढी प्रकाश पर्छ तापनि राजनैतिक इतिहासमा पनि निकै प्रकाश परेको हामी पाउँछौं । यस कारण शाहकालको प्रामाणिक इतिहास तयार पार्न त्यस बेलाका राजा तथा प्रजाहरूले राखेका अभिलेखहरूको पनि अध्ययन, मनन गर्नु उपयोगी रहेको छ भन्ने कुरा स्पष्ट छ ।

वंशावलीकारले वंशावली तयार पार्दा अभिलेखको पनि केही उपयोग गरेको पाइन्छ तापनि हाम्रो यहाँ अभिलेखको अध्ययन गरी तिनलाई प्रकाशमा ल्याउने काम हुन थालेको ठीक एक शताब्दी मात्र भयो । वि.सं. १९३७ पं. भगवान्लाल इन्द्रजीले नेपालबाट लगी २३ अभिलेख प्रकाशित गरेपछि यस क्षेत्रमा बाटो खुलेको हो । पं. भगवान्लालले छपाएका अभिलेखमा लिच्छविकालका, मल्लकालका अभिलेखका साथै शाहकालका अभिलेख पनि परेका छन् । यसरी शाहकालका अभिलेख प्रकाशमा आउन थालेको पनि ठीक एक शताब्दी भयो । तर पं. भगवान्लालबाहेक त्यस बेलाका बेन्डाल आदि अरू विद्वान्हरूले शाहकालका अभिलेखमा त्यति चाख लिएनन् । यसो हुँदा शाहकालका अभिलेख प्रकाशमा आउनामा केही विलम्ब भएको ।

ऐ.शि. बाबुराम आचार्य आदि नेपाली विद्वान्हरूले भने शुरूदेखि नै शाहकालका अभिलेखको अध्ययनमा पनि ध्यान दिन थालेथे । वि.सं. २०१० मा योगी नरहरिनाथको प्रयासबाट 'संस्कृत-सन्देश' निस्केपछि शाहकालका अभिलेख बढी प्रकाशमा आउन थाले । योगी नरहरिनाथ, ऐ.शि. बाबुराम आचार्य, श्रीगुरु नयराज पन्त आदि यस क्षेत्रमा अगाडि बढ्नुभयो । साथै अरूबाट पनि शाहकालका अभिलेख प्रकाशित हुन थाले । यसरी संस्कृत-सन्देश, इतिहास-प्रकाशहरूमा निकै शाहकालका अभिलेख प्रकाशित भएका छन् ।

वि.सं. २०१८मा संशोधन-मण्डलले 'अभिलेख-संग्रह' प्रकाशमा ल्यायो । जम्मा १२ भाग

अभिलेख-संग्रह प्रकाशित भए । तिनमा बृद्ध भागमा शाहकालका अभिलेख परेका छन् । यसरी शाहकालका अभिलेख प्रकाशमा ल्याउनामा संशोधन-मण्डलको योगदान पनि उल्लेखनीय रहेको छ ।

त्रिभुवन-विश्वविद्यालय, नेपाल अध्ययन संस्थानतर्फबाट तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा वि.सं. २०२८मा गोरखाको ऐतिहासिक सर्भेक्षण गरिएको थियो । त्यसको प्रतिवेदनस्वरूप 'गोरखाको ऐतिहासिक सामग्री' प्रकाशमा आएको छ । त्यसमा पनि शाहकालका केही नयाँ अभिलेख परेका छन् । यसै गरी हाम्रा 'नुवाकोटको ऐतिहासिक रूपरेखा, दोलखाको ऐतिहासिक रूपरेखामा पनि शाहकालका केही नयाँ अभिलेख प्रकाशमा आएका छन् । अरूबाट पनि शाहकालका केही अभिलेख प्रकाशित भएका छन् ।

यसरी शाहकालका अभिलेख केही प्रकाशमा आएका छन् तापनि यससम्बन्धी अनुवाद व्याख्यासहितको पृथक् ग्रन्थको भने अभाव नै रहेको थियो । त्यसै अभावको पूर्तिको लागि 'शालकालका अभिलेख' प्रस्तुत गरिएको हो । यस संकलनमा निकै अप्रकाशित अभिलेख पनि परेका छन्; अभिलेखका अनुवाद र संक्षिप्त व्याख्या पनि यहाँ समावेश गरिएका छन् । पाठकको लागि यो प्रकाशन उपयोगी हुनेछ भन्ने हामीलाई आशा छ ।

गत वि.सं. २०३४—३५ आर्थिक वर्षमा हामीले 'शाहकालका अभिलेख' बारे अनुसन्धान-योजना चालू गरेका थियौं । एक वर्षको प्रयासले तीन शयभन्दा बढी शाहकालका अभिलेख हामीले संकलित गरेका थियौं । तर यस पहिलो भागमा १६४ वटा अभिलेख मात्र समावेश गर्न सकियो । छत्र शाहदेखि गीर्वाणयुद्धविक्रम शाह सम्मका अभिलेख यस प्रथम भागमा समावेश गरिएका छन् । अरू अभिलेख अरू भागमा समावेश गर्ने भएका छौं ।

नेपालको एकीकरण खालि एक विजय-अभियान मात्र नभई त्यसले नेपाली जातिलाई नै कर्मठ र वीर बनाउने काम पनि केही गरेथ्यो । एकीकरण अभियानले अनेक भारादारहरूलाई अगाडि ल्याएथ्यो । नेपाल राष्ट्रलाई एक पार्नामा ती अनेक भारादारहरूको पनि हात रहेको थियो । यस कारण यस संकलनमा त्यस्ता भारादारहरूका अभिलेख पनि केही समावेश गरेका छौं ।

अन्त्यमा यस काममा मद्दत गर्ने सबैप्रति कृतज्ञता-ज्ञापन गर्नु हामी आफ्नो कर्तव्य संझन्छौं । उमेश उपाध्यायज्यूले यस अनुसन्धान-योजनामा केही महीना काम गर्नु भएथ्यो; रुक्मिणी प्रधानज्यूले पनि केही अभिलेखका पाठ पढिदिनुभएथ्यो । यसका लागि उहाँहरूलाई धन्यवाद छ ।

—ग्रन्थकार

[ १ संख्या ]

# गोरखाको छत्र शाहको अभिलेख

गोरखा–दरबार, रंगमहलको छिंडीको कुनामा बुइटा ठूलठूला नगरा छन् । ती नगरामध्ये आर्यापट्टिको नगरामा यो अभिलेख कुँदिएको छ । यहाँ शकसंवत् १५३१ दिइएको छ ।

'गोरखाको ऐतिहासिक सामग्री' को १४ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्य-द्वारा यो प्रकाशित भएको छ ।

## मूलपाठ

१. श्रीशाके १५३१ मासे ५ श्रीमहाराजछंत्रसाहस्य कृतिः

## अनुवाद

शकसंवत् १५३१ (वि. सं. १६६६) भाद्रमा, श्रीमहाराज छत्र शाहको यो कृति हो । (अर्थात् वि. सं. १६६६ भाद्रमा महाराज श्रीछत्र शाहले यी नगरा बनाउन लाएका हुन् ।)

व्याख्या—

गोरखामा अहिलेसम्म पाइएका शाहकालका अभिलेखमा छत्र शाहको यो सानो अभिलेख पहिलो हुन आएको छ । यो अभिलेख एक पङ्क्तिको मात्र छ तापनि गोरखाको प्रामाणिक इतिहासको दृष्टिले यस अभिलेखको महत्त्व निकै रहेको छ । यस कुरामा प्रकाश पार्नुभन्दा पहिले गोरखाको अलिकता ऐतिहासिक झलक यहाँ प्रस्तुत गर्नुपरेको छ ।

गोरखामा लिच्छविकालका दुइ अभिलेख पाइएका छन्। तिनमा पहिलो अभिलेख द्वितीय शिवदेवको संवत् १२२ को हो[१]। यो हाल गोरखनाथ गुफामा रहेको छ। दोस्रो अभिलेख गोरखादरबारसंगै हनूमान्‌भञ्ज्याङमा रहेको छ[२]। त्यस अभिलेखमा संवत् हाल देखिंदैन तापनि त्यसमा राजा जयदेवको नाम स्पष्ट देखिने हुनाले त्यसको आसन्नसमय निर्धारण गर्न नसकिने छैन। असुरक्षित अवस्थामा रहेका हुनाले यी दुवै अभिलेख निकै खिइसकेका र खण्डित अवस्थामा रहेका छन्। यसो हुंदा गोरखा–भेकको अनेक जान्न सकिने कुरा अब जान्न नसकिने भएको छ। तैपनि यी दुइ अभिलेखले गोरखाभेकको राजनैतिक र धार्मिक कुराको केही ज्ञातव्य कुरामा अझै निकै मात्रामा प्रकाश पार्दछन्। काठमाडौं–उपत्यकाका लिच्छविकालका अभिलेखसरह नै यी अभिलेख पनि सोझै कैलासकूटभवनबाट जारी गरिएका छन्। यी अभिलेखमा सामन्त राजाको उल्लेख देखिदैन। यसबाट लिच्छ-विकालमा गोरखासम्म सोझै केन्द्रबाटै शासन चल्दथ्यो भन्ने थाहा पाइन्छ। उपत्यकाका अभिलेख र यी अभिलेखको बेहोरामा एउटा अन्तर रहेको छ। हनूमान्–भञ्ज्याङको अभिलेखमा यताका बासिन्दाहरूलाई सम्बोधन गर्दा 'जनपदलोक' शब्दको प्रयोग गरिएको छ। उपत्यकाका बासिन्दाहरूलाई सम्बोधन गर्दा जनपदलोक अर्थात् 'जानपद' शब्दको प्रयोग गरिएको देखिएको छैन। उहिले राष्ट्रका बासिन्दाहरूलाई दुइ तहमा विभाजन गर्ने चलन थियो। राजधानी आदि प्रमुख शहरका बासिन्दाहरू 'पौर' कहलाउंथे; राष्ट्रका अरू बासिन्दाहरू 'जानपद' कहलाउंथे[३]। यसरी गोरखाको उक्त अभिलेखले लिच्छविकालको प्रशासन–व्यवस्थामा प्रकाश पारेको छ। जे होस्; लिच्छविकालको उत्तरार्धमा गोरखा केही आबाद भइसकेको र यहांको प्रशासन सोझै केन्द्रअन्तर्गत रहेको थियो भन्ने तथ्य उक्त दुइ अभिलेखबाट प्रकाशमा आउंछ।

उक्त दुइ अभिलेख खण्डित नभई पूर्ण भएको भए गोरखाको धार्मिक, आर्थिक, सामाजिक कुरामा समेत निकै प्रकाश पर्ने थियो। तर ती दुइ अभिलेखका धेरै अंश खण्डित हुंदा जान्न सकिने धेरै कुरा गुमेका छन्। तैपनि लिच्छविकालको उत्तरार्धमा गोरखा प्रमुख धार्मिक स्थल बनिसकेको कुराको पुष्टि ती अभिलेखले गर्छन्। गोरखनाथ गुफाको अभिलेखमा

---

१. धनवज्र वज्राचार्य, 'लिच्छविकालका अभिलेख' त्रि.वि. नेपाल र एशियाली अध्ययन संस्थान, काठमाडौं, वि.सं. २०३०, पृ.५२३-५२४

२. 'लिच्छविकालका अभिलेख' पृ.५७८

३. 'लिच्छविकालका अभिलेख' पृ. ५७६

'वज्रभैरव' को पूजा-आजाको स्थितिबन्देज बाँधिएको कुरा परेको छ[४]। गोरखा उपल्लो कोटमा प्रसिद्ध वज्रभैरवस्थान अहिलेसम्म छँदैछ। गोरखनाथको मठको स्थापना यस बेला भइसकेको देखिंदैन तापनि वज्रभैरवबाहेक अरू देवताको पनि स्थापना यहाँ भएको थियो भन्ने कुरा हनूमान्भन्ज्याङको अभिलेखले दर्शाउंछ।[५] यी कुराबाट गोरखाको धार्मिक महत्त्व लिच्छविकालमै रहिसकेको कुरामा शङ्का छैन।

वज्रभैरवको पूजा-आजाको प्रसङ्गमा उल्लेखित केही शब्दहरूले तात्कालिक गोरखाको आर्थिक अवस्थामा पनि अलिकता प्रकाश पार्छन्। लिच्छविकालमा यहाँको भूमिव्यवस्था पनि काठमाडौं-उपत्यकाकै परिपाटीमा बसाइएको थियो भन्ने संकेत उक्त दुइ अभिलेखमा उल्लिखित 'भूमि' 'मानिका' आदि पारिभाषिक शब्दले दिन्छन्। आजकाल रोपनी भने जस्तै त्यस बेला जग्गा 'भूमि' नामक इकाइमा विभक्त हुन्थ्यो। प्रति भूमिको यति 'मानिका' कुत भन्ने निर्धारित हुन्थ्यो।[६] गोरखाका उक्त दुइ अभिलेखमा पनि जग्गाको परिमाण र कुतको परिमाणलाई बुझाउन काठमाडौं-उपत्यकामा जस्तै 'भूमि' र मानिका' शब्दको प्रयोग भएको छ। साथै उक्त अभिलेखमा पण, पणपुराण आदि मुद्राको[७] पनि उल्लेख आएको हुंदा तात्कालिक मुद्राको प्रसारलाई पनि यसले औंल्याएको छ।

वज्रभैरवको नित्य र नैमित्तिक पूजा (कारणपूजा)को प्रसङ्गमा उल्लिखित केही कुराले धार्मिकबाहेक सांस्कृतिक परम्परालाई पनि संकेत गर्छ। गोरखनाथको अभिलेखमा वज्र-भैरवको पूजाको प्रसङ्गमा दुइ पटक 'वादित्र' (बाजा) को उल्लेख भएको छ; साथै

---

४. गोरखाको उक्त अभिलेख ज्यादै खिइएको हुँदा त्यसको थोरै भाग मात्र पढ्न सकिएको छ। तैपनि त्यसमा "वज्रभैरवभट्टा(रक) ... कारणपूजा... भगवतो दत्तानि" आदि वाक्यांश स्पष्ट देखिने हुनाले वज्रभैरवको पूजा-आजाको बन्दोबस्त गरी अभिलेख राखिएको हो भन्ने थाहा पाइन्छ।
'लिच्छविकालका अभिलेख' पृ. ५२३-५२६

५. यस अभिलेखको पनि धेरै भाग खण्डित भइसकेको छ। तर यस अभिलेखमा 'सर्वदेव' (सारा देवता) शब्दको प्रयोग भएको पाइएको हुनाले वज्रभैरवबाहेक अरू देवता पनि लिच्छविकालमा गोरखाभेकमा थिए भन्ने संकेत पाइन्छ।
'लिच्छविकालका अभिलेख' पृ. ५७९

६. 'लिच्छविकालका अभिलेख' पृ. ४-६

७. 'लिच्छविकालका अभिलेख' पृ.२२३-२२४

'पञ्चरङ्गचित्रकर्मण' भनी देवतालाई रङ्ग चढाउने विधानको पनि चर्चा गरिएको छ[८]। यसले वाद्यकला र चित्रकलाको यस क्षेत्रमा भएको प्रसारलाई औंल्याउंछ।

यति कुरा गर्नाको तात्पर्य गोरखाभेकको विकास लिच्छविकालमा नै निकै मात्रामा भइसकेको थियो भन्ने दर्शाउनाको लागि हो। पछि यहां गोरखनाथको मठ बनेपछि यो प्रदेश झन् प्रसिद्ध रहेको देखिन्छ।

मध्यकालको शुरूमा गोरखाको अवस्था कस्तो रह्यो; सो खुल्न सकेको छैन। तर पूर्व-अवस्थामा त्यति धेरै अन्तर आएन कि भन्ने अनुमान गर्ने आधार भने नभएको होइन। अर्थात् मध्यकालको शुरूमा लिच्छविकालमा जस्तै यो प्रदेश सोझै केन्द्रको अधीनमा नै रहेको देखिन्छ। विक्रमको बाह्रौं शताब्दीसम्म लमजुङ गुल्मीभेकमा केन्द्रको (नेपाल उपत्यकाको) प्रभुत्व यथावत् कायम भएको देखिएको हुंदा[९] गोरखामा पनि त्यस वेला केन्द्रको प्रभुत्व कायम रहेको कुरामा शङ्का छैन। तर यसैताका उता कर्णालीप्रदेशमा 'खसराज्य'को स्थापना भयो[१०]। यस राज्यको राज्यक्षेत्र विस्तृत हुनाको साथ-साथै सैन्यशक्ति पनि मजबूत हुंदै जान थाल्यो[११]। बलियो सैन्यशक्तिको अभावमा केन्द्रका शासकले खसराज्यको विस्तारलाई रोक्न सकेनन्[१२]। यसो हुंदा गोरखासम्म खसराज्यको प्रभुत्व कायम भयो[१३]। नुवाकोटसम्म मात्र केन्द्रले आफ्नो प्रभुत्व कायम गर्न सक्यो[१४]।

---

८. 'लिच्छविकालका अभिलेख' पृ. ५२४

९. धनवज्र वज्राचार्य 'मध्यकालका शुरूका केही अभिलेख' 'कन्ट्रिब्युसन्ज् टु नेप्लिज् स्टडीज्' वर्ष ५ अङ्क १. त्रि.वि. नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं २०३४, पृ. ९९–१००

१०. धनवज्र 'कर्नाली प्रदेशको ऐतिहासिक रूपरेखा' कर्णाली प्रदेश : एकबिटो अध्ययन, सामाजिक अध्ययन समुदाय, जुम्ला, वि. सं. २०२८, पृ. १३

११. 'कर्नाली प्रदेशको ऐतिहासिक रूपरेखा' पृ. १२

१२. 'कर्नाली प्रदेशको ऐतिहासिक रूपरेखा' पृ. ३४

१३. मोहनप्रसाद खनाल, 'मध्यकालीन अभिलेख' काठमाडौं, वि. सं. २०३०. पृ. १–२, ९–१०

१४. धनवज्र र टेकबहादुर श्रेष्ठ 'नुवाकोटको ऐतिहासिक रूपरेखा' त्रि. वि. नेपाल र एशियाली अध्ययन संस्थान, काठमाडौं, वि. सं. २०३२, पृ. ३३

गोरखाभेकसम्म खसराज्यको प्रभुत्व आदित्यमल्लको पालामै अर्थात् वि. सं. १३७८ तिर नै कायम भइसकेको थियो भन्ने कुरा तायबाइ गुम्बामा पाइएको ताम्रपत्रले देखाउंछ[१५]। यस कुराको पुष्टि यता पाइएको पुण्यमल्लको अर्को ताम्रपत्रले पनि गर्छ[१६]। गोरखाभेकको प्रशासन चलाउन उच्चस्तरीय अधिकारी नियुक्त गरिएका हुन्थे भन्ने कुरा पनि उक्त ताम्रपत्रबाट थाहा पाइन्छ।

अभयमल्लपछि अर्थात् विक्रमको पन्ध्रौं शताब्दीको उत्तरार्धमा कर्नालीप्रदेशको खसराज्य टुक्रिएर 'बाइसीराज्य' खडा भए[१७]। यी बाइसीराज्यमध्ये कसैले पनि गण्डकीप्रदेशमा प्रभुत्व जमाउन नसक्दा यस भेकको प्रशासनको लागि नियुक्त पहिलेका अधिकारीहरूले नै कति ठाउंमा आफ्नो स्वतन्त्र शासन कायम गरेथे। गोरखामा द्रव्यशाहद्वारा शाहराज्यको स्थापना भन्दा अगाडिका जुन खड्का राजा थिए; ती त्यस्तै शासक हुन्। कर्नालीका खसराजाहरूले पहिले यस भेकको प्रशासन चलाउन नियुक्त अधिकारी खड्का नै अवसर पाई गोरखाका शासक बनेका हुन्। वंशावलीमा "यस्त समयमा गोर्खामा भन्या खड्का खसराजा भयाको थियो" भनी खड्कालाई "खस राजा" नै भनी वर्णन गरिएको कुरा यस प्रसंगमा विचारणीय छ[१८]। मूल केन्द्रसंग अर्थात् जुम्ला आदि कर्नाली प्रदेशका बाइसीराज्यसंग यिनीहरूको सम्बन्ध छुटिसकेको हुंदा गोरखामा खड्काहरू नाममात्रका राजा थिए। यिनीहरूसंग सैन्यशक्ति पनि पर्याप्त थिएन। गोरखाका बासिन्दामा पनि यिनीहरूको विशेष प्रभाव थिएन। यसै हुंदा द्रव्य शाह स्थानीय जनतालाई हात लिई सजिलैसंग गोरखा दख्खल गर्न समर्थ भएथे[१९]।

त्यस बेला गोरखाका बासिन्दाहरूमा मगरहरू पनि प्रभावशाली थिए। गोरखाका रैती हात लिन गणेश पाँडेले त्यहांका मगरहरूलाई पहिले हात लिएको कुरा गोरखावंशावली आदि वंशावलीमा परेको छ[२०]। गोरखामा द्रव्य शाहको राज्यस्थापना हुनुभन्दा ११ वर्ष जति

---

१५. मोहनप्रसाद खनाल, 'मध्यकालीन अभिलेख' पृ. १–२

१६. 'मध्यकालीन अभिलेख' पृ. ६–१०

१७. धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठ 'पाञ्चायली शासनपद्धतिको ऐतिहासिक विवेचना' त्रि. वि. नेपाल र एशियाली अनुसन्धान केन्द्र, काठमाडौं, वि. सं. २०३५, पृ. १२४

१८. नयराज पन्त र अरू 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' जगदम्बाप्रकाशन, ललितपुर, वि. सं. २०२५, पृ. ५४६

१९. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५४६–५४७

२०. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५५०

पहिले भएको पशुपतिको सन्धिपत्रले पनि गोरखाका मगरहरूको अवस्थामा केही प्रकाश पार्छ । वि. सं. १६०५ मा भक्तपुरका राजा प्राणमल्लको विरुद्ध कान्तिपुरका राजा नरेन्द्र-मल्ल आदिले परस्परमा गरेको सो सन्धिपत्रमा प्रसंगवश गोरखाका मगरहरूको चर्चा पनि परेको छ। त्यसमा एक शर्त "नुवाकोटको बाटो वा अरू बाटोबाट कारबाइका लागि मगरहरू आए भने अर्थ सामर्थ विचार गरी एक भई मगरहरूको बलाबल विचार गरी आक्रमण प्रत्याक्रमण गरी परस्परमा नफुटी रहनुपर्छ" भन्ने परेको छ[२१]। यसबाट गोरखाका मगरहरू-लाई गोरखामा द्रव्य शाहको आक्रमणको आशंका भइसकेको र उनीहरूले हामीलाई आवश्यक भए गुहार माग्न आउंछौं भन्ने आशयको कुनै पूर्व सूचना उपत्यकाका शासकहरूलाई दिएको संकेत पाइन्छ । तर द्रव्य शाहकै पक्षले मगरहरूलाई हात लिई मात्र गोरखाका खड्का खसराजाको विरुद्ध कारबाइ गरेको हुंदा गुहार माग्नुपर्ने अवस्था नै आइपरेन । यसबाट गोरखासेकमा त्यस बेला मगरहरूको प्रभावबारे निकै प्रकाश पर्छ ।

द्रव्य शाहको पालाको प्रामाणिक ऐतिहासिक सामग्री प्रकाशमा आउन सकेको छैन । द्रव्य शाहको पहिलो राज्याभिषेक पसलाङमा गरिंदाको कलश गोरखा-दरबारमा रहेको छ भन्ने कुरा श्रीदण्डपाणि अर्ज्यालज्यूबाट सुनेका हुंदा गोरखा-दरबारमा गई यस विषयको खोज-खबर गरियो । अभिषेक गर्दाको कलश भनी देखाइएको कलशमा अभिलेख अंकित नहुंदा यस कुराको टुङ्गो लगाउन सकिएन[२२] । द्रव्य शाहलाई खड्गसिद्धि गरी सुम्पिएको खड्ग मसंग सुरक्षित छ भनी कृष्णराज पन्तज्यूको भनाइ छ[२३]। द्रव्य शाहले गणेश पांडेलाई गरिदिएको पत्र पाइएको समाचार पनि एकताका सुनिएको हो[२४]। तैपनि द्रव्य शाहको पालाको

---

२१. उक्त ताम्रपत्रमा रहेको सम्बद्ध मूलवाक्य यस प्रकारको छ–
"मगरकर्म्मस नवक्वाठलं यौलंन गोलंन वरसनों अर्थ सामर्थन उ याङ गोलोटों प्रजंतननो मगरया बलाबल सोयाव धाड हाथार याङ्न संथगन थेथ्य वेल मतस्यं सङ. यंनेमाल"
'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ४६
( यहां उल्लिखित 'मगर' शब्दले पाल्पाका सेनलाई लक्ष्य गरेको हो कि भन्ने पनि देखिएको छ । )

२२. यस विषयमा राम्ररी छानबीन गर्न सके उक्त राज्याभिषेक कलश पत्ता लाग्ने संभावना छ । सो पत्ता लगाउन सके गोरखाराज्यका संस्थापकलाई संझाउने एक महत्त्वपूर्ण सामग्रीको रूपमा सो रहने स्पष्ट छ ।

२३. यस विषयमा पनि आधिकारिक रूपमा छानबीन हुनु वाञ्छनीय छ ।

२४. गोरखाका श्रीभोलाराज पांडेले त्यस कुराको सूचना हामीलाई दिनुभएको हो । तर हालसम्म उक्त पत्र पत्ता लाग्न सकेको छैन ।

प्रामाणिक ऐतिहासिक सामग्री एउटा पनि अहिलेसम्म प्रकाशमा आउन सकेको छैन। वंशावलीमा वि. सं. १६१६ मा द्रव्य शाहले राज्यस्थापना गरेपछि ११ वर्ष राज्य गरेको वर्णन छ[२५]। द्रव्य शाहको देहावसान चेपेघाटमा भएथ्यो। त्यहाँ यसको संस्मनामा एक शिवालय स्थापना गरिएको थियो भन्ने अनुश्रुति चलेको छ। तर यस कुराको प्रमाणद्वारा पुष्टि हुन सकेको छैन।

द्रव्य शाहपछि उनका छोरा पूर्ण शाह नवस्थापित गोरखाराज्यको गद्दीमा बसे। पूर्ण शाहले पनि गोरखा राज्यको केही विस्तार गरे[२६]। पूर्ण शाहका छोरा यी छत्र शाह हुन्[२७]। वंशावलीहरूमा छत्र शाहले सात महीना मात्र राज्य गरे; वि. सं. १६६३ मा उनको मृत्यु भयो भन्ने लेखिएको छ[२८]। तर उक्त भनाइ अशुद्ध छ भन्ने कुरा यस अभिलेखले देखाएको छ। नगरामा कुंदिएको यस अभिलेखमा शकसंवत् १५३१ ( वि. सं. १६६६ ) भाद्र अंकित भएको र 'श्रीमहाराजछत्रसाहस्य कृतिः' भन्ने स्पष्ट उल्लेख भएको हुंदा वि. सं. १६६६ भाद्र सम्म छत्र शाह जीवित थिए भन्ने सिद्ध भएको छ। कुनै टिपोटे कागतमा यिनको नाम 'क्षेत्रशाह' पनि पाइएको हुंदा सोही नाउं शुद्ध हो कि भन्ने प्रश्न पनि उठेको थियो। तर यस अभिलेखले छत्र शाह नाम नै शुद्ध रहेछ भन्ने प्रमाणित गरेको छ[२९]।

आवश्यक काज आइपर्दा भारादारहरू र प्रजापञ्चहरूलाई नगराको बजाइद्वारा सूचना दिई एकत्रित पार्ने चलन त्यस बेला चलेको थियो। नवस्थापित गोरखाराज्यको यस बेला अलि विस्तार पनि हुंदै थियो; साथै यसले आफ्नो अस्तित्वको रक्षाको लागि पनि सजग भएर रहनुपरेको थियो; बराबर लडाईं भिडाईंको पनि सामना गर्नु परेको थियो[३०]। यसै हुंदा आफ्ना भारादारहरूलाई र प्रजापञ्चहरूलाई चाहिएको बेला एकत्रित पार्न यो नगराको निर्माण छत्र शाहले गराएको स्पष्ट छ। यसबाट नवस्थापित गोरखाराज्यले त्यस बेला सामना गर्नु

---

२५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५४६–५५१

२६. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५५३–५५४

२७. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५५५

२८. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५५५

२९. तुलसीराम वैद्य र धनवज्र वज्राचार्य 'गोरखाको ऐतिहासिक सामग्री' त्रि. वि. नेपाल अध्ययन संस्थान, काठमाडौं, वि.सं. २०२९, पृ. ४

३०. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५५४–५५५
'गोरखाको ऐतिहासिक सामग्री' पृ. ५

परेको अवस्थाको अलिकता झलक हामी पाउंछौं। साथै त्यस बेला स्थायी सैन्यको कमी र त्यस कमीको पूर्ति प्रजापञ्चहरूले गर्ने परम्पराको प्रकारान्तरले संकेत पनि यो नगराले गर्छन्[३१]।

यसरी छत्र शाहको एक पङ्क्तिको यो सानो अभिलेखले पनि गोरखा राज्यको तात्कालिक निकै कुरामा केही प्रकाश पार्छ। यस कारण यस अभिलेखको उपयोगिता निकै रहेको छ भन्ने स्पष्ट छ।



३१. मध्यकालको उत्तरार्धमा खडा भएका प्रायः सबैजसा राज्यको अवस्था उही थियो। त्यस ताका प्रजापञ्चहरू नै अस्थायी सैनिकको काम पनि गर्दथे। 'पाञ्चाली शासन पद्धतिको ऐतिहासिक विवेचना' पृ. १४९–१५८

[ २ संख्या ]

# गोरखाको राम शाहको अभिलेख

गोरखा पोखरीथोकमा पोखरीको सामुन्ने मुरलीधर नारायणको मन्दिर छ। त्यसको ढोकामाथि यो अभिलेख कुँदिएको ढुंगो रहेको छ। यहाँ शकसंवत् १५३६ दिइएको छ।

'इतिहास-प्रकाश' १ अंकको ४० पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ। 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश'को ५७२ पृष्ठमा पनि यो अनुवादसहित छापिएको छ। 'गोरखाको ऐतिहासिक सामग्री'को १४-१५ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. श्रीशाके १५३६ विधुगिरिरसपृथ्वीचिह्निते वि-
२. क्रमाब्दे गतवति नृपरामो मानदः सज्जनानां ।
३. मठमधिकविधिज्ञो दिक्षु विक्षिप्तकीर्तिर्गण-
४. पतिप्रभृतीनां देवतानामकार्षीत् ॥१॥ शुभं ॥

## अनुवाद

शकसंवत् १५३६, विक्रमसंवत् १६७१मा सज्जनहरूको मानमर्यादा गर्ने, देशविदेशमा कीर्ति फैलिएका, धेरै विधिविधान जान्ने राजा राम शाहले गणेश आदि देवताहरूको मठ (मन्दिर) बनाउनुभयो। शुभ होस्।

व्याख्या–

गोरखाराज्यको विकासमा राम शाहको महत्त्वपूर्ण स्थान रहेको छ। गोरखाराज्यको जग द्रव्य शाहले बसालेका थिए तापनि नवस्थापित उस राज्यलाई अनेक दृष्टिले मजबूत पार्ने काम राम शाहले गरेथे। राम शाहले एकातिर गोरखाराज्यको केही बढी विस्तार गरे[१] भने अर्कोतिर अनेक स्थिति-बन्देज बाँधी यसको जग मजबूत पारे।[२] गोरखाराज्यलाई न्यायको आडमा रहेको राज्यको रूप दिने प्रयास उनले गरे। राज्यको उत्थानको लागि जनताको सहयोग नै प्रमुख शक्तिस्रोत हुने देखेर जनतामा जागर्ति फैलियोस्; जनतामा आर्थिक शोषण सकभर नहोस्; जनताउपर थिचोमिचो नहोस् आदि कुराको प्रबन्ध गर्ने चेष्टा राम शाहले गरे। त्यसै उनले परराष्ट्रनीतिको सन्तुलन पनि मिलाए। जुम्ला, पाल्पा, पर्वत आदि राज्यसँग उनले सम्पर्क बढाए।[३] पूर्वतिर बढ्ने उद्देश्यले उनले विशेष गरेर ललित-पुरसँग मित्र-सम्बन्ध कायम गरे।[४] त्यस बेलाको नेपालको आर्थिक स्रोतमध्ये एक भोटसँगको व्यापार-सम्बन्ध पनि थियो। राम शाहले पनि भोटसँग व्यापार-सम्बन्ध जोड्ने कोशिश गरे।[५] यसरी गोरखालाई आर्थिक दृष्टिले पनि मजबूत पार्ने चेष्टा उनले गरे।

सांस्कृतिक, धार्मिक क्षेत्रमा पनि गोरखालाई अघि बढाउने प्रयास राम शाहले गरेका थिए भन्ने कुरा गोरखा पोखरीथोकमा मुरलीधर नारायण-मन्दिर बनाई राखेको यस अभिलेखले देखाउँछ। राम शाहको यो प्रयास पनि कम उल्लेखनीय छैन। कला, संस्कृतिको क्षेत्रमा पनि गोरखा अघि बढ्न थालेको कुरा यसले दर्शाउँछ।

सानो उस अभिलेखमा वर्णित कुराले राम शाहको तात्कालिक गतिविधि, नीतिबारे केही प्रकाश पार्छ। बाईसी, चौबीसी राज्य र भोट, काठमाडौं-उपत्यका आदिसँग सम्पर्क बढाउने राम शाहको प्रयासले गर्दा र न्यायमा आधारित शासन कायम गर्न खोज्ने उनको

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५७२–५८५

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५६१–५६९

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५७०

४. धनवज्र वज्राचार्य 'गोरखाको पूर्वतिर बढ्ने उद्योग' मधुपर्क वर्ष २ अङ्क ८, गोरखा-पत्र करपोरेशन, काठमाडौं, वि.सं. २०२६, पृ. २६–२७

५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५८५
'त्रिरत्नसौन्दर्यगाथा' परिशिष्ट पृ. २७३–२७४

नीतिले गर्दा राम शाहको प्रसिद्धि फैलिन लागेको थियो। यसै हुँदा यस अभिलेखमा राम शाहको वर्णन गर्दा 'दिक्षु विक्षिप्तकीर्ति' (देश विदेशमा कीर्ति फैलिएको) भन्ने कुरामा जोड दिइएको देखिन्छ।

राम शाहको एक उल्लेखनीय कुरा अरू राज्यका पनि योग्य व्यक्तिहरूलाई गोरखामा तान्ने रहेको थियो। यसका लागि उनले गोरखा राज्यमा बसोबास गर्न आउनेहरूलाई बिर्ता आदि अनेक सुबिधा मिलाई दिने गरेका थिए।[६] यस नीतिले गर्दा गोरखा गुलजार हुँदै गएको थियो। राम शाहको यस नीतिको संकेत यस अभिलेखमा 'मानदः सज्जनानां'(असल मानिसहरूको मानमर्यादा गर्ने) भनी वर्णन गरी प्रकारान्तरले गरिएको छ। 'अधिकविधिज्ञ' पदले उनले बाँधेको स्थितिबन्धेजलाई औँल्याएको बुझिन्छ।

यस अभिलेखमा गणेश आदिको मन्दिर बनाइयो भन्ने वर्णन परेको छ तापनि पाञ्चायन सिद्धान्तअनुसार बनेको यो मन्दिर मुख्यतः मुरलीधर नारायणको हो। मन्दिरभित्र गणेश आदिका पनि मूर्ति छन् तापनि ती साना छन् र छेउछेउमा रहेका छन्। बीच भागमा रहेको मुरलीधर नारायणको मुख्य मूर्तिचाहिं तीभन्दा निकै ठूलो छ। यस कारण मुरलीधर नारायणलाई प्रमुखता दिई बनाइएको मन्दिर यो हो भनी सहजै छुट्याउन सकिन्छ। वंशावलीकारले पनि "यिन राजाले गोरखा पोखरीथोकमा श्रीमुरलीधर नारायण स्थापना गर्‍या" भनी वर्णन गरेका छन्।[७]

उक्त मन्दिर दुइतले नेपाली शैलीको छ। मन्दिर त्यति ठूलो भने होइन; ठीकैको छ। सुनको जलप लाएको धातुको गजुर रहेको छ। तोरणहरूमा अनेक देव-देवीहरू अंकित छन्। साधारणतः मन्दिर केही कलात्मक नै रहेको छ।



---

६. रामशाहको यो नीति 'धूँवाबिर्ता'को रूपमा प्रसिध्द छ। यस विषयका राम शाहकै पालाका कागतपत्र पाइएका छैनन् तापनि यस कुराको पुष्टि पछिका पत्रबाट हुन्छ।

७. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृष्ठ ५७२

[ ३ संख्या ]

# गोरखाको राम शाहको अभिलेख

गोरखा पोखरीथोकमा मुरलीधर नारायण-मन्दिरसँगै रामेश्वर-महादेवको ढुंगे मन्दिर रहेको छ। त्यसको ढोकामाथि यो अभिलेख कुँदिएको ढुंगा रहेको छ। यहाँ शकसंवत् १५५८ दिइएको छ।

'इतिहास-प्रकाश' १ अंकको ४० पृष्ठमा यो छापिएको छ। 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' को ५५८ पृष्ठमा पनि यो अनुवादसहित छापिएको छ। 'गोरखाको ऐतिहासिक सामग्री'-को १५ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

( बायाँपट्टि )

१. श्री गणेशाय नमः। वसुबाणशिवाननचेंदुयुते
२. नृपशालिवाहसमये विगते। विदधे नृपराम
३. मठं कुतुकात् शुचिदशमीयुक्तरवौ नभसि ॥१॥
श्रीशाके १५५८

(दायाँपट्टि)—

१. रामश्चांकरसेंद्वतीतसमये श्रीविक्रमार्कस्य वै
२. शुद्धे श्रावणमासि भानुदिवसे युक्ते दशम्यां तथा ॥
३. चक्रे राममहीपतिर्मठमसावानंदसंदोहनं
४. श्रीमच्छंकरपादपद्मरजसा पूतः सदा शत्रुजित् ॥१॥

## अनुवाद

श्रीगणेशलाई नमस्कार । शकसंवत् १५५८ ( वि. सं. १६९३ ) श्रावण महीनामा, आषाढ दशमी आदित्यवारको दिन, (धर्मसा) चौंचौ भएका राजा राम शाहले मठ (मन्दिर) बनाउनुभयो ।

विक्रमसंवत् १६९३ चोखो श्रावण महीनामा दशमी आदित्यवारको दिन श्रीशिवजीका पाउरूपी कमलका धूलाले पवित्र भएका सबै शत्रुलाई जित्ने उहाँ राजा राम शाहले आनन्द दिने मठ (मन्दिर) बनाउनुभयो ।

व्याख्या–

वि. सं. १६९३ मा शिवमन्दिर बनाउन लगाई राम शाहले यो अभिलेख कुँदन लाएका हुन् । राम शाहले गोरखालाई सांस्कृतिक दृष्टिले पनि आकर्षक पार्ने नीति लिएथे भन्ने चर्चा माथि गरिसकेको छ । रामेश्वरमन्दिर बनाउन लगाई राखेको यस अभिलेखले पनि उक्त कुराको पुष्टि गर्छ ।

यस रामेश्वर-मन्दिरको वास्तुशैली अलि भिन्नै खालको छ । सँग रहेको मुरलीधर नारायणको वास्तुशैली तला तला हाली बनाउने ठेट नेपाली शैलीको छ भने यस रामेश्वर-मन्दिरको वास्तुशैलीलाई साधारणतः राजस्थानी शैली भन्ने संज्ञा दिन सकिन्छ । चारपाटे वेदिकामाथि चारपाटे नै भित्तिभाग उठाइएको छ । त्यस भित्तिभागमा मूल गुम्बज रहेको छ । त्यसको चार कुनामा साना साना चार गुम्बज रहेका छन् । प्रत्येक गुम्बजका टुप्पा गजुर-रूपका छन् । मन्दिरका घेरजस्ता भाग ढुंगाका छन् । गुम्बजहरू मात्र वज्रलेप गरी बनाइएका छन् । यस मन्दिरमा पश्चिमपट्टि एउटा मात्र ढोका रहेको छ । ढोकाका अवयवहरू आकर्षक नै छन् । तोरण भिन्नै रहेको छैन तापनि ढोकाको शिरानमा गरुडाकृति अंकित छ । ढोकाका खापाचाहिं काठका छन् । यसरी यो रामेश्वर-मन्दिर निकै आकर्षक रहेको छ । मन्दिर निकै ठूलो पनि छ ।

वंशावलीअनुसार राम शाहको मृत्यु वि. सं. १६९०मा भयो भन्ने छ ।[१] तर वि. सं.

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५९२

१६६३को यस अभिलेखबाट वंशावलीको उक्त भनाइ अशुद्ध छ भन्ने देखिएको छ। यसबाट वि. सं. १६६३ सम्म त राम शाह जीवित नै थिए भन्ने सिद्ध भएको छ।

गोरखाराज्यको स्थापनाको साथ-साथै गोरखामेकमा विद्याको पनि अध्ययन केही बढ्न थालेथ्यो। गोरखामा केही विद्वान्‌हरू आई रहन थालेथे। विशेष गरेर द्रव्य शाहको राज्य-स्थापनामा विशेष काम गर्ने नारायण अर्ज्यालका वंशजहरू विद्याध्ययनमा पनि दत्तचित्त रहेका थिए। स्वयं राम शाह, उनका छोरा डम्बर शाहलाई पढ्नाका लागि सारिएका ग्रन्थहरू पनि पाइएका छन्।[२] यसरी गोरखामा विद्याप्रचार पनि क्रमशः हुँदै गएको हामी पाउँछौं। तर राम शाहको पालासम्म विद्याको स्तर भने त्यति माथि उठ्न सकेको देखापर्दैन। रामेश्वर-मन्दिरको यस सानो अभिलेखमा अशुद्धि केही परेको छ; लेखनशैली पनि त्यति प्रौढ छैन।

जे होस्; राम शाहको अन्तिम यस अभिलेखले त्यस ताकाका केही कुरा प्रामाणिक रूपमा दर्शाइरहेको हुनाले गोरखाको इतिहासको दृष्टिले यस अभिलेखको उपयोगिता कम छैन। यो रामेश्वर-मन्दिर बनाउन लाएको केही समयपछि राम शाहको देहावसान भएको बुझिन्छ। दरौंदी र मर्स्याङ्‌दीको दोभानमा ( मझुवा खँरिनीमा ) राम शाहको देहावसान भएको हो। त्यहाँ यस कुराको संझनाको लागि देवमन्दिर बनाइएको छ भन्ने अनुश्रुति चलेको हुँदा उक्त ठाउँमा गई यस कुराको छानबीन गरियो। तर त्यस्तो कुनै स्मारक भेट्टिए न।



२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५८६–५६२

[ ४ संख्या ]

# गोरखाको रुद्र शाहको अभिलेख

गोरखा-दरबारबाट हनूमान्भञ्ज्याङतिर ओर्लँदा बीचमा पहरोको ठूलो ढुंगामा यो अभिलेख कुँदिएको छ। यहाँ शकसंवत् १५८८ दिइएको छ।

'सन्धिपत्रसंग्रह'को ६५६ र ७१९ पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ। 'गोरखाको ऐतिहासिक सामग्री'को ६ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ।। श्रीशाके १५८८ सोपानस्येह राजीमर्शितिविधितिथौ
२. माधवे तीव्ररश्मावब्देकैर्विक्रमीयैः सरति सुरसरिन्नेत्रवाहाब्धिजातेः ।।
३. राजश्रीरुद्रशाहः प्रथितबहुगुणोचीकरत्पूर्वतस्तां राज्ञामायाः परे-
४. षामिव निलयतलेष्वागतेरुच्चनीचा ।। ।।

## अनुवाद

श्री गणेशलाई नमस्कार। शकसंवत् १५८८, वि. सं. १७२३ वैशाख कृष्ण द्वादशी आदित्यवारको दिन, गुणी राजा श्रीरुद्र शाहले अरू राजाहरूको दरबारमा जस्तै तलमाथि आनुआउनुको लागि (गोरखा दरबारको) पूर्वतिर सिँढीहरू बनाउन लाउनुभयो।

व्याख्या–

राम शाहपछि गोरखाको गद्दीमा क्रमशः डम्बर शाह, कृष्ण शाह, रुद्र शाह बसेथे।[१] यी रुद्र शाह राम शाहका पनाति हुन्। वि. सं. १६९३ सम्म राम शाह जीवित थिए भन्ने कुरा गोरखा पोखरीथोक रामेश्वर-मन्दिरको अभिलेखबाट थाहा पाइन्छ। रुद्र शाहको यो अभिलेख वि. सं. १७२३ को हो। राम शाहपछिको यो तीस वर्ष जति समयभित्र गोरखाको उल्लेखनीय विकास भएको देखिँदैन। वंशावलीकारले लेखेजस्तै यस बीच गोरखा राज्य थाम्ने काममात्र भए[२]; यसलाई योजनाबद्ध रूपमा अगाडि बढाउने काम हुन सकेन। यसमा अनेक कारण रहेका थिए। त्यस वेला नेपाल अधिराज्यभित्र खडा रहेका बाईसी, चौबीसी नेपाल उपत्यकाका मल्लराज्य, पूर्वका सेनराज्यमध्ये गोरखाराज्य आर्थिक आदि कति कुरामा पछि नै रहेका थिए।[३] पश्चिमतिर बढ्न नसकिने हुँदा गोरखाराज्य स्थापनापछि यस राज्यले पूर्वतिर आफ्नो राज्यक्षेत्र विस्तार गर्ने नीति लिएको थियो।[४] शुरूमा केही सफलता पनि प्राप्त भएको थियो। तर डम्बर शाह, कृष्ण शाह, रुद्र शाहको पालामा नेपाल उपत्यकामा प्रतापमल्ल आदि चल्तापूर्जा राजाहरू रहेका हुँदा गोरखाले पूर्वतिर बढ्ने अवसर पाएन। साथै डम्बर शाह, कृष्ण शाह, रुद्र शाहहरू व्यक्तिगत रूपमा पनि त्यती प्रभावशाली बन्न सकेको देखिँदैन। यिनीहरूको शासनकाल पनि छोटो छोटो रह्यो। यस कारण राम शाह-पछिको यस समयमा गोरखाले उल्लेखनीय सफलता हासिल गर्न सकेन; राज्य थाम्ने काम मात्र भयो। तर यस बीच पनि राजकाजमा केही षाड्गुण्यको प्रयोग भने नभएको होइन। ललितपुरका राजा सिद्धिनरसिंहको सहायताको लागि डम्बर शाह पूर्वतिर बढेको र कान्तिपुरका राजा प्रतापमल्लसँग उनको संघर्ष भएको थियो।[५] यस घटनाले कान्तिपुर र गोरखामा केही तनाव, वैमनस्य हुनु स्वाभाविक थियो। पछि चतुर प्रतापमल्लले गोरखासँगको यस वैमनस्य हटाई गोरखालाई ललितपुरको विरुद्ध आफ्नो पक्षमा मिलाउने कोशिश गरेका थिए। यसका

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५९२–५९६

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५९६

३. रामजी तेवारी र अरू 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग), नेपाल सांस्कृतिक परिषद्, काठमाडौं, वि.सं. २०२१, पृ. ११–१५

४. धनवज्र वज्राचार्य 'गोरखाको पूर्वतिर बढ्ने उद्योग' मधुपर्क वर्ष २ अङ्क ८, पृ. २६–३३

५. धनवज्र वज्राचार्य र अरू 'इतिहास संशोधनको प्रमाणप्रमेय' जगदम्बाप्रकाशन, ललितपुर, वि. सं. २०१९, पृ. ५८

लागि उनले एक दूतमण्डल गोरखातिर पठाएका थिए । यस कुराको उल्लेख प्रताप मल्लले हरिहर सेनलाई लेखेको पत्रमा परेको छ ।[६] सो पत्रमा परेको गोरखासम्बन्धी उक्त उल्लेख विचारार्थ यहाँ उद्धृत गर्नु परेको छ–

"इहा गोरषालीसे बंध वदले अन्योन्य पुपुरी वामन कर हाथ वी हलवा.........आगे कैसन होई हमे नाही जानीला"

( यहाँ गोरखालीसँग सम्झौता गर्न परस्परमा विश्वस्त दूतरूपका ब्राह्मणमार्फत सम्बन्ध राख्न खोजिएको छ......अगाडि के हुन्छ मलाई थाहा छैन । )

यसबाट प्रताप मल्लले गोरखासँग सम्बन्ध राख्न खोजेको स्पष्ट छ । तर प्रताप मल्लको पालामा यस कुरामा सफलता प्राप्त भएको देखिँदैन । उनका छोराका पालामा भने गोरखा र कान्तिपुरको मित्रसम्बन्ध जोडियो । गोरखाले ललितपुरसँगको पुरानो सम्बन्धलाई उपेक्षा गरी कान्तिपुर, भक्तपुरसँग सम्बन्ध जोड्न पुग्यो । यसका लागि स्वयं पृथ्वीपति शाहले दुइ पटक कान्तिपुरको यात्रा गरेथे ।[७]

यति कुरा गर्नाको तात्पर्य नयाँ नयाँ ऐतिहासिक सामग्रीको खोज-खबर गर्न सके डम्बर शाह, कृष्ण शाह, रुद्र शाहका पालामा भएका गतिविधि पनि थाहा पाउन सकिने सम्भावना छ भन्नाको लागि हो । अहिलेलाई रुद्र शाहको पालाको प्रामाणिक ऐतिहासिक सामग्रीमा यही एक अभिलेख र एक अर्को कागज-पत्र मात्र पर्न आएका छन् ।[८] यस कारण गोरखाको प्रामाणिक इतिहास तयार गर्ने सिलसिलामा यो सानो अभिलेख पनि निकै महत्त्वपूर्ण हुन आएको छ ।

---

६. मोहनप्रसाद खनाल, 'अभिलेख संकलन' साझाप्रकाशन, काठमाडौं, वि.सं. २०१८ पृ. ३१–३२

७. यस विषयको सप्रमाण चर्चा तल अर्को अभिलेखमा गरिएको छ ।

८. 'ऐतिहासिक पत्रसंग्रह' ( दोस्रो भाग) पृ. १०–११

हाल गोरखादरबार रहेको ठाउँमा खड्का खस राजाको पालामा पनि कोटरूपको एक राजभवन रहेको देखिएको छ।[९] राम शाहले त्यसलाई नयाँ रूप दिएथे।[१०] डम्बर शाहले पनि अलिकता भाग थपेको बुझिन्छ।[११] गोरखा-दरबारको विस्तार, पुनर्निर्माणको सिलसिलामा रुद्र शाहले पनि उल्लेखनीय एक कार्य गरेथे भन्ने कुराको संझना यस अभिलेखले दिलाइरहेको छ। गोरखा-दरबार डाँडाको टुप्पोमा बनाइएको छ। सुरक्षाको दृष्टिले कोटको रूप दिनुपरेको हुँदा दरबारको लागि यस्तो जगह छानिएको हो। राजदरबार टुप्पामा रहे तापनि अरू भाइभारदार आदिका घरहरू तलतिर बनेका थिए। यसो हुँदा राजदरबार पुग्न उकालो चढ्नुपर्ने भयो। यस्तो उकालो ठाउँमा सिंढी सिंढी पारेर बाटो बनाउँदा आरामदायक हुने र यसबाट शोभा पनि हुने हुनाले रुद्र शाहले वि. सं. १७२३ मा हनूमान्भञ्ज्याङबाट माथि दरबारमा जाने बाटोमा ढुंगा छापी सिंढी बनाउन लाएछन् भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ। जुन सिंढी हालसंम पनि कायम नै छ।

यस अभिलेखमा सिंढी बनाएको प्रसंगमा "परेषां राज्ञामिव" भन्ने पद प्रयोग भएको हुँदा अरू राजाहरूको दरबारको तुलनामा यस्तो ढुंगाको सिंढी गोरखा दरबारमा पहिले नभएको हुँदा रुद्र शाहले त्यस कमीको पूरा गरे भन्ने भाव झल्किन्छ। जे होस्; सानै भए पनि यसले रुद्र शाहको कृतिलाई संझाइरहेको छ।

एक पद्यको यो अभिलेखको रचना गर्ने पण्डितको संस्कृत भाषामा त्यति राम्रो दखल नभएको बुझिन्छ। यस कारण यो पद्य अर्थ बुझ्न पनि गाह्रो क्लिष्ट रूपको हुन गएको छ।

卐

---

९. वंशावलीको वर्णन केलाएर अध्ययन गर्‍यौं भने उक्त कुरा हामी थाहा पाउँछौं। 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५४७, ५५०

१० गोरखा-दरबारलाई राम शाहले भव्य रूप दिए भन्ने कुरा परम्पराबाट अहिलेसम्म नै प्रचलित भई आएको हामी पाउँछौं। राम शाहले बाँधेका स्थितिमध्ये केहीमा गोरखा-दरबारसम्बन्धी कुराको पनि उल्लेख आएको छ।
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५६८

११. गोरखा-दरबारको पश्चिमभेकको एक लड डम्बर शाहले थपेका हुन् भन्ने कुरा परम्पराबाट प्रचलित भई आएको पाइन्छ।

[ ५ संख्या ]

# गोरखाको पृथ्वीपति शाहको पालाको अभिलेख

गोरखा पोखरीथोकबाट केही पूर्वतिर लागेपछि रानीवनमा पुगिन्छ । त्यहाँ एउटा घरको गाहारोमा हाल यो शिलापत्र टाँसेर राखिएको छ । यहाँ शकसंवत् १६०१ छ ।

यो अभिलेख पहिले तल पनेरानिर थियो । पछि मात्र माथि लगी राखिएको हो भन्ने सुनिन्छ । 'गोरखाको ऐतिहासिक सामग्री'को १६–१७ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. ॥ श्रीशाके १६०१ ॥
२. श्रीसंवत् १७३६ वैशाखे श–
३. शिहोनपक्षशशभृत्कामा–
४. शिवभि संयुते ऋत्वग्न्यर्णवभू–
५. मिते कृतवती नाम्नी हि रत्ना–
६. वती ॥ वर्षे विक्रमभूमिपस्य ज–
७. लदानाय प्रपामंदिरं श्रीपृथ्वी–
८. पतिराजराजसमये लक्ष्मी–
९. पति:प्रीतये ॥१॥ प्रिया प्रद्यु–
१०. म्नसेनस्य श्रीमद्रामात्मजा–
११. त्मजा । रत्नावती कृतं रम्यं
१२. प्रपाहर्म्यं शुभे दिने ॥ २ ॥

# अनुवाद

शकसंवत् १६०१, विक्रमसंवत् १७३६ वैशाख कृष्ण त्रयोदशी सोमवार अश्विनी नक्षत्रमा महाराज श्रीपृथ्वीपति शाहको पालामा, रत्नावतीले नारायणलाई प्रसन्न पार्न, पानीको खाँचो टार्न पौवा बनाउन लाउनुभयो । उहाँ रत्नावती प्रद्युम्नसेनकी पत्नी, श्रीराम शाहकी छोरीकी छोरी हुनुहुन्छ । उहाँले शुभ दिनमा राम्रो पौवा बनाउन लाउनुभएको हो ।

व्याख्या–

धारा, पाटी, पौवा आदि जनहित तथा लोकोपकार हुने कृतिहरू राख्न लाउने कुरामा प्राचीन कालदेखि नै नेपाली नारीवर्गको उल्लेखनीय हात रहेको हामी पाउँछौं ।[१] लिच्छविकालका अभिलेखहरू केलायौं भने यस्ता कुराका उदाहरण अनेक पाउँछौं ।[२] मध्यकालमा पनि यो परम्परा कायमै रहेको थियो । राम शाहकी छोरीकी छोरी रत्नावतीले पौवा बनाई कुँदन लाएको यस अभिलेखले गोरखाको नारीवर्ग पनि यस क्षेत्रमा पछि परेको थिएन भन्ने कुरा दर्शाउँछ । वि. सं. १९४३मा यस पनेरोको जीर्णोद्धार गरिएको थियो । गोरखा रानीवनमा यो पौवा, पनेरो हाल पनि छँदै छ । गोरखा भेकका पनेरामध्ये यहाँको पानी सबभन्दा शीतल, स्वास्थ्यकर छ भन्ने कुरा यहाँका बासिन्दाहरू सुनाउँछन् ।

रत्नावतीको वर्णन गर्दा यस अभिलेखमा "प्रिया प्रद्युम्नसेनस्य" भन्ने उल्लेख परेको छ । यसबाट रत्नावती प्रद्युम्नसेनकी पत्नी हुन् भन्ने थाहा पाइन्छ । प्रद्युम्नसेनको परिचय पाउन नसकिएको हुँदा यस विषयमा राम्ररी प्रकाश पर्न सकेको छैन । पछि वि. सं. १९४३ मा उक्त पौवाको जीर्णोद्धार गरी राखिएको अभिलेखमा रत्नावतीलाई "नृपवधू" भनी लेखिएको छ । यसबाट प्रद्युम्नसेन कुनै ठकुराइका राजा थिए भन्ने संकेत पाइन्छ । तर यी कहाँका सेन हुन् भन्ने कुरा स्पष्ट हुन सकेको छैन । जे होस्; यस उल्लेखले गोरखाका शाहखलकको सेन राजखलकसँगको विवाह सम्बन्धलाई दर्शाएको छ ।

पृथ्वीपति शाहका पालाका अभिलेखमध्ये यो पहिलो हो । राम शाहपछिका गोरखाका राजामा पृथ्वीपति शाहको विशिष्ट स्थान रहेको छ । यस कुराको विशेष चर्चा तलको उनको अभिलेखमा गरिएको छ । 卐

---

१. धनवज्र वज्राचार्य, 'नेपाली संस्कृतिको उत्थानमा नारीवर्गको देन' 'ऐश्वर्य' (शुभजन्मोत्सव विशेषाङ्क) श्री ५ बडामहारानी २८ औं शुभजन्मोत्सव समारोहसमिति, काठमाडौं, वि. सं. २०३३, पृ. ४१–४५

२. 'लिच्छविकालका अभिलेख' पृ. १३३, १३४, १७५, ४७२–४७३, ५४७

[ ६ संख्या ]

# गोरखाको पृथ्वीपति शाहको अभिलेख

गोरखा पोखरीथोकमा रामेश्वर महादेवको सामुन्ने एउटा ठूलो शिलास्तम्भ खडा छ। सो शिलास्तम्भमाथि पृथ्वीपति शाहको सालिक रहेको छ। त्यसै स्तम्भको पूर्व पाटामा यो अभिलेख कुँदिएको छ। यहाँ शकसंवत् १६०२ दिइएको छ।

'इतिहास-प्रकाश' १ अंकको ४० पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ। 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश'को ५६८-६६ पृष्ठमा, पनि यो अनुवादसहित छापिएको छ। 'गोरखाको ऐतिहासिक सामग्री'को १८ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. ॥ श्रीविश्वेश्वरो जयति ॥
२. ॥ श्रीशाके १६०२ मासे ३
३. स्वस्ति श्री ॥ उत्तराशासुनासीरो गोर्षाचलसुधा–
४. निधिः ॥ पृथ्वीपतिर्विजयतां स्तंभारूढः शिवं भज–
५. न् ॥१॥ पृथ्वीपतिर्जयति भक्तिमदद्वितीय स्तंभं म–
६. हांतमधिरुह्य निरातपत्रः। बद्धांजलिः स–
७. विनयो निभृतेन्द्रियात्मा यः सेवते प्रतिमया–
८. पि महेश्वरांघ्रि ॥२॥ श्रीशाकेक्षिवियद्रसाव–
९. निमिते स्वब्दे प्रमोदेयने सौम्ये ग्रीष्मशुचौ त–
१०. मःफणितिथौ द्वंद्वार्क्क ऋक्षे वसौ। श्रीपृथ्वीपति–

११. भूभुजा पुरवरे गोर्षापुरे पुष्करे भक्त्याधायि
१२. निजाकृतिः शिवपुरः सद्भोगमोक्षार्थिना ॥
१३. ॥३॥ गोर्षाधीशमहाराजपृथ्वीपतिनृपाज्ञया ॥
१४. वीरेश्वरेण विदुषा प्रसस्ती रचिता शुभा ॥४॥

## अनुवाद

श्रीविश्वेश्वर ठूला हुनुहुन्छ। शकसंवत् १६०२ (वि. सं. १७३७) आषाढ महीनामा।

कल्याण होओस्। उत्तर दिशाका इन्द्रअस्ता, खम्बामा चढेर श्रीशिवजीको भजन गरिरहेका, गोरखाका महाराजा श्रीपृथ्वीपति शाहको जय होस् ॥१॥

भक्तहरूमध्ये अद्वितीय भएका, अग्लो खम्बामा चढेर छाता नओढी विनयपूर्वक हात जोडिहेरका, इन्द्रिय र मनलाई आफ्नो वशमा पारेका श्रीपृथ्वीपति शाह ठूला हुनुहुन्छ। जुन महाराज सालिकद्वारा पनि श्रीमहादेवका दुइ पाउको सेवा गर्नु हुन्छ ॥२॥

शकसंवत् १६०२ ( वि. सं. १७३७) प्रमोद संवत्सरमा, उत्तरायण ग्रीष्म ऋतुमा, आषाढ कृष्ण पञ्चमी तिथि धनिष्ठा नक्षत्र सोमवारमा मिथुन राशिमा सूर्य भएका वेलामा, असल गोरखा शहरको पोखरीथोकमा, सुखभोग र मोक्ष चाहने महाराज पृथ्वीपति शाहले भक्तिपूर्वक शिवजीको अगाडि आफ्नो सालिक स्थापना गर्नु भयो ॥३॥

गोरखाका महाराज पृथ्वीपति शाहका आज्ञाले विद्वान् वीरेश्वरले यो उत्तम प्रशस्ति बनाएका हुन् ॥४॥

कल्याण होस्।

व्याख्या–

राम शाहपछि गोरखालाई अघि बढाउने शाह राजामा पृथ्वीपति शाहको पनि उल्लेखनीय स्थान रहेको छ। आफ्नो लामो शासनकालमा गोरखा राज्यलाई मजबूत पार्ने काम पृथ्वीपति शाहले निकै गरेका थिए। विशेष गरेर पूर्वतिर बढ्ने काममा पृथ्वीपति शाहले

समयोचित नयाँ नीति अवलम्बन गरे ।[१] गोरखालाई सैनिक दृष्टिले र सांस्कृतिक दृष्टिले उन्नत पार्ने काम केही मात्रामा पृथ्वीपति शाहले गरे ।[२] पृथ्वीपति शाहको यस विशिष्टताको चर्चा वंशावलीहरूमा पाइँदैन; तर उनका पालाका अरू ऐतिहासिक सामग्रीहरूको तुलनात्मक अध्ययन गर्‍यौँ भने उपर्युक्त कुरा हामी स्पष्ट रूपमा थाहा पाउन सक्छौँ ।

राम शाहले नेपाल-उपत्यकाका मल्ल राजाहरूमध्ये ललितपुरका मल्ल राजासँग घनिष्ठ सम्बन्ध जोडेका थिए । राम शाह र सिद्धिनरसिंह मल्लबीच जुन संझौता भएको थियो;[३] त्यसले गर्दा गोरखा र ललितपुरको सम्बन्ध राजनैतिक, आर्थिक, सांस्कृतिक क्षेत्रमा समेत निकै दरिलो बनेथ्यो । यस सम्बन्धले गोरखा र ललितपुर दुवै राज्यलाई लाभ भएथ्यो ।

ललितपुरका प्रतिद्वन्द्वी कान्तिपुर यस सम्बन्धमा फेरफार पारी ललितपुरलाई कमजोर पार्न चाहन्थ्यो । कान्तिपुरका चतुर राजा प्रताप मल्ल गोरखामा दूतमण्डल पठाई गोरखालाई ललितपुरको विरुद्ध आफ्नो पक्षमा मिलाउन प्रयत्नशील रहे भन्ने कुराको चर्चा माथि गरिसकेको छ । प्रताप मल्लको यो प्रयोग उनको पालामा त सफल भएको देखिँदैन । तर पृथ्वीपति शाहले भने तत्काल यस अवसरबाट लाभ उठाई नयाँ परराष्ट्रनीतिको अवलम्बन गरे । यसबाट गोरखाको पूर्वतिर बढ्ने प्रयासलाई निकै बल मिलेको हुनाले यहाँ उक्त कुरा अलि खुलाएर लेख्नुपरेको छ ।

वि. सं. १७३१ मा अकस्मात् प्रताप मल्लको मृत्यु भयो ।[४] उनका उत्तराधिकारीको कुरामा केही कचिंगल उठेको हुँदा तीन महीनाजति कान्तिपुरको गद्दी खाली रह्यो । आखिरमा जेठा नृपेन्द्र मल्ल गद्दीमा राखिए; अरू दुइ छोरा संयुक्त राजा घोषित गरिए ।[५] चौतारा ( मुख्य मन्त्री )को पद चिकुटि ( अर्को नाम देवदास )ले पाए ।[६] यस बेला राजा

---

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ५६

२. यस ताका गोरखामै तोप ढालिएको आदि घटनाबाट उक्त कुकाको पुष्टि हुन्छ । यस कुराको चर्चा तल अर्को अभिलेखको व्याख्यामा गरिएको छ ।

३. 'श्री ५ पृथ्वीनारायणशाहको उपदेश' पृ. ५५६, ५६६

४. 'इतिहास-संशोधनको प्रमाण प्रमेय' पृ. ६१–६२
'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. २८

५. रामजी तेवारी, 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) २८–२६,

६. 'चौतारा चिकुटि अथवा देवीदास' पूर्णिमा १ पूर्णाङ्क, संशोधनमण्डल, पृ. १३–१४

नृपेन्द्रमल्ल १२ वर्षका मात्र थिए। यसो हुँदा चौतारा चिकुटि शक्तिशाली भई निस्के।[७] कान्तिपुर राज्यका थुमथुममा नियुक्त उमराहरूमा खस मगरहरू पनि अनेक थिए। उमराहरूले भारदारका रूपमा राजदरबारमा हुने भारदारी सभामा पनि सम्मिलित हुन पाउँदथे।[८] यसो हुनाले कान्तिपुरको भारदारीमा खस मगरदलको पनि केही प्रभाव रहेको थियो। यो खस मगरदललाई चौतारा चिकुटिले राम्ररी हात लिएका थिए र सो दललाई आफ्नो विश्वस्त वर्गको रूपमा उनले परिणत गरेका थिए।[९] यिनै खस मगरदलको माध्यमले कान्तिपुरले गोरखासँग सम्पर्क बढायो। गोरखाका तात्कालिक राजा पृथ्वीपति शाहले यस परिस्थितिबाट लाभ उठाउन सक्ने सम्भावना देखेर उनी राजनीतिको दाउपेच खेल्न अघि सरे। यसका लागि पृथ्वीपति शाह स्वयं दुइ पटक कान्तिपुर पुगे। उनको पहिलो यात्रा वि. सं. १७३५मा भएको थियो। कान्तिपुर पुगी उनले कान्तिपुरका राजा नृपेन्द्र मल्लसँग मीत लाए। यस घटनाको रिपोट तात्कालिक एक ठ्यासफुमा गरिएको छ।[१०] त्यसको सम्बद्ध अंश यस प्रकारको छ–

"सम्वत् ७९८ आश्विन शुक्ल दशमी आदित्यवार — थ्व कुन्हु चारण याय धुनकाओ मोहनचुकस श्रीश्रीजयनृपेन्द्रमल्ल महाराजाओ गोरखाया प्रिथिपति साहिओ मित्रसंबन्ध याङ त्वाच चिनका यंया खप्पया प्रमाणपनि वयकाओ त्वाच चिनका जुरो"

( चन्द्रमान जोशीको ठ्यासफुबाट)

( ने. सं. ७९८ [ वि. सं. १७३५ ] आश्विन शुक्ल दशमी आदित्यवार — यस दिन चारण (खड्गचालन आदि विधान) सिध्याइसकेपछि मोहनचोकमा श्रीश्रीजयनृपेन्द्र मल्ल महाराज र गोरखाका पृथ्वीपति शाहले ललितपुरका भक्तपुरका समेत भारादारहरूको समक्ष मीत लाइयो।)

---

७. 'इतिहास-संशोधनको प्रमाण प्रमेय' पृ. २३७–२३८

८. 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ६१
   'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ४७–४८

९. इतिहास-संशोधनको प्रमाण प्रमेय' पृ. २३९

१०. नयराज पन्त, 'त्रिरत्नसौन्दर्यगाथा'को उपोद्घात पृ. ६१
   'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६२०

त्यस बेला प्रचलित 'एकानि शत्रु एकानि मित्र' रूपको सन्धि गराइमा[११] र यस मित्यारी लाइएको घटनामा अलि भिन्नता रहेको थियो । यसबाट गोरखा र उपत्यकाका मल्ल राज्यमा बढी आत्मीयता, एकता स्थापित भएको थियो । राजकाजको क्षेत्रमा मात्र होइन, धार्मिक क्षेत्रमा समेत यसको केही असर परेको थियो । उदाहरणार्थ त्यस बेलाको एउटा धार्मिक घटनालाई लिन सकिन्छ । उक्त मित्यारी लाएको ३ वर्षपछि वि. सं. १७३८ मा अधमास परेको थियो । यसो हुनाले दशैं कहिले गर्ने भन्ने प्रश्न धार्मिक क्षेत्रमा बडो चर्चाको विषय बन्यो । अन्त काशी, तिरहुत र पर्वतभेकमा सर्वत्र भदौमा सोह्र श्राद्ध र आश्विनमा दशैं मनाइयो । तर गोरखा, कान्तिपुर, भक्तपुर र ललितपुरले चाहिँ भदौमा सोह्र श्राद्ध र कार्तिकमा दशैं मनाएका थिए ।[१२] यस घटनाले गोरखा र उपत्यकाका मल्लराज्यमा सांस्कृतिक क्षेत्रमा समेत कायम भएको घनिष्ठतालाई औंल्याएको छ ।

यस प्रसंगमा एउटा कुरामा ध्यान दिनुपर्छ । कान्तिपुर र गोरखाका राजाले मीत लाएको उक्त अवसरमा भक्तपुरका र ललितपुरका समेत भारादारहरू उपस्थित थिए । यसरी यस मीतसम्बन्धलाई भक्तपुर र ललितपुर दुबै राज्यले समर्थन गरेको स्पष्ट छ । यद्यपि यो घटना ललितपुरको हितको विरुद्ध थियो । तैपनि त्यस बेलाका कान्तिपुरका राजा र चौतारा दुबै खूद ललितपुरका राजा श्रीनिवास मल्लले नै थापेका[१३] हुँदा उनीहरूबाट ललितपुरको हितको विरुद्ध कार्वाइ हुन सक्दैन भन्ने धारणाले ललितपुरले उक्त कुरामा साथ दिएको देखिन्छ । तर उता ललितपुरमा श्रीनिवास मल्ल सत्ताबाट हटेको लगत्तै पछि भएको पृथ्वीपति शाहको दोस्रो यात्रामा ललितपुरले साथ दिन छोडेको थियो । यस कुराको स्पष्ट

---

११. कसैसँग सन्धि गर्दा देशकाल परिस्थिति मिलाई व्यवहारमा आउने किसिमबाट सन्धि गर्नु लाभदायक हुन्छ । यसै हुँदा प्राचीन अर्थशास्त्रकारहरूले अवस्था हेरी गर्ने विभिन्न प्रकारका सन्धिहरूको उल्लेख गरेका छन् । पछि पछि यस कुरामा राम्रो ध्यान दिइएको देखिँदैन । यस ताका सन्धि गर्दा व्यवहारमा नआए तापनि प्रायः 'एकानि शत्रु एकानि मित्र'को रूपमा सन्धि गर्ने चलन थियो । वास्तवमा यसरी सन्धि गर्नु दुइ राज्यलाई एकै राज्य जस्तै मान्नु हो । परन्तु यस वाक्यको अर्थ महत्त्वपूर्ण भए तापनि साधारण अर्थमा यसको प्रयोग हुन्थ्यो ।
'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. १, ७–९

१२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६२२
'गोरखाको पूर्वतिर बढ्ने उद्योग' 'मधुपर्क' बर्ष २ अंक ८, पृ. २७–२८

१३. 'चौतारा चिकुटि अथवा देवीदास' पूर्णिमा १ पूर्णाङ्क, पृ. १३–१९

उल्लेख उपर्युक्त ठ्यासफुमा परेको छ।[१४] विचारार्थ त्यसको पनि उद्धरण यहाँ दिनु परेको छ–

"सं. ८०६ पौष कृष्ण सप्तमी बुधवार थ्व कुन्हु श्रीश्रीपार्थिवेन्द्र मल्ल, ख्वपया श्रीश्री जयजितामित्र मल्ल नेम्ह फुकिजं गोरखाया राजा पृथिपति साहि मोहनचुकस मेत जुव, एल याकात"

(चन्द्रमान जोशीको ठ्यासफुबाट)

(ने. सं. ८०६ (वि.सं. १७४२) पौष कृष्ण सप्तमी बुधवारका दिन श्रीश्रीपार्थिवेन्द्र मल्ल भक्तपुरका श्रीश्रीजयजितामित्र मल्ल दुवै दाजुभाइले गोरखाका राजा पृथ्वीपति शाहसँग मोहन चोकमा भेट गरे; ललितपुर एक्लै पऱ्यो।)

यसबाट पृथ्वीपति शाहले कान्तिपुरसँग सम्बन्ध बढाएको ललितपुरका नयाँ राजा योगनरेन्द्रलाई प्रिय नभएको र उनले पृथ्वीपति शाहको वि. सं. १७४२ मा भएको दोस्रो उपत्यका-यात्रामा साथ नदिएको स्पष्ट छ।

यसरी कान्तिपुरका मल्ल राजासँग सम्बन्ध बढाई पृथ्वीपति शाहले दुइटा फाइदा लिएका थिए। एक त पूर्वतिर आफ्नो प्रभाव फैलाउने, दोस्रो लम्जुङ आदि चौबीसी राज्यले गोरखामा आक्रमण गरे उपत्यकाका मित्रराज्यबाट गुहार लिने। गोरखा राज्य खडा भएदेखि नै लम्जुङले गोरखामा आँखा गाडेर बसेको थियो।[१५] पृथ्वीपति शाहको समयमा लम्जुङसँग झन् टक्कर पऱ्यो।[१६] यसो हुनाले पृथ्वीपति शाहले चौबीसीसँगको संघर्षमा पनि लाभ उठाएका थिए। उदाहरणार्थ वि. सं. १७४३मा गोरखालाई गुहार दिन कान्तिपुरबाट सैन्य हिँडेको घटनालाई देखाउन सकिन्छ–[१७]

"सं. ८०७ मार्गशिर कृष्ण।। तृतीया आर्द्रा प्र पुनर्वसुनक्षेत्र सोमवार थ्व कुन्हु गोरखा हतार न्ह्यात।। नवमिसिं, वावत भा वंशीधर भा प्रमुखन।।"

(चन्द्रमान जोशीको ठ्यासफुबाट)

---

१४. 'त्रिरत्न सौन्दर्य गाथाको उपोद्घात पृ. ६१
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६२३–६२४

१५. गोरखाको पूर्वतिर बढ्ने उद्योग' मधुपर्क वर्ष २ अङ्क ८, पृ. २६
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५५१–५२ ख, ५५४, ५७४,

१६. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६०८–६१२

१७. 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ३५

(ने. सं. ८०७ (वि. सं. १७४३) मार्ग कृष्ण तृतीया आर्द्रा उप्रान्त पुनर्वसुनक्षत्र सोमवारको दिन नवमीसिं, बावत, वंशीधर आदि भारादारको मातहतमा फौज लडाइँको लागि गोरखातिर हिंड्यो ।)

पृथ्वीपति शाहले उठानमा कान्तिपुरसँग बढी मित्रता कायम गरेका थिए । तर कान्तिपुरका राजा पार्थिवेन्द्र मल्ल मारिएपछि परिस्थिति बदलियो । अनि पृथ्वीपति शाह कान्तिपुरको विरुद्ध भक्तपुरको मद्दतगार बन्न पुगेथे । यस कुराको पुष्टिको लागि ललितपुरका राजा योगनरेन्द्र मल्ल र भक्तपुरका राजा भूपतीन्द्र मल्लले वि. सं. १७५८मा गरेको सन्धि-पत्रलाई देखाउन सकिन्छ । त्यस सन्धिपत्रमा भक्तपुरका राजाले गोरखा आदिको मद्दतले ललितपुरका राजालाई बचाएको कुरा परेको छ । त्यसमा मुख्य गरी कान्तिपुरको विरुद्ध मोर्चा बाँधेको कुरा परेको छ।[१८] पृथ्वीपति शाहको उक्त उद्योग पछि पनि कायमै रह्यो । वि.सं. १७७३ सम्म पृथ्वीपति शासन गर्दै थिए भन्ने कुरा अजीरगढको जागीर दिई गरिदिएको पत्र-बाट थाहा पाइन्छ।[१९]

गोरखा पोखरीथोकको पृथ्वीपति शाहको यो स्तम्भलेख वि.सं. १७३७ को हो। यसभन्दा दुइ वर्षजति अगाडि पृथ्वीपति शाहले कान्तिपुर यात्रा गरी नृपेन्द्र मल्लसँग मित्रसंबन्ध जोडेथे। यस मित्रसम्बन्धले राजनीतिक क्षेत्रमा मात्र होइन, सांस्कृतिक क्षेत्रमा समेत घनिष्ठता बढेको थियो भन्ने चर्चा माथि गरिसकेको छ । उक्त कुराको पुष्टि यस स्तम्भको स्थापनाले पनि केही गर्छ । आफ्ना इष्ट देवताको अगाडि यसरी भक्ति प्रदर्शन गरी स्तम्भ राख्ने प्रथा काठमाडौं

---

१८. 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ४०–४३

सो सन्धिपत्रको एक अंश यस प्रकारको छ—

"......अल खपो गोर्षा मोकांपुर उपाध्या डाम्ह संगुतान एकान मित्र एकान शत्रु याङाव चोस्यं तथा भाषा, अलन खपो व विना साहुतिन यं व बोलय यातसा मोहोर टंका पियदोल ४०००० खपो गोर्षा मोकांपुर उपाध्या ध्व पेम्हस्यन अलस छेकय याङाम्रो काय जुरो"

(.....ललितपुर भक्तपुर गोरखा मकवानपुर उपाध्या (तनहुँ), यी पाँच छिमेकी मित्र राज्यहरूले एकानि मित्र एकानि शत्रु गरी सन्धि गरियो; त्यसको बेहोरा— ललितपुरले भक्तपुरको सल्लाह नलिईकन कान्तिपुरसँग गुहार माग्यो भने ४०००० चालीस हजार रुपियाँ भक्तपुर गोरखा मकवानपुर उपाध्या ( तनहुँ ) यी चार राज्यले ललितपुरलाई अँठ्याई लिनू ।)

१९. योगी नरहरिनाथ, 'सन्धिपत्रसंग्रह' पृ. ५४

उपत्यकामा बढी प्रचलित थियो। कान्तिपुर-यात्राप्रसङ्गमा पृथ्वीपति शाहको मनमा उक्त प्रथाले असर पारेको देखिन्छ। कान्तिपुर राजदरबार क्षेत्रमा तलेजु देगुतले आदि देवताको सामुन्ने स्थापित प्रताप मल्ल आदिका यस्ता शिलास्तम्भहरू निकै आकर्षक छन्। यसले एकातिर आफ्ना इष्टदेवताप्रति भक्ति-आदर भावको राम्ररी प्रदर्शन गरिरहेको छ भन्ने अर्कोतिर आफ्नो प्रतिकृतिको पनि एक आकर्षक नमूना यसले प्रस्तुत गरिरहेको छ। यसो हुँदा पृथ्वीपति शाहले पनि गोरखा पुगी त्यसै गरी आफ्नो स्तम्भ खडा गर्ने अठोट गरे। गोरखा पोखरीथोकमा राम शाहले स्थापना गरेका शिवालय मुरलीधर नारायण-मन्दिर, गणेश-मन्दिर आदिले पोखरीथोकले एक रमणीय राजकुलको रूप लिंदै थियो। यसो हुनाले पृथ्वीपति शाहले पनि यहीं पोखरीथोकमा आफ्नो स्तम्भ राख्न लाउने विचार गरे। तदनुसार रामेश्वर-मन्दिरको सामुन्ने यो अभिलेखसहितको स्तम्भ स्थापना गरियो।

यस शिलास्तम्भको माथि पृथ्वीपति शाहको सालिक रहेको छ। सो नमस्कार मुद्रामा रहेको छ। अर्थात् घुँडा टेकेर हात जोडी बसेको छ। सो सालिक मानिसको कद-भन्दा अलि सानो छ। यसमा भक्तियुक्त गम्भीर मुखमुद्रा उतार्न कलाकार सफल छन्। धातुको सालिकमा त्यति सफलता प्राप्त गर्न सक्नु कालिगढको सिद्धहस्तताको द्योतक हो।

यस सालिकबाट तात्कालिक शाह राजाहरूको वेशभूषा बुझ्न पनि केही मद्दत पाइन्छ। मुगलशैलीको पगरी लाइएको छ; लुगा पनि मुगलशैलीकै छ अर्थात् अङ्गरखा लगाइएको छ। मोतीको माला र कण्ठी पहिरेको छ। दुवै हातमा एक एक बाला लाएको छ। बायाँ हातको कान्छी औंलामा औंठी शोभित छ। ढाल-तरवार भिरेको छ। सामुन्ने कुनै पुस्तक पाठार्थ राखिएको छ। यस सालिकमा जुङ्गाको रेखी नदर्शाइएको हुनाले यस बेला पृथ्वीपति शाह भरखरका तरुना थिए भन्ने संकेत पाइन्छ। शिरमा केशकर्तनशैली दर्शाउन जलप लाइएको धातुको सालिकमा पनि पगरीबाट बाहिर देखिएको केशभाग कालै देखाइएको छ। कानमा कर्णच्छेद देखिन्छ। तर कुनै गहना लाएको छैन। यसरी पृथ्वीपति शाहको यो सालिक निकै आकर्षक छ।

शिलास्तम्भ पनि निकै कलात्मक छ। राम्ररी तरासेको, चार पाटा ठीक मिलेको असल जातको ढुङ्गाको यस स्तम्भमा बुट्टाहरू पनि कुँदिएका छन्। शिलास्तम्भको शिरोभाग-मा फुलेको कमल कुँदिएको छ। यस शिलास्तम्भमा देवनागरी लिपिमा अक्षर पनि ठूलठूला गरी राम्ररी कुँदिएका छन्।

यति वर्णन गर्नुको तात्पर्य पृथ्वीपति शाहको सालिकसहितको यस स्तम्भलेखले गोरखा पोखरीथोकको शोभा निकै बढाएको छ भन्नाको लागि हो। यस्ता सांस्कृतिक गति-

थिथिले गर्दा पहिले 'ग्राम' कहिने[२०] गोरखाले अब 'पुरवर' कहिन थालेको संकेत यसै अभिलेखबाट पाइन्छ । 'पुरवरे गोर्षापुरे पुष्करे' भन्ने उल्लेख यस अभिलेखमा परेको हुनाले यो ठाउँले 'पोखरीथोक'को संज्ञा यसभन्दा अगाडि नै पाइसकेको देखिन्छ ।[२१]

यो शिलास्तम्भ राख्न लाएताका पृथ्वीपति शाहको हौसला बढेको थियो; उनको प्रतिष्ठा बढेको थियो भन्ने संकेत यस अभिलेखको वर्णनशैलीबाट थाहा पाइन्छ । यहाँ पृथ्वीपति शाहलाई "उत्तराशासुनाशीर" (उत्तर दिशाका इन्द्र ) भनी वर्णन गरिएको छ । यसबाट गोरखामात्र होइन; नेपालकै उत्तरीभेकका राजामा पृथ्वीपति शाहको स्थान उच्च छ भन्ने महत्त्वाकांक्षाले ठाउँ पाउन थालेको संकेत पाइन्छ । हुन पनि राम शाहपछि गोरखा-लाई अघि बढाउनेमा पृथ्वीपति शाह निकै उल्लेखनीय बनेका थिए ।

---

२०. राम शाहको समयमा लेखिएको हस्तलिखित ग्रन्थमा गोरखालाई 'ग्राम' भनिएको पाइन्छ । जस्तै—

"संवत् १६७८ शाके १५४३ समये कार्तिक वदि ८ नक्षत्रे ७ शुक्रवासरे गोर्षा ग्रामे रामसाहिभुज्यमानराज्ये जयभद्रशर्मणा लिखितमिदं पुस्तकं शुभमिति ॥ ॥"

योगी नरहरिनाथ 'इतिहास-प्रकाश अङ्क २, भाग ३, पृ. ५५२
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५६०

कृष्ण शाहको समयसम्म पनि गोरखालाई 'ग्राम' नै भनिएको पाइन्छ । जस्तै—

"श्रीशाके १५८१ समये श्रावणदशम्यान्तिथौ रविवासरे श्रीश्रीमत्कृष्णसाहभुज्य माने गोर्षाग्रामे लिखितं शुभं ॥ ॥'

'गोरखाको ऐतिहासिक सामग्री' पृ. ३३

पृथ्वीपति शाहको यस अभिलेखमा भने 'पुरवरे गोर्षापुरे' भनिएको हुँदा यस वेलासम्म गोरखाको विकास बढी भइसकेको संकेत पाइन्छ ।

२१. गोरखा-वंशावलीअनुसार पोखरीथोकको पोखरी पृथ्वीपति शाहको समयमा बन्यो भन्ने देखिन्छ ।

'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६२१

पृथ्वीपति शाहको यस स्तम्भलेखका रचयिता वीरेश्वर हुन् भन्ने कुरा "वीरेश्वरेण विदुषा प्रशस्त रचिता शुभा" भनी यहाँ खुलाएर लेखिएको छ । यसरी प्रशस्तिकारको नामोल्लेखसमेत गराई पृथ्वीपति शाहले विद्वान्को कदर गरेका छन् । यी वीरेश्वर अर्ज्याल द्रव्य शाहको राज्याभिषेक गराउने प्रसिद्ध नारायणदास अर्ज्यालका वंशज हुन् । नारायणदास अर्ज्यालका वंशजहरूले गोरखालाई विद्याध्ययन क्षेत्रमा अघि बढाएको कुरा यस प्रसंगमा उल्लेखनीय रहेको छ ।[२२]



---

२२. नारायणदास अर्ज्यालका वंशजहरूले सारेका, लेखेका अनेक हस्तलिखित ग्रन्थ गोरखामा प्राप्त भएका छन् । त्यसबाट उक्त कुराको पुष्टि हुन्छ ।

[ ७ संख्या ]

# गोरखाको पृथ्वीपति शाहको पालाको अभिलेख

गोरखा–दरबार, हनूमान्‌भञ्ज्याङमा हनूमान्‌मूर्तिसँगै एक खण्डित शिलापत्र रहेको छ। त्यसैमा यो अभिलेख कुँदिएको छ। यहाँ शकसंवत् १६३४ दिएको छ। अभिलेखको धेरै भाग खण्डित छ।

'सन्धिपत्रसंग्रह'को ६५६ तथा ७१६ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख छापिएको छ। 'गोरखाको ऐतिहासिक सामग्री'को १८–१६ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ॥ ॥ नत्वा.........
२. ......श्रुतित्रिषड्भूशाकेपि पृथ्वीप(ति).........
३. ......स्त्री ॥ पुण्यश्रीरास वैरिक्षिति(पति).........
४. ......श्रं द्ररूपकृतसचिर्वविधि.........
५. ......र्ल्लंसितरसरसे सत्यरू(प).........
६. ......रोद्योतसाहानुजो.........
७. ......मंदिरे चन्द्ररूपो नृ.........
८. ......॥२॥

## अनुवाद

श्रीगणेशलाई नमस्कार ॥......लाई नमस्कार गरेर......शकसंवत् १६३४ ( वि. सं. १७६९) मा,पृथ्वीपति...........स्त्री, वैरी राजाहरूलाई (सन्ताप पार्ने), पवित्र राज्यलक्ष्मी भएका हुनुभयो ।.................

चन्द्ररूप शाहले सचिव (काजी) भएर काम गरिरहनुभएको...................... सुहाएको...........सत्यरूप...........उद्योत शाहका भाइ,.................मन्दिरमा ......चन्द्ररूप शाहले.........

व्याख्या–

गोरखा–दरबारबाट पूर्वतिर अलि तल ओह्लँदै पछि हनूमान्‌भन्ज्याङमा पुगिन्छ। त्यहाँ हनूमान्‌को एक आकर्षक मूर्ति रहेको छ। यो हनूमान् मूर्ति पृथ्वीपति शाहले स्थापना गरेका हुन् भनी वंशावलीमा लेखिएको छ।[१] यसै हनूमान् मूर्तिबाट "हनूमान् भन्ज्याङ" नाम रहेको हो।

उपर्युक्त हनूमान्‌मूर्तिसँगै रहेको एक शिलाखण्डमा यो अभिलेख कुँदिएको छ। निकै अंश खण्डित भइसकेको हुँदा यस अभिलेखको महत्त्व घटेको छ। तर बचेको अलिकता अंशबाट यो अभिलेख महत्त्वपूर्ण थियो भन्ने अनुमान गर्न सकिन्छ। यस अभिलेखमा संवत् र राजाको नाम भएको भाग बचेको छ। त्यताबाट यो अभिलेख वि. सं. १७६९को हो; राजा पृथ्वीपति शाहको समयमा उनका छोरा चन्द्ररूप शाहले मन्दिर ( घर ) बनाई यो अभिलेख कुँदन लाएको देखिन्छ। यस अभिलेखमा "चन्द्ररूपकृतसचिवविधि" भन्ने उल्लेख परेको। यसबाट चन्द्ररूप शाह यस वेला मन्त्री ( काजी ) का रूपमा रहेका देखिन्छन्। चन्द्ररूप शाहका दाजु उद्योत शाहको पनि यस अभिलेखमा नामोल्लेख भएको छ।

पृथ्वीपति शाहका अनेक रानीहरू थिए[२]; ती अनेक रानीतर्फबाट अनेक राजकुमारहरू पैदा भएका थिए। पृथ्वीपति शाह अलि बूढा हुँदै आएका र छोराहरू समर्थ हुँदै आएका हुँदा

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६२१
नयराज पन्त, 'हनूमान् स्थापनाको हेतु' पूर्णिमा १ पूर्णाङ्क, संशोधन-मण्डल, पृ. २६–३०

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५६७–५६८

गोरखा-दरबारमा केही मतभिन्नता देखापरेको थियो । केही अंशमा राजपरिवारमा वैमनस्य-समेत पैदा हुन थालेको थियो । यत्तिकैमा जेठा छोरा ( युवराज ) वीरभद्र शाहको मृत्यु भइ-दिँदा पृथ्वीपति शाहका उत्तराधिकारी कसलाई बनाउने भन्ने समस्या खडा हुन लागेको थियो ।[३] तर राजव्यसन खडा हुन लागेको यस अवस्थामा चन्द्ररूप शाहले इमान्दारी र चतुरता दर्शाएका थिए ।[४] साथै चन्द्ररूप शाहले गोरखालाई सामरिक आदि दृष्टिबाट पनि बलियो पार्ने चेष्टा गरेको प्रमाण पाइन्छ ।[५] यस कारण यस ताकाको गोरखाको इतिहासमा राजकुमार चन्द्ररूप शाहको उल्लेखनीय स्थान रहेको छ ।

यस अभिलेखमा "मन्दिर" शब्दको उल्लेख परेको छ । मन्दिर शब्दले विशिष्ट घर र देवमन्दिरलाई पनि बुझाउँछ । यस कारण यो अभिलेख देवमन्दिर बनाई राख्न लाइएको हो कि राजभवन बनाई राखिएको हो भन्ने प्रश्न उठ्छ । तर यो अभिलेख कुँदिएको शिलाखण्ड प्रायः गरी घर बनाउँदा राखिने खालको हुँदा राजभवन नै बनाई राख्न लाइएको हो भन्ने अनुमान हुन्छ । यस अभिलेखको बीच भागमा चार हात भएकी देवीको कलापूर्ण मूर्ति कुँदिएको छ; तर केही खण्डित भइसकेको छ । तात्कालिक चलनअनुसार उक्त देवीमूर्तिको दुवैतिर अभिलेख कुँदिएको देखिन्छ । तर अहिले दायाँ भागको केही भाग मात्र बाँकी छ ।

जे होस्; यस खण्डित अभिलेखले पनि तात्कालिक गोरखाको केही अवस्थामा अलिकता प्रकाश पार्छ । पृथ्वीपति शाहको पालामा पनि चन्द्ररूप शाहको रेखदेखमा गोरखा-दरबारको केही बढी विकास गरिएको थियो भन्ने यस अभिलेखले देखाउँछ ।

गोरखावंशावलीमा पृथ्वीपति शाहको पालामा गोरखा-दरबार र आसपासका अनेक देवताहरूको स्थापना, जीर्णोद्धार आदि भएको उल्लेख परेको छ ।[६] तर उक्त कुराको प्रामाणिक रूपमा पुष्टि गर्ने अभिलेख, कागतपत्र आदि तात्कालिक सामग्री भने प्राप्त हुन सकेको छैन । तर पृथ्वीपति शाहको पालामा गोरखामा निर्माण, पुनर्निर्माणसम्बन्धी गतिविधि निकै भएछ भन्ने कुराचाहिँ यो अभिलेख र यस्तै अरू केही अभिलेखबाट स्पष्ट झल्किन्छ ।

卐

---

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६०३–६०४

४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६०५–६०७

५. यस कुराको केही पुष्टि तलको तोपको अभिलेखबाट हुन्छ ।

६. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६२१

[ ८ संख्या ]

# गोरखाको पृथ्वीपति शाहको पालाको अभिलेख

गोरखा-दरबार, रङ्गमहलको छिंडीमा एउटा पुरानो खालको तोप राखिएको छ। त्यसै तोपको मुखभागमा यो अभिलेख कुँदिएको छ। यहाँ शकसंवत् १६३६ दिइएको छ।

'गोरखाको ऐतिहासिक सामग्री'को १९ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

१. श्रीशाके १६३६ मासे ९ श्रीश्रीमहाराजापृथ्वि–
२. पतिशाहराजसमये चंद्ररूपसाहस्य कृतिः।

## अनुवाद

शकसंवत् १६३६ ( वि. सं. १७७१ ) पौष महीनामा, श्रीश्रीमहाराज पृथ्वीपति शाहको राज्यकालमा, चन्द्ररूप शाहले यो तोप बनाउन लाइएको हो।

व्याख्या–

पृथ्वीपति शाहका पालाका गोरखाका अभिलेखमा सानो भए पनि यस अभिलेखको महत्त्व बेग्लै खालको छ। यस अभिलेखले यस वेला गोरखाले सामरिक दृष्टिले मजबूत हुन कोशिश गरिरहेको थियो भन्ने महत्त्वपूर्ण संकेत दिन्छ। तोपको मुखमा कुँदिएको यस अभिलेखमा

"चंद्ररूपसाहस्य कृतिः" भन्ने उल्लेख परेको हुनाले यो तोप बनाउन लाउनामा चन्द्ररूप शाहको विशेष हात थियो भन्ने स्पष्ट छ। माथि गएको हनूमान्भन्ज्याङको खण्डित अभिलेखमा "चंद्ररूपकृतसचिवविधि" भन्ने उल्लेख परेको हुँदा यस ताका राजकुमार चन्द्ररूप शाहले काजी भई प्रशासन चलाउँदै आएका थिए भन्ने थाहा पाइन्छ। यस ताकाका गोरखामा देखापर्न लागेको आन्तरिक कलहलाई चन्द्ररूप शाहले बुद्धिमानीपूर्वक शान्त पारेका थिए भन्ने चर्चा माथि गरिसकेको छ। गोरखामै तोप ढाल्न लाउने प्रयास गरेको यस उदाहरणले चन्द्ररूप शाहको महत्त्व अझ बढाएको छ।

त्यस बेला लम्जुङ "आठहजार" कहलाएको थियो।[1] गोरखाचाहिँ "बाह्र हजार" कहलाएको थियो।[2] यसरी आवादी विस्तारको दृष्टिले गोरखा अघि थियो तापनि सामरिक शक्तिको दृष्टिले गोरखाभन्दा लम्जुङ बलियो थियो। गोरखा "सर्प" भने लम्जुङ "गरुड" कहलाएको थियो।[3] यसरी आबादी थोरै भएर पनि लम्जुङ बलियो हुनाका कारणमध्ये लम्जुङले तोप आदिको संग्रह गर्नु पनि एक थियो। यस कुराको संझना लम्जुङ-दरबार कालिकास्थानको कोटमा रहेका दुइ तोप र अरू हतियारले दिलाइरहेका छन्। ती दुइ तोपमध्ये एउटामा "श्रीसंवत् १५९८" कुँदिएको पाइएको छ।[4] यसबाट लम्जुङमा शाहराज्यको स्थापना भएको केही कालपछि नै त्यस राज्यले सामरिक शक्ति बढाएको स्पष्ट देखिन आएको छ। यसै गरी गोरखाले पनि तोप ढाल्नलाई आफ्नो सामरिक शक्ति बढाउने प्रयास गरेको कुरा यस अभिलेखले स्पष्ट देखाउँछ। उता भारतको मैदानमा भने तोपको प्रचलन यस बेला प्रशस्त मात्रामा भइसकेको थियो। तर नेपालको पहाडी भागमा भने तोपको प्रचलन त्यति भइसकेको थिएन। नेपाल-उपत्यकामा किल्ला भत्काउन यस ताकाका तोपको प्रयोग गरिएको फाटफुट उल्लेख आएको छ।[5] तैपनि यस बेला तोप लडाइँको प्रमुख हतियार बनिसकेको थिएन। यस अवस्थामा गोरखामा तोपको निर्माण गर्ने प्रयास हुनु कम महत्त्वको कुरा छैन। यस प्रयासले चन्द्ररूप शाहको पनि महत्त्व बढाएको छ।

---

१–२. योगी नरहरिनाथ 'इतिहास प्रकाश' २।३, पृ. ५८६–५८७
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६२९

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१८

४. धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठ 'लम्जुङको एक ऐतिहासिक झलक' स्वाइस् अफ् हिस्ट्रि, भाग ३, त्रि.वि.इतिहास-शिक्षण समिति, वि.सं. २०३४, पृ. ३०

५. वि. सं. १७४४मा मकवानपुरबाट शुभसेन ललितपुरभेकमा पसे भनी ललितपुरका प्रजा त्यसको विरुद्ध उठेथे; त्यस प्रसङ्गमा उनीहरूले किल्लाको रक्षाको लागि तोपको

हाल गोरखा-दरबार, रङ्गमहलको छिंडीमा रहेको उक्त तोप त्यति ठूलो भने होइन। यसको लमाइ ४७ इञ्चको छ। मुखतिरको गोलाई ४४ इंच र फेदको गोलाइ ३८ इञ्चको छ। तामा मिसिएको अलि अर्के खालको धातुले उक्त तोप ढालिएको छ।

जे होस्; तोप ढाल्न लाई कुँदाइएको यस अभिलेखले गोरखाले अघि बढ्न यस बेला गरिरहेको उद्योगलाई केही मात्रामा औँल्याउँछ।



---

प्रयोग गरेको उल्लेख चन्द्रमान जोशीसँग रहेको ठयासफुमा आएको छ। जस्तै–

"सं. ८०८ पौष कृष्ण ।। प्रतिपदा आदित्यवार···थ्व कुन्हु म्हुकानपुलि सुभसस्मन पशयथात धकाओ वल जन थाथाव दाव, तुपक तव क्वाठ द(क्क) स्यंन"

[ने. सं. ८०८ (वि. सं. १७४४) पौष कृष्ण प्रतिपदा आदित्यवार···यस दिन मकवानपुरका शुभसेन पसे भनी ललितपुरका प्रजा उठेर आए। तोपको प्रयोग गरियो। किल्ला जति भत्काइए।]

हुनत नेवारीभाषामा साधारणतः 'तुप' शब्दले बन्दूकलाई पनि बुझाउँछ। ठयासफुमा यस कुराको उल्लेख ठाउँठाउँमा आएको छ। जस्तै–

"सं. ८०७ कार्तिक कृष्ण त्रयोदशी बुधवार थ्व कुन्हु श्रीकिशि भाजु तुपकन कयाओ सिक···हतारस"

[ने. सं. ८०७ (वि. सं. १७४३) कार्तिक कृष्ण त्रयोदशी बुधवारको दिन लडाईंमा गोली लागी श्रीकिशि भाजुको मृत्यु भयो।]

"सं. ८०७ श्रावण कृष्णः। नवमी···थ्व कुन्हु बावत भा तुपकन कयाओ सिक"

[ने.सं. ८०७ (वि.सं. १७४४) श्रावण कृष्ण नवमी···यस दिन भारादार बावत गोली लागी मरे।]

तर माथि शुभसेनको आक्रमणको प्रतिरोधको सिलसिलामा प्रयुक्त "तुप" शब्दले बन्दूकलाई होइन; तोपलाई नै बुझाएको हो भन्ने कुरा प्रसङ्गबाट थाहा पाइन्छ।

[ ६ संख्या ]

# गोरखाको उद्योत शाहको अभिलेख

गोरखा-दरबारबाट पश्चिमतिर तल ओर्लंदा बीच बाटोमा सिद्धिगणेशस्थान आइपुग्छ। त्यहाँको गणेशमूर्तिको पादपीठमा यो अभिलेख कुँदिएको छ। यहाँ शकसंवत् १६४४ दिइएको छ।

'गोरखाको ऐतिहासिक सामग्री'को २० पृष्ठमा यो अभिलेख तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ॥ गजाननमहं नौमि सुखदं विघ्नहारकं रिद्धिबुद्धिप्रदं सिद्धिदायकं गण–

२. नायकं ॥ स्वस्ति श्रीशाके १६४४ श्रीसंवत् १७७९ जेष्ठमासे शुक्लपक्षे तिथौ ६ नक्षत्रे ८ वारे ५ तद्दिने स्थापित

३. श्रीसत्यरूपेश्वरसिद्धिविनायक ॥ पुन दिन १७ गते वारे ३ नक्षत्रे १३ तिथौ ११ श्रीश्रोउद्योतसाहकस्य नेपालयात्रा शुभ

## अनुवाद

श्रीगणेशलाई नमस्कार। सुख दिने, विघ्न हर्ने ऋद्धि (सम्पत्ति), सिद्धि र बुद्धि दिने, गजानन गणेशलाई म ढोग्दछु।

कल्याण होस् । शकसंवत् १६४४ विक्रमसंवत् १७७९ ज्येष्ठ शुक्ल षष्ठी, पुष्यनक्षत्र, बृहस्पतिवारको दिन श्रीसत्यरूपेश्वर सिद्धिविनायकको स्थापना गरियो ।

अर्को कुरा, १७ गते मंगलवार हस्तनक्षत्र एकादशीको दिन श्रीश्रीउद्योत शाहले नेपाल-उपत्यकाको यात्रा गर्नुभएको हो । शुभ होस ।

व्याख्या–

पृथ्वीपति शाहका ६ रानीतिरबाट गरी जम्मा १२ छोरा भएका थिए । तिनमध्ये साहिँली, रानीतिरबाट दुइ छोरा भएका थिए; ती हुन्– उद्योत शाह र चन्द्ररूप शाह ।[१] तिनै उद्योत-शाहले वि. सं. १७७९ ज्येष्ठमा गोरखा-दरबारनजीकै गणेश स्थापना गरी यो अभिलेख कुँद्न लाएका हुन् ।

उक्त सिद्धिगणेशको मूर्ति निकै आकर्षक छ । सबभन्दा तल पादपीठिकामा नाग अंकित छ । त्यस पीठिकामाथि रहेको कमलासनमा गणेशजी उभिएर रहेका छन् । गणेशको मुखमुद्रा प्रसन्न र गम्भीररूपको छ । सुँड, आँखा, दाँत आदि हात्तीकै अनुरूपका छन् । शिरमा चाहिँ विशेषरूपको मुकुट रहेको छ । चार हात छन् । तिनमा मोदकपात्र, पाश, परशु आदि रहेका छन् । नागको यज्ञोपवीत (जनै) पहिरिएको छ । पेट ठीकै रूपमा लागेको छ । अन्तजस्तो भुँडेका रूपमा यहाँ गणेश चित्रित छैनन् । माला लाएको छ । वाहनरूपका दुइ छुचुन्द्रा गणेशका खुट्टानिर दुइतिर रहेका छन् । यसरी मूर्ति आकर्षक र कलात्मक रहेको छ । ढुंगा पनि असल जातकै रहेको छ । खालि मूर्ति कुँदाइँमा श्लक्ष्णता छैन; अलि खस्रोपना देखा-परेको छ । यसले गर्दा मूर्तिको सौन्दर्यमा अलि कमी देखापरेको छ । तैपनि समष्टिरूपमा मूर्ति आकर्षक नै छ । विशेष गरी अलि टाढाबाट हेर्दा मूर्ति आकर्षक देखिन्छ । स्थापना मिति आदि निश्चित भएको हुँदा गोरखाभेकको मूर्तिकलाको विवेचनाप्रसंगमा यस मूर्तिको महत्त्व देखापर्छ ।

दाजु वीरभद्र शाहको मृत्युपछि गोरखाको गद्दीका हकवालाका रूपमा दावी गर्नेमा एक उद्योत शाह पनि थिए । गोरखावंशावली आदिमा यस कुराको चर्चा परेको छ ।[२] तर पछि युवराज वीरभद्र शाहका छोरा नरभूपाल शाह गद्दीका हकवाला घोषित गरिएपछि उद्योत शाह

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६०८
२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६०४

असन्तुष्ट भएथे। केही काल उद्योत शाह गोरखा छोडी अन्त पनि गएको देखिन्छ।[३] तर पछि उद्योत शाह गोरखामै आई रहन लागे भन्ने कुरा यस अभिलेखले देखाउँछ।

गणेश स्थापना गरी कुँदिएको यस अभिलेखमा एउटा अर्को उल्लेखनीय कुरा पनि कुँदिएको छ। त्यो हो, उद्योत शाहको नेपाल-उपत्यकाको यात्रा। गणेशस्थापना गरेको पाँच दिनपछि सो यात्रा गरिएको छ। यस नेपाल-यात्रालाई महत्त्व दिई अभिलेखमा समेत कुँदाइएको हुनाले यसको राजनैतिक महत्त्व रहेको देखिन्छ। तर कुन सिलसिलामा, के उद्देश्यले उद्योत शाहले नेपाल-उपत्यकाको यात्रा गरेका हुन्; सो मर्म खुल्न सकेको छैन।



३. गोरखा वंशावलीमा यस कुराको चर्चा यसरी गरिएको छ—

"वहाँदेषिन्...उद्योतसाह आफैले रजपूतै हुँ क्या होला तव भनि आफना रानिरनिवा छोराछोरि, चाकरवाकर सब लि निशाना षोलि नगरा ठोकि गरिड तरी पूर्व देशतिर लाग्दा भया"

'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६२६

[ १० संख्या ]

# नुवाकोटको नरभूपाल शाहको अभिलेख

नुवाकोट, तुप्चे गाउँ-पंचायतका श्रीसीतारामज्यूसँग रहेको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ वि. सं. १७९६ दिइएको छ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा'को २३ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधवि–
२. रुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्री–
३. श्रीश्रीमन्नरभूपालसाहदेवानां सदा समरविजयिनाम्–
४. आगे भगीरथ पाध्याके धाधिंग आफनु थायलक बदला सा–
५. हु गाव दिहल, संगी सात भाइ भतिजाक षतपत आफना अंवल–
६. भीत्र वितलप वकस भैल, आफना जीयक सर्कार एस वातका सा–
७. छी श्रीविष्णु कुमार साह श्रीकोडंडमल्ल श्रीचंद्रप्रकास साह
८. अनिरुद्र थापा जैसिंह राना रत्नमनि राना कालु पांडे लिखक साछी
९. मोक्षेश्वर जैसि इति संवत् १७९६ मार्गसिर वदि २ रोज ३ शुभम्

व्याख्या–

पृथ्वीपति शाहले पूर्वतिर बढ्न तिर्के कोशिश गरेका थिए भन्ने कुराको चर्चा माथि गरिसकेको छ। यस काममा उनलाई चिताएजति सफलता नमिले पनि यस उद्योगले गोरखामा राजनैतिक चल्तापूर्जापन, सैनिक योग्यतामा वृद्धि आदि गुणको विकास हुँदै गएथ्यो। यसो हुँदा पृथ्वीपति शाहको देहान्त-पछि उनका नाति नरभूपाल शाहको पालामा पनि पूर्वतिर बढ्ने प्रयास जारी रह्यो। यद्यपि नरभूपाल शाह गद्दीमा बस्दा उनका काका आदि असन्तुष्ट भई गोरखा छोडी यत्र-तत्र लागेथे। तर पछि उनीहरूलाई पनि बोलाई एक मतो गरी अगाडि बढ्ने प्रयास जारी गरियो।[१] पर्याप्त सैनिक शक्ति र आवश्यक धन आदिको अभाव हुँदा सोझै सैनिक कार्‍बाइद्वारा राज्यविस्तार गर्नु यस बेला सम्भव थिएन। यस कारण उपत्यकाका मल्लराजाहरू र पूर्वका सेन राजा आदिलाई गुहार दिई त्यताबाट लाभ उठाउने नीति पृथ्वीपति शाहले लिएका थिए। शुरूमा त्यही नीतिको अनुसरण नरभूपाल शाहले पनि गरे। कहिले भक्तपुरको, कहिले कान्तिपुरको र कहिले ललितपुरको मद्दतगारको रूपमा पूर्वतिरको काजमा गोरखा यस बेला पहिलेभन्दा बढी सक्रिय रह्यो। वंशावलीमा गोरखाका यस्ता गतिविधिको अनेक उल्लेख परेका छन्[२], उपत्यकाका मल्ल राजाहरूका सन्धिपत्र ताम्रपत्रहरूमा पनि यस कुराको उल्लेख पाइन्छ।[३]

वि. सं. १७९२मा कान्तिपुरका राजा जगज्जय मल्लको मृत्युपछि[४] जयप्रकाश मल्ल गद्दीमा बसे; अनि कान्तिपुरमा एक किसिमले गृहकलह देखापर्न थाल्यो। एक थरी भारादारले जयप्रकाश मल्ललाई राज्यच्युत गरी उनका भाइलाई गद्दीमा राख्ने चेष्टा गर्न थाले। यस अवस्थाबाट लाभ उठाई गोरखाले नुवाकोट कब्जा गर्ने विचार गर्न थाल्यो।[५] नुवाकोट गोरखा राज्यसँग सीमा जोडिएको प्रदेश मात्र थिएन; यो कब्जा गर्न सके आर्थिक लाभ पनि

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ.६२७–६२८

२. 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ५५–५६

३. 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ५२–५७

४. एक ठ्यासफुमा "सं. ८५६ माघ शु ६ जगज्जय अभाग" भन्ने उल्लेख पाइएको हुँदा जगज्जय मल्लको मृत्यु १७९२ माघमा भएको रहेछ भन्ने निश्चित भएको छ। 'पाञ्चालीशासनपद्धतिको ऐतिहासिक विवेचना' पृ. २४२

५. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ५६

निकै हुने हुनाले नुवाकोटमा गोरखालीहरूले आँखा गाड्नु स्वाभाविक थियो।[६] तर यस कापमा बाधा पनि अनेक थिए। गोरखा अगाडि बढ्यो कि लम्जुङले गोरखामा हमला गर्ने सम्भावना हुँदा पहिले लम्जुङलाई हात लिनु आवश्यक थियो। यसो हुँदा वि. सं. १७९६ माघमा गोरखाले लम्जुङसँग एक महत्त्वपूर्ण सम्झौता गऱ्यो।[७] त्यसमा गोरखाले "पूर्वको काम गर्नू" भन्ने अनुमति लम्जुङबाट प्राप्त गरिएको छ।

लम्जुङसँगको उपर्युक्त सम्झौता हुनुभन्दा दुइ महीनाअगाडि नरभूपाल शाहले भगीरथ उपाध्यायलाई यो ताम्रपत्र गरिबिएका हुन्। नुवाकोट तुप्चेमा पाइएको यस ताम्रपत्रबाट पनि नरभूपाल शाहले पूर्वतिर बढ्न प्रयास गर्न थालेको कुराको पुष्टि मिल्छ। अब गोरखाले आफ्नो सीमाक्षेत्र बढाउँदै लान थालेको र स्थानीय प्रभावशाली व्यक्तिलाई हात लिन थालेको कुरा यस ताम्रपत्रले देखाउँछ। यस ताम्रपत्रमा उल्लिखित भगीरथ उपाध्यायको विशेष परिचय पाउन सकिएको छैन तापनि यी भगीरथ उपाध्याय र उनका भाइभतिजाहरूलाई समेत हात लिन सुबिधा गरिदिइएको कुरा यस ताम्रपत्रमा परेको हुनाले उनीहरू सीमाक्षेत्रका प्रभावशाली व्यक्ति थिए भनी अनुमान गर्न सकिन्छ। यस ताम्रपत्रमा भगीरथ उपाध्यायलाई उनले खाईपाई आएको धादिङको जग्गाको सट्टा साहुगाउँको जग्गा मिलाइदिइएको कुरा परेको छ। साथै उनी र उनका सात भाइभतिजाहरूलाई पञ्चखतसम्बन्धी मुद्दाबाट उठ्ने रकम खान पाउने सुबिधा पनि गरिदिइएको छ। ब्राह्मणवर्गलाई यस किसिमको सुबिधा दिने प्रथा त्यस बेला प्रचलित थियो।

यस ताम्रपत्रको भाषा नेपाली नभएर मैथिली, अवधि मिश्रित रहेको छ। सेन राजाहरूले यस्तै भाषालाई राजभाषा बनाएका थिए।[८] त्यस बेला नेपालको मधेश, तराईभेकमा प्रचलित राजभाषा यस्तै किसिमको भाषा थियो। त्यतैको प्रभावबाट पहाडीभेकमा पनि लेनदेन आदिको व्यवहारमा त्यस भाषाको केही प्रभाव परेको देखिन्छ।

यस ताम्रपत्रमा परेका साक्षीहरू पनि उल्लेखनीय छन्। यिनमा कालु पाँडेचाहिँ पछि प्रसिद्ध हुन पुगे। अरूहरूको चाहिँ त्यति प्रसिद्धि फैलिन सकेन।



---

६. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७१
७. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६२९–६३२
८. महादत्तसेनले 'श्रीनगर' शहर बसाई वि. सं. १८४४ मा राख्न लाएको शिलालेखमा समेत यस्तै किसिमको भाषा प्रयोग गरिएको छ।
'पाञ्चाली शासनपद्धतिको ऐतिहासिक विवेचना' पृ. ७३–७४

[ ११ संख्या ]

# नरभूपाल शाहको अभिलेख

यो ताम्रपत्राभिलेख 'कैलाश' वर्ष १ अंक १ को ६ पृष्ठमा प्रो. म्याकडोनाल्डद्वारा प्रकाशित भएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि
२. विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमन्नरभूपाल–
३. साहदेवानां सदा समरविजयीनाम्–
४. आगे ह्लोपा लामाकन, नकथलिको घुम्बा कुशवृत्ति बकस भयो, धन जि–
५. यले सेवा गर्नु, क्षोड लामाकन बकस्याको जजमान सभै बकस भयो, थूंबन्
६. गोलजुङ चिर्लातिमा, पाजुङका षेत २ धुंवा गाउँ, गदलां, एति गाउंले या ला–
७. माले अह्लायाको सो काम गर्नु, मिति शंवत् १७९८ फाल्गुण वदि ५ रोज ७ शुभं ॥

व्याख्या–

नरभूपाल शाहका पालाका अहिले प्राप्त अभिलेखमा यो अभिलेख पछिल्लो हो। यसमा रसुवाभेकका लामालाई हात लिन नरभूपाल शाहले प्रयास गरेको कुरा परेको छ। यसबाट आफ्नो अन्तिम समयसम्म पनि नरभूपाल शाह गोरखा राज्यलाई बलियो पार्ने तथा विस्तृत पार्ने कोशिश केही मात्रामा गर्दै थिए भन्ने संकेत पाइन्छ।

यसभन्दा केही वर्ष अघिदेखि नै नरभूपाल शाहले नुवाकोट कब्जा गर्ने प्रयास गर्दै आएका थिए। यसमा उनी सफल भने हुन सकेका थिएनन्। तर नुवाकोटको मूल बस्तीमा अधिकार जमाउन सफल नभए पनि यस प्रयासबाट त्रिशूलीवारिका प्रदेशमा भने गोरखाको अधिकार जमेथ्यो; साथै रसुवाभेकका प्रदेशमा पनि गोरखाको अधिकार जम्न थालेको थियो भन्ने कुरा यस ताम्रपत्रबाट थाहा पाइन्छ। यस कारण गोरखाले पूर्वतिर बढ्न गरेको उद्योगलाई यस ताम्रपत्रले पनि केही झल्काउँछ।

राजनैतिक अवस्थाबाहेक तात्कालिक धार्मिक भावनालाई पनि यस ताम्रपत्रले केही मात्रामा झल्काउँछ। रसुवाभेकमा बौद्ध धर्मानुयायी लामाहरूका गुम्बा थिए। अन्य धर्मावलम्बीहरूलाई जस्तै लामामतका अनुयायीहरूलाई पनि प्रश्रय दिने नीति शाह राजाहरूले लिएथे। साथै गोरखा-दरबारमै पनि लामाहरूको उपस्थिति हुन्थ्यो भन्ने कुरा तात्कालिक कागतपत्रबाट थाहा पाइन्छ।[१] यस ताम्रपत्रमा ह्लोपा लामालाई नकथलीको गुम्बा दिँदा "कुशबिर्ता"को रूपमा दिइएको उल्लेख छ। साधारणतः ब्राह्मणहरूलाई बिर्ता दिँदा संकल्प गरी "कुशबिर्ता"को रूपमा दिने चलन थियो। लामाहरू पनि एकथरी वर्गका पुरोहित हुँदा ब्राह्मणसरी उनीहरूलाई पनि "कुशबिर्ता"को रूपमा बिर्ता दिइएको यो उदाहरण चाखलाग्दो छ।

यसरी बिर्ता दिँदा स्थानीय प्रशासनसम्बन्धी केही अधिकार पनि बिर्तावालले पाउँथे। बिर्ता जग्गाभित्रका बासिन्दाहरूलाई केही मात्रामा खटनपटन गर्ने, काम अह्राउने आदि अधिकार बिर्तावाललाई हुन्थ्यो। यसै हुँदा यस ताम्रपत्रमा "एति गाउँले लामाले अह्रायाको काम गर्नु" भन्ने उल्लेख परेको छ।

स्थानीय बासिन्दाहरूमा लामाको निकै प्रभाव रहने हुनाले र लामाहरू केही अंशमा धनी पनि हुने हुनाले परेको बखतमा लामाहरूले पनि सरकारलाई धनजनद्वारा मद्दत पुऱ्याउनुपर्दथ्यो। यस ताम्रपत्रमा "धन जियले सेवा गर्नु" भनी उक्त कुरालाई नै लक्ष्य गरिएको हो।

卐

१. 'गोरखाको ऐतिहासिक सामग्री' पृ. ३४–३५

[ १२ संख्या ]

# नुवाकोटको पृथ्वीनारायण शाहको अभिलेख

यो अभिलेख कुँदिएको ताम्रपत्र नुवाकोट माभिटारनिवासी रामबहादुर भाभीसँग रहेको छ। यसमा विक्रमसंवत् १८०२ दिइएको छ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा'को २४ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख प्रकाशित भएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामनि नरनारायनेत्यादि विविधविरुदावलि-विराजमान मानोन्नत

२. श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमन्नृपपृथ्वीनारायन शाहदेवानां सदा समरविजयीनां

३. आगे जलुवा माझिकन षिच्यातघाटका माझिको थानुमाहा बिर्त्ति गरि बकस भयो, पश्चीम-

४. को सांध थलादेषि उभो पाषो सिसन्यारि षोलाबोटो दक्षिन दिसा थला डांडाको पानि-

५. ढलो अकन्यासंम पूर्व गंडकि उत्तर हातिगौडाबोटो ,बड धंयाराको बोट अवलाको

६. बोट पिपलको बोट दवदव्याको बोट अवलाको बोट पिपलको बोट बाभनका सांध

७. माटाको ढिकुरो वार सिउंडधारि इसानतिर पानिढलो धोबिखोलो गंडक-
संम पा—

८. रि सिकुन्याघाटपरि बिर्त्ति भयो, पश्चिम दिशा सिवालिधारि उत्तर साजको
बोट दे—

९. विथान जान्या बाटो उधो पूर्वतिर तादिको ढिकरूमटासमेत तादिको सांध
हकुवा—

१०. टार छोडि डिलको सांध तेह्लौत्याका डिहिको सांध डिहिसुद्धा माझिका
पायाका

११. षेतसमेत पुंडोलको साध दक्षिन माझिको अंबल तावापत्र गरि बिर्त्ति भयो
भाका

१२. माझिको गर्नु सेवा वारिपारि गर्नु, सेवा छाड्या तावापत्र कांचो सेवा
गर्दै रह्या पाको

१३. इस बातक साछि विष्णु साहि कालु पांडे चंद्रप्रकास साह लक्षिमनारायन
पांडे भा—

१४. नु जैसि तुलाराम पांडे वंसु राना शिउराम वसन्यात सिह वानिञ्या लिषक
साछि वि—

१५. श्वामित्र जैसि इति संवत् १८०२ वैशाख वदि १२ शुभं——

व्याख्या—

नरभूपाल शाहको पालामा पनि पूर्वतिर बढ्ने प्रयास जारी रह्यो; कान्तिपुरमा गृहकलह भएको मौका छोपी उनले नुवाकोट कब्जा गर्ने उद्योग गरी एक पाइला अघि सारेथे भन्ने कुराको चर्चा माथि गरिसकेको छ। नुवाकोट जित्ने उद्योगमा नरभूपाल शाहले सफलता प्राप्त गर्न नसके पनि त्रिशूली सोंघुवारिसम्म गोरखाराज्यको विस्तार यसबाट भएथ्यो भन्ने कुराको संक्षिप्त चर्चा पनि माथि परिसकेको छ।

नरभूपाल शाहको मृत्युपछि श्री ५ पृथ्वीनारायण शाह गोरखाको गद्दीमा बसे। त्यस बेला उनी केही काम गरौं भन्ने उत्साह बढ्ने उमेरका (बीस वर्षका) युवक थिए।[१] आफ्ना

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३८९

पुस्तालि गर्दै आएको पूर्वतिर बढ्ने प्रयासबाट पृथ्वीनारायण शाहले पर्याप्त प्रेरणा पाएको देखिएको छ ।[२] सानै उमेरदेखि उनका कानमा यस्तै कुराहरू पर्न लागेथे । उनी प्रतिभाशाली र विजिगीषु प्रकृतिका हुनाले गद्दीमा बस्ने बित्तिकै पूर्वतिर बढ्ने प्रयासमा लागिहाले । शुरूमा उनको उद्देश्य गोरखा राज्यको विस्तार गर्नु मात्र थियो । तर पछि अगाडि बढ्दै गएपछि समयमै नेपालको एकीकरण नगरे नेपालको अस्तित्व नै खतरामा पर्ने कुरा उनले स्पष्ट देखे ।[३] यसो हुँदा ज्यादै होशियार र सतर्क भई उनी अगाडि बढे । मध्यकालको "गुहार-युगे राजनीति"लाई तोडेर नेपालको एकीकरण गर्ने योजना उनले बनाउन थाले[४] तथा एक टंकारसँग योजनाबद्ध रूपमा काम गरी उनले नेपालको एकीकरणको जग बसाले पनि ।

नुवाकोट-विजय नेपालको एकीकरण-अभियानको पहिलो खुड्किलो थियो ।[५] यसमा सफलता नमिलेको भए नेपालको एकीकरण गर्ने हौसला पृथ्वीनारायण शाहमा आउने थिएन । अर्को कुरा, नुवाकोट-विजय गर्न पृथ्वीनारायण शाहले धेरै कुरामा दृष्टि पुर्‍याउनुपरेको थियो । प्रस्तुत अभिलेखको महत्त्व बुझ्न पृथ्वीनारायण शाहले नुवाकोट-विजय कसरी गरे भन्ने कुराको अलिकति चर्चा गर्नुपरेको छ ।

गद्दीमा बस्नेबित्तिकै पृथ्वीनारायण शाहले नुवाकोटमा आक्रमण गर्न लाएका थिए । तर यो आक्रमण सफल भएन । नुवाकोट गढ फुट्न नपाउँदै उपत्यकाका तीनै मल्ल-राज्यको संयुक्त सेना मद्दतको लागि आइपुगेकोले गोरखाली फौजले त्यस बेला पछि हट्नुपरेको थियो ।[६]

यस असफलताबाट पृथ्वीनारायण शाहले राम्ररी शिक्षा लिए । पहिलेका भूलहरू नदोह-रिऊन् भनी उनले योजनाबद्ध रूपमा काम गर्न थाले । उपत्यकाका तीन मल्ल राजाहरूको संयुक्त सैन्यको मुकाबिला गर्नु पर्दा गाह्रो भएको अनुभव हुँदा पृथ्वीनारायण शाहले पहिले यस कुरामा दृष्टि दिए । वि. सं. १८०१मा दोस्रो पटक आक्रमण गर्न तयारी गरिएताका कान्तिपुर र ललितपुरको त वैमनस्य हुन थालेको मौका थियो । यस कारण गोरखाले नुवा-

---

२. 'गोरखाको पूर्वतिर बढ्ने उद्योग' मधुपर्क, वर्ष २, अंक ८, पृ. ३३

३. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ५८

४. 'गुहारयुग र श्री ५ पृथ्वीनारायण शाह' मधुपर्क वर्ष २, अंक ११, पृ. ६८–८०

५. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६८

६. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ५८
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६७२–६७३

कोटमा आक्रमण गरे कान्तिपुरलाई गुहार दिन ललितपुर नआाउने निश्चित थियो।[७] अब रह्यो भक्तपुरको कुरा। यसका लागि पृथ्वीनारायण शाहले राम्रो कूटनीतिको प्रयोग गरे। भक्तपुरका राजा रणजित् मल्ल आफ्ना "मीतबाबा" हुनाले यस मित्रसम्बन्धले गर्दा भक्तपुरसँग पृथ्वीनारायण शाहको घनिष्ठता छँदै थियो।[८] यसो हुँदा भक्तपुरसँग सम्बन्ध जोड्न पुग्नु कुनै गाह्रो थिएन। साँखु, चाँगु महादेवपोखरी, नालदूम आदि प्रदेश भक्तपुरलाई पाइक पर्दथे। व्यापारिक दृष्टिले र बाटोघाटोको दृष्टिले महत्त्वपूर्ण ती प्रदेश कान्तिपुर राज्य अन्तर्गत थिए। यसो हुनाले पृथ्वीनारायण शाहले साँखु, चाँगु महादेवपोखरी, नालदूम, दोलखा आदि प्रदेश कान्तिपुरबाट खोसी भक्तपुरलाई दिलाई दिने प्रलोभन रणजित् मल्ललाई देखाए।[९] गुहारयुगे राजनीतिमा फसेका रणजित् मल्लले पृथ्वीनारायण शाहको योजनाको भेउ पाउन सकेनन् र उपर्युक्त प्रदेश पाउने लोभले गर्दा गोरखाले नुवाकोटमा आक्रमण गरे कान्तिपुरलाई गुहार दिन भक्तपुर नआाउने कुरा उनले मञ्जूर गरे।[१०] यता लम्जुङलाई पनि हात लिइसकेको थियो। यसरी कान्तिपुरलाई एकलो पार्ने प्रबन्ध मिलाइयो।

यसरी बाह्य राजनैतिक सन्तुलन मिलाइसकेपछि आवश्यक आन्तरिक कुरामा पनि पृथ्वीनारायण शाहले ध्यान दिए। युद्ध सञ्चालन गर्दा भएको पहिलेको त्रुटि, अभाव अब हुन नदिने कुरामा उनी सावधान रहे। नुवाकोट गढरूपको बलियो प्रदेश हुँदा तलबाट सोझै उकालो चढी आक्रमण गर्दा आक्रमण गर्नेलाई गाह्रो पर्ने र प्रत्याक्रमण गर्नेलाई माथिबाट तल अस्त्र आदिको प्रहार गर्न सुविधा हुन्थ्यो। अर्को कुरा, त्रिशूलीको साँघु तरी गोरखाली सैन्य अघि बढेको कुरा नुवाकोटेबाट गुप्त रहन पाउँदैनथ्यो; गोरखाली सैन्य अघि बढेको सूचना बेलैमा पाएका हुँदा नुवाकोटेहरूले बन्दोबस्त गर्ने मौका पाउँथे तथा कान्तिपुरबाट मद्दत आइपुग्थ्यो। पहिलेका नुवाकोट-आक्रमण असफल हुनामा यो पनि एक कारण रहेको थियो।[११]

---

७. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६०

८. श्री ५ पृथ्वीनारायण शाहले नीलकण्ठ जोशीलाई लेखेको एक पत्रमा "एकाद महिना मितबाबाको बाटो पनि हेर्नैपर्‍यो" भनी रणजित् मल्ललाई "मीतबाबा" भनिएको छ। वंशावलीमा पनि उक्त कुरा परेको छ।
'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ६९–७०

९. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ४३
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ९३४–९३७

१०. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६१

११. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६१–६२

दोस्रो पटक पृथ्वीनारायण शाहले नुवाकोटमा आक्रमण गर्दा पहिलेको मूल दोहऱ्याएनन् । यस पटक नुवाकोटमा आक्रमण गर्दा गोरखाली सैन्य पुरानो बाटो गएनन्; शुभाघाटबाट त्रिशूली तरी सुटुक्क महामण्डल उक्ली त्यताबाट नुवाकोटमा आक्रमण गरियो । यसो गर्दा गोरखाली सैन्यको हात माथि पऱ्यो । यस आक्रमणको सुइँको नुवाकोटेहरूले पहिले नै पाउन सकेनन् र यो पनि नुवाकोट-विजयको कारणमध्ये पर्न आयो ।[१२]

शुभाघाट इन्द्रायणीघाटभन्दा अलि उत्तरतिर पर्छ । महामण्डलको डाँडाले छेकेको हुँदा शुभाघाटतिरको दृश्य नुवाकोटको मूल बस्तीबाट देखिँदैन । यसो हुँदा त्रिशूली तर्न यस पटक पृथ्वीनारायण शाहले "शुभाघाट"लाई रोजेका हुन् । यताबाट महामण्डल उक्लन सजिलो पनि थियो । फेरि इन्द्रायणीघाटतिर जप-पाठ गर्न पृथ्वीनारायण शाह पहिले पनि बराबर जान्थे । "दिव्य उपदेश"मा यो कुरा "वेत्रावतिका वेनि इन्द्रायेनि थानमा डुंगा तरि जप पाठ लाई जान्थ्यां" भनी पृथ्वीनारायण शाहले बोलेका छन् ।[१३] यसो हुँदा नुवाकोटका उमराहरूले पृथ्वीनारायण शाहको नयाँ गतिविधिउपर विशेष दृष्टि दिनु आवश्यक नसंझेको बुझिन्छ; यसलाई धार्मिक कुरा मात्र संझेको बुझिन्छ । तर यो पनि पृथ्वीनारायण शाहको एक योजनाबद्ध प्रयोग थियो । यस दृष्टिले शुभाघाटको पनि केही ऐतिहासिक महत्त्व रहेको स्पष्ट छ ।[१४]

पृथ्वीनारायण शाहले नुवाकोटमा दोस्रो आक्रमण आश्विनको शुरुतिर गरेका थिए ।[१५] त्यस वेलासम्म त्रिशूलीको जलवेग ठूलै थियो । त्रिशूली त्यसै तर्न सकिँदैनथ्यो । यस कारण त्रिशूली तर्न डुंगाको आवश्यकता पऱ्यो । त्यो पनि शत्रुपक्षले सुइँको नपाउने गरी रातारात गरी डुंगा तयार गर्नुपर्ने भयो । यस काममा पृथ्वीनारायण शाहलाई जलुवा माझीले बखतमा ठूलो मद्दत गरे । उनले कसैले सुइँको नपाउने गरी रातारात गरी आवश्यक डुंगा तयार गरी दिए र गोरखाली सैन्य साइतभित्रै त्रिशूली तरी अगाडि बढ्न सफल भए ।[१६] जलुवा माझीको यस पुरुषार्थको वर्णन वंशावलीमा परेको छ । नुवाकोटका बुढापाकाहरू पनि जलुवा माझीको कार्यकुशलताको चर्चा अझै गर्दछन् । 'पृथ्वीन्द्रवर्णोदय' काव्यमा पनि यस

---

१२. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६३

१३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३२०

१४. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६३

१५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ७२०–७२१

१६. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६३–६४

कुराको वर्णन परेको छ । यद्यपि त्यसमा जलुवा माझीको नामोल्लेख छैन । तैपनि छिटोछिटो बनाइएका डुंगाहरूद्वारा त्रिशूली तरी गोरखाली सैन्य अगाडि बढेको उल्लेख त्यसमा परेको छ । त्यसमा नुवाकोट आक्रमणको वर्णन गर्दा "उत्तीर्यात्मकृताभिराशु तरिभिर्गङ्गां त्रिशूलोद्भवाम्" भनी लेखिएको छ ।[१७] यसबाट त्रिशूली तर्दा गोरखाली सैन्यले डुङ्गाहरूको प्रयोग गरेथ्यो; त्यो काम पनि छिटोछरितो रूपमा पूरा गरिएथ्यो भन्ने थाहा पाइन्छ । सो वर्णनले अलि अस्पष्ट रूपमा भए पनि जलुवा माझीको पुरुषार्थलाई संझाइरहेको छ ।

जलुवा माझीको यसै कार्यकुशलताबाट रिझी पृथ्वीनारायण शाहले उनलाई विर्ता दिई यो ताम्रपत्र गरिदिएका हुन् । यहाँ चार किल्ला खोली दिइएको जुन विर्तामध्ये एक खण्ड "माझिटार" नामले अझै प्रख्यात छ । यसरी विर्ता दिँदा यहाँ पृथ्वीनारायण शाहले लिएको नीति निकै उल्लेखनीय रहेको छ । सामाजिक र जनजीवनका अरू आवश्यक काम कुराहरू राम्ररी चलून् भन्ने उद्देश्यले उहिले विर्ताप्रथाको जन्म भएको हो । दूरदर्शी शासकहरू पछिसम्म पनि विर्ता दिँदा यस कुराको ध्यान राख्तथे । यहाँ पनि पृथ्वीनारायण शाहले जलुवा माझीलाई विर्ता दिँदा सामाजिक हितको पनि ध्यान राखेका छन् । सो सामाजिक हित हो, नदी तर्ने कुरामा जनतालाई सुबिधा होस् भन्ने । यहाँ जलुवा माझीलाई विर्ता दिँदा जनतालाई खोला वारपार गराउने जिम्मेवारी वहन गर्नुपर्ने शर्त राखिएको छ । केही गरी जलुवा माझी र तिनका वंशजले सो शर्त पूरा नगरेमा विर्ता स्थायी नहुने कुरा यस ताम्रपत्रमा "भाका माझिको गर्नु सेवा वारि पारि गर्नु सेवा छाड्या तावापत्र कांचो, सेवा गर्दै रह्या पाको" भनी स्पष्ट शब्दमा किटान गरिएको छ । यसरी कुनै कार्यविशेषले रिझी विर्ता दिँदा पनि त्यसबाट जनताको हित पनि पछिसम्म हुँदै रहोस् भन्ने कुरामा पृथ्वीनारायण शाहको दृष्टि पुगेको यसबाट स्पष्ट देखिन्छ । पृथ्वीनारायण शाहको यस नीतिको झलक उनका अरू पत्रबाट पनि पाइन्छ ।[१८]

पृथ्वीनारायण शाहले नुवाकोट-विजय वि. सं. १८०१ भाद्रतिर गरेका थिए । जलुवा माझीलाई विर्ता दिई यो ताम्रपत्र वि. सं. १८०२ वैशाखमा मात्र गरिदिइएको छ । यसबाट अब नुवाकोट-विजय दीगो भयो भन्ने भावना दृढ भएपछि मात्र यो ताम्रपत्र गरिदिइएको बुझिन्छ ।

यस ताम्रपत्रमा साक्षी बस्ने भारावारहरूको नामावलीतिर दृष्टि दिँदा अब नयाँ चेहराहरू पनि देखापर्न थाले; योग्यताको कदर गरी युवक भारावारहरूलाई पनि अघि बढाउने काम

१७. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६४

१८. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६७८–६८०

पृथ्वीनारायण शाहले गरे भन्ने संकेत पाइन्छ । यिनमा केहीले नेपालको एकीकरण गर्ने कार्यमा उल्लेखनीय योगदान पनि दिएथे ।

यसरी जलुवा माझीलाई बिर्ता दिई गरिएको ताम्रपत्र भए पनि यसले तात्कालिक अनेक कुरामा प्रकाश पारेको छ । अर्को कुरा, अहिलेसम्म पाइएका पृथ्वीनारायण शाहका अभिलेख (शिलापत्र, ताम्रपत्र आदि)मा पहिलो यही नै हो । यस कारण राष्ट्रनिर्माता पृथ्वीनारायण शाहको गतिविधिलाई केही अंशमा भए पनि प्रामाणिक रूपमा औँल्याउने यस ताम्रपत्रको महत्त्व निर्के छ भन्ने स्पष्ट छ ।

卐

[ १३ संख्या ]

# देवीघाटको पृथ्वीनारायण शाहको पालाको अभिलेख

नुवाकोट देवीघाट त्रिशूलीपारि भैरवेश महादेवस्थान रहेको छ। त्यहाँ यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यहाँ शकसंवत् १६७४ दिइएको छ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा'को २४–२५ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख छापिएको छ। 'अभिलेख-माला'मा पनि यो छापिएको छ।

## मूलपाठ

१. श्रीशिवो विजयते ॥ ॥ शाके वेदागतर्कामृतकिरणमिते
२. १६७४ ज्येष्ठमासेऽब्जवारे नक्षत्रे सोमदैवे कमलजनिपतौ सत्ति—
३. थौ शुक्लपक्षे ॥ विख्याते भूमिलोके निजभुजविभवोद्धूतभूतारिव—
४. र्गे पृथ्वीनारायणाख्यक्षितिपकुलमणौ शासति क्षोणिपालान् ॥१॥
५. आत्रेयान्वयसारसव्रजरविर्नक्षत्रविद्यान्तगो विप्रः श्रीजमदग्निर—
६. ग्निसदृशो गोर्षानिवासी कृती ॥ तत्पुत्रो गणकाग्रणीर्नृपकुलैः सम्मा—
७. नितो ऽतिष्ठिपद् भानुर्विप्रवरस्त्रिशूलसरितः श्रीभैरवेशं तटे ॥२॥ क्षे—
८. त्रं विंशतिमुरिकं निहितं देवालयस्य रक्षायै ॥ धर्मद्रवातट—
९. स्थं शिवस्वमेतन्न कस्यापि ॥३॥ यो नित्यमस्य परिलेपनमा—
१०. र्जनादि देवालयस्य कुरुतेऽनिशमत्र विप्रः लिंगाभिषेच—
११. (न)मपीह षडंगमंत्रैः क्षेत्रं प्रदेयमवनीपतिनापि तस्मै
१२. ॥ ॥ क्षेत्रं सागरिकं नाम पञ्चाशन्मुरिसम्मितम्। तद्दैव—

१३. —— क विप्रस्य रक्षणीयं तु भूभुजा ।।५।। देवालयचतुर्दिक्षु पं–
१४. (चा)शद्ध स्तसम्मिता ।। न कर्षणीया सा भूमिरंगणं भैरवेशितुः
१५. ।।६।। न करोति पूर्वमुक्तं स महापापी शिवस्वचौरोपि ।। परि–
१६. ......नंतु सर्वं कुर्यादितन्महीपालः ।।७।। गंगायै नमः ।।

## अनुवाद

श्रीमहादेव विजयी भई रहनुभएको छ। शकसंवत् १६७४ ( वि. सं. १८०९ ) ज्येष्ठ शुक्ल द्वितीया सोमवार मृगशिरा नक्षत्रमा, पृथ्वीमा प्रख्यात भएका, आफ्नो बाहुबलले शत्रुहरूलाई सखाप पारेका, राजाहरूमा शिरोमणि भएका पृथ्वीनारायण शाहले अरू राजालाई काबुमा ल्याई शासन गरिरहनुभएको बेलामा ।।१।।

आत्रेय कुलमा जन्मेका ज्योतिष विद्यामा पारंगत भएका आगोजस्ता तेजिला विद्वान् ब्राह्मण श्रीजमदग्नि गोरखामा हुनुहुन्थ्यो। उहाँका छोरा ज्योतिषीहरूमा श्रेष्ठ भएका, राजपरिवारले सन्मान गरिएका असल ब्राह्मण भानु ( अर्ज्याल )ले त्रिशूली नदीको किनारामा "श्रीभैरवेश" महादेवलाई स्थापना गरे ।।२।।

यस शिवालयको हेरचाहको लागि धर्मद्रवा (दरौँदी)को किनारमा रहेको बीस मुरी खेत गुठी राखियो। महादेवलाई चढाइएको यस जग्गामा कसैको हक लाग्दैन ।।३।।

जुन ब्राह्मणले यहाँ शिवालयमा नित्य सफा सुग्घर गर्नु, शिवलिंगमा चन्दन लिप्नु, षडङ्ग मन्त्रद्वारा अभिषेक गर्नु आदि गर्छन्; तिनलाई राजाद्वारा यो खेत दिलाइदिनू ।।४।।

सागरिक भन्ने पचास मुरी खेत यी देवताका पुजारी ब्राह्मणलाई राजाद्वारा सुरक्षित रूपमा दिलाइदिनू ।।५।।

शिवालयको चारैतिर पचास हातसम्मका जमीनमा खनजोत नगर्नू; त्यस इलाकालाई "भैरवेश" महादेवको आँगनको रूपमा राख्नू ।।६।।

जसले माथि बताएअनुसार गर्दैन; त्यसलाई महापाप लाग्छ; त्यो महादेवको सम्पत्ति चोर्ने पनि ठहर्छ।......राजाबाट पनि यी सब कुरामा देखरेख होस् ।।७।।

गङ्गाजी (त्रिशूली गङ्गा)लाई नमस्कार।

व्याख्या—

गोरखामा शाहराज्य स्थापनामा नारायणदास अर्ज्याल, गणेश पाँडे, गंगाराम राना आदि अनेक व्यक्तिको योगदान थियो। यसैले उनीहरू गोरखाली भारादारीमा थर-घरका नामले संमानित गरिए।[1] अर्थात् उनीहरूले वंशानुगत रूपमा गोरखाली भारादारीमा स्थान पाए तथा आफ्नो तर्फबाट पछिसम्म पनि सक्दो योगदान पनि दिँदै रहे। तिनमा नारायणदास अर्ज्यालका वंशमा विद्वान्हरू पनि जन्मदै रहे। तिनीहरूले राजनैतिक क्षेत्रमा बाहेक गोरखाको सांस्कृतिक उत्थानमा पनि उल्लेखनीय भूमिका खेलेका थिए।

यो शिलालेख कुँदाउन लाउने भानु अर्ज्याल पनि नारायणदास अर्ज्यालकै वंशज हुन्। नारायणदास अर्ज्यालका साहिँला छोरा विष्णुदासपट्टिका सन्तान भानु अर्ज्याल हुन्।[2] भानु अर्ज्यालका बाबु जमदग्नि हुन्। तिनको वर्णन यस अभिलेखमा पनि गरिएको छ। गोरखादरबारमा ज्योतिषीका रूपमा जमदग्निको पनि प्रतिष्ठा निकै थियो।[3] उनका छोरा भानु अर्ज्यालले चाहिँ आफ्ना पितालाई पनि त्यस कुरामा उछिनेका छन्। पृथ्वीनारायण शाह महत्त्वाकांक्षी कर्मठ व्यक्ति हुँदा उनले थालेको एकीकरण अभियानले गर्दा गोरखाली भारादारहरूमध्ये धेरैलाई अगाडि बढ्ने मौका दियो। तिनमध्ये एक भानु अर्ज्याल पनि हुन्। त्यसताका साइत नहेरीकन कुनै पनि कार्यको थालनी हुँदैनथ्यो। पृथ्वीनारायण शाहको पालामा ख्याति पाएका ज्योतिषीमा एक भानु अर्ज्याल पनि हुन्। भानु अर्ज्याल शुरूदेखि नै पृथ्वीनारायण शाहका साथमा थिए। पृथ्वीनारायण शाहको हातबाट नेपालको एकीकरण हुन सक्छ भनी भानु अर्ज्यालहरूले भविष्यवाणी गरी उनको हौसला बढाइदिएका हुँदा पृथ्वीनारायण शाहले यस कुराको संझना "दिव्य उपदेश"मा गर्व र आदरसाथ गरेका छन्।[4] त्यस प्रसंगमा उल्लिखित "हाम्रा हातमा पनि सरस्वतीको वरदान छ" भन्ने वाक्यले भानु अर्ज्याललाई आफ्नो पढाइमा आत्मविश्वास रहेको झल्कन्छ। शायद भानु अर्ज्यालको यस अभिलेखका पद्यको रचना उनैले गरेको हुनुपर्दछ। त्यसो हो भने ज्यौतिष शास्त्रमा बाहेक संस्कृत पद्य रचनामा समेत उनको दखल भएको कुरा यसले औंल्याउँछ। जे होस्; भानु अर्ज्याल पृथ्वी-

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५६५

२. संग्रहशील पं. दण्डपाणि अर्यालज्यूबाट उक्त कुरा थाहा पाइएको हो। 'उहाँले अर्ज्याल वंशावली' तयार पार्नु भएको छ।

३. यस कुराको संकेत यसै अभिलेखबाट पनि पाइन्छ।

४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१६

नारायण शाहका पालाका ख्यातिप्राप्त ज्योतिषी हुन् भन्ने कुरा निश्चित छ । माथि गएको अलुवा माभीलाई पृथ्वीनारायण शाहले गरिदिएको वि. सं. १८०२को ताम्रपत्रमा साक्षी बस्ने भारादारहरूमा यी भानु अर्ज्याल पनि छन् ।

नुवाकोट इलाकाको "देवीघाट" नेपालको प्रख्यात धार्मिक क्षेत्रमध्ये पर्दछ । यो तीर्थस्थल तादी र त्रिशूलीको संगममा रहेको छ । नेपालका ६४ प्रसिद्ध शिवलिंगमध्येको एक "भैरवेश्वर" यहीँ रहेको छ । यसरी यो क्षेत्रको प्रसिद्धि निकै रहेको छ । यहाँ हुने "देवीजात्रा" निकै प्रसिद्ध छ ।[५]

नुवाकोटमा आफ्नो विजय दीगो भएपछि अब पूर्वतिर बढ्न सुविधाजनक हुँदा पृथ्वी-नारायण शाहले नुवाकोटलाई आफ्नो राजधानी नै बनाएका थिए ।[६] अनि करीब पच्चीस वर्ष जति नुवाकोटले राजधानी हुने मौका पाई नै रह्यो । यसरी राजाको मुकाम नुवाकोटमा हुन थालेपछि भाइभारादारहरूको पनि बसाइँ यतै हुनु स्वाभाविक थियो । यस प्रसंगमा नुवाकोट भेकमा नयाँ भवनहरू बन्नाको साथसाथै देवमन्दिर आदि पनि निकै बनेको पाइन्छ ।[७] भानु अर्ज्यालले देवीघाट, त्रिशूलीपारि शिवलिंग स्थापना गरी त्यसका लागि गुठी राखिदिनु पनि सोही सिलसिलामा भएको देखिन्छ ।

यस अभिलेखको शुरूमा पृथ्वीनारायण शाहको वर्णन परेको छ । यो शिलालेख राखिए ताकासम्म (वि. सं. १८०९सम्म) पृथ्वीनारायण शाहले गोरखाराज्यको विस्तार धेरै गर्न सकेका थिएनन् । तैपनि जसरी सक्रिय रूपमा अगाडि बढ्दै थिए; त्यसले गर्दा उनको ख्याति फैलिन थालेको थियो । यस कुराको संकेत यस अभिलेखबाट पनि पाइन्छ ।

पृथ्वीनारायण शाहको दरबारमा भानु अर्ज्यालले जुन सम्मान पाएका थिए, त्यसको झलक पनि यस अभिलेखबाट पाइन्छ । आफूले स्थापना गरेका शिवको पूजाआजाको लागि भानु अर्ज्यालले जुन गुठी राखेका छन्, त्यसको रक्षा राजाबाट होस् भन्ने अभिप्राय यस अभि-लेखमा व्यक्त गरिएको छ । साथै यस शिवमन्दिरमा नित्यपूजा गर्ने ब्राह्मणको नियुक्ति पनि राजाबाट होस् भनी यहाँ लेखिएको छ । यस कुराबाट पनि भानु अर्ज्यालको राजदरबारमा कत्रो प्रतिष्ठा रहेछ भन्ने संकेत पाइन्छ ।

भानु अर्ज्यालले स्थापना गरेको यो शिवमन्दिर हाल पनि छँदै छ । तर उनले चिताए-जस्तो मन्दिरको व्यवस्था कायम रहेको भने हाल देखापर्दैन । 卐

---

५. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. १०३–११०

६. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७०

७. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७४–७७

[ १४ संख्या ]

# नुवाकोटको पृथ्वीनारायण शाह्को अभिलेख

नुवाकोट भैरवमन्दिरभित्र निकै घण्टाहरू झुण्ड्याइएका छन् । तीमध्ये एउटामा यो अभिलेख कुँदिएको छ । यहाँ विक्रमसंवत् १८१६ दिइएको छ ।

'नुवाकोटको ऐतिहासिक रुपरेखा'को २६ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो छापिएको छ । 'अभिलेखमाला'मा पनि यो छापिएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराज–

२. श्रीश्रीश्रीमत्पृथ्वीनारायणसाहसमर्पितेयं घंटा संवत् १८१६ वैशाख वदि ६ रोज ४ शुभम्

## अनुवाद

स्वस्ति, पहाडी राजाहरूमा शिरोमणि, नरनारायण इत्यादि अनेक प्रशस्तिले सुहाएका, ठूलो इज्जत भएका श्रीमहाराज श्रीश्रीश्रीपृथ्वीनारायण शाहद्वारा यो घण्टा चढाइएको हो ।

वि. सं. १८१६ वैशाख कृष्ण षष्ठी बुधवार । शुभ होस् ।

आस्थामा—

देवदेवतामा, सिद्धहरूमा पृथ्वीनारायण शाहको भित्रैदेखि श्रद्धा रहेको थियो । स्वयं उनी पनि जप, पाठमा संलग्न रहन्थे ।[१] यसो हो तापनि उनका धार्मिक कृतिहरू त्यति धेरै प्राप्त हुन्न् । उनी सर्वात्मना एकीकरण अभियानमा व्यस्त रहेका हुनाले एक त उनलाई फुर्सद पनि कम थियो; दोस्रो एकीकरण अभियानमा लाग्दा उनलाई आर्थिक खाँचो पनि बढी नै रहेको थियो । यसो हुँदा अरू शासकहरूले जस्तै नयाँ-नयाँ देवमन्दिर आदि निर्माण गराउन उनले सकेका थिएनन् ।[२] अर्को कुरा, अघिदेखि प्रतिष्ठित अनेक देव-देवताहरू हाम्रो यहाँ प्रशस्त हुँदा नयाँ देवताको स्थापना आदिको आवश्यकता पनि पृथ्वीनारायण शाहले त्यति अनुभव नगरेको बुझिन्छ । अघिदेखि प्रतिष्ठित देव-देवताको श्रद्धासाथ दर्शन-पूजन गर्ने, गुठी राख्ने, अरू कुनै कृति राख्ने काम भने पृथ्वीनारायण शाहले अनेक गरेका छन् ।

नुवाकोटका भैरव-भैरवी पनि निकै अघिदेखि प्रतिष्ठित थिए । वि. सं. १८०१मा पृथ्वीनारायण शाहले नुवाकोट-विजय गरेपछि उनले तत्काल यी भैरवको दर्शन गरेका थिए । यी भैरवको अघिदेखिको जात्रा, पूजाआजा जुन प्रचलित थिए, तिनलाई पृथ्वीनारायण शाहले साबिकबमोजिम नै चल्न दिएका थिए । नुवाकोट भैरव-भैरवीको जात्रामा संकल्प खुद राजाले नै गर्नुपर्ने चलन थियो; त्यसमा पृथ्वीनारायण शाह स्वयं संलग्न रहेथे ।[३] कान्तिपुर-विजयपछि राजधानी कान्तिपुरमा सर्दा नुवाकोटको अघिदेखि प्रचलित विधिविधान टुट्न नपाओस् भनी उनले नुवाकोटमा आफ्ना विशेष प्रतिनिधि नियुक्त गर्ने परम्परा चलाएथे ।

इत्यादि कुराबाट नुवाकोट भैरव-भैरवीमा पृथ्वीनारायण शाहको श्रद्धा भक्ति थियो भन्ने देखिन्छ । त्यस कुराको पुष्टि नुवाकोट-भैरवलाई वि.सं. १८१६मा घण्टा चढाएको यस उदाहरणबाट पनि हुन्छ । वि.सं. १८१४मा कीर्तिपुर युद्धमा हार भएपछि फेरि उठ्न पृथ्वी-

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१९–३२०

२. गोरखा, दरौंदीको किनारमा पृथ्वीनारायण शाहले शिवलिङ्ग स्थापना गरेको उल्लेख शक्तिवल्लभ अर्ज्यालको 'जयरत्नाकर नाटक'मा गरिएको छ । गोरखाभेकको सर्वेक्षणमा जाँदा हामीले उक्त शिवलिङ्ग पत्ता लाउने प्रयास गरेका थियौं; तर सफलता मिलेको थिएन । हालै गोरखानिवासी दीपबहादुर बस्नेतले उक्त शिवलिङ्ग पत्ता लागेको छ; हेर्न आउनू भनी हामीलाई पत्र लेख्नुभएको छ । यस विषयमा छानबीन भने गर्न पाइएको छैन ।

३. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. १०९

नारायण शाहलाई केही समय लागेको थियो । त्यसै कष्टको बेलामा पृथ्वीनारायण शाहले नुवाकोट भैरवलाई घण्टा चढाउने संकल्प गरेको बुझिन्छ । वि. सं. १८१६ देखि पृथ्वीनारायण शाहले फेरि अभियान चलाएथे । यस साल आषाढमा उनले शिवपुरी-दखल गरेथे, काभ्रे पनि यसै साल उनले विजय गरेथे ।[४] यसरी वि. सं. १८१६को शुरूमा नुवाकोट-भैरवलाई घण्टा चढाएर पूजाआजा गरेर मात्र उनी फेरि अगाडि बढेको देखापरेको छ । पृथ्वीनारायण शाहका अरू धार्मिक कृतिहरू राख्नामा पनि यस्तै पृष्ठभूमि रहेको हामी पाउँछौं ।



४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५२१

[ १५ संख्या ]

# नुवाकोटको पृथ्वीनारायण शाहको पालाको अभिलेख

नुवाकोटको भैरव-मन्दिरमा धेरै ताम्रपत्रहरू टाँसिएका छन् । तीमध्ये एउटामा यो अभिलेख कुँदिएको छ । यहाँ शकसंवत् १६८१ दिइएको छ ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा'को २६-२७ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख छापिएको छ ।

## मूलपाठ

१. श्रीभैरव्यै नमः ।। ।। श्रीशाके भूगजनृपमिते गां गतेर्के नवम्यां पृथ्वीनारायण इति महीमण्डले ख्या–

२. तनाम्नि ।। राजन्यस्यां पुरि सति पुरः पादमूले स्तवं ते कृत्वा भक्त्या– र्पितवति मयि त्वं प्रसीदाशु मा–

३. तः ।।१।। वंद्या वृन्दैर्देवतानां मुनीनां योगीन्द्राणां वा नृणां वासुराणां ।। हृद्यैः पद्यैः किन्नरैः संस्तु–

४. ता वा मामीशाना भैरवी पातु नित्यं ।।१।। हृत्पद्मस्था भक्तिपूतात्मनां वा ध्याता लोकैरीप्सितप्रेप्सुभि–

५. र्वा ।। संतुष्टा वा भक्तिनीतोपहारैर्मा. ।।२।। माता स्माता सज्जनानां नितांतं घोरा व्याघ्री सैव दौरात्म्यभा–

६. जां आशूद्धर्त्री ध्यायतां पादपद्मं मा. ।। भक्त्या भक्ताभीष्टदा सुप्रसन्ना घ्नंती मूलं वीक्ष्य दुष्टात्मनां वा ।।

७. सालङ्कारा सायुधा सानुकंपा मा. ।।४।। काले काले भूतये सज्जनाना–
मन्यान्हंतुं लीलयाविर्भवंती ।।

८. ज्ञाताज्ञातात्पश्यतोघात्पुनाना मा. ।।५।। आदौ विश्वं लीलया वा सृजंती
पांती मध्ये संहरंती तथांत्ये ।। ना–

९. नाशक्तिर्भक्तिगम्यांघ्रिपद्मा मां. ।।६।। भुंजानं वा स्वादु तल्पे शयानं
गच्छंतं वैकाकिनं पथ्यरण्ये ।। यु–

१०. ध्यंतं वा संगरे विद्विषद्भिर्मा. ।।७।। दारिद्र्याद् वा कष्टतो व्याधितो वा
शोकान्मोहाद्वापदो वाहिताद् वा ।।

११. आरण्याद् वा ग्राम्यतो नाशतो वा मा. ।।८।। भैरवीपादमूलस्थो यः पठे-
त्प्रयतः स्तवं ।। लभेत स पुमा–

१२. नाशु मनसाभीप्सितं फलं ।।९।। इति कृत्वा स्तवं दिव्यं लक्ष्मणः कश्चन
द्विजः ।। पादमूले स भैरव्या

१३. भक्तितोर्पितवानिमं ।।१०।। इति श्रीलक्ष्मणोपाध्यायकृतं भैरवीस्तोत्रं
शुभं ।। ।।

## अनुवाद

श्रीभैरवीलाई नमस्कार । शकसंवत् १६८१ ( वि. सं. १८१६ ).............. नवमी, पृथ्वीमा नाउँ चलेका राजा पृथ्वीनारायण शाहले यस शहर ( नुवाकोट शहर )मा शासन चलाइरहनुभएको वेलामा, हजूरको पाउ सामुन्ने आई बनाइएको हजूरको स्तोत्र चढाउने ममा हे माई, हजूर प्रसन्न हुनुहोस् ।

देवता मुनि ठूला योगी मानिस वा दानवहरूले पनि ढोगिएको, किन्नरहरूले सुन्दर पद्य-हरूद्वारा स्तुति गरिएकी देवी भैरवीले मलाई सधैँ रक्षा गरून् ।।१।।

सज्जनहरूको लागि दयालु आमा जस्तै हुने, दुष्टहरूको लागि भयंकर बघिनी जस्तै हुने, पाउरूपी कमलको ध्यान गर्नेहरूलाई छिटो उद्धार गर्ने देवी भैरवीले मलाई सधैँ रक्षा गरून् ।।२।।

मन लाएर भक्ति गर्नेहरूलाई खुशीसाथ इच्छा पूरा गरिदिने, दुष्ट मन भएकाहरूको जरो उखेल्ने, अलंकार र आयुधसहितकी दयालु देवी भैरवीले मलाई सधैँ रक्षा गरून् ॥४॥

अक्षत-अक्षतमा सज्जनहरूको कल्याण गर्ने र दुष्टहरूको दमन गर्ने स्वेच्छाले प्रकट हुने भएकी, जानीजानी गरिएको पापबाट मुक्त पार्ने भएकी देवी भैरवीले मलाई सधैँ रक्षा गरून् ॥५॥

शुरूमा विश्वको सृष्टि गर्ने भएकी, बीचमा विश्वको स्थिति गर्ने भएकी तथा अन्त्यमा विश्वको संहार गर्ने भएकी, अनेक थरी शक्ति भएकी, भक्तिले पाउरूपी कमलको सेवा गर्न पाइने देवी भैरवीले मलाई सधैँ रक्षा गरून् ॥६॥

मीठो खान लागेको वा ओछ्यानमा सुत्न लागेको वा एक्लै बाटोमा जंगलमा गइरहेको वा लडाईँको मैदानमा शत्रुसँग लड्न लागेका मलाई देवी भैरवीले रक्षा गरून् ॥७॥

गरीबी, कष्ट, रोगव्याधि, शोक, मोह, आपत्ति, अहित कुरा, जंगली गाउँले पशु वा अरू नाश हुने कुराबाट मलाई देवी भैरवीले सधैँ रक्षा गरून्।

जसले हजूरको पाउनिर रही हजूरको यो स्तोत्र पाठ गर्ला; त्यो मानिसले मनले चिताएको कुरा छिटो पाउला ॥९॥

यसरी ब्राह्मण लक्ष्मणले दिव्य स्तोत्र बनाई यसलाई भैरवीकै पाउमा चढाए ॥१०॥
श्रीलक्ष्मण उपाध्यायले बनाएको भैरवीस्तोत्र सिद्धियो ॥ शुभ होस् ॥

व्याख्या—

आफ्ना अभीष्ट देवताप्रति भक्ति प्रकट गर्ने पद्धतिमा सम्बद्ध देवताको स्तोत्रपाठको पनि प्रमुख स्थान रहेको छ। त्यसमा पनि उक्त स्तोत्रको रचनासमेत आफैँले गर्न सकियो भने यसको महत्त्व अझ बढी मानिन्छ। यस्तो धारणा हुँदा हाम्रो यहाँ अभिलेखमा देवताको स्तोत्र कुँदाई राख्ने चलन पनि चलेको पाइन्छ। त्यस्तै चलनअनुसार यो स्तोत्ररूपको अभिलेख उपाध्याय ब्राह्मण लक्ष्मणले ताम्रपत्रमा कुँदाई नुवाकोट भैरवस्थानमा टाँस्न लाएका हुन्। यी लक्ष्मण उपाध्याय को हुन् भन्ने कुरा निश्चित रूपमा भन्न अलि गाह्रो छ। यस अभिलेखमा "उपाध्याय" "द्विज" भनेर सिवाय उनको अरू परिचय दिइएको छैन। तर यसो प्रसंग विचार गर्दा यी लक्ष्मण उपाध्याय 'कवितानिकषोपल'का रचयिता लक्ष्मण कवि नै हुन् भन्ने देखिन्छ।

पृथ्वीनारायण शाहका पालाका कवि लक्ष्मणले बनाएको 'कवितानिकषोपल' प्रकाशमा आइसकेको छ ।[१] यस स्तोत्रको उठानमा पृथ्वीनारायण शाहको उल्लेख गरिएको छ तथा यो स्तोत्र वि. सं. १८१६मा कुँदाइएको हो भन्ने पनि यसमा उल्लेख छ ।

नुवाकोटका मूलदेवता भैरव र उनको शक्ति भैरवी हुन् । त्यसैले यहाँ धामी र धमिनी दुवै हुन्छन् । मध्यकालमा साधारणतः नुवाकोटका भैरवीभन्दा भैरवको प्रख्याति अलि बढी रहेको देखिन्छ । तात्कालिक अभिलेखमा भैरवीको पनि उल्लेख पाइन्छ तापनि "भैरव"को उल्लेख बढी पाइन्छ ।[२] त्रिशूली गण्डकी नजीकका भैरव हुँदा "गण्डी भैरव" भनेर यी प्रख्यात थिए ।[३] शाहकालमा आएर भैरवभन्दा भैरवीको प्रचलन बढी हुन आएको पाइन्छ ।[४] यस अभिलेखमा पनि भैरवीलाई प्रमुखता दिई उनको स्तुति गरिएको छ । उठानमा पनि "श्रीभैरव्यै नमः" भनी लेखिएको छ तथा "मामीशाना भैरवी पातु नित्यं" भन्ने उक्ति प्रत्येक श्लोकको अन्त्य पाउमा पारिएको छ । यसबाट शक्तिरूपका देवताको मान्यता बढी हुन थालेको संकेत पाइन्छ । नुवाकोटको जात्राको विधानमा भैरवको प्रधानता रहेको छ तापनि यस जात्रालाई "देवीजात्रा" भन्ने नामकरण गरिएको छ ।

यस्ता स्तोत्रहरूमा भनिएका कुराहरू केलायौं भने भक्तहरू कस्ता-कस्ता कुरामा दैवी शक्तिको मद्दत चाहँदा रहन्छन् भन्ने रोचक कुरा पत्ता लाग्छ । यहाँ लक्ष्मण कविले व्यक्त गरेका कुरा प्रायः गरी यस्ता स्तोत्रमा हुने कुरा नै परेका छन् । तर एक दुइ कुरा भने अलि भिन्न प्रकारका पनि छन् । उदाहरणार्थ यस स्तोत्रको सातौं श्लोकलाई देखाउन सकिन्छ । "भुञ्जानं वा स्वादु तल्पे शयानं..." आदि उल्लिखित यस श्लोकमा "मीठो खाने कुरा खान लागेको, डसनामा आनन्दसँग सुत्न लागेको... मलाई देवी भैरवीले रक्षा गरून्" भन्ने प्रार्थना गरिएको छ । इवाट्ट हेर्दा मीठो खाने कुरा खान लागिरहेको, डसनामा आनन्दसँग सुत्न पाइरहेको मानिसलाई पनि किन रक्षा गर्नुपर्‍यो र भन्ने प्रश्न उठ्तछ । तर साधारण मानिसलाई नभए पनि राजकाजमा लागेका आदि मानिसलाई विषप्रयोग, षड्यन्त्र आदि हुने सम्भावना हुँदा मीठो खान पाउनु, आनन्दसँग डसनामा सुत्न पाउनु पनि मृत्युको कारण बन्न जान सक्छ । यस कारण यस्ता कुरामा पनि देवीलाई गुहार पर्ने खण्ड आउँछ । दरबारमा कहिले-कहीं घट्ने घटनाबाट प्रभावित भई कविले उक्त भाव व्यक्त गरेको देखिन्छ ।



---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ४७७–४८६
२. मध्यकालका अभिलेखतिर दृष्टि दियौं भने उक्त कुरा थाहा पाउँछौं ।
३. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ४,१४,१५,१८......
४. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. १४,१५,१८......
५. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. २६,३१,३५,३७,३६,४२,४४–४५

# नुवाकोटको पृथ्वीनारायण शाहको अभिलेख

[ १६ संख्या ]

नुवाकोट, साततले-दरबारको मूल ढोकाको शिरानमा यो अभिलेख कुँदिएको शिलापत्र टाँसिएको छ। यहाँ शकसंवत् १६८४ दिइएको छ।

यो अभिलेख सर्वप्रथम सूर्यविक्रम ज्ञवालीद्वारा 'पृथ्वीनारायण शाह'को परिशिष्टमा छापिएको हो। पछि अरूद्वारा पनि यो फेरि छापिएको छ। 'नुवाकोटको ऐतिहासिक रूपरेखा'को २८ पृष्ठमा हामीले पनि यो छपाएका छौं।

## मूलपाठ

१. ।। स्वस्ति श्रीगणेशाय नमः ।। ।। पारावारद्विरदधरणीनायकैः १६८४
२. सम्मितेब्दे राधे मासि त्रिदशगुरुणाऽधिष्ठिते मेषराशौ। नेपालेशान्स-
३. पदि विगताहङ्कृतींस्तान् विरच्य पृथ्वीनारायणनृपतिना निर्म्मितन्दुर्ग्ग-
४. रत्नम् ।।१।। त्रिविक्रमो नाम नरेन्द्रकेसरी त्रितुङ्गभूमीधरभूमिभूषणः।।
५. निबध्य येनायसपिञ्जरे हठान्निवेशितोऽनुग्रहतो विसर्ज्जितः ।।२।। शङ्कु-
६. रीयनगरीम्प्रतियाता शुल्कहारिषु विधित्सुरनिष्टम् ।। योवधीत्पथि तुरु-
७. ष्कनरेशान् तस्य को तु कथयेद् गुणचर्चाम् ।।३।। शुभम्भूयात् ।। ।।

## अनुवाद

कल्याण होस्। श्रीगणेशलाई नमस्कार। शकसंवत् १६८४ ( वि. सं. १८१९ ) वैशाख महीनामा बृहस्पति मेषराशिमा बसेको बेलामा, पृथ्वीनारायण शाहले नेपाल (उपत्यका)का राजाहरूको घमण्ड तोडी (यो) असल किल्ला (किल्लारूपको दरबार) बनाउनुभयो ।।१।।

जसले राजाहरूमा सिंहजस्ता तनहुँका राजा त्रिविक्रम ( सेन )लाई कैद गरी फलामको पिंजरामा हाल्नुभयो तथा पछि दया गरी छोडिदिनुभयो ॥२॥

जसले काशी जाँदा (काशी गएर फर्केर आउँदा) बाटोमा भन्सारचौकीमा अधिकारीहरूको भेख मार्ने इच्छाले मुसलमानी अधिकारीहरूलाई सिद्ध्याउनुभयो; त्यस्ता पृथ्वीनारायण शाहको गुणको वर्णन कसले गर्न सक्ला ॥३॥ शुभ होस् ॥

व्याख्या–

पृथ्वीनारायण शाहका उल्लेखनीय अभिलेखमध्ये एक यो पनि हो। नुवाकोट डाँडोमा किल्ला रूपको भव्य दरबार बनाउन लगाई वि.सं. १८१९मा पृथ्वीनारायण शाहले यो अभिलेख कुँदन लाएका हुन्। यस अभिलेखमा मुख्य गरी तीन कुरा व्यक्त गरिएका छन्। नेपाल-उपत्यकाका मल्ल राजाहरूको घमण्ड तोडेको, तनहुँका राजा त्रिविक्रम सेनलाई कैद गरी पछि दया गरी छोडिदिएको र काशी जाँदा ( काशी गई फर्केर आउँदा ) बाटोमा शुल्क लिन खोज्ने मुसलमानी अधिकारीहरूलाई मारेको। यी तीन कुरालाई यस अभिलेखमा पृथ्वीनारायण शाहको पुरुषार्थको रूपमा वर्णन गरिएको छ। नुवाकोटमा दरबार बनाउन लाई राखिएको यस अभिलेखमा उक्त कुराको वर्णन किन गरियो, ह्वाट्ट हेर्दा उक्त कुराको सम्बन्ध नुवाकोटसँग त्यति छैन कि भन्ने देखापर्छ। तर गहिरिएर विचार गर्‍यौं भने तीनै कुराको सम्बन्ध नुवाकोटसँग रहेको थियो भन्ने देखापर्छ।

नुवाकोट-विजय एक प्रदेशको विजय मात्र थिएन; यो नेपाल एकीकरणको पहिलो खुड्किलो थियो भन्ने कुरा माथि लेखिसकेको छ। कान्तिपुरका मल्ल राजाले नुवाकोट फिर्ता लिन कम प्रयास गरेका पनि होइनन्, नसकेरै मल्ल राजा यस कुरामा चूप लागी बसेका हुन्।[१] फेरि नुवाकोट-विजय हाँगो पार्न पृथ्वीनारायण शाहले अनेक कूटनीति खेल्नुपरेथ्यो।[२] यो अभिलेख राखिएको ताकासम्म पृथ्वीनारायण शाह नेपाल-उपत्यकाका मल्ल राजाहरूका अनेक क्षेत्र कब्जा गरी अगाडि बढिसकेका थिए। वि.सं. १८१९ साल पृथ्वीनारायण शाहको लागि निकै शुभ र हौसला बढाउने खालको थियो। यसै साल उनले सेन राजाको मकवानपुर राज्य

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६७–६८

२. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ५८–६७

विजय गरेका थिए,[3] बंगालका नवाब मीरकासिमलाई पराजित पारेथे।[4] यस सालसम्ममा आर्थिक दृष्टिले पनि पृथ्वीनारायण शाह सम्पन्न भएको बुझिन्छ। यसै हुँदा यस सालमा आएर उनले नुवाकोटमा दरबार बनाउन सके। मुख्य गरी अब नेपाल-उपत्यकाका मल्ल राजाहरूले नुवाकोट फिर्ता लिन कुनै हालतमा पनि सक्ने छैनन् भन्ने विश्वास उनमा जमिसकेको थियो। यसै हुँदा नेपाल-उपत्यकाका मल्ल राजाहरूको मानमर्दन गरेको कुरा यस अभिलेखमा गौरव-साथ कुँदाइएको हो।

पृथ्वीनारायण शाह ताकाका तनहुँका राजा त्रिविक्रमसेन निकै चल्तापूर्जा शासक थिए। पृथ्वीनारायण शाह नुवाकोट कब्जा गरी अघि बढ्न लागेपछि त्रिविक्रम सेन पनि तनहुँको राज्य क्षेत्र बढाउने सुरमा थिए। उनले लामिडाँडामेकमा आँखा गाडेका थिए।[5] लामिडाँडा कब्जा गर्ने सुरमा पृथ्वीनारायण शाह पनि थिए।[6] यसरी ती दुइ महत्त्वाकांक्षी व्यक्तिमा भित्र-भित्र प्रतिस्पर्धा जागेको थियो। यत्तिकैमा त्रिविक्रम सेनले एक अध्यालो गर्न पुगे। काशी-तिर लगिएको पृथ्वीनारायण शाहको भित्र्यानीको डोलाको झापन त्रिविक्रम सेनले उघारी हेरे।[7] त्यस वेलाको चलनअनुसार अरूद्वारा झापन उघारी हेरिनु निकै अपमानजनक घटना संझिइन्थ्यो। यो समाचार सुनेपछि पृथ्वीनारायण शाह भित्र-भित्र क्रुद्ध भए। उनले त्रिवि-क्रम सेनसँग यसको बदला लिने अठोट गरे। कुनै तरहले आफ्ना गुरुमार्फत त्रिविक्रम सेनसँग ज्यामीरघाटमा भेट गर्ने योजना पृथ्वीनारायण शाहले मिलाए।[8] यसरी राजाहरू परस्परमा भेट गर्दा हात-हतियार नलिई आउने चलन थियो। तर पृथ्वीनारायण शाहले भने अघिबाटै बालुवामा हतियार लुकाई राख्न लाएका थिए। यिनै हतियारको बलले पृथ्वीनारायण शाहले तनहुँका राजा त्रिविक्रम सेनलाई झुक्क्याई कैद गरे। अनि उनलाई पहिले गोरखामा र पछि

---

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १११६–१११८

४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६८६–६८८

५. बाबुराम आचार्य 'श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाह' (सँक्षिप्त जीवनी) भाग २, श्री ५ महाराजाधिराजका प्रेससचिवालय, राजदरबार, काठमाडौं, वि.सं. २०२४, पृ. २२३–२२४

६. 'श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाह' भाग २, पृ. २२४

७. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८०६

८. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८०७–८०८

नुवाकोटमा त्याई कैद गरियो।[९] त्रिविक्रम सेनलाई कैद गर्दा राजोचित व्यवहार नगरी पृथ्वी-नारायण शाहले पूरा साटो फेरेको देखिन्छ। नुवाकोटको यस अभिलेखको वर्णनअनुसार त्रिविक्रम सेनलाई फलामको पिँजरामा थुनिएको थियो भन्ने स्पष्ट छ। यसरी पृथ्वीनारायण शाहले ठूलो खतरा मोलेर पनि त्रिविक्रम सेनसँग आफ्नो अपमानको बदला लिएको देखिन्छ। तर राजकाजको दृष्टिले यो कुनै लाभदायक कुरा नहुँदा पछि रिस सेलाएपछि त्रिविक्रम सेन-लाई छोडी दिएथे। तनहुँको डरले होइन, दया गरेर छोडी दिइएको हो भन्ने कुरा यस अभिलेखमा 'अनुग्रहतो विसर्जित' भनी गर्वसाथ लेखिएको छ। त्रिविक्रम सेनलाई नुवाकोटमा थुनेको हुँदा यस अभिलेखमा उक्त कुराको वर्णन गरेको देखिन्छ।

नुवाकोटको मूल बस्ती 'गढ' रूपको थियो।[१०] यस बस्तीलाई चारैतिर अग्ला पर्खालहरूले घेरिएको थियो; गहिरो खाई खनिएको थियो; ठाउँ-ठाउँमा झाड बनाइएका थिए। पृथ्वी-नारायण शाहका प्रसिद्ध दरबारिया कवि ललितावल्लभले 'पृथ्वीन्द्रवर्णोदय' काव्यमा गरेको वर्णनबाट हामी नुवाकोटको गढको झलक पाउँछौं। यस किसिमको गढरूपको बस्ती हुँदा गोरखालीहरूले कति पटक नुवाकोटलाई घेरामा पारे पनि सो गढ तोडी उनीहरू भित्र पस्न सकेका थिएनन्।

यसै हुँदा काशीयात्रामा जाँदा पृथ्वीनारायण शाहले बन्दूकहरूका साथै बारूद आदि विस्फोटक पदार्थ पनि ल्याएका थिए। सो लिई काशीबाट फर्कंदा बाटामा परेको भन्सार चौकीका अधिकारीहरूले अपमानपूर्वक भारी खोल्न खोज्दा पृथ्वीनारायण शाहलाई झोँक चल्यो र उनले ती अधिकारीहरूलाई सखाप पारी बाटो तताएथे।[११] यो खतरापूर्ण कामको नतीजा नुवाकोट-विजयको लागि लाभदायक नै भयो। वि.सं. १८०१मा गरिएको नुवाकोट आक्रमणमा गोरखाली सैन्यले नुवाकोट-गढलाई तोड्न विस्फोटक पदार्थको प्रयोग गरेथे।[१२] यस कुराको पुष्टि ललितावल्लभका 'पृथ्वीन्द्रवर्णोदय'बाट हुन्छ। गोरखाली सैन्य नुवाकोट गढभित्र पस्दाको वर्णन गर्दा त्यहाँ "प्रचण्डस्वन अनलास्त्र"को प्रयोग गरे भनी लेखिएको छ।[१३] यसरी काशीयात्राबाट ल्याइएको बारूदले नुवाकोट-विजयमा मद्दत गरेको हुँदा नुवाकोट-दर-बारको यस अभिलेखमा उक्त काशी-यात्राको कुरा गर्वसाथ उल्लिखित गरिएको बुझिन्छ।

---

९. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८०९
१०. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ५८–५९
११. बाबुराम आचार्य 'श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाह' भाग २, पृ. २११
१२. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६६
१३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ४४३

दरबार बनाई राख्न लाएको यस अभिलेखमा "पृथ्वीनारायणनृपतिना निर्म्मितन्दुर्गं-रत्नम्" भनी किल्ला बनाएको वर्णन परेको छ। त्यस ताका दरबार बनाउँदा सुन्दरता र आरामदायकपनलाई मात्र ध्यान राखेर पुग्दैनथ्यो, दरबार बनाउँदा सुरक्षाको पनि बढ्ता ख्याल राख्नु आवश्यक हुन्थ्यो। यसै हुँदा पृथ्वीनारायण शाहले सो दरबार सुरक्षाको दृष्टिले किल्लारूपको बनाउन लाएथे। यस ताका अन्त पनि दरबार बनाउँदा सुरक्षालाई नै बढी ध्यान दिएको हामी पाउँछौं। उदाहरणार्थ ललितपुरको "चौकोट" दरबार आदिलाई देखाउन सकिन्छ।[१४]

卐

---

१४. धनवज्र वज्राचार्य 'चौकोट-दरबार' पूर्णिमा ३ पूर्णाङ्क, संशोधन-मण्डल, पृ. ४६-५१

[ १७ संख्या ]

# मनकामनास्थानको पृथ्वीनारायण शाहको अभिलेख

मनकामना माईको मन्दिरको ढोकामा टाँसी राखिएको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यसमा वि.सं. १८२० दिइएको छ ।

'इतिहास-प्रकाश' १ अंकको ४८ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख प्रकाशित भएको छ । 'गोरखाको ऐतिहासिक सामग्री'को २०–२१ पृष्ठमा पनि यो छापिएको छ ।

## मूलपाठ

१. श्रीशाके १६८५ वैशाख शुदि १५ रो ४ स्वस्ति श्रीगिरिराज–
चक्रचूडामणि नरनाराय–

२. णेत्यादिविविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज
श्रीश्रीश्रीमत्पृथ्वीनारा–

३. यण साहदेवले बक्रांका शेराको वह्या खण्डको मुरि २०० लगापातमुद्धा
षेत् श्रीमनकामना श्रीवक्रेश्वर महादेव श्रीसिद्धकन

४. गूठ चह्राञा, एस् षेतका धानमध्य श्रीमनकामनाकन रोजको
व्याहांन माना १ अक्षता व्यालुका मु–

५. ठि ५ धूप बाति फुलपाति श्रीखण्ड रक्तचंदन नैवेद्य श्रीवक्रेश्वरकन व्याहांन
मात्रै माना १

६. अक्षता धूप दीप बाति नैवेद्य ठूला दशैंमहां रांगो १ बोक्या १ श्रीसिद्धकन
बोक्या १ बाह्रैं १२ पू–

७. गिमाका बोक्या १२ चैत्या दशैंमहां बोक्या १ एति सभै एसै गूठमध्य काम गर्नु फिरि रोज–

८. को माना ४ धान् परेवाके आहारा गर्नु यसै गूठमध्य ॥ ॥ एस् वातका साक्षि युवराज

९. प्रतापसिंह साहदेव, संवत् १८२० शुभम् भूयात् ॥

व्याख्या–

नेपालका मध्यभागका प्रसिद्ध देवताहरूमा मनकामना माईको पनि विशिष्ट स्थान रहेको छ। बाटोघाटोको सुविधाले गर्दा आजकाल भक्त दर्शनार्थीहरूको घुइँचो नै लाग्न थालेको छ। तर उहिले बाटो-घाटोको सुविधा नभएको वेलामा पनि भक्तहरू कैयौं दिन लाएर पनि मनकामनाको दर्शन-पूजन गर्न जान्थे। यसरी नेपाली जन-मानसमा यस देवीले विशिष्ट स्थान पाएको कुरा स्पष्ट छ।

राम शाहको पालामा सिद्ध लखन थापाको सिद्धयाईंले गर्दा मनकामना देवीको प्रख्याति बढेको कुराको संकेत वंशावलीमा परेको छ।[१] अर्को थरी अनुश्रुतिअनुसार मनकामना भगवतीको प्रख्याति निकै अघिदेखि थियो; मनकामनाका पुजारी लखन थापाको पालामा मनकामना देवीको प्रसिद्धि बढी रहेको मात्र हो भन्ने ज्ञात हुन्छ। सो अनुश्रुतिअनुसार नुवाकोट, मनकामना र गोरखाको धार्मिक सिलसिला एकै सम्प्रदाय अन्तर्गत रहेको हो भन्ने देखापर्छ।[२] नुवाकोटका भैरव, भैरवी, गोरखाका वज्रभैरव तथा मनकामना भगवतीको सम्बन्ध परस्परमा केही रहेको थियो भन्ने चाहिं यी देवताका मूल रहस्य र पूजाविधिको तुलनात्मक अध्ययनबाट थाहा पाइन्छ। नुवाकोटमा भैरव, भैरवी देवता चढाउने जुन वज्राचार्य हुन्; तिनैले मनकामनाका पुजारी मगर थापालाई दीक्षा मन्त्र सुनाउने परम्परा प्रचलित रहेको हुनाले मूलतः यी देवता वज्रयान-अन्तर्गतका सिद्धहरूले जगाएका हुन् कि भन्ने देखिएको छ। यहाँनिर एक कुरामा ध्यान दिनु आवश्यक छ। तन्त्र-पद्धतिमा पुगेपछि शैव, बौद्ध आदि सम्प्रदायविशेषको भेद त्यति रहँदैन र सिद्ध भएका देवदेवीहरूको दर्शन-पूजन सबै सम्प्रदायका अनुयायीहरूले भेदभावविना, श्रद्धाभक्तिपूर्वक गर्ने परम्परा हाम्रो यहाँ रहेको छ। यो परम्पराले

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५८९

२. नुवाकोटमा प्रचलित लोककथाबाट उक्त कुराको संकेत पाइन्छ।

गर्दा मनकामना माईमा पनि सबै नेपालीहरूको समान आदरभाव रहेको हामी पाउँछौं । गोरखा राज्यस्थापना भई राम शाहको पालासम्म यो राज्य केही विस्तृत र बलियो हुन थालेपछि मनकामनाका पुजारी सिद्ध लखन थापाको पालामा यी भगवतीले बढी प्रसिद्धि पाएको थाहिँ सबैतिरबाट देखापरेको छ ।

लिच्छविकालको उत्तरार्धदेखि नै नेपालको पश्चिम पहाडीभेकमा मन्त्रयान, सिद्धपरम्पराको प्रसार भएथ्यो ।[३] तिब्बतसँगको सम्बन्धले गर्दा यसको अझ बढी प्रचार भएथ्यो । मध्यकालमा हाम्रो यहाँ अनेक सिद्ध देखापरे ।[४] उनीहरूको सिद्धचाईले जनता निकै प्रभावित रहे । यसै हुँदा शाह राजाहरूमा पनि शुरूदेखि नै सिद्धचाईको र देवदेवीहरूको निकै प्रभाव रह्यो भन्ने कुरा माथि पनि लेखिसकिएको छ । यस वातावरणमा हुर्कंदा हुँदा विजिगीषु पृथ्वीनारायण शाहको मनमा पनि हाम्रो परम्पराको निकै असर परेको थियो । अझ उनले गोरखाको विस्तार गरी नेपालको एकीकरण गर्ने दृढ अठोट गरेपछि यो ठूलो अभियान पूरा गर्न दैवी शक्तिमा पनि उनको स्वभावतः केही झुकाव रह्यो । असल साइत, देवदेवी, सिद्धहरूको सुदृष्टिले पनि नेपालको एकीकरण गर्ने आफ्नो अभीष्ट कुराको प्राप्तिमा केही मद्दत गर्छ भन्ने धारणा उनमा रह्यो र उनी विजयका लागि पुरश्चरण गराउने[५] खड्गसिद्धि गराउने[६] देव-देवीको पूजाआजाको लागि भाकल गर्ने आदि पनि गर्दथे ।[७] यसको अभिप्राय उनी दैवी शक्तिमा मात्र भर पर्दथे भन्ने होइन । आफ्नो एकीकरण अभियान सफल पार्न उनी सावधान भई षाड्गुण्यको प्रयोग, सैनिक योग्यतामा वृद्धि आदि आवश्यक कुराको पनि जाँजो-पाँजो मिलाउनमा पनि सर्वात्मना संलग्न थिए । साथै मनोबल बढाउन र अभीष्ट सिद्धि छिटो होस् भन्ने धारणाले देव-देवी सिद्ध आदिको पनि उपासना, पूजा-आजा पनि गराउँथे । यस कुराका अनेक उदाहरण पाइन्छन् ।

वि. सं. १८१९ साल पृथ्वीनारायण शाहको एकीकरण अभियानमा महत्त्वपूर्ण सफलता मिलेको साल थियो । यसै साल मकवानपुर विजय भएथ्यो ।[८] यसरी उनलाई एकीकरण गर्न

---

३. 'लिच्छविकालको अभिलेख' पृ. ५२३–५२६

४. प्रसिद्ध चौरासी-सिद्धमध्ये केही नेपालसँग सम्बद्ध थिए । पछि अरू सिद्धहरू पनि हाम्रो यहाँ भएथे ।

५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १११६

६. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ५६–६०

७. यस कुराको चर्चा माथि भइसकेको छ ।

८. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १११६–१११७

प्रतिज्ञा गर्न विवश पार्ने एक शक्तिलाई पराजित पार्नामा उनी सफल भएथे। अर्को कुरा, बंगालका शासक मीरकासिमलाई पराजित पारी एकातिर बाह्य शक्तिलाई पनि उनले चुनौती दिएका थिए भने अर्कोतिर यसै सिलसिलामा आधुनिक ढङ्गका अर्थात् बन्दूकको प्रयोग गर्ने पाँच पल्टन खडा गरी नेपाली सैनिक इतिहासमा नयाँ अध्याय शुरू गर्न पनि उनी सफल भएथे।[९] मकवानपुरको युद्धप्रसंगमा यस कार्यमा सफलता मिले मनकामना आदि देवताको पूजाआजाको बन्दोबस्त गर्ने भाकल पृथ्वीनारायण शाहले गरेको बुझिन्छ। यसै हुँदा उपर्युक्त अभीष्ट सिद्धि भएको लगत्तै पछि मनकामना माईको स्थानमा पुगी उनले गुठी राखिदिएको कुरा यस ताम्रपत्रले देखाउँछ। पृथ्वीनारायण शाहले राखिदिएको यो गुठी अहिलेसम्म पूर्ववत् नै चलिरहेको छ।

मनकामना-इलाकामा मनकामना माईबाहेक वक्रेश्वर महादेवस्थान पनि केही प्रसिद्ध छ। मनकामनास्थानबाट केही पर पूर्वतिर डाँडामा वक्रेश्वर महादेवस्थान रहेको छ। यहाँ अन्त जस्तो विशेष शिवलिंग छैन। काभ्रोको ठूलो रूखमुनि रहेको शिलाखण्ड नै महादेवका रूपमा सिद्ध भएका हुन्। यो देवस्थल पीठरूपकै छ। बसाहाहरू चढाइएका हुँदा मात्र महादेवको सँकना गराउँछ। यहाँ तीजमा मेला लाग्छ। महादेवस्थान भए पनि यहाँ बलि चढाइन्छ। तर नियमपूजा नगरीकन भने बलिपूजा गरिँदैन। नियमपूजा सिद्धिएपछि मात्र बलि चढाइन्छ। यस कुराले हाम्रो यहाँ दोलखा आदि ठाउँमा प्रचलित पद्धतिको संकना दिलाउँछ। दोलखामा मेषबलि आदि दिँदा खाताले बाँधी भीमेश्वरको ईश्वरत्व चुलिका (चूडामणि) नामक मौलोमा सारिन्छ; अनि बलि चढाइन्छ।[१०] यहाँ वक्रेश्वरमा पनि नियमपूजापछि ईश्वरले भैरवरूप लिने हुँदा बलि चढेको हो भन्ने भनाइ छ। हात-खुट्टा नचलेका (वक्र भएका), बोली नफुटेका केटाकेटीलाई यहाँ ल्याई दर्शन-पूजन गराए सो ठीक हुन्छ भन्ने लोकधारणा रहेको छ।

यसरी तात्कालिक समाजमा वक्रेश्वरको पनि मान्यता निकै रहेको हुनाले पृथ्वीनारायण शाहले वक्रेश्वरको पूजाआजाको लागि गुठी राखिदिएका हुन्। जुन पूजाआजा अहिलेसम्म चल्दैछ।[११]

---

९. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८४४

१०. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ७

११. वि. सं. १८८४ श्रावणमा जनरल भीमसेन थापाले पनि वक्रेश्वरको आराधना गरी घण्टा चढाएथे। भीमसेन थापाले चढाएको सो घण्टा त फुटिसक्यो; अहिले छैन। तर वि.सं. १९५० मा मनकामनाका पुजारी कुलमान थापाले त्यसको जीर्णोद्धार गरी कुँदन लाएको अभिलेखबाट भीमसेन थापाको कृतिको संकना गराउँछ।

यहाँ अर्को एक कुरा पनि उल्लेखनीय रहेको छ। मनकामना माई, वक्रेश्वर-महादेवलाई जस्तै पृथ्वीनारायण शाहले "सिद्ध"लाई पनि बलि चढाउन गुठी राखिदिएको चर्चा यस अभिलेखमा परेको छ। सिद्धको नामोल्लेख यहाँ गरिएको छैन तापनि ती सिद्ध लखन थापा हुन् भन्ने कुरामा शंका छैन। वक्रेश्वर-महादेव स्थानभन्दा माथि डाँडोपारि "सिद्धगुफा" रहेको छ। सो गुफामा सिद्ध लखन थापा अलपेका हुन् भन्ने अनुश्रुति चलेको छ। सिद्ध लखन थापा मगर राम शाहका पालाका हुन्।[१२] उनी मनकामनाका पुजारी थिए। तर आफ्नो सिद्ध्याइँले गर्दा राम शाहको पालामा उनी निकै प्रख्यात भएका थिए। उनका सिद्ध्याइँ-बारेका अनेक अनुश्रुति प्रचलित छन्। उनीमा ठूलो जनआस्था रहेको हुँदा उनको मृत्युपछि उनी देवताजस्तै जनताका पूज्य सिद्ध बन्न पुगे। पृथ्वीनारायण शाहले मनकामना माई, वक्रे-श्वर-महादेवलाई जस्तै उनलाई पनि प्रतिपूर्णिमा, चैतेदशैं आदिमा बलि चढाउनाको लागि गुठी राखिएको यस उदाहरणले सिद्ध लखन थापाले पृथ्वीनारायण शाहको समयसम्ममा पुग्दा देवतासरह स्थान पाएको कुरा स्पष्ट छ। यस उदाहरणले त्यस युगमा सिद्ध्याइँमा कस्तो आस्था थियो भन्ने उल्लेखनीय उदाहरण प्रस्तुत गरेको छ। साथै पृथ्वीनारायण शाहको धार्मिक उदारताको उदाहरण पनि यसले प्रस्तुत गरेको छ।

काठमाडौं-उपत्यकाको विजयपछि पृथ्वीनारायण शाहले पश्चिमतिर विजय गर्ने योजना बनाए। यस प्रसंगमा पनि पृथ्वीनारायण शाहले मनकामनाको पूजा गरी घण्टा चढाएका थिए। घण्टा वि.सं. १८२८ वैशाखमा चढाइएको हो। उक्त घण्टा फुटिसकेको छ। तर त्यसको जीर्णोद्धार गरी मनकामनाका पुजारी कुलमान थापाले वि.सं. १९५०मा राख्न लाएको घण्टा भने मनकामना मन्दिरको ढोकाको बायाँतिर रहेको छ। उक्त घण्टामा कुँदिएको अभिलेख यस प्रकारको छ–

१. सम्वत् १८२८ साल मिती वैशाष शुदी १५ रोज २ मा
श्रीमनकामना देवी प्रीति गरी श्री ५ महाराजाधिराज पृथ्वीनारायण साहदेवले चढा-याको घण्ट फुटेको हुनाले श्रीमनकामना देवीका

२. पुजाहारी कुल्मान थापाले सम्वत् १९५० साल वैसाष शुदी ३'रोज ५ मा जीर्णोद्धार गरी बनायाको, धार्नी ४१।६॥

यसै गरी शाह राजाहरूले मनकामनाको पूजाआजा गरेका उदाहरण अरू पनि पाइन्छन्।

---

१२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५५७–५८६

मनकामना-मन्दिर ठेट नेपाली शैलीमा बनेको छ। यसका दुवै छाना तामाका छन्। माथिल्लो छाना वि.सं. १९२४ मा श्री ५ सुरेन्द्रबाट निर्माण गराइएको हो भन्ने कुरा त्यसमा कुँदिएको अभिलेखले दर्शाउँछ। तल्लो छानामा वि.सं. २०२६मा श्री ५ महेन्द्रबाट जीर्णोद्धार गराइएको कुरा कुँदिएको छ।

卐

[ १८ संख्या ]

# नुवाकोटको पृथ्वीनारायण शाहको अभिलेख

नुवाकोट सात्तले दरबारअगाडि डबली जस्तोको भित्तामा, एउटा शिलापत्र टाँसेर राखेको छ। त्यसमा यो अभिलेख कुँदिएको छ। अभिलेखको केही भाग फुटेको छ। यहाँ शकसंवत् १६८५ दिइएको छ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा'को २६ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठ-द्वारा यो छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ।। ।। शाके सायकनागभूप १६८५ तुलिते मासे नभस्येसि–
२. ते पक्षे वैष्णव ऋक्षयुग्वरितिथौ सिंहाधिरूढे रवौ ।। श्रीशक्रध्वजसम्यगु–
३. (च्छ्र) यमहप्रत्यब्दसंसिद्धये शालेयं सनयं प्रतापनृपतिः क्षेत्रं समुत्सृष्ट–
४. वान् ।। १ ।। पृथ्वीनारायणस्य क्षितिपतिमुकुटप्रोतमाणिक्यमालासं–
५. स्पर्शाराधिताङ्घ्रे रिपुकुलगह(नो)दीप्तदावानलस्य ।। सूनुर्विख्या–
६. (तकी)र्तिर्दिशि दिशि महसा भास्करो याचकानां कल्पद्रुः कामिनीनां म–
७. दन.........सिंहप्रतापः ।।२।। क्षेत्रं भूपालपुत्रस्तु.........
८. .........।। खवाह...........।।३।। प्रतापसिंह......
९. व.........मया न......पितम् । यो हरे.........महापातकपंच–
१०. कम् ।। ४ ।। ( स्वदत्तां ) परदत्तां वा यो हरेत वसुन्धरां । ( षष्टि ) वर्षसहस्राणि

११. विष्टायां जायते कृमिः ॥५॥ षिच्यातको आयस्ता मुरि एक सय
१२. चालिस श्रीइन्द्रदेवताकन जात्रानिमित्त गुठ चह्लाञौ ॥ शुभम् ॥

## अनुवाद

श्रीगणेशलाई नमस्कार। शकसंवत् १६८५ (वि.सं. १८२०) भाद्र शुक्ल चतुर्दशी श्रवण नक्षत्रमा, सिंहराशिमा सूर्य भएमा प्रतिवर्ष इन्द्रध्वज उठाउने (लिंगो गाड्ने) उत्सव चलाउनाको लागि प्रतापसिंह शाह युवराजले मार्सी धान आउने खेत गुठी राख्नुभयो ॥१॥

राजाहरूको श्रीपेचमा जडेका रत्नहरूको स्पर्शले चरण भलमल्ल भएका (अर्थात् राजाहरूले ढोगिएका), शत्रुहरूलाई सन्ताप पार्ने पृथ्वीनारायण शाहका छोरा, टाढा-टाढासम्म नाउँ चलेका, तेजिला, माग्नेहरूलाई खूब दान दिने, राम्रा सिंहप्रताप (प्रतापसिंह) शाह हुनु हुन्छ ॥२॥

युवराज प्रतापसिंह शाहले........खेत चढाउनुभयो। जसले यो हर्ला, त्यसलाई पञ्च-पातक लागोस् ॥३–४॥

आफूले दान दिएको अथवा अरूले दान दिएको जग्गा जमीन हर्‍यो भने साठी हजार वर्षसम्म नरकमा कीरा भएर रहला ॥५॥

**व्याख्या–**

पृथ्वीनारायण शाहले नुवाकोटलाई राजधानी घोषित गरेका हुँदा उनको मुकाम नुवाकोटमा बढी हुनु स्वाभाविक थियो।[१] तर एकीकरण अभियानको सञ्चालन गर्न स्वयं पृथ्वीनारायण शाह नै अगुवा भई जाने गरेकाले उनको मुकाम नुवाकोटमा मात्र सीमित हुँदैनथ्यो। आवश्यकताअनुसार उनी अन्त गई रहन्थे। आफू अन्त जाँदा नुवाकोट राजधानीमा युवराज प्रतापसिंह शाहलाई स्थानीय प्रशासनको केही अभिभारा सुम्पेर जाने गर्दथे। उक्त कुराको पुष्टि यस अभिलेखबाट हुन्छ। नुवाकोटमा इन्द्रजात्राको दिन लिङ्गो गाड्ने कार्यको लागि निकै

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७०

ठूलो गुठी राख्ने काम युवराज प्रतापसिंह शाहबाट भएको वर्णन यस अभिलेखमा परेको छ। यस अभिलेखमा पृथ्वीनारायण शाहको पनि वर्णन छ तापनि यो अभिलेखको रचना गर्ने पण्डितले प्रतापसिंह शाहलाई प्रसन्न पार्न उनको तारीफ बढी गरेका छन्। यो अभिलेख कुँद्न लाइएको वेलामा अर्थात् वि.सं. १८२०मा प्रतापसिंह शाह केही तरुना हुन थालेको कुरा यहाँ गरिएको "कामिनीनां मदन" वर्णनबाट थाहा पाइन्छ।

भाषावंशावली, पछिका अभिलेख आदिमा प्रतापसिंह शाहको नाम "सिंहप्रताप" भनी लेखिएको पाइन्छ। तर उनी राजा भए ताकाका अभिलेख, लालमोहर, टक आदि प्रामाणिक सामग्रीमा "प्रतापसिंह" नाम मात्र अंकित भएको पाइन्छ। यस कारण "सिंहप्रताप" यो नाउँ अशुद्ध हो, शुद्ध नाउँ "प्रतापसिंह" हो भन्ने निर्णय गरिएको थियो।[२] तर वि.सं. १८२०को यस अभिलेखमा "सिंहप्रताप" नामको पनि उल्लेख परेको छ साथै; "प्रतापसिंह" भन्ने उल्लेख पनि परेको छ। यसबाट उक्त कुरामा अलिकता पुनर्विचार गर्नुपर्ने भएको छ। शुरुदेखि नै "सिंहप्रताप" नाम पनि प्रचलित भएको रहेछ, अतः यो नाम सर्वात्मना अशुद्ध भनी भन्न अलि नमिल्ने रहेछ भन्ने कुरा यस अभिलेखले देखाएको छ। यद्यपि राजा हुँदा लिइएको आधिकारिक नाम "प्रतापसिंह" नै हो तापनि शुरुमा (युवराज छँदा) सिंहप्रताप पनि भनिएको रहेछ।

नुवाकोटमा देवीजात्राको सिलसिलामा लिंगो गाड्ने आदि चलन पहिलेदेखि थियो तापनि इन्द्रजात्राको प्रसंगमा लिंगो गाड्ने चलन पहिले नभएको बुझिन्छ। पृथ्वीनारायण शाहले नुवाकोटलाई राजधानी बनाएपछि नुवाकोटको सांस्कृतिक उत्थान पनि भएथ्यो भन्ने कुराको संझना इन्द्रजात्राको दिन ( भाद्र शुक्ल चतुर्दशीको दिन ) लिंगो गाड्ने प्रथा चलाई त्यसको लागि निकै ठूलो गुठी राखेको यस अभिलेखले पनि गराउँछ। यसै गरी प्रतापसिंह शाहले पछि काठमाडौंमा पनि इन्द्रजात्राको सिलसिलामा लिंगो गाड्ने प्रथा चलाएथे।[३]

卐

---

२. 'इतिहास-संशोधनको प्रमाणप्रमेय' पृ. १५७–१६०

३. तोयराज पाँडे र नयराज पन्त 'नेपालको संक्षिप्त इतिहास' काठमाडौं, वि.सं. २००४, पृ. ६३

[ १९ संख्या ]

# सल्यानकोटको पृथ्वीनारायण शाहको पालाको अभिलेख

'इतिहास-प्रकाश' १ भागको ३८ पृष्ठमा यो अभिलेख योगी नरहरिनाथ र जनकलाल ढकालद्वारा छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीसाके १६८७ संवत्
२. १८२२ मासे ३ सल्ह्यानकोट देव–
३. ल बनायाको श्री ५ नृपपृथ्वीना–
४. रायण साहा श्रीणरिन्द्रलक्ष्मी मा–
५. हाराणीसमये कृति तथा दवान्या
६. सुर्जमान्याधा विश्राम् राना चामु ष–
७. ड्का जेठाबुढा ननस्त् थंका बार्केस
८. राना शुभम्।

व्याख्या–

सल्यानकोट धादिङजिल्ला अन्तर्गत पर्दछ। गोरखाबाट जाँदा बुढीगण्डकी तरी जानुपर्छ। सामरिक दृष्टिले सल्यानकोट निकै सुरक्षित प्रदेश रहेको थियो। यसो हुँदा गोरखाको नजीकैको प्रदेश भए पनि सल्यानकोट जित्न गोरखालाई त्यति सजिलो भएन। राम शाहको पालामा सल्यानकोटमा गोरखाको आधिपत्य जम्यो तापनि यसका लागि गोरखाले गणेश पाँडेजस्ता

योग्य र अनुभवी व्यक्ति गुमाउनुपरेथ्यो ।[१] यस भेकका शासक घलेहरू निकै लडाका थिए । यसो हुँदा पनि निकै बल लाएर मात्र गोरखाले सल्यानकोट जित्न सकेको थियो ।

सल्यानकोटमा त्रिपुरासुन्दरी देवीको प्रसिद्ध मन्दिर रहेको छ । जुन देवी सल्यानकोटकी माईकी रूपमा प्रख्यात छिन् । हाम्रो यहाँ दोलखा आदि ठाउँमा पनि त्रिपुरासुन्दरी देवीका मन्दिर छन्[२] तापनि सल्यानकोटकी त्रिपुरासुन्दरीको महिमा ठूलो छ । यहाँ मेला जात्रा पनि ठूलै लाग्छ । दोलखाकी त्रिपुरासुन्दरीका पुजारी जोशी छन् भने सल्यानकोटकी त्रिपुरा-सुन्दरीका पुजारी राना छन् । यो कुरा विचारणीय छ ।

सल्यानकोटकी माईको महिमाले पृथ्वीनारायण शाह पनि निकै प्रभावित भएका थिए । यसै हुँदा एकीकरण अभियान थाल्नुभन्दा अगाडि पृथ्वीनारायण शाहले सल्यानकोटकी देवीको पूजाआजा, जपतप गरेका थिए । सपनामा साक्षात् देवीको दर्शन पाएका हुँदा अब कार्यमा सिद्धि हुने भयो भनी उनी निकै प्रभावित भएथे । यस कुराको चर्चा पृथ्वीनारायण शाहले आफ्नो "दिव्य उपदेश"मा विस्तारपूर्वक गरेका छन् ।[३]

सल्यानकोटकी देवीको पूजाआजाको लागि पृथ्वीनारायण शाहले गुठी राखिदिएको चर्चा "दिव्योपदेश"मा भएको हुँदा सल्यानकोटमा पृथ्वीनारायण शाहको ताम्रपत्र आदि अभिलेख पाइन्छ कि भनी हामीले निकै खोजीनीति गरेका थियौं । तर सफलता प्राप्त गर्न सकिएन । माथि सल्यानकोटमा राम शाहको ताम्रपत्र रहेको छ भन्ने सुन्दा हामी निकै उत्साहित भएथ्यौं । माथि पुगी हेर्दा राम शाहको भनिएको सो ताम्रपत्र गीर्वाणयुद्धविक्रम शाहको पो रहेछ । तर यहाँ राम्ररी खोज गर्न सके राम शाहहरूका केही कृति पाइने सम्भावना भने नभएको होइन ।

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५८२–५८३

२. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ६

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१६

सम्बद्ध अंश यस प्रकारको छ—"सल्ल्यान्कोटकि देवी साछ्यात् छन् भनि भन्छन् म पनि सायेत गरी जान्छु भनि बिदा गराया र सायेत गरि म पनि गजुं र बारिमा थपुं पऱ्यो र सल्ल्यानिको घरघर बराहा उमराउहरूसित सुध्याआ. माईको दर्सन् गर्नु हुन्छ की भन्दा भित्र दर्सण पुजाहारि टहलुवालाई मात्रै भित्र दर्सन गर्नु हुन्छ जो हुकुम् भन्या र ढोकामा ता हुन्छ कि भन्दा ढोकामा ता हुन्छ भन्या र साज बिहान ढोकासम्म जाई पाठ पुजा जप् दर्सन

द्वारे सूर्यमान आदिले सत्यानकोटमा देवल बनाई राखेको यस अभिलेखमा विशेष कुरा परेको छैन तापनि राजा रानीको नामोल्लेख भएको, सालमिति परेको हुँदा यो अभिलेख स्थानीय केही कुरा बुझ्न केही उपयोगी नै रहेको छ । जनता अथवा भारादारले राखेका अभिलेखमा प्राय गरी राजाको मात्र नामोल्लेख भएको पाइन्छ । यस अभिलेखमा भने रानीको पनि नामोल्लेख भएको छ । यस दृष्टिले यस अभिलेखको केही महत्त्व रहेको छ । यसो विचार गर्दा यस अभिलेखमा उल्लिखित द्वारे, जेठा बुढा आदि गोरखा दरबारकै हुन् कि भन्ने देखापर्छ ।



---

गर्थ्या र यक दिनका रातमा सोपना भयो र दुई हातमा दुई षड्ग लियाकी सात आठ वर्षकी कन्न्या कुसुमे पछिउराको घुगूटि पारि मछेउ आइन् र मैले सोध्याऔं तिमि कस्की छोरि हौ भनि मैले भन्दा पुजाहारि रानाकी छोरि हुँ भनिन् र उ दुवै षड्ग मेरा हातमा दिन् र आरसि प्रमानको लाल टल्बल् गर्थ्यो, षोकीलाबाट झिकी मेरा मुषसम्ममा ल्याई यो पनि निल् भनिन् र तम्रो मनकान्छ्या पुऱ्याई दियाको छ म पनि केही माग्छु. थपि जाउ भनि जसै दुई पाईला गै थिन्. उसै बेलामा मं पनि बिम्ज्यौ र भानु जैसि कुलानन्द जैसि पुछाहारि रानालाई डाक्या र सुध्याउा. जैसिले पनि पुजाहारिले पनि ति माई हुन् दर्सन पाउनुभएछ भने र उसै बेलामा धुप दिप धजा नैबेदे नित्यपुजालाई सात राग्गा सातै बोका थपि बोर्ला घाटको आम्दानी र घाटै छेउको टार माईलाई संकल्प गरिदिआ र उसै घरिको सायेत गरि रात दिन गरि सरासरी आमां"

[ २० संख्या ]

# नुवाकोटको पृथ्वीनारायण शाहको अभिलेख

नुवाकोट माडी, सेरा–दरबारको बगैंचाभित्र यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। खिइसकेकोले केही भाग अस्पष्ट छ। यहाँ शकसंवत् १६८७ दिइएको छ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा' को २९–३० पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख प्रकाशित भएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ।। श्रीशाके सप्तनागक्षितिप १६८७ परिमिते मासि चैत्रे–
पक्षैकादश्यां मैत्र ऋक्षे भृगु–

२. तनयदिने सद्गवाक्षादिचित्रम् ।। प्राकाराट्टप्रणालायुतमतिसुरतोद्दीपकं का–
मुकानां श्रीमान् गोरक्षभूपा......

३. ......संव्यधाद् रंगसौधम् ।। १ ।। गोरक्षभूपालकुलाब्धिजातो नेपालभूमी-
शतमिस्रहन्ता ।। पूर्ण्णः स–

४. ......भिधानः प्रतापसिंहो जयति क्षमेशः ।।२।। विविधकुसुमभूषा भूमि...
......तरुणमनुज–

५. चेतोहारिणी रम्यवे–।। विपुलधनक......सत्फलैः पूर्णितासौ जयति कुसुम-
वाटी......... पटीय ।।

६. ३।।...........पात्रदानप्रदाता ।। नृपतिरतिविवेकी य.......................
.............

७. ........सुगन्धि.........जननिपेयो निर्मितो भाति कूपः ॥४॥
विशालपुष्पवाटिकां रसालमंजरीयुताम्
८. नदीप्यसन्निधौ मुदा स्वकीयभावभाविताम् ॥ स्वतन्त्रफाल्गुनोत्सवे वि–
चित्ररागगायकैरनेकनागरैर्ज–
९. गौ प्रतापसिंहभूपतिः ॥५॥ शुभम्भूयात् ॥ ॥ श्रीराम राम राम
राम राम राम राम राम

## अनुवाद

श्रीगणेशलाई नमस्कार । शकसंवत् १६८७ ( वि.सं. १८२२ ) चैत्र.........एकादशी शुक्रवार, अनुराधा नक्षत्रमा......श्रीमान् गोरखाका राजाले......पर्खाल अट्ट ( भवन विशेष ) ढुङ्गे धाराहरू भएको, असल आँखिझ्याल आदिले राम्रो देखिने, आनन्द दिने रङ्ग-महल बनाउन लाउनुभयो ॥१॥

गोरखाका राजाको कुलमा जन्मेका, नेपालका राजाको घमण्ड तोड्ने...... नाउँ चलेका (युवराज) प्रतापसिंह शाह ठूला हुनुहुन्छ ॥२॥

अनेक किसिमका फूलहरूले सिंगारिएको,......तरुनाहरूको मन हर्ने, ठूलठूला......... फलहरूले भरिएको सुन्दर यो फूलबारी सुहाइरहेको छ । ॥३॥

पात्रमा दान दिने, अतिविवेकी राजा, जसले बनाउन लाएको मीठो सुगन्धी पानी भएको कुवा (इनार) पनि सुहाइरहेको छ ॥४॥

नदीको किनारमा रहेका, आँपका मुजुराहरूले सुहाएको विशाल फूलबारीलाई लक्ष्य गरेर फागुको उत्सवको स्वच्छन्द वेलामा अनेक थरी राग गाउने शहरियाका साथ स्वयं प्रतापसिंह शाह युवराजले गाना गाउनुभयो ॥५॥

शुभ होस् । श्रीराम राम राम राम राम.........॥

व्याख्या–

वि.सं. १८२२मा नुवाकोटमाडी, सेराबेंसीमा तादीको किनारामा "रंगमहल" दरबार बनाउन लगाई यो अभिलेख कुँद्न लाइएको हो । यस ताका पृथ्वीनारायण शाह कीर्तिपुर विजय गर्ने उद्योगमा व्यस्त हुँदा उनी नुवाकोटमा थिएनन् कि भन्ने देखिन्छ ।[१] यस कारण यो दरबार बनाउने काम युवराज प्रतापसिंह शाहको देखरेखमा भएको थियो । यसै हुँदा यस अभिलेखमा प्रतापसिंह शाहको बढी वर्णन परेको छ । यसभन्दा ३ वर्षजति अघि पृथ्वीनारायण शाहले माथि नुवाकोट डाँडोमा पनि एक भव्य दरबार बनाउन लाएथे । दरबार बनाउन लगाई राखेको उक्त अभिलेखमा पृथ्वीनारायण शाहको सफलताको वर्णन गरिएको छ ।[२] नुवाकोट-माडीमा रंगमहल बनाई राखिएको यस अभिलेखमा वर्णित कुरा भने अलि बेग्लै खालको छ । पृथ्वीनारायण शाहका अरू अभिलेखसँग तुलना गरी हेर्‍यौं भने पनि यहाँ वर्णित कुरा पृथ्वी-नारायण शाहको आदर्शअनुरूपको छैन भन्ने स्पष्ट थाहा पाइन्छ । वास्तवमा यस अभिलेखका रचयिताले पृथ्वीनारायण शाहलाई होइन कि युवक प्रतापसिंह शाहलाई प्रसन्न पार्ने उद्देश्यले यस अभिलेखको रचना गरेथे भन्ने देखिन्छ । यस अभिलेखमा रचयिताको नामोल्लेख परेको छैन । तर यस अभिलेखको रचना जयमंगल पौडेलले (व्रजनाथ पण्डितका बाबु, रंगनाथ पण्डित-राजका बाजेले) गरेका होलान् भन्ने हाम्रो अनुमान छ । किनभने "देवीगुरु"को हैसियतले जयमंगलको यस ताका दरबारमा प्रतिष्ठा रहेको देखिन्छ ।[३] अर्को कुरा, यस अभिलेखमा अन्त्यमा "श्रीराम राम राम........" कुँदाइएको छ । जयमंगल पण्डितले नुवाकोट धैंबुङ-निर राममन्दिर बनाई त्यस स्थानलाई नै "रामपुर" नामकरण गरेथे ।[४] पृथ्वीनारायण शाहको अरू अभिलेखमा यस्तो "श्रीराम राम राम......" कुँदाइएको पाइँदैन ।

मध्यकालमा सुरक्षातिर ध्यान दिनु आवश्यक भएको हुँदा प्रायः गरी दरबार सुरक्षित प्रदेशमा, डाँडोको टुप्पोमा बनाइन्थे । तर जाडोको मौसममा लेकमा बडी जाडो हुने हुनाले लेकमा भन्दा बेंसीमा बस्नु आरामदायक हुन्छ । यसो हुनाले प्रायः गरी पहाडी राज्यमा मूल

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८७४–८७६
'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७५

२. यो अभिलेख माथि गइसकेको छ ।

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३६३

४. तल आउने धैंबुङको वि.सं. १८३६को अभिलेखबाट यो कुरा थाहा पाइन्छ । त्यसमा 'सेमं प्रपा रामपुरे दिदीपे' भनी धैंबुङको उक्त अभिलेख रहेको स्थानलाई "रामपुर" संज्ञा दिइएको छ ।

दरबार लेकमा रहे तापनि शीतकालमा बस्ने बेंसीमा पनि एक दरबार बनाउन लाउने प्रथा चलेको थियो।[५] सोही प्रथाअनुसार माथि नुवाकोट-डांडो र तल नुवाकोटमाडीमा पनि दरबार बनाइएको हो।

नुवाकोट-डांडाको पृथ्वीनारायण शाहले बनाउन लाएको साततले दरबार केही रूप बदलिए पनि अहिलेसम्म मौजूद छ। तल नुवाकोट-माडीको दरबार भने अहिले मौजूद छैन, त्यसको भग्नावशेष मात्र बाँकी छ।[६] यो अभिलेख प्राप्त नभएसम्म नुवाकोट-माडीमा पनि पृथ्वीनारायण शाहको दरबार थियो भन्ने कुरा प्रमाणित हुन सकेको थिएन। अब भने उक्त कुरा प्रमाणित भएको छ।

यस शिलालेखमा गरिएको वर्णन र हाल रहेको भग्नावशेषलाई तुलना गरी हेर्‍यौं भने पृथ्वीनारायण शाहले प्रतापसिंह शाहको देखरेखमा बनाउन लाएको नुवाकोट माडी-दरबारको केही झलक हामी पाउन सक्छौं। यस शिलालेखमा दरबारको चारैतिर प्राकार ( पर्खाल ) लाएको वर्णन छ। जुन केही अंशमा अहिले पनि छ। शिलालेखमा "सद्गवाक्षादिचित्रम्" भनी दरबारमा राम्रा राम्रा आँखिझ्याल, झ्यालहरू रहेको वर्णन परेको छ। उत्खनन गरिएमा यस्ता झ्यालको नमूना भेट्टिनु सम्भव छ। माथि नुवाकोट डांडोको साततले दरबारको वर्णन गर्दा "दुर्गरत्न" ( असल किल्ला )को रूपमा जोड दिइएको छ। तलको दरबारको वर्णन गर्दा भने आरामदायक पक्षलाई जोड दिइएको छ। यस शिलालेखमा प्रणाली ( ढुंगेधारा ) बनाएको वर्णन परेको छ। जुन धाराचाहिँ पुरानै रूपमा बचेको देखिंदैन। शायद सेरा बगैंचाबाट नुवाकोटडांडोमाथि चढ्ने बाटोनिर रहेको ढुंगेधाराले पुरानो धाराको अस्तित्वलाई केही जोगाई रहेको छ। शिलालेखमा सुगन्धी पिउन लायक पानी भएको इनारको वर्णन छ। जुन अहिलेसम्म राम्रै अवस्थामा छँदै छ। शिलालेखमा अनेक थरी फूलहरू भएको बगैंचा "कुसुमबाटी"को वर्णन छ। जुन सेराबगैंचा नामले अहिलेसम्म प्रसिद्ध छ। आँपको बगैंचा लाएको वर्णन पनि शिलालेखमा छ; केही काल अगाडिसम्म यहाँ आँपको राम्रो बगैंचा थियो। हाल मात्र सो मासिएको छ। हालको भग्नावशेषलाई केलायौं भने उक्त दरबारको अरू झलक पनि हामी भेट्टाउँछौं।

---

५. धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठ 'श्री ५ पृथ्वीनारायण शाहको नुवाकोट माडी दरबार' कन्ट्रिब्युशन्ज् टु नेप्लिज् स्टडीज्, वर्ष २ अङ्क २, त्रि. वि. नेपाल र एशियाली अध्ययन संस्थान, कीर्तिपुर, वि. सं. २०३२, पृ. १४५–१४७

६. 'श्री ५ पृथ्वीनारायण शाहको नुवाकोटमाडी दरबार' कन्ट्रिब्युशन्ज् टु नेप्लिज् स्टडीज्-वर्ष २ अङ्क २, पृ.१४५–१५४

दरबारमा अनेक "द्वार" (ढोका) हुनु स्वाभाविक छ । तर हाल तावीको किनारपट्टिको दक्षिण द्वारको मात्र अवशेष भेट्टिन्छ । सो ढोका काठमाडौं उपत्यकातिर आवतजावत गर्ने "मूल ढोका"को रूपमा रहेको बुझिन्छ । यहाँ ढुंगे सिँढी अहिले बाँकी नै छ । ढोकानिर रहेको पाटी जस्तो स्थलको अवशेष पनि केही बाँकी छ । यहाँ उहिले पहरा रहन्थ्यो भन्ने अनुश्रुति चलेको छ । काठमाडौंबाट हनूमान्ढोका कडेलचोकको भगवती ल्याएर यहीँ राख्ने चलन थियो ।[७] यस दरबारको रंग बैठक भएको भागको पश्चिमपट्टि एक कमलपोखरी थियो भनिन्छ । पोखरी सुक्दा देखिने अवशेष भाग चाहिँ अहिले पनि देखिन्छ । केही काल अगाडिसम्म पनि त्यहाँ कमलहरू थिए भन्ने स्थानीय बूढा-पाकाको भनाइ छ । नगर, प्रासादको शोभाका लागि उहिले कमलपोखरी अनिवार्य जस्तै ठानिन्थ्यो । यहाँको कमलपोखरी त्यति ठूलो भने देखिँदैन, साधारण खालको मात्र थियो भन्ने देखिन्छ । यसै हुँदा शिलालेखमा कमलपोखरीको वर्णन नपरेको बुझिन्छ ।

कमलपोखरी भएको स्थलको अलिकता पूर्वपट्टि "रंगबैठक"को भग्नावशेष रहेको छ । यसलाई "कचहरी घर" पनि भनिँदो रहेछ । १२० मीटर जतिको घेराभित्र भग्नावशेष हाल बाँकी छ । यहाँ तेलिया ईंट आदिको ढिस्को नै रहेको छ । यहाँ उत्खनन गरी हेर्न सकेमा रंगबैठकको ढाँचाकाँचाबारे निकै प्रकाश पर्ने सम्भावना छ । नुवाकोटमाडी-दरबारको प्रमुख अंग नै "रंगमहल" थियो । यस अभिलेखमा "संव्यधाद् रङ्गसौधम्" भनी उक्त कुरा खुलाएर पनि लेखिएको छ । त्यस रंगमहलअन्तर्गत रहेको एक विशेष भाग "रंगबैठक" अथवा "कचहरी घर" भनी नामकरण हुन पुगेको देखिन्छ ।

रंगबैठकको उत्तरपूर्व र पूर्वतिर निकै परसम्म अरू घरहरूका भग्नावशेष पनि केही अंशमा अहिले फेला पर्दछन् । त्यस ताका गढखारसम्म व्यापारको केन्द्र रूपको इलाका[८] फैलिएको हुँदा यस्ता भवनहरू निकै परसम्म पनि रहेको हुन सक्छ । राजदरबारनिर सम्बद्ध भाइभारादारहरूका पनि भवन बन्ने चलन त्यस बेला थियो ।[९]

शिलालेखमा फागुको उत्सव धूमधामसँग मनाइएको वर्णन परेको छ । फागु पूर्णिमाको दिन सो उत्सव केही अंशमा अहिले पनि मनाइन्छ । नुवाकोटका बासिन्दाहरू बाजाका साथ

---

७. गौतम वज्र वज्राचार्य 'हनूमान्ढोका राजदरबार' त्रि. वि. नेपाल र एशियाली अध्ययन संस्थान' वि. सं. २०३२; पृ. १३६–१३७

८. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. १७

९. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३२३–३२४

अहिले पनि सेरा बगैंचामा फागु मनाउन पुग्छन् । केही काल अगाडिसम्म हाम्रो यहाँ फागुको उत्सव धूमधामसँग मनाइन्थ्यो । त्यस वेलामा विशेष नाचगान पनि हुन्थ्यो । विदेशबाट समेत गवैया नर्तकीहरू बोलाइन्थे ।[१०] नुवाकोटमाडी-दरबारमा पनि फागुको उत्सव उहिले विशेष रूपमा मनाइन्थ्यो भने देखिन्छ । फागुको उत्सवमा नुवाकोट नगरवासीहरूको साथ स्वयं प्रतापसिंह शाहले पनि गाना गाएको वर्णन यस शिलालेखमा गरिएको छ ।

यस नुवाकोटमाडी-दरबारको एक उल्लेखनीय ऐतिहासिक महत्व रहेको देखापरेको छ । नुवाकोटप्रति पृथ्वीनारायण शाहको विशेष लगाव रहेको थियो । यसो हुँदा आफ्नो देहत्याग यसै क्षेत्रमा गर्ने विचार उनको मनमा उठेको अनुमान हुन्छ ।[११] हुनत पूर्वतिर सुखीम (सिक्किम)सँग सीमाना जोडिएपछि पूर्वतिरको काज थामी अब पश्चिमतिर बढ्ने विचारले पृथ्वीनारायण शाह नुवाकोटतिर लागेथे ।[१२] तर मन दौडे पनि शरीरले साथ दिन छोडेको संकेत उनले पाइसकेका थिए ।[१३] यसो हुँदा नुवाकोट-दरबारमा केही आराम गर्ने विचार उनले गरे । त्यस वेला हिउँदको ताका थियो, यसो हुँदा नुवाकोट-डाँडाको साततले दरबारभन्दा नुवाकोटमाडी-दरबार आरामदायक थियो । अतः अधिदेखि प्रचलित चलनअनुसार पृथ्वीनारायण शाहले अन्तिम समय तादीको किनारमा रहेको रमणीय शीतकालिक दरबारमा बिताएको कुरामा शङ्का छैन । यसरी पृथ्वीनारायण शाहले दिव्योपदेश दिएको ऐतिहासिक स्थल यही सेरा बेँसीको दरबार थियो भन्ने देखिएको छ ।[१४] अन्त्यावस्थामा उपदेश दिई जाने कुनै विशेष चलन त्यस वेला थिएन । तर आफूले कष्टसाथ उठाएको एकीकरण अभियान त्यसै सेलाएर नजाओस् भन्ने ठूलो पीर पृथ्वीनारायण शाहको मनमा परी रहेको थियो । साथै एकीकरण अभियानलाई सुदृढ पार्न आर्थिक, सामाजिक आदि स्थिति ठीक बसाल्नुपर्ने आवश्यकता पनि उनले अनुभव गरेका थिए । आफ्नो अन्त्यावस्थाले गर्दा यो आवश्यकताको पूर्ति आफूबाट सम्भव नहुँदा भावी पुस्ताले सो पूरा गरोस् भन्ने उत्कट अभिलाषा उनको मनमा थियो । यसो हुँदा रोगले शरीरलाई गाल्दै ल्याए पनि भाइभारदारहरू भेला गरी पृथ्वीनारायण शाहले जुन उपदेश दिएथे, सो नेपाली मात्रको लागि प्रेरणाप्रद, पथ-प्रदर्शक रूपमा रहन पुगेको छ । यसै हुँदा जसलाई "दिव्यउपदेश" को संज्ञा पनि दिइन थालियो । यसरी सो प्रसिद्ध दिव्योपदेश दिइएको ऐतिहासिक स्थल यही नुवाकोटमाडी-दरबार देखिएको छ । यस कारण यस दरबारको ऐतिहासिक महत्त्व निकै रहेको छ भन्ने स्पष्ट छ । 卐

---

१०. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३३१

११. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७३–७४

१२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१५

१३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११८६

१४. 'श्री ५ पृथ्वीनारायण शाहको नुवाकोटमाडी दरबार' कन्ट्रिब्युशन्ज् टु नेप्लिज् स्टडीज् वर्ष २ अङ्क २, पृ. १४५–१५४

[ २१ संख्या ]

# भमरकोटको पृथ्वीनारायण शाहको अभिलेख

भमरकोटको मोढीपाटी भन्ने पाटीको भित्तामा यो अभिलेख कुँदिएको शिलापत्र टाँसी राखिएको छ। यसमा वि.सं. १८२४ दिइएको छ।

'अभिलेख-संकलन'को ७५–७६ पृष्ठमा मोहनप्रसाद खनालद्वारा यो अभिलेख प्रकाशित भएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-विराजमान

२. मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमत्पृथ्वीनारायणशाहदेवानां सदा समर—

३. विजयिनाम लि: आगे सुमेरगीर गोसाइले ॥ भवरकोट ब्यासीक्को षेत विसही छ

४. हलौग्या षेत बिस २ निवुवा कोट्या षेत बिस ५ बाहविश्याको कटुवा षेत बिस

५. ३ करट्या षेत बिस ३ टोडया ब्यासिको षेत बिस ६ ठूलो षेतमहा बिस २ मूरि ५ सब खेत

६. जम्मा ५२५ ब्यांसि डिही गाव घड्यारी लगापातसमेत यति गरी चह्राया

७. सुमेर गिरले चह्रायाको हामीले थामिबक्स्यौं. उसमा राजाले हरण गरी न

८. खानु, सुमेर गिरका सन्तानले बेचि बिखनी अंस गरी नखानु, देवताको पूजा ग–
९. र्नु गुठ गर्नू सदावर्त गर्नु पूजा गर्न्यालाई दिनु देवल पाटि बिग्रदा बनाउनु,
१०. यस बुंदमहा जो चुकला तसलाइ पंचमहापातक लागला, धर्म जगाइ खानु सर्वथा
११. सर्वथा सर्वथा ॥ ॥ स्वस्ति श्रीशाके १६८९ विक्रमादित्यसंवत् १८२४
१२. मार्गसिर वदि १० रोज १ शुभम्

व्याख्या–

सुमेर गिरि गोसाईले अमरकोटका महादेवलाई चढाएको गुठी खेत थामी, त्यसको बन्देज बाँधी पृथ्वीनारायण शाहले यो शिलालेख राख्न लाएका हुन् । आफ्नो तर्फबाट मात्र शिलालेख राख्न लाउँदा पछि सो गुठी जग्गा हरण होला कि भन्ने डरले सुमेर गिरि गोसाईले पृथ्वीनारायण शाहबाट बक्साई यसरी अभिलेख कुँदन लाएका हुन् । यसबाट सुमेर गिरि गोसाईको पृथ्वीनारायण शाहसँग कुनै प्रकारको सम्बन्ध रहेको कुरा झल्कन्छ ।

नेपालको भोट र भारतसँगको व्यापार शुरूमा नेपाली व्यापारीहरूकै हातमा थियो । मध्यकालको उत्तरार्धमा आएर यसमा अन्तर आयो । अब गोसाईहरू र काश्मीरी मुसलमान आदिको पनि यसमा हात रहन लाग्यो । धार्मिक क्षेत्रमा त गोसाईंहरूको स्थान रहेकै थियो, अब वाणिज्य-क्षेत्रमा पनि गोसाईंहरूको हात रहन लाग्यो । भारत तथा नेपालमा समेत मठका मालिक हुन पुगेका हुनाले र धनी हुनाले यिनीहरूलाई व्यापारमा अनुकूलता रहेको थियो ।[१] कारणवश मल्ल राजाहरूले यिनीहरूलाई प्रोत्साहन दिने नीति लिएथे ।[२] नुवाकोट विजयपछि पृथ्वीनारायण शाहले पनि यी गोसाईंहरूलाई हात लिने चेष्टा गरेथे । नेपालको एकीकरण अभियान सफल पार्न पृथ्वीनारायण शाहलाई अर्थको ठूलो खाँचो परेको थियो । त्यस खाँचोको अलिकता अंशमा मात्र भए पनि पूर्ति यी गोसाईंहरूबाट भएथ्यो । साथै भोटसँगको व्यापारबाट लाभ उठाउन पनि यी गोसाईंहरूलाई हात लिएका हुन् । यसो हुँदा पृथ्वीनारायण शाहले कमलवन गोसाईंहरूलाई सुबिधा गरिदिएका पत्रहरू अनेक पाइएका छन् ।[३]

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ९८
२. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ९८, ऐ.सा. खण्ड ६७–६९
३. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ९९–१००

यहाँ राजा पृथ्वीनारायण शाहसँग सुमेर गिरि गोसाईंसँग पनि यस्तै सम्बन्ध रहेको बुझिन्छ । अमरकोट सेलाखाट-अमेलाखा भई भोट जाने प्रसिद्ध व्यापारमार्गमा पर्दथ्यो । यसै हुँदा सुमेर गिरि गोसाईंले अमरकोटका महादेवलाई निकै ठलो संख्यामा खेत गुठी राखिदिएको बुझिन्छ ।

सुमेरगिरि गोसाईंले चढाएको गुठी खेतलाई थामी गरिदिएको यस अभिलेखमा गुठी खेतको सुरक्षाको लागि पृथ्वीनारायण शाहले बाँधिदिएको स्थितिबन्देज उल्लेखनीय छ । एकातिर राजाद्वारा गुठी खेतको हरण नहोस् भन्ने बन्देज रहेको थियो भने अर्कोतिर सुमेर गिरिका सन्तानले पनि गुठी जग्गा बेच्न नपाउने, अंश गरी लिन नपाउने गरिएको छ । ती गुठी खेतको आयस्ताले "देवताको पूजा गर्नु, गूठ गर्नु, सदावर्त गर्नु, पूजा गर्न्यालाई दिनु, देवल पाटि बिग्रं'वा बनाउनु" भन्ने कुरा स्पष्टसँग किटान गरिएको छ । यसरी गुठी प्रथाको मूल उद्देश्य अनुरूप गुठी जग्गाको सदुपयोग होस्; दुरुपयोग नहोस् भन्ने कुरामा पृथ्वीनारायण शाह सावधान थिए भन्ने यताबाट थाहा पाइन्छ ।

卐

[ २२ संख्या ]

# नुवाकोटको महोद्दामकीर्ति शाहको अभिलेख

नुवाकोट भैरवमन्दिरको बाहिरपट्टि दायाँ बायाँ केही घण्टाहरू झुण्ड्याइएका छन् । तीमध्ये दायाँपट्टिको घण्टामा यो अभिलेख कुँदिएको छ । यहाँ विक्रमसंवत् १८२५ दिइएको छ ।

'पुरातत्वपत्रसंग्रह' तेस्रो भागको ११ पृष्ठमा शंकरमान राजवंशीद्वारा यो अभिलेख प्रकाशित भएको छ । 'नुवाकोटको ऐतिहासिक रूपरेखा'को ३१ पृष्ठमा पनि यो छापिएको छ ।

## मूलपाठ

नमः भैरव्यै ॥ ॥ श्रीविक्रमसम्वत् १८२५ ॥
श्रीशाके पञ्चनेत्रद्विपधरणिमितेऽस्मिन्नभस्याद्यपक्षे
पञ्चम्यां रम्यघण्टां व्यतरदरिहरिर्भैरवीप्रीतये सः ॥
स्वस्ति श्रीवीरभद्रात्मजनृपनरभूपालसूनुर्महीयान्
पृथ्वीनारायणस्य क्षितिपतिमुकुटालंकृतेर्भ्रातृरत्नम् ॥ १ ॥
तुहिनगिरिसुताङ्घ्रिद्वन्द्वसच्चञ्चरीको
मदनसुभगरूपभ्रान्तसत्सुन्दरीकः ॥
सकलगुणिगुणज्ञो भूतले वीरमूर्ति-
र्जयति बुधमनोज्ञः श्रीमहोद्दामकीर्तिः ॥ २ ॥

## अनुवाद

श्रीभैरवीलाई नमस्कार । विक्रमसंवत् १८२५ भाद्र कृष्ण पञ्चमीको दिन, शत्रुहरूलाई सखाप पार्ने उहाँ (महोद्दामकीर्ति)ले भैरवी प्रीति गरी घण्टा चढाउनुभयो ।

उहाँ महोद्दामकीर्ति वीरभद्रका नाति, राजा नरभूपालका छोरा, राजाहरूमा शिरोमणि भएका पृथ्वीनारायणका असल भाइ हुनुहुन्छ । उहाँ महोद्दामकीर्ति पार्वतीका पाउको सेवा गर्ने, सुन्दरीहरूको दृष्टिमा कामदेव जस्तै राम्रा, गुणीहरूको गुण चिन्ने पृथ्वीमा वीर कहलाएका, विद्वान्हरूको मनसाय बुझ्ने हुनुहुन्छ ।

### व्याख्या–

पृथ्वीनारायण शाहका तीन आमातिरबाट चार भाइहरू थिए । "हामी तिन थोपिका पांच पाण्डवाको अवतार भयाका थिउं" भनी उक्त कुरा पृथ्वीनारायण शाहले आफ्नो "दिव्योपदेश"को उठानमा गर्वसाथ उल्लेख गरेका छन् ।[१] तिनमा महोद्दामकीर्ति शाह माहिला हुन् ।[२] वि.सं. १८२५ भाद्रमा महोद्दामकीर्तिले नुवाकोट-भैरवीलाई घण्टा चढाई यो अभिलेख कुँदेर लाएका हुन् । देवदेवतालाई घण्टा चढाउनुको ठूलो पुण्य छ भन्ने धारणाअनुसार हुने पुग्नेहरू देवदेवतालाई घण्टा चढाउने गर्दथे । हाम्रो यहाँ यस कुराका अनेक उदाहरण पाइन्छन् ।[३]

पृथ्वीनारायण शाहका चारै भाइहरू लडाका शूर वीर भई निस्केका थिए । पृथ्वीनारायण शाहले उठाएको नेपालको एकीकरण-अभियानमा उनका भाइहरूको योगदान पनि निकै रहेको थियो । नुवाकोटको लडाईंमा बाह्र वर्षको उमेरमा दलमर्दन शाहले "जेठो तरवार" हानी पृथ्वीनारायण शाहको मनमा गहिरो प्रभाव पारेका थिए ।[४] कीर्तिपुरको दोस्रो लडा-

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१५

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३६३

३. घण्टा चढाई राखिएका अभिलेखहरूलाई राम्ररी केलाई हेर्‍यौं भने उपर्युक्त कुराको पुष्टि हुन्छ । यस्ता अभिलेख केही माथि गइसकेका छन्; केही तल आउँदैछन् ।

४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३२१

इँमा कान्छा भाइ शूरप्रताप शाहले आँखा गुमाएका थिए ।[५] माहिला महोद्दामकीर्ति शाहले पनि मकवानपुर लडाइँ आदि अनेक युद्धमा मन लाएर लडेका थिए ।[६]

सबै मानिसको मन एकनासको हुँदैन । आफ्नो केही स्वार्थ छोडेर पनि देशको भविष्य सप्रने काम गरेर जाऔं भन्ने भावना सबैमा उत्पन्न गराउनु गाह्रो हुन्छ । धेरैजसा मानिसको इच्छा आफ्नो केही बन्दोबस्त होस् भन्ने हुन्छ । पृथ्वीनारायण शाहका भाइहरूलाई पनि "हामीले यतिका परिश्रम गरिसक्यौं, अब हाम्रो आपनो पनि केही बन्दोबस्त हुनुपर्छ" भन्ने इच्छाले छोप्यो । यसैले वि.सं. १८२५ मा कान्तिपुर, ललितपुर विजयपछि उनीहरूले सो इच्छा व्यक्त गरे । उनीहरूको इच्छा हामीले पनि कुनै प्रदेशको शासक हुन पाउनुपर्छ भन्ने थियो । परन्तु पृथ्वीनारायण शाह त्यस बेला भाइहरूको इच्छा पूरा गरिदिन सक्ने अवस्थामा थिएनन् ।[७]

पच्चीस वर्षसम्मको ठूलो प्रयत्नले कति क्षय र व्ययले एक पार्दै ल्याएको राज्यलाई अंशबण्डा गरे जस्तै बाँडिदिनु कुनै पनि भविष्य देख्ने शासकले गर्ने कुरा थिएन । मध्यकालमा जस्तै यसरी फेरि राज्य टुक्र्याए भविष्यमा ती राज्यको अस्तित्व पनि नरहने सम्भावना थियो । किनभने उता भारतमा अंग्रेजहरूले आफ्नो शक्ति बढाएर ल्याउँदै थिए । उनीहरू नेपालमा पनि आँखा गाडेर बसेका छन् भन्ने कुरा भरखरको सिँधुलीयुद्धले देखाएको थियो ।[८] यसैले भविष्यमा सो विदेशी शक्तिसँग हामीले जुध्नु छ; यसको लागि हामीले तयार भएर बस्नुपर्छ भन्ने पृथ्वीनारायण शाहले स्पष्ट देखेका थिए ।[९] यस कारण हामीले सानो सानो स्वार्थमा लागेर कमजोर हुनु हुँदैन भन्ने उनको विचार थियो ।

पृथ्वीनारायण शाहको यो विचार उनका भाइहरूलाई प्रिय भएन । यसैले उनीहरू दाजुदेखि अप्रसन्न भए । हुनत पृथ्वीनारायण शाहले आफ्ना भाइहरूलाई प्रसन्न पार्ने चेष्टा सकभर गरेका थिए । माहिला भाइ महोद्दामकीर्ति र साहिँला भाइ दलमर्दनलाई उनले "चौतारा" (मुख्यमन्त्री) बनाएका थिए । दुइ जना चौतारा हुँदा महोद्दामकीर्ति "जेठा चौतारा"

---

५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५००

६. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८४३

७. धनवज्र र ज्ञानमणि नेपाल 'ऐतिहासिक पत्रसंग्रह' पहिलो भाग, नेपाल सांस्कृतिक परिषद् काठमाडौं, वि.सं. २०१४, पृ. ३२—३४

८. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १०२६—१०३०

९. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३२२

र दलमर्दन "कान्छा चौतारा" कहलाएका थिए।[१०] त्यस बेलाको राज्यप्रशासनमा सबभन्दा ठूलो पद चौतारा नै थियो।[११] त्यही पद दुइ भाइलाई दिई उनीहरूको परिश्रमको कदर गरिएको थियो। अरू दुइ भाइलाई पनि उनले काजी र सेनापतिको बर्जाले सम्मानित गरेका थिए।[१२]

यसरी पृथ्वीनारायण शाहले सकभर भाइहरूको कदर गरेका थिए तापनि उनीहरू सन्तुष्ट भएनन्। उनीहरू आफू एक एक प्रदेशका राजै हुन चाहन्थे। परन्तु पृथ्वीनारायण शाहले यसो गर्न पछि स्पष्ट रूपमा मञ्जूर नगर्दा उनीहरू भित्र भित्र मुरमुरिए। पछि जेठा चौतारा महोद्दामकीर्तिले मधेशतिर गई विद्रोह गर्ने चेष्टासम्म गरेथे।[१३] परन्तु पृथ्वीनारायण शाहको नीतिले गर्दा उनका साथमा योग्य स्वामिभक्त भारदारहरू भएका हुँदा महोद्दामकीर्ति शाहको चेष्टा सफल हुन सकेन।

पृथ्वीनारायण शाहको मृत्यु भएको तीन दिनपछि आफ्नो इच्छा पूरा गर्न कास्कीका राजा सिद्धिनारायण शाहसँग गुहार माग्न महोद्दामकीर्ति शाह पुगेका थिए। सिद्धिनारायण शाहले "धर्मपत्र" पनि लेखिदिएका थिए।[१४] तर यसबाट पनि कुनै नतीजा निस्केन।

पृथ्वीनारायण शाहका माहिला भाइ महोद्दामकीर्तिको आकांक्षा ठूलो थियो; उनी पाए कुनै प्रदेशका राजा हुने सुरमा थिए भन्ने दर्शाउन माथि केही विवरण दिइएको हो। वि.सं. १८२५ भाद्रमा नुवाकोट-भैरवीलाई घण्टा चढाउनुमा पनि उही आफ्नो मनोवाञ्छा पूरा होस् भन्ने चाहना रहेको बुझिन्छ। घण्टा चढाएको यो मिति कान्तिपुर विजय गर्नुभन्दा केही दिन अघिको मात्र हो।

जे होस्; महोद्दामकीर्तिको यो सानो अभिलेखबाट पनि तात्कालिक केही कुरा बुझ्न मद्दत पाइन्छ। वीरभद्र, नरभूपाल, महोद्दामकीर्ति तीन पुस्ताको नामोल्लेख यसमा परेको छ। पृथ्वीनारायण शाहको बढ्दो शक्तिको झलक पनि यहाँ झल्किन्छ।



१०. 'ऐतिहासिक पत्रसंग्रह' पहिलो भाग, पृ. ३१–३२
११. 'पाञ्चाली शासन–पद्धतिको ऐतिहासिक विवेचना' पृ. १३१
१२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३९३
१३. 'ऐतिहासिक पत्रसंग्रह' पहिलो भाग, पृ. ३४–३५
१४. रामजी तेवारी र अरू 'ऐतिहासिक पत्रसंग्रह' दोस्रो भाग, पृ. ८६–८७

[ २३ संख्या ]

# वसन्तपुरको पृथ्वीनारायण शाहको अभिलेख

हनूमान् ढोका, वसन्तपुर-दरबारको उत्तरपट्टिको ढोकाको (नासलचोक भित्रको) निदालमा यो अभिलेख कुँदिएको छ। 'संस्कृत-सन्देश' १।११मा धनवज्र वज्राचार्य र ज्ञानमणि नेपाल-द्वारा यो छापिएको छ। 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश'को ४३०–३१ पृष्ठमा र 'हनूमान्ढोका राजदरबार'को २६२–६३ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ।। गोरक्षेशनरेशवंशतिलकात्पृथ्वीपतेः प्राभवद् भूपाल–द्विरदाङ्कुशः

२. क्षितितले श्रीवीरभद्रो नृपः ।। तत्सूनुर्नरभूपसाहसुकृती भूकल्पशाखी यतो

३. यातः को नु मृषाभिलाषसहितो दिश्यो जनः सोभवत् ।।१।। तस्मादभवन्नृपतिः

४. पृथ्वीनारायणेति नामासौ दुर्जननिग्रहकारी रक्षावतीर्णगिरिधारीव ।।२।।

५. भूमिनन्दरसचन्द्रमितेब्दे शालिवाहनशके मधुमासे ।। धातृभे शनिदिने युगल–

६. ग्ने नागदैवततिथौ सितपक्षे ।।३।। तेन भूपकरिसिंहवरेण निर्म्मितं किल वसन्तसुह–

७. र्म्यम् ।। चित्रजालबहुभूमविशेषं सुन्दरीसुदृढमाननिरासम् ।।४।। समस्त भूपाल—

८. कुलाब्धिलक्ष्मीमादाय लोके विहिता विधात्रा ।। नारीगुणाढ्या पतिविष्णु-भावा रा–

९. ज्ञी तदीया हि नरेन्द्रलक्ष्मीः ॥५॥ सूनुद्वयं भूपतिवर्गसिंहादजीजनत्सिंहकुमा–
१०. रकल्पम् ॥ प्रतापसिंहः प्रथमः कनीयाल्लोके बहादूर इति प्रसिद्धः ॥६॥श्र‍ु॥
११. स्वस्ति ॥ वीरोसौ जयति क्षितीशमुकुटालङ्कारहीरावलीविद्यु(द्)द्योतित-
पाद–
१२. पङ्कजयुगप्रोद्भासितक्ष्मातलः ॥ नेपालक्षितिपालबालवनितासिन्दूरविन्दूनह–
१३. ठान्नेपालं स्ववशीचकार तरसा संमार्ज्य बाह्वोर्बलात् ॥१॥कास्मल्लीखां प्रयातो वरु–
१४. णदिशि जितो यस्य भल्लप्रहारादार्त्तो मत्तःक्षणेन क्षणमपि न रणे स्थातु-
मीशः फिरङ्गी ॥
१५ गेहे शूराः प्रतीच्या रणभुवि सुभटैर्न्निर्ज्जितास्ते वराकाः पृथ्वीनारायणेशो
रिपुदवदहनो
१६. भाति नेपालसिंहः ॥२॥ यावद्भूर्भूधराढ्या दिनमणिशशिनौ सप्तपा
१७. थोधयोपि यावन्नक्षत्रमाला विलसति गगने तावदेव स्थिरः
१८. स्यात् ॥ पृथ्वीनारायणस्य क्षितिपतिमुकुटप्रोतहीरस्य वंशो
१९. नेपाले गुह्यकालीपशुपतिचरणद्वन्द्वधूलिप्रसादात् ॥३॥
२०. शुभमस्तु ॥ श्रीश्रीश्रीपशुपतये नमः ॥श्र‍ु॥

## अनुवाद

श्रीगणेशलाई नमस्कार छ । गोरखालां राजवंशमा श्रेष्ठ भएका राजा पृथ्वीपतिबाट राजारूपी हात्तीहरूमा अंकुश जस्ता भएका वीरभद्र शाह देव पृथ्वीमा पैदा हुनुभयो । जसबाट इच्छा पूर्ण नभई (रित्तो हात) कुनचाहिँ दिशामा बस्ने मानिस फर्केर गयो र ? ।

उहाँबाट दुष्टलाई दण्ड दिने, रक्षानिमित्त अवतार लिनुभएका कृष्ण जस्ता यहाँ पृथ्वी-नारायण राजा हुनुभयो ।

शकसंवत् १६६१ (वि.सं. १८२६) चैत्र शुक्ल पञ्चमी शनैश्चरवार रोहिणीनक्षत्र मिथुन लग्नमा ॥

राजारूपी हात्तीमा सिंह जस्ता भएका उहाँ महाराजले किसिम किसिमका ख्याल भएको घेरै तला भएको सुन्दरीहरूको दृढ मान तोडिदिने वसन्तपुर दरबार बनाउनुभयो ।

सबै राजकुलरूपी समुद्रबाट लक्ष्मी (शोभा)लाई लिएर ब्रह्माजीले पृथ्वीमा पैदा गरिएकी, स्त्रीजातिमा हुनुपर्ने गुणले युक्त भएकी, पतिलाई विष्णु संझने नरेन्द्रलक्ष्मी उहाँ महाराजका महारानी हुनुहुन्छ ।

राजाहरूमा सिंह जस्ता भएका महाराज (पृथ्वीनारायण शाह)बाट (उहाँ महारानीले) सिंहका डमरू जस्ता दुइ छोरा पैदा गर्नु भयो । जेठा प्रतापसिंह शाह र कान्छा बहादुर शाह भनी लोकमा प्रसिद्ध हुनुहुन्छ ।

कल्याण होस् ।

राजाका श्रीपेच सिंगार्ने हीराका लहरका तेजले सुहाएका आफ्ना दुइ चरणकमलले पृथ्वीतल उज्यालो पार्ने, वीर उहाँ महाराजले नेपाल(उपत्यका)का राजाका आइमाईहरूका सिन्दूरका टीकालाई बलजफतले पुछेर बाहुबलले नेपाल(उपत्यका)लाई आफ्नो वशमा पार्नु-भयो ॥ १ ।

जसका भालाका चोटले घाइते भएको कास्मल्लीखाँ (मीरकासिम) हारेर पश्चिमतिर भागेर गयो । केही काल माद बढेको फिरंगी (अङ्ग्रेज) लडाईंमा एक छिन पनि टिक्न सकेन । घरका बाघ ती बिचरा पश्चिमाहरू (बाईसी चौबीसीहरू) जसका बलिया सिपाहीहरूले लडाईंको मैदानमा जितिए । शत्रुरूपी जंगलमा डढेलो भएका नेपालकेशरी महाराज पृथ्वी-नारायण शाह सुहाइरहनुभएको छ ।

जबसम्म पर्वतले युक्त पृथ्वी, चन्द्र, सूर्य, सात समुद्र रहन्छन् । जबसम्म आकाशमा ताराहरू चंकिरहन्छन् । तबसम्म राजाहरूको श्रीपेचमा जडेको हीरासमान भएका महाराज पृथ्वीनारायणको वंश गुह्येश्वरी र पशुपतिका दुइ पाउका धूलाका प्रसादले नेपालमा स्थिर भइरहोस् ॥ ३ ॥ शुभ ॥ श्री ३ पशुपतिनाथलाई नमस्कार।

卐

[ २४ संख्या ]

# वसन्तपुरको पृथ्वीनारायण शाहको अभिलेख

## मूलपाठ

१. श्रीगणेशाय नमः ।। धरानवर्त्त भूमिते शके सुमा-
२. सि माधवे सितेथ पक्षके शनौ विधातृभे तिथावहे: ।। वि-
३. चित्रजालमण्डितं विलासमन्दिरं मुदा विधाय मन्मथोत्सवं व्यधा-
४. न्महीशकेशरी ।।१।। श्रीमद्दुर्गाङ्घ्रिरक्ताम्बुजमधुरमधुस्वादु भृङ्गायमाण-
५. स्तस्या दृक्प्रान्तपातामितपरमकृपावाप्तनेपालराज्यः ।। दानोद्र्रे—
६. कातिलुब्धभ्रमरगणसमानेकविद्वत्प्रशस्तः पृथ्वीनारायणेशो
७. जयति नृपशिखारत्ननीराजिताङ्घ्रिः ।।२।। शुभमस्तु ।।
८. स्वस्ति ।। राजानः सन्ति नो किं दिशि दिशि धरणीपालवंशाब्धिजाताद्यूत-
९. स्वापाबलासु प्रणिहितमनसो दानयुद्धप्रहीणाः ।। पृथ्वीनारायणेशो रिपुद-
१०. वदहनप्रौढदावानलोसौ दाने मेघोपमानो जयति निजधरावारितद्यूतदो-
११. षः ।। ३ ।। समस्तभूपालकुलाब्धिलक्ष्मीमादाय भूमौ विहिता विधात्रा ।। रमाभिरामा
१२. पतिविष्णुभावा राज्ञी तदीया हि नरेन्द्रलक्ष्मीः ।।४।। सूनुद्वयं भूपतिवर्गसिंहा-
१३. दजीजनत्साथ कुमारकल्पम् ।। प्रतापसिंहः प्रथमः कनीयांल्लोके
१४. बहादूर इति प्रसिद्धः ।।५।। शुभमस्तु ।।श्र।। गृहमिदं स्थिरो भवतु ।।

# अनुवाद

श्रीगणेशलाई नमस्कार । शकसंवत् १६६१ (वि-सं. १८२६) चैत्र शुक्ल पञ्चमी रोहिणी नक्षत्र शनैश्चरवारका दिन राजामा सिंह जस्ता (पृथ्वीनारायण शाहले) मन्मथोत्सव (कामदेवको पूजा गरी गर्ने उत्सव = फागुको उत्सव) गरीकन किसिम किसिमका झ्यालले सिंगारिएको (यो) विलास-मन्दिर हर्षपूर्वक बनाउनुभयो ॥१॥

श्रीदुर्गाका चरणरूपी रातो कमलको मीठो रस लिनामा भमरा जस्ता (दुर्गाको उपासना गर्ने), दुर्गाको कटाक्ष पर्नुरूपी ठूलो कृपाले नेपालराज्य पाएका, दान (हात्तीको मदजल)मा झुम्मिएका भमराहरू झैं प्रशस्त दान पाएका धेरै विद्वान्हरूले तारीफ गरिएका, राजाहरूका श्रीपेचका रत्नले पाउ झलमल्ल भएका (सामन्त राजाहरूले ढोगिएका), महाराज पृथ्वीनारायण शाह हुनुहुन्छ ॥२॥

कल्याण होस् ।

जुवामा लहसिएका, सुती सुती दिन काट्ने, आइमाईहरूमा भुलेका, दान नगर्ने, लडाईं भिडाईं देखि हटेका अनेक राजकुलमा जन्मेका राजाहरू त के जतातते पाईंदैनन् र ? । यहाँ पृथ्वीनारायण शाह डँढेलोले वन डढाए झैं शत्रुहरूलाई सन्ताप पार्नुहुन्छ, मेघले पानी वर्षाए झैं दान गर्नुहुन्छ तथा उहाँले आफ्नो राज्यभर जुवा बन्द गरिसक्नुभएको छ ॥३॥

सारा राजकुलरूपी समुद्रबाट लक्ष्मी (शोभा)लाई लिई ब्रह्माजीले पृथ्वीमा पैदा गरिएकी, साक्षात् लक्ष्मी जस्तै राज्ञी, पतिलाई विष्णु सम्झने नरेन्द्रलक्ष्मी उहाँ महाराजका महारानी हुनुहुन्छ ॥४॥

उहाँ (महारानी नरेन्द्रलक्ष्मी)ले राजाहरूमा सिंहजस्ता (पृथ्वीनारायण शाह)बाट स्वामिकार्तिक जस्ता दुइ पुत्र जन्माउनुभयो । जेठा प्रतापसिंह शाह र कान्छा बहादुर शाह भनी लोकमा प्रख्यात हुनुहुन्छ ।

कल्याण होस् । यो दरबार स्थिर भइरहोस् ।

व्याख्या–

काठमाडौँ वसन्तपुर दरबारको दक्षिण ढोकामा र उत्तर ढोकामा गरी माथिका दुइ अभिलेख कुँदिएका छन् । दक्षिणतिर ढोकामा रहेको अभिलेखमा मिति १६९१ शकसंवत् माधव महीना, शुक्लपक्ष पञ्चमी तिथि शनैश्चरवार रोहिणीनक्षत्र दिइएको छ । उत्तरतिर रहेको अभिलेखमा चाहिँ १६९१ शकसंवत् मधुमहीना, शुक्कपक्ष पञ्चमी तिथि शनैश्चरवार रोहिणीनक्षत्र दिइएको छ । "वैशाखे माधवो राधः" अमरकोश १।४।१६ अनुसार माधवको अर्थ वैशाख भन्ने हुन्छ । "स्याच्चैत्रे चैत्रिको मधुः" अमरकोश १।४।१५ अनुसार मधुको अर्थ चैत्र भन्ने हुन्छ । यसबाट ङ्वाट्ट हेर्दा यी दुइ अभिलेख एकसाथ राखेको होइन कि भन्ने देखा पर्छ । तर महीना फरक भए पनि दुवै अभिलेखका संवत् तिथि नक्षत्र वारहरू एउटै छन् । यसरी सन्देह उठे तापनि गणनाबाट यी दुवै अभिलेख वि.सं. १८२६ चैत्र २२ गते चैत्र शुक्ल पञ्चमी शनैश्चरवारको बिहान पख ( ७।४७ उप्रान्त ९।५२ घडीभित्र ) वसन्तपुर दरबारको प्रतिष्ठा गरी राखिएका हुन् भन्ने प्रमाणित भएको छ ।[१]

वि.सं. १८२५ आश्विन १३ गते पृथ्वीनारायण शाहद्वारा कान्तिपुर-विजय गरिएको हो।[२] त्यसको लगत्तै पछि ललितपुर पनि जितियो ।[३] यसको लगत्तै पछि भक्तपुर पनि जित्ने चेष्टा पृथ्वीनारायण शाहले गरेथे । तर त्यति छिटो यसमा सफलता मिल्न सकेन । उपत्यकाका तीनै मल्ल राजाहरू भक्तपुरमा जम्मा भई सक्दो रक्षाको बन्दोबस्त मिलाई बसेका हुनाले भक्तपुर नजितेसम्म नेपाल-उपत्यकाविजयको काम अधूरो नै रहने हुनाले भक्तपुर जित्न पृथ्वी-नारायण शाह निकै हतारिएका थिए । यसका लागि उनले कडा कारवाइ गरेका थिए ।[४] तर एक वर्ष पछि मात्र भक्तपुर जित्न पृथ्वीनारायण शाह सफल भए । यस युद्धमा निकै जन धनको पनि क्षति भयो ।[५] जे होस्; भक्तपुर विजय एकीकरण अभियानको महत्त्वपूर्ण अङ्ग बनेथ्यो । यसैले पृथ्वीनारायण शाहका दरबारिया कवि ललितावल्लभले यस कुराको महत्त्व

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ४३३–४३५
२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८७७–८८०
३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८८०–८८२
४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११४१–११४३
५. संशोधनमण्डल 'इतिहास संशोधनको प्रमाण प्रमेय' जगदम्बा प्रकाशन, ललितपुर, वि.सं. २०१९, पृ. ११७

बुझी 'भक्तविजयकाव्य' नै लेखेथे ।[६] उपत्यकाविजयपछि पृथ्वीनारायण शाहले कान्तिपुरलाई महत्त्व दिई राजधानी बनाएका हुनाले यसो हेर्दा कान्तिपुरविजय काव्य लेखिनुपर्न जस्तो देखिन्छ । तर भक्तपुरविजयको ऐतिहासिक महत्त्व कान्तिपुरविजयभन्दा बढी रहेको थियो ।

भक्तपुर विजयपछि पृथ्वीनारायण शाहको शताब्दीको चौथाइ समय लगाई गरिएको उद्योग सफल भएथ्यो । अब यो विजय दीगो भयो भन्ने दृढ विश्वास उनलाई भएपछि कान्तिपुर-दरबारमा आफ्नो पनि एक भव्य कलात्मक कृति राख्ने इच्छा पृथ्वीनारायण शाहको मनमा उठ्यो । उनको सोही इच्छाको मूर्त रूप वर्तमान वसन्तपुर दरबार हो ।

उपत्यकाका मल्ल राजाहरूका तीन राजधानी कब्जा गरेपछि पृथ्वीनारायण शाहलाई आर्थिक लाभ पनि निकै भएथ्यो ।[७] त्यसपछि आर्थिक अवस्था राम्रो भएथ्यो । यसो हुनाले पनि एक भव्य कलात्मक भवन बनाउन लाउने विचार उनको मनमा उठेको बुझिन्छ ।

खेती हुने हराभरा जग्गा घर बनाई मास्नु हुँदैन भन्ने सिद्धान्त पृथ्वीनारायण शाहको थियो ।[८] यसो हुँदा उनी दहचोक-डाँडोमा दरबार बनाई बस्ने विचारमा थिए ।[९] तर एकीकरण अभियानको लागि भएको व्यस्तताले गर्दा सो विचारलाई उनले मूर्त रूप दिन सकेनन् ।

---

६. सं. चौ. फत्यजङ्गपराक्रम शाह 'भक्तविजयकाव्य'
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३९२–४०२

७. तुलसीराम वैद्य 'पृथ्वीनारायण शाह–रणजित्मल्लकालिक कागतपत्र' त्रि. वि. नेपाल अध्ययन संस्थान, वि.सं. २०२८,

यसमा भक्तपुर कब्जा गरिएपछि भक्तपुरदरबारबाट प्राप्त नगद र जिन्सीको विवरण परेको छ । साथै तात्कालिक अरू पत्रबाट पनि उक्त कुराको पुष्टि हुन्छ ।

८. "गह्रो बन्न्या जग्गामा घर भया पनि घर अरु जग्गामा सारि कुलो काटि षेत बनाई अबाद गर्नु" – दिव्योपदेश ।
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३२९

९. "……मेरो मनसुबा ता दहचोकमा दरबार बनाउला र चारै दिसा घरघरको गुरु प्रोहित भैंयाद भारादार मिर उमराउको घर बनाई छुट्टा दरबार बनाउला…… भन्यां यस्तो अविलाष थीयो" – दिव्योपदेश ।
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३२४

बसन्तपुर दरबार बनाई कुँदन लाइएका यी दुइ अभिलेखमा पृथ्वीनारायण शाहका कार्य र सिद्धान्तको ठीक ठीक प्रतिनिधित्व भएको छैन। अभिलेखको रचना गर्ने पण्डितजीले संस्कृत साहित्यमा ठूला राजाको वर्णन गर्दा प्रयुक्त गरिने साधारण शैलीलाई नै यहाँ पनि अपनाएका छन्। तैपनि यी दुइ अभिलेखमा पृथ्वीनारायणसम्बन्धी महत्त्वपूर्ण कुराको केही झलक पाइन्छ। विचारार्थ तिनको झलिकता चर्चा यहाँ गर्नुपरेको छ।

पृथ्वीनारायण शाह विजिगीषु प्रकृतिका दूरदर्शी व्यक्ति थिए। राष्ट्रको निर्माणतिर लम्कनुपरेको बेलामा त्यसका बाधारूपका व्यसनमा फस्नु हुँदैन भन्ने उनको सिद्धान्त थियो।[१०] धनी सम्पन्न व्यक्तिहरूलाई उँभो लाउने कुरामा बाधक तत्त्वमध्ये भोगविलासमा फस्नु, जूवा खेल्नु, सुतेर आलस्यपूर्वक दिन बिताउनु आदि पनि हुन्। आफ्ना सामानकालिक राजाहरूमा उक्त दुर्व्यसनहरू रहेको पृथ्वीनारायण शाहले महसुस गरेका थिए। यसो हुनाले दक्षिणपट्टिको अभिलेखमा पृथ्वीनारायण शाहको वर्णन प्रसंगमा उक्त कुराको स्पष्ट शब्दमा निन्दा गरिएको छ। साथै 'निजधराधारितद्यूतदोष" भनी आफ्नो अधिराज्यभर पृथ्वीनारायण शाहले जूवा बन्द गरेको घोषणा पनि उक्त अभिलेखमा गरिएको छ। यो कुरा हेर्दा साधारण भए पनि जूवा आदि व्यसन कुनै पनि जातिलाई पतन गराउने तत्त्व हो भन्ने कुरा राष्ट्र-निर्माता पृथ्वीनारायण शाहले राम्ररी बुझेका रहेछन् भन्ने महत्त्वपूर्ण संकेत यताबाट पाइन्छ। राष्ट्रनिर्माणको लागि शक्ति, राजनैतिक कुशलता मात्र पर्याप्त हुँदैनन्; त्यसका लागि चरित्रबलको पनि उत्तिकै आवश्यकता हुन्छ भन्ने कुरा पृथ्वीनारायण शाहले राम्ररी बुझेका थिए भन्ने संकेत यताबाट पाइन्छ। पृथ्वीनारायण शाहको संसर्ग पाएका भारादारहरू एकसे एक कर्तव्यनिष्ठ, देशभक्त रहनामा पृथ्वीनारायण शाहको उक्त नीति पनि कारण रहेको थियो।[११]

यी अभिलेख कुँदन लाएको समयसम्म पृथ्वीनारायण शाहले नेपालउपत्यकाका मल्ल राजा, मकवानपुरका सेन राजालाई मात्र जितेका होइनन्; यस बीच उनले दुइ पटक विदेशी शक्ति-सँग पनि टक्कर लिई सकेका थिए। तिनमा एक हुन्; बंगालका मीरकासिम। पृथ्वीनारायण शाहले मकवानपुर कब्जा गरेपछि बंगालका नवाब मीरकासिमले मकवानपुर कब्जा गर्न फौज

१०. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३२५,३३१

११. पृथ्वीनारायण शाहको सहवास, आश्रय पाएका भारदारहरू खालि लडाका, राजनीतिज्ञ मात्र थिएनन्; उनीहरूको चरित्रबल पनि उच्च रहेको थियो; यो विचारणीय कुरा रहेको छ। उक्त कुरा पृथ्वीनारायण शाहले लिएको नीतिकै परिणाम थियो भन्ने स्पष्ट छ।

पठाएथे । तर गोरखाली सैन्यको मार पर्दा टिक्न नसकी सो मुसलमानी सैन्य भागेथ्यो। यस विजयबाट पृथ्वीनारायण शाहको प्रतिष्ठा जम्नुको साथै यसबाट निकै हातहतियारसमेत हात लागेथ्यो। यसै घटनापछि बन्दूकधारी पाँच कम्पनी पृथ्वीनारायण शाहले खडा गरेथे।[१२] यसो हुनाले मीरकासिम पराजय पृथ्वीनारायण शाहको एकीकरण अभियानसिलसिलामा भएका घटनामध्ये एक उल्लेखनीय घटना थियो। यसो हुनाले वसन्तपुर दरबारको यस अभिलेखमा "कास्मल्लीखाँ प्रयातो वरुणदिशि जितो यस्य मल्लप्रहारात्" भनी गर्वसाथ वर्णन गरिएको छ। आफ्नो उपदेशमा पनि पृथ्वीनारायण शाहले "कास्मेरिखान् नवाफ् मकवानपुरमा चढ्यो र छअबिस् घोडाले काटि घर्काई सिवाना कटाई आजाँ" भनी उक्त कुराको चर्चा गरेका छन्।[१३]

दोस्रो विदेशी शक्ति अंग्रेजको थियो। बक्सरको युद्धमा सफलता पाएपछि भारतमा अंग्रेजहरू निकै शक्तिशाली भएका थिए। कान्तिपुरलाई चारैतिरबाट नाकाबन्दी गरी घेरेपछि कान्तिपुरका राजा जयप्रकाश मल्लले अंग्रेजहरूसँग गुहार मागेका थिए। त्यसै सिलसिलामा वि.सं. १८२४ मा किनलकको नेतृत्वमा अंग्रेजी सैन्य सिन्धुलीतिरबाट नेपाल पसेको थियो। तर पृथ्वीनारायण शाह यसबाट कत्ति पनि आत्तिएनन्। बरु पहिले मीरकासिमको आक्रमणबाट फाइदा उठाए जस्तै यस आक्रमणबाट पनि फाइदा उठाउनुपर्छ भन्ने योजनामा उनी लागे। हुन पनि गोरखाली सैन्यले अकस्मात् आक्रमण गर्दा अंग्रेजी सैन्य तितरबितर भयो र निकै हातहतियार छोडी भाग्यो।[१४] यसरी सजिलैसँग गोरखाली सैन्यले अंग्रेजी सैन्यलाई धपाए पनि "यो बल फेरि आउनेछ" भन्ने कुरा पृथ्वीनारायण शाहले राम्ररी बुझेका थिए।[१५] यो शक्तिबाट राष्ट्रलाई जोगाउन सकिएन भने नेपालको राष्ट्रिय अस्तित्वमै ठूलो खतरा छ भन्ने कुरा पृथ्वीनारायण शाहले राम्ररी बुझेका थिए। यस कारण अंग्रेजसँगको सिन्धुली-युद्धको महत्त्वको चर्चा वसन्तपुर दरबारको यस अभिलेखमा "मत्तः क्षणेन क्षणमपि न रणे स्थातुमीशः फिरङ्गी" भनी उल्लेख गरिएको छ। "दिव्योपदेश" मा पनि "तिन चार पल्टन् लिएर सिंडुलि गढिमा हाँडीसाहेव चढ्यो र वा वाही पनि काटि पथर्काला च्याति त्याजा" भनी उक्त घटनाको स्मरण गरिएको छ।[१६]

---

१२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८४४,८५२

१३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३३०

१४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८६४,१०३०

१५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३२२

१६. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३३०

नेपालको एकीकरण अभियानको सिलसिलामा गोरखाले पूर्वतिर बढ्दा एक ठूलो बाधाका रूपमा चौबीसी, बाईसी राज्यहरू रहे । गोरखा पूर्वतिर बढ्दा उनीहरूले बारंबार पश्चिमबाट गोरखामा हमला गरी दुःख दिएथे ।[१७] पृथ्वीनारायण शाहको लागि पछाडि शुद्ध पार्नुपर्ने यो काम एक समस्याको रूपमा रहेको थियो । तर सैनिकशक्तिको दृष्टिले चौबीसी आदि राज्य केही बलिया थिए तापनि उनीहरूको कुनै स्पष्ट लक्ष्य वा उद्देश्य थिएन । यसो हुनाले पृथ्वी-नारायण शाहले अनेक कूटनैतिक प्रयोग गरी चौबीसी बाईसीको प्रयासलाई असफल पारेथे ।[१८] यसै हुँदा वसन्तपुर दरबारको यस अभिलेखमा "गेहे शूराः प्रतीच्या रणभूमि सुभटैर्न्निर्ज्जितास्ते बराकाः" भनी चौबीसी बाईसीप्रति आफ्नो धारणा व्यक्त गरिएको छ। "दिव्योपदेश "मा पनि बाईसी चौबीसीहरूलाई "हाति हउवा" शब्दले व्यङ्ग्य गरिएको छ।[१९] ह्वाट्ट हेर्दा मात्र बाईसी चौबीसीहरू बलिया जस्ता देखिन्छन्; वास्तवमा भित्र त्यति गुदी छैन भन्ने उक्त भनाइको तात्पर्य हो ।

वसन्तपुर-दरबार बनाई राखिएका यी दुइ अभिलेखबाट यसै गरी अरू तात्कालिक केही कुरा पनि हामी बुझ्छौं । गोरखाले पूर्वतिर बढी नेपाल-उपत्यकाका तीनै मल्ल राजाहरूलाई जित्न सक्नामा पृथ्वीपति शाहले गरेको प्रयास पनि एक उल्लेखनीय कारण हो [२०] भन्ने कुरा पृथ्वीनारायण शाहको मनमा रहेको थियो । यसै हुँदा यी अभिलेखमा पनि पृथ्वीपति शाह-देखिका आफ्ना पुर्खाको वर्णन गराइएको छ। भक्तविजय काव्य, पृथ्वीन्द्रवर्णोदय काव्य आदिमा पनि पृथ्वीपति शाहदेखि नै वर्णन गरिएको छ ।[२१]

यी अभिलेखमा पृथ्वीनारायण शाहले आफ्ना बडामहारानी, युवराज र अर्का राजकुमारको पनि वर्णन गराई तत्सम्बन्धी घोषणा पनि विधिवत् गराइएको छ ।

---

१७. धनवज्र वज्राचार्य 'श्री ५ पृथ्वीनारायण शाह र गुहारयुग' मधुपर्क वर्ष २ अङ्क ११, गोरखापत्र करपोरेशन, काठमाडौं, वि.सं. २०२६, पृ. ६८–८०

१८. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६३०–६३२, ६३६–६३७, १००४, ११००–११०४

१९. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१७

२०. धनवज्र वज्राचार्य 'गोरखाको पूर्वतिर बढ्ने उद्योग' मधुपर्क वर्ष २, अङ्क ८, पृ. २६–३३

२१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३६२,४३७

यसरी पृथ्वीनारायण शाहका बडामहारानी नरेन्द्रलक्ष्मी, युवराज प्रतापसिंह शाह र राजकुमारका रूपमा बहादुर शाह हुन् भन्ने कुराको प्रख्याति गराइएको पाइन्छ। यस बेला बहादुर शाह भरखर तेह्र वर्षका मात्र थिए।[२२] तैपनि आफ्नो व्यक्तित्वले गर्दा उनको प्रसिद्धि फैलिन थालेको संकेत "लोके बहादूर इति प्रसिद्धः" भन्ने उक्तिले दर्शाउँछ। प्रतापसिंहलाई चाहिँ जेठा हुन् भन्ने भाव मात्र यहाँ व्यक्त गरिएको छ।

शाही सम्बोधनहरूमा गुह्येश्वरी पशुपतिले रक्षा गरून् भन्ने जुन वाक्य प्रयोग गर्ने चलन चलेको छ; त्यसको शुरुआत पृथ्वीनारायण शाहद्वारा उपत्यकाविजयपछि नै चलन थालेको थियो भन्ने कुरा पनि यी अभिलेखबाट थाहा पाइन्छ। यहाँ "नेपाले पृथ्वीनारायणस्य वंशो गुह्यकालीपशुपतिचरणद्वन्द्वधूलीप्रसादात् स्थिरः स्यात्" भन्ने कामना व्यक्त गरिएको छ।

यसै गरी यी अभिलेखबाट कलात्मक वसन्तपुर दरबार बनाउनाको उद्देश्य आदि कुरामा पनि केही प्रकाश पर्छ। यस कारण तात्कालिक कुरा बुझ्न यी दुइ शिलालेख निकै उपयोगी छन्।

卐

---

२२. राजकुमार बहादुर शाहको जन्म वि. सं. १८१४ मा भएको हो। वसन्तपुरका यी अभिलेख राख्दा उनी तेह्र वर्ष लागेका थिए।

[ २५ संख्या ]

# भीमेश्वर-भण्डारको पृथ्वीनारायण शाहको पालाको अभिलेख

दोलखा, भीमेश्वर-भण्डारमा केही ताम्रपत्रहरू रहेका छन् । तिनमध्ये एउटा ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८२६ दिइएको छ ।

'दोलखाको ऐतिहासिक रूपरेखा'को १२३ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख प्रकाशित भएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीशाके १६९१ माषे वैशाषशुक्लपक्षदसम्यायां तिथौ उत्तर फाल्गुनिन–
२. क्षेत्रे हर्षणयोगे शोमवासरे, तसुदिने श्रीश्रीश्रीश्रीश्रीभीमेश्वरका खम्ब
३. प्रतिष्ठा गऱ्याको श्रीश्रीश्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमत्पृथ्वीनारायण–
४. साहदेवस्य कनेष्ट भ्राता श्रीश्रीमद्दलजित साहवको दोलषाको अंवल हुदा दुवा–
५. ऱ्या श्रीगजसिं षवास, श्रीकिसन लामा, दोलषाका प्रधान देशवार सिद्धिसंषर
६. केसौनारायन, गुनेश्वर रनदत्तसिं, नन्दि तेजवन्त ढाक्रया रूपसिं, सिद्धिध–
७. र, रत्नविरसिं, हर्षनारायन कपालि लक्ष्मीनारायन वित्तवार ढाक्रया स–
८. ब पञ्च मिलि खंब उठायाको हो.यस खंबको लक्षिन विधि उभो हात १६ उ–
९. धो हात ५ यति प्रमान हो, प्रतिष्ठाको विधि अघिल्ला दिन यज्ञ होम गर्नु

१०. मौलि वेर जौर १ रोगा यथाविधिले सब देवताको सेवा गर्नु, तस धर्म्मले पु–
११. त्रपौत्रादि सन्तानको लक्ष्मी वृद्धि धन धान्य मनोवांछा सिद्धि होस्। शुभ
(बायाँ छेउमा–) दुवान्या श्रीमगर मित्रा हो, (दायाँ–)केरनारायन

व्याख्या–

वि.सं. १८११मा दोलालघाट-सन्धि भएपछि दोलखाभेकमा पृथ्वीनारायण शाहको आधिपत्य जमेको हो।[१] दोलखा कब्जा गर्न पृथ्वीनारायण शाहले विशेष युद्ध गर्नुपरेको थिएन। दोलखा देशभरका पञ्चहरू मेला भई अर्थात् "देशपञ्च समुच्चय"को मेलाले पृथ्वीनारायण शाहसँग मेल गर्ने भन्ने निर्णय गरेपछि[२] दोलखाका पञ्चप्रधानहरू दोलालघाट गई पृथ्वीनारायण शाहका भारादार तुलाराम पाँडे आदिसँग मतो गरी सन्धि भएपछि सजिलैसँग दोलखाभेकमा पृथ्वीनारायण शाहको आधिपत्य कायम भएको थियो।

यसरी पृथ्वीनारायण शाहसँग मिलेपछि दोलखालीहरू उनीप्रति बफादार रहे।[३] दोलखाको प्रशासनको लागि पृथ्वीनारायण शाहले पनि अलि विशेष प्रबन्ध गरे। दोलखाको अम्बल विशेष व्यक्तिलाई सुम्पने प्रथा कायम गरियो।[४] यस प्रदेशको प्रशासन शुरूमा युवराज प्रतापसिंह शाहको मातहतमा राखियो।[५] यो अभिलेख कुँदाइएको ताका अर्थात् वि.सं. १८२६मा दोलखाको अम्बल पृथ्वीनारायण शाहका भाइ दलजित् शाहको मातहतमा रहेको थियो भन्ने कुरा यस अभिलेखमा उल्लिखित "–श्रीश्रीश्रीमत्पृथ्वीनारायण साहदेवस्य कनेष्ठभ्राता श्रीश्रीमद्दलजितशाहको दोलषाको अंबल हुंदा" भन्ने वाक्यले दर्शाउँछ। यस कुराको पुष्टि दोलखा भीमेश्वर-भण्डारको वि.सं. १८३१को अर्को ताम्रपत्रबाट पनि हुन्छ।

"भ्राता" शब्दले दाजु र भाइ दुवैलाई कहने हुनाले दलजित् शाहलाई पृथ्वीनारायण शाहको भाइ भन्नाको लागि यहाँ "कनिष्ठ भ्राता" शब्द प्रयोग गरिएको हो। कान्छा भाइ

१. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ४३–४४
२. 'पाञ्चालीशासनपद्धतिको ऐतिहासिक विवेचना' पृ. १९५–१९७
३. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ४४
४. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. १७०
५. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ५०

भन्ने अभिप्रायचाहिँ यसको होइन । दलजित् शाह पृथ्वीनारायण शाहका काहिँला भाइ हुन् ।[६] पृथ्वीनारायण शाहका अरू भाइहरू उनीदेखि अप्रसन्न भई विद्रोही जस्तै बनेथे ।[७] दलजित् शाहचाहिँ दोलखाका अम्बल पाएर उनीदेखि सन्तुष्ट भई रहेथे ।

दोलखामा भीमेश्वरमूर्तिको ठीकपछाडि पूर्वपट्टि अग्लो एक खम्बा अर्थात् "चूलिका" रहेको हुन्छ । दोलखाका भीमसेनलाई ईश्वर (महादेव) मानी रुद्री पनि गरिन्छ; साथै मेष-बलि, पञ्चबलि आदि दिइन्छ । मेषबलि दिँदा भीमेश्वरमा खादा (सेतो कपडा विशेष)ले बेह्री सो खादा उक्त खम्बामा बाँधिन्छ । यसरी बलि दिने बेलामा भीमेश्वरको ईश्वरत्व सो खम्बामा सर्छ भन्ने लोकविश्वास छ । यस कारण सो खम्बा अर्थात् "चूलिका"को महत्त्व ठूलो रहेको छ ।[८] काठको सो खम्बा बराबर फेरिन्छ । यो अभिलेख वि.सं. १८२६मा सोही खम्बा फेरी त्यसको संक्रनामा कुँदाइएको हो । सो फेर्दा निकै विधि विधान पूरा गर्नुपर्छ ।[९] त्यसको मुख्य कुराको केही चर्चा यस अभिलेखमा पनि उल्लिखित छ । यस खम्बाको नापो ५ हात जमीनमनि गाडिएको र १६ हात माथि देखिएको हुनुपर्छ ।

यस अभिलेखबाट दोलखाको तात्कालिक स्थानीय प्रशासनव्यवस्थाको अलिकता झलक पनि पाइन्छ । साथै मल्लकालमा जस्तै शाहकालमा पनि यहाँ पञ्चायत-व्यवस्था कायम थियो; धार्मिक, सांस्कृतिक विधानमा पञ्चहरूको पनि उल्लेखनीय हात रहन्थ्यो भन्ने थाहा पाइन्छ ।[१०] "विर्तवार ढाक्रया सब पञ्च मिलि खंब उठायाको" भन्ने यस उक्तिले यस बेला पनि मल्लकालमा जस्तै पञ्चप्रमानहरूले वृत्ति (जागीर) पनि पाउँदथे भन्ने थाहा पाइन्छ । यसरी यो अभिलेख तात्कालिक स्थानीय प्रशासनमा पञ्चहरूको कुन स्थान थियो भन्ने कुरा बुझ्नाको लागि पनि निकै उपयोगी रहेको छ ।



६. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३६३

७. 'ऐतिहासिक पत्रसंग्रह' पहिलो भाग, पृ. ३१–३६

८. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ७

९. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ७, ११३–११४,११६,

१०. 'पाञ्चाली शासन पद्धतिको ऐतिहासिक विवेचना' पृ. १२४–१२५

[ २६ संख्या ]

# हनूमानूढोकाको पृथ्वीनारायण शाहको पालाको अभिलेख

हनूमानढोका, नुवाकोट भगवतीको भण्डारमा रहेको पानपात्रमा यो अभिलेख कुँदिएको छ।

'हनूमान् ढोका राजदरबार'को २६३ पृष्ठमा गौतमवज्र वज्राचार्यद्वारा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीभगवतीप्रीत्यै
पृथ्वीनारायणात्मजप्रतापसिंहनृपतिः
पानपात्रं समर्पयत् ॥ सम्वत् १८२६
पौष शुदि ८ रोज ६ शुभम् ॥

## अनुवाद

कल्याण होस् । श्रीभगवतीको प्रीतिको लागि पृथ्वीनारायणका छोरा प्रतापसिंह राजा (युवराज)ले पानपात्र चढाउनुभयो।

वि.सं. १८२६, पौष शुक्ल अष्टमी, शुक्रवार । शुभ ।



[ २७ संख्या ]

# हनूमान्ढोकाको पृथ्वीनारायण शाहको पालाको अभिलेख

हनूमान्ढोका, नुवाकोट-भगवतीको भण्डारमा रहेको गाग्रोमा यो अभिलेख कुँदिएको छ।

'हनूमान्ढोका राजदरबार'को २६३ पृष्ठमा गौतमवज्र वज्राचार्यद्वारा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीभगवतीप्रीत्यैं पृथ्वीनारायणात्मज
प्रतापसिंहनृपतिर्जलपात्रं समर्पयेत्
सम्वत् १८२६ पौष शुद्धि ८ रोज ६ शुभम्
श्रीश्रीन बिया हव ।

## अनुवाद

कल्याण होस् । श्रीभगवतीको प्रीतिको लागि पृथ्वीनारायणका छोरा प्रतापसिंह राजा (युवराज)ले गाग्रो चढाउनुभयो ।

वि.सं. १८२६ पौष शुक्ल अष्टमी, शुक्रवार । शुभ । श्रीश्री ( राजा )बाट यो पठाइएको हो ।

व्याख्या—

हनूमान्ढोकाको कनेलचोकको पूर्वी लडमा नुवाकोट भगवतीको प्रतिमा रहेको छ। वि.सं. १८२५मा कान्तिपुर विजय भएपछि पृथ्वीनारायण शाहले नुवाकोटबाट कान्तिपुरमा राजधानी सारेका थिए। नयाँ राजधानीको बहाली गर्न त्यस बेला कान्तिपुरतिर लाग्दा उनले नुवाकोटकी भगवतीको प्रतिमा पनि साथै ल्याएका थिए भन्ने अनुश्रुति चलेको छ।[१] यस विषयको प्रमाण भने प्राप्त हुन सकेको छैन। जे होस्; कान्तिपुर विजय गरेको लगत्तै पछि पृथ्वीनारायण शाहले हनूमान्ढोका दरबारको एक मन्दिरमा नुवाकोट भगवतीको प्रतिमा स्थापना गराएको कुरामा चाहिँ शंका छैन। सो नुवाकोट भगवतीको प्रतिवर्ष जात्रा चलाउने प्रथा पनि उनले चलाएथे। तदनुसार प्रतिवर्ष हनूमान्ढोका दरबारमा रहेको उक्त मन्दिरबाट वैशाख कृष्ण चतुर्थीको दिन भगवतीको प्रतिमा खटजात्रा गरी नुवाकोट लगिन्छ र त्यहाँ केही दिन राखी वैशाख कृष्ण द्वादशीको दिन फेरि हनूमान्ढोका दरबार भित्र्याउने काम अहिले पनि हुन्छ।[२]

युवराज प्रतापसिंह शाहले वि.सं. १८२६ पौषमा चढाएका पानपात्र, गाग्रोका यी दुई अभिलेखबाट यस बेला भगवतीको स्थापना भइसकेको कुरा थाहा पाइन्छ। एकीकरण अभियानको सिलसिलामा पृथ्वीनारायण शाह यता उता लागिरहँदा युवराज प्रतापसिंह शाहलाई केही अभिभारा सुम्पेर जाने गर्दथे।[३] यसो हुँदा त्यस्तो अवस्थामा उनलाई "नृपति" शब्दको पनि प्रयोग गरिन्थ्यो भन्ने कुरा यी अभिलेखले र अरू अभिलेखले पनि जनाउँछन्। गाग्रोको अभिलेखमा "श्रीश्रीन बिया हव" भन्ने वाक्य कुँदिएको हुनाले उक्त जलपात्र भगवतीलाई चढाउन राजा पृथ्वीनारायण शाहले नै पठाएका हुन् भन्ने देखिन्छ। यहाँ सो एक वाक्य नेवारीमा कुँदिएको पनि चाख लाग्दो छ।

卐

---

१. गौतमवज्र वज्राचार्य 'हनूमान्ढोका राजदरबार' त्रि.वि. नेपाल र एशियाली अध्ययन संस्थान, काठमाडौं, वि.सं. २०३२, पृ. ५८

२. 'हनूमान्ढोका राजदरबार' पृ. ५९–६०

३. यस विषयका केही अभिलेख माथि गइसकेका छन्। तात्कालिक पत्रबाट पनि उक्त कुरा थाहा पाइन्छ।
'श्री ५ पृथ्वीनारायण शाहको सन्देश' पृ. १०७६

[ २८ संख्या ]

# नुवाकोटको पृथ्वीनारायण शाहको पालाको अभिलेख

नुवाकोट, अशोकबाटिनजीक सिम्भूस्थानमा चैत्यसँगै रहेको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ ने.सं. ८९३ (वि.सं. १८३०) दिइएको छ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा'को ३२ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख प्रकाशित भएको छ।

## मूलपाठ

१. शुभ सम्वत् ८९३ मिति
२. स्वस्ति ।। श्री ३ धर्मधातु भगवान् ।। अद्य ब्रह्मनो द्वितिय प्रहला–
३. य.........वराहकप्य जबूदिप्य जंबूदिपे भलतखंदे आर्ज्यावृत
४. देशे करिजुग्य प्रथमचलने पशुपतिपश्चिमभाग्य निलकंथद–
५. क्षिनभाग्य त्रिशूलीगंगाया पक्षिङभाग्य श्रीभइलवक्षेत्र
६. उत्रभाग्य इहैव मुनिपतनगाम नवाकोथस्थाने विसाखानगरे
७. श्रीमहामंद्रथान, अद्य आश्विनमास्य शुक्लपक्ष पुर्नमास्यान्तिथौ उ–
८. त्रभद्रनक्षत्र.........प्र ध्रु वजोग्य जथाकर्ण्णमोहोत्र बृहस्प–
९. तिवार कन्यरासिगते सवित्रि मिनरासिगते चन्द्रमसि ।। श्री–
१०. ३ माहाराजाधिराज पृथिनारायनसाहव्रदेवानां सदा
११. स्मं ।। श्री ३ धर्म्मधातु भगवान् मूर्ति दयकाओ रछिनि सि–

१२. न मनोभागि निह्यसेन दुंता पिथिनारायण तंका ४०

१३. थुरिया ओर्सानन मुरि २ ङा पुजा जोर मुरि २ सरादां

१४. गुथिजन वज्राचार्य छत्रपति किस्नदेओ......

१५. .........थुरि मयातसा पञ्चमहापाप जुरो ॥ थुति यातसा

१६. शुष शंपति.........दत शुभ ॥

### अनुवाद

शुभ होस् । ने.सं. ८९३ (वि.सं. १८३०) । कल्याण होस् । श्री ३ धर्मधातु भगवान् ।

आज ब्रह्माको दोस्रो प्रहरार्धमा, श्वेतवराहकल्पमा, कलियुगको पहिलो पाउमा, जम्बूद्वीप भरतखण्ड आर्यावर्त्त देशमा, पशुपतिको पश्चिम भागमा नीलकण्ठ ( गोसाईकुण्ड )को दक्षिण भागमा, त्रिशूलगंगाको.........भागमा श्री ३ भैरवक्षेत्रको उत्तर भागमा, यहाँ मुनिपत्तन· ग्राम नुवाकोटस्थान विशाखानगरमा, श्रीमहामण्डलस्थानमा ।

आज आश्विन शुक्ल पूर्णिमा बृहस्पतिवार, उत्तरभाद्र नक्षत्र,......पर ध्रुवयोग पर्नुपर्ने करण मुहूर्त परेको बेलामा, कन्याराशिमा सूर्य मीनराशिमा चन्द्रमा रहेको बेलामा, सधैं लडाइँ जित्ने महाराजाधिराज पृथ्वीनारायण शाहदेवको विजयराज्यमा ।

श्री ३ धर्मधातु भगवान्को मूर्ति बनाई लक्ष्मीसिं मनोभागि दुइ जनाले पृथ्वीनारायण टङ्का (रुपिया) ४० (चालीस) चढाए । यसको आयस्ता दुइ मुरीले पूजा सामग्री... ..गुठियार वज्राचार्य छत्रपति कृष्णदेव.........। यति गरेनन् भने पञ्चमहापाप लागोस् । यति गरे भने सुख सम्पत्ति......प्राप्त होस् । शुभ ।

व्याख्या–

पृथ्वीनारायण शाहद्वारा एकीकरण अभियान शुरू गरेपछि वि.सं. १८०१ देखि १८२५ सम्म करीब पच्चीस वर्ष जति नुवाकोटले राजधानी बन्ने अवसर पाएथ्यो ।[१] त्यस बेला नुवा-कोटमा माथि डाँडोको साततले दरबार र तल तादीको किनाराको नुवाकोटमाडी-दरबार

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७०

आदि उल्लेखनीय भवनहरू बन्नुबाहेक यस भेकमा धार्मिक, सांस्कृतिक पुनरुत्थान पनि केही भएथ्यो ।[२] यस कुराको केही चर्चा माथि पनि गरिसकेको छ। कान्तिपुर विजयपछि राजधानी कान्तिपुरमा सारियो ।[३] तर नुवाकोट सुक्न नपाओस् भनी पृथ्वीनारायण शाहले विशेष व्यवस्था मिलाएथे। आफ्नो प्रतिनिधिरूपका विशिष्ट "द्वारे" को नियुक्ति, नुवाकोटका बासिन्दाहरूलाई केही सुविधा मिलाइदिनु; जात्रा चाडपर्वहरू साविकबमोजिम चलून् भन्ने कुराको बन्दोबस्त आदि कुरा पृथ्वीनारायण शाहले मिलाई दिएका थिए ।[४] यसो हुँदा राजधानी नुवाकोटबाट कान्तिपुरतिर सरे पनि नुवाकोट गुल्जार नै रह्यो भन्ने कुराको झलक यस अभिलेखबाट पाइन्छ। नुवाकोट अशोकबारीमा चैत्य बनाईकन त्यसको वर्षबन्धन आदिको लागि आयस्ताको बन्दोबस्त मिलाई यो अभिलेख कुँदाइएको हो। नुवाकोटभेकका आकर्षक बौद्ध चैत्यमा अशोकबारीको यो चैत्य पनि पर्दछ।

यस धर्मकर्मका दानपति दुइजना स्त्रीहरू हुन् भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ। नेपालको धार्मिक र सांस्कृतिक परम्पराको संवर्द्धनमा स्त्रीहरूको यस्तै दानशीलताले महत्त्वपूर्ण स्थान लिएको पाइन्छ। हाम्रो यहाँ लिच्छविकालदेखिकै देवमन्दिर, विहार आदिको निर्माणमा स्त्रीहरूको पनि उल्लेखनीय स्थान रहेको कुरा अरू अनेक उदाहरणबाट पनि सिद्ध हुन्छ ।[५]

नुवाकोट विजयपछि भोट र मधेस ( भारत )सँग व्यापार सम्बन्ध जोड्न केही सफल भएपछि पृथ्वीनारायण शाहले पनि आफ्ना चाँदीका स्वतन्त्र टकको प्रचलन गरेथे। पृथ्वीनारायण शाहको सो टकसार नुवाकोटमै थियो ।[६] अशोकबारीमा चैत्य बनाई त्यसको वर्षबन्धन आदिको लागि ४० पृथ्वीनारायण शाहका टंका गुठी राखेको उल्लेख यस अभिलेखमा परेको छ। "टंका" शब्दले रुपियालाई बुझाउँछ। अर्थात् टंका भनेको "दुइ मोहर" हो। यसै हुँदा" रुपिया"लाई "डबल" भन्ने प्रचलन पनि भएको हो। पृथ्वीनारायण शाहका मोहर-

---

२. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७४–७८

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६०३–६०४

४. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७६–७७

५. धनवज्र 'नेपाली संस्कृतिको उत्थानमा नारीवर्गको देन' 'ऐश्वर्य' शुभजन्मोत्सव विशेषाङ्क, श्री ५ बडामहारानी २८ औं शुभजन्मोत्सव समारोहसमिति, काठमाडौं वि.सं. २०३३, पृ. ४१–४५

६. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७३

हरू निकै मात्रामा अहिले पनि पाइएका छन् । तर तिनमा "टंका" अर्थात् रुपिया देखापरेको छैन । यस अभिलेखबाट चाहिँ पृथ्वीनारायण शाहका मोहरबाहेक रुपिया पनि ढालिएका थिए भन्ने संकेत पाइन्छ ।

चालीस रुपियाँको ब्याजबाट वर्षबन्धन आदि चलाउने कुरा यस अभिलेखमा उल्लिखित छ । शयकडा दश मात्र ब्याज उठे पनि चालीस रुपियाँको ४ रु. सम्म उठ्ने त स्पष्ट छ । तर व्यवहारमा ब्याज शयकडा दशभन्दा बढी नै उठ्थ्यो ।[७] त्यस बेला (वि.सं. १८३० तिर ) १ रु. को धान ४०–५० पाथीसम्म पाइन्थ्यो ।[८] यो कुरा तात्कालिक बजार भाउको टिपोटबाट थाहा पाइन्छ । यस कारण चालीस रुपियाको ब्याज मात्रले पनि वर्षबन्धन आदि काम चलाउन पर्याप्त हुन्थ्यो । मुद्रास्फीति नभएको हुँदा उहिले "रुपिया"को भाउ अहिलेभन्दा १३० गुना जति थियो ।

यस प्रसंगमा एउटा कुरा स्मरणीय छ । हाम्रो यहाँ उहिले "गुठी"हरूले पनि एक किसिमले ब्याङ्कको काम गर्दथे । गुठीमा जम्मा हुने रकम त्यसै नराखी विधिपूर्वक ब्याजमा लगाइन्थ्यो । यो प्रथा गुठीको अङ्ग जस्तै थियो । रुपियाँ आवश्यक भएकाहरू विधिपूर्वक घरखेत आदि धरौटी राखी "गुठी"बाट ऋण लिने गर्दथे । यस्तो गुठीमार्फत "लेनदेन" भएका तात्कालिक टिपोटहरू अनेक पाइन्छन् ।[९] यो चलन आधुनिक कालसम्म पनि प्रचलित थियो भन्ने कुरा यस अभिलेखबाट पनि देखिएको छ ।



७. 'ऐतिहासिक पत्रसंग्रह' दोस्रो भाग पृ. ५१

८. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १०६०

९. [illegible] मल्लकालको अन्तिमसमयसम्मका यस्ता टिपोटहरू अनेक प्राप्त छन् ।

[ २६ संख्या ]

# पशुपति-भण्डारको पृथ्वीनारायण शाहको पालाको अभिलेख

पशुपतिभण्डारमा धेरै ताम्रपत्र रहेका छन् । तीमध्ये एउटामा यो अभिलेख कुँदिएको छ । यसमा शकसंवत् १६९५ (वि.सं. १८३०) दिइएको छ ।

'कन्ट्रिब्युशन्ज् टु नेप्लिज् स्टडिज्' वर्ष १ अंक २ को १०४–१०५ पृष्ठमा टेकबहादुर श्रेष्ठ-द्वारा यो अभिलेख छापिएको छ ।

## मूलपाठ

श्री ५ पशुपतिर्जयति

१. ॐ अद्य श्वेतवाराहकल्पेत्यादि ।। आषाढमासे शुक्लपक्षे च-
२. तुर्थ्यां तिथौ अश्लेषानक्षत्रे वज्रयोगे यथाकरणमुहूर्तके
३. मिथुनराशिगते सवितरि कर्क्कटराशिगते चंद्रमसि ।। आत्रेय-
४. गोत्रेः श्रीवालकृस्नदेव शर्म्मा सपुत्र श्रीपशुपतिभट्टार-
५. कप्रीतये इमे नकुगुणवतीनाम्न्यौ दास्यौ देवदासीत्वेन
६. संप्रदत्तौ ।। ।। अथ भाषा । स्वस्ति श्रीशाके १६९५ आषाढ शु-
७. दि चतुर्थीका दिनमाहा भीरकोट्या श्रीवालकृस्न उपाध्याले
८. श्री ५ पशुपतिनाथका चरणतल दुइगोटी कमारी नकु गुण भन्याकी ने-
९. वार्नीकन श्री ५ पशुपतिनाथका देवदासी गरि चढायौं. इनमाथी पुजारी
१०. भट्टहेरूको लाग नास्ति ।। साक्षी श्रीहरिहर उपाध्याका पार्थे

११. भाइका ॥ साक्षी भगवतीवन गोसाइ ॥ लेखक श्रीदुर्गानाथ भट्टाचार्य्या

१२. इन दुऐकन जो हरण गरला तस्कन पंच महापातक होला ॥ ॥

(दायाँ छेउमाः–) साक्षी श्रीवीरभद्र राणा ॥ शुभ

(बायाँ छेउमाः–) साक्षी पुत्र श्रीषडानन उपाध्या ॥

व्याख्या–

पशुपति भण्डारमा रहेको वि.सं. १८३०को यो अभिलेख पृथ्वीनारायण शाहको पालाको हो । तर यसमा राजाको नामोल्लेख भएको छैन । यस अभिलेखको सम्बन्ध राजनैतिक पक्षसँग रहेको छैन; नेपालको सांस्कृतिक पक्षसँग यसको सम्बन्ध रहेको छ । यस कारण यस अभिलेखको पनि केही महत्त्व रहेको छ ।

दास-प्रथाका अनेक रूप पाइन्छन् । तिनमध्ये देवदासी प्रथा पनि एक हो भन्न सकिन्छ । तर देवदासी प्रथा अरू दासप्रथाभन्दा अलि भिन्न खालको हुन्छ । प्रसिद्ध देवमन्दिरमा सफा सुग्घर गर्ने, आरतीको बेला देवमूर्ति समक्ष भक्तिपूर्वक गाना गाउने, नृत्य गर्ने कामको निमित्त युवक युवतीहरूलाई देवदास, देवदासीको रूपमा अर्पण गर्ने चलन उहिले थियो । यसलाई देवदास देवदासी प्रथा भनिन्छ । दासप्रथा प्रायः आर्थिक पृष्ठभूमिमा रहेको थियो भने देवदास देवदासी प्रथाचाहिँ धार्मिक पृष्ठभूमिमा रहेको थियो भन्न सकिन्छ ।[१]

हाम्रो यहाँ लिच्छविकालदेखि नै देवदास देवदासी प्रथाको अस्तित्व रहेको थियो भन्ने कुरा अभिलेखबाट थाहा पाइन्छ । लिच्छविकालका प्रसिद्ध राजा नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको अभिलेखबाट तात्कालिक देवदास देवदासी प्रथामा निकै प्रकाश पर्छ । लिच्छविकालमा यस भेकमा हंसगृहद्रङ्ग नामक प्रसिद्ध बस्ती थियो । त्यस बस्तीमा "लोकपालस्वामी"को प्रसिद्ध मन्दिर थियो । यी लोकपालस्वामीको पूजा आजा, वार्षिक यात्रा आदि धूमधामसँग हुन्थे । यहाँ हुने विधिविधान आदिको देखरेखको लागि एक जना कुलपति नै नियुक्त हुन्थे । सो देवमन्दिरमा सफाइ आदि गर्ने र आरतीको बेला नृत्य आदिको लागि दश जना देवदास र बीस जना देवदासीहरू रहेको उल्लेख अनन्तलिङ्गेश्वरको अभिलेखमा आएको छ । देवदास

१. टेकबहादुर श्रेष्ठ, 'देवदासीप्रथा : एक अध्ययन' कन्ट्रिब्युशन्ज् टु नेप्लिज् स्टडिज् वर्ष १ अंक २ पृष्ठ १०६–१०७

हरूलाई १४० मानिका धान, १२० पुराण र देवदासीहरूलाई ३६० मानिका धान ८० पुराण आर्थिक अनुदान तोकिएको कुरा पनि उक्त अभिलेखमा परेको छ ।[२]

प्रसिद्ध देवमन्दिरमा देवदासी रहने प्रथा पछि आधुनिक कालको शुरूसम्म पनि कायम थियो भन्ने कुरा पशुपतिभण्डारमा रहेको यो ताम्रपत्रले देखाएको छ । यस अभिलेखमा भीरकोट निवासी बालकृष्ण उपाध्यायले नकु र गुणवती नाम गरेकी दुइवटी नेवार्नी कमारीलाई देवदासीको रूपमा पशुपतिनाथलाई चढाएको कुरा परेको छ । यसरी पशुपतिनाथलाई चढाइएका देवदासीबाट यस ताका के काम लिइन्थ्यो सो स्पष्ट हुन सकेको छैन । लिच्छविकालमा जस्तो आरतीको वेला नृत्य, गान गर्ने परम्परा शाहकालमा थियो, थिएन; यो पनि स्पष्ट हुन सकेको छैन । यसरी पशुपतिनाथलाई चढाइएका यी देवदासीउपर पुजारी भट्टहरूको अधिकार हुनेछैन भन्ने कुराचाहिँ यस ताम्रपत्रमा स्पष्ट रूपमा उल्लेख गरिएको छ । यसबाट देवदासीहरूलाई पुजारी आदिले घरायसी काममा लगाउन नपाउनेचाहिँ स्पष्ट देखिन्छ ।

लिच्छविकालमा देवदास, देवदासीहरूलाई मानाचामलको बन्दोबस्त गरिएको उल्लेख पाइन्छ ।[३] तर, यस ताम्रपत्रमा भने देवदासीलाई त्यस्तो कुनै रकम छुट्याइएको छैन । यसरी पशुपतिनाथलाई चढाइएका यी देवदासीहरू कसरी गुजरा गर्दथे भन्ने कुरा पनि खुल्न सकेको छैन ।

जे होस्; आधुनिक कालको शुरूसम्म पनि प्रसिद्ध देवतालाई देवदासी चढाउने प्रथा कायमै थियो भन्ने कुराचाहिँ यस ताम्रपत्रले स्पष्ट रूपमा देखाएको छ । यस दृष्टिले यसको महत्त्व रहेको छ

卐

२. 'लिच्छविकालका अभिलेख' पृ. ४८८

३. 'लिच्छविकालका अभिलेख' पृ. ४८५–४८६

[ ३० संख्या ]

# भीमेश्वर-भण्डारको पृथ्वीनारायण शाहको पालाको अभिलेख

दोलखा भीमेश्वर भण्डारमा केही ताम्रपत्रहरू रहेका छन् । तीमध्ये एउटामा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८३१ रहेको छ ।

'दोलखाको ऐतिहासिक रूपरेखा'को १२४ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख प्रकाशित भएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीसाके १८३१ नेपालसंवत् ८९५ श्री ५ भिमेश्वर पिरतिन श्री ३ प(रमहं)
२. स परिव्राजक सकलचक्राधिश्वर महाराजाधिराज जोगेस्वर भगवन्तनाथजि श्री ३ पृथि—
३. श्री ३ दलजित काजि साहाव श्रीमदलि वसुनाथ श्रीपथाइ सित्तापनाथका प्रजावमा हो श्री—
४. भिमेश्वर चलएतरे ॐ अदे ब्रह्मनो द्वितिय पराध्य श्रीस्वेतवराहकलपे वैवश्वतमन्वतरे श्री अ—
५. ष्टाविंसतिमध्ये चतुर्युग...... प्रथम पाद्य जाम्बुदिपे भरतखंडे भारतवर्षे आर्यावर्त...

६. न हेमवत दक्षिणपाद्य श्रीनेपालपतने तांवकुसिकायां पश्चिमकुले सुवरनकु-
सिकायां पुर्वकुले

७. श्री २ अभयपुरनगरे श्री ५ भीम्यस्वरस्थाने भिम............ भुमौ
कासेपगोत्र श्री...

८. त्तनाथ जोगिकस भार्य्य ग्यानेश्वरी जोगिनि, गंगा जोगिनिकस्य पुत्र
पुत्रादि...

९. र्म काम मोक्षादि वैकुंथगमन मनमार्गादि लाभ: श्री ५ भीमेश्वर
पिरतिन...

१०. प भिमयकादसिका दिन रात्रि पहर ४ जागृता पर द्वादसिका दिन श्रीवा-
हादि अतित अभ्या–

११. गतकन मना चाउल दिनु, रूपया १०२ का ब्याजले दिनका मना चधाउनु
पौवामहा बसने

१२. कन छोरा भया छोराले, चउल छोरा नभया गुनेस्वरि ग्यानि छोरि इन...

१३. षानु. गुनेस्वरिका संतान नभया ग्यानीका सन्तानले षानु. ग्यानीका सन्तान
नभया गु.

१४. नर षानु... इन दुका सन्तानले धर्म चलाइ षानु, नचलाया पंचमहापातक
ब्रह्महथ्या...

१५. -हथ्या तस दिनका साछि श्रीचन्द्र सूर्य यदि धर्म चलाया सदा जय ३
वाग्यसेले षेत १ तुल्या...

१६. को कुतले मना चाउल सदावर्त दिनका माना १ वाहुन अतितकन....

व्याख्या–

मूल अभिलेख नै राम्ररी नकुँदिएको त्यसमा पनि प्रतिलिपि अलि अस्पष्ट हुँदा संपूर्ण भाग पढ्न नसकिएको हुँदा यो अभिलेख अलि अपूरो र अलि अस्पष्ट रहेको छ। तर तात्कालिक धार्मिक, सांस्कृतिक कुरामा यस अभिलेखबाट अलिकता प्रकाश पर्ने हुनाले यसलाई यस संकलनमा समावेश गरिएको हो।

संन्यास लिएका जुनसुकै सम्प्रदायका व्यक्तिलाई पनि "जोगी" शब्दले बुझाउँछ; साथै एकथरी कापालिक सम्प्रदायका संन्यासी (कुसले)हरू हाम्रो यहाँ "जोगी" भनी रूढ भएका थिए।[१] उनीहरू गृहस्थी भएपछि पनि "जोगी" नै कहलाएका छन्। "जोगी" उनीहरूको थर नै बनेको छ। यो ताम्रपत्र पनि दोलखाको त्यस्तै एक जोगी (कुसले) परिवारले केही दान धर्म गरी कुँदाएका हुन्। यसो हुँदा यस ताम्रपत्रको शिरबेहोरा अलि बेग्लै खालको रहेको छ।

यस अभिलेखमा राजा पृथ्वीनारायण शाहको भन्दा पहिले भगवन्तनाथको चर्चा गरिएको छ। उनलाई "श्री ३ परमहंसपरिव्राजक सकलचक्राधीश्वर महाराजाधिराज जोगेश्वर" भन्ने गौरवमय प्रशस्तिले विभूषित गरिएको छ। यसबाट नेपालका सारा जोगीहरूका अधीश्वरका रूपमा भगवन्तनाथलाई सम्मान गरिएको कुराको संकेत पाइन्छ। भगवन्तनाथ पश्चिम नेपालका ख्यातिप्राप्त सल्यानतिरका सिद्ध जोगी थिए। पश्चिमतिरको काजमा पृथ्वीनारायण शाहले यी भगवन्तनाथबाट निकै मद्दत पाएका थिए। यसो हुँदा वि.सं. १८२७मा पृथ्वीनारायण शाहले भगवन्तनाथलाई "जोगीहरूको मण्डलाई" चढाएका थिए।[२] तदनुसार उनले कुसले आदि केही जोगी वर्गबाट केही रकम उठाउन पाउने अधिकार पाएका थिए। यो कुरा वि.सं. १८२७को पृथ्वीनारायण शाहको लालमोहरबाट थाहा पाइन्छ। यसै हुँदा यस अभिलेखमा भगवन्तनाथप्रति उपर्युक्त सम्मान व्यक्त गरिएको हो।

पृथ्वीनारायण शाहले आफ्ना काहिँला भाइ दलजित् शाहलाई दोलखाको अम्बल सुम्पेका थिए भन्ने कुराको चर्चा माथि गरिसकेको छ। यस अभिलेखबाट पनि उक्त कुराको पुष्टि हुन्छ। यस अभिलेखमा पृथ्वीनारायण शाहको साथ साथै काजी दलजित् शाहको "पर्याय" (कार्यकाल)मा यो दानधर्म गरिएको भन्ने कुराको चर्चा परेको छ।

दोलखाको अर्को नाउँ "अभयपुर" भन्ने रहेको थियो।[३] सुनकोशी र तामाकोशीको बीचको प्रदेश त्यस अन्तर्गत रहेको मानिन्थ्यो। यस अभिलेखमा र अरू अभिलेखमा यस कुराको उल्लेख परेको पाइन्छ।

---

१. अहिलेसम्म पनि नेवारीभाषामा कुसलेलाई 'जोगी' भन्ने चलन चलेकै छ।

२. वि.सं. १८२७ को पृथ्वीनारायण शाहको लालमोहरमा "आगे गोसाञी श्रीभगवन्तनाथजीके हाम्रा मुलुकभरीको जोगीहरूको मण्डलाइ चह्राञा" भनिएको छ। त्यहाँ 'कुसल्या'को पनि उल्लेख परेको छ।
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १०६६

३. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ११७,१२०,१२४,१६६

भीम एकादशीको दिन दोलखा भीमसेन स्थानमा मेला लाग्छ। त्यस प्रसंगमा त्यहाँ आएका अतीत अभ्यागतलाई माना चामल दिने आदि कुराको लागि १०२ रु. गुठी राखेको कुरा यस अभिलेखमा परेको छ। उक्त रु. को ब्याजले उक्त दानधर्म गर्ने उल्लेख यसमा परेको छ। उहिले "गुठी"ले एक किसिमले ब्याङ्कको काम पनि केही अंशमा गर्दथ्यो भन्ने कुराको चर्चा माथि गरिसकेको छ। उक्त कुराको पुष्टि यस अभिलेखबाट पनि केही हुन्छ। यस अभिलेखबाट त्यस वेलाको अंशबण्डासम्बन्धी कुराको अलिकता झलक पनि पाउन सकिन्छ।

卐

[ ३१ संख्या ]

# चाँगुनारायणको अभिलेख

चाँगुनारायणको नित्यपूजामा प्रयुक्त हुने चाँदीको थालीमा यो अभिलेख कुँदिएको छ। 'अभिलेख-संकलन'को ७६ पृष्ठमा मोहनप्रसाद खनालद्वारा यो छापिएको छ।

## मूलपाठ

१. श्रीचाँगुनारायणका पुरानु गहना जो तुलसिपत्रहरू किचि श्रीप्रतापसिंह शाहदेवका प्रसादमा बनायाको थाली संवत् १८३१ आश्विन वदि १० रोज ६ तोला ५४

व्याख्या–

पृथ्वीनारायण शाहको अन्तिम समयताकाको यो अभिलेख हो। यस अभिलेखमा पृथ्वीनारायण शाहको नामोल्लेखचाहिँ भएको छैन। युवराज प्रतापसिंह शाहको देखरेखमा उक्त चाँदीको थाली बनाइएको हुँदा यहाँ प्रतापसिंह शाहको मात्र नामोल्लेख भएको छ। पृथ्वीनारायण शाहले युवराज प्रतापसिंह शाहलाई केही कार्यभार सुम्पेको चर्चा माथि गरिसकेको छ। त्यस कुराको पुष्टि यस अभिलेखले पनि गर्छ।

चाँगुनारायण काठमाडौं उपत्यकाका प्राचीन प्रसिद्ध नारायणस्थान हुँदा यहाँ भक्तहरूले चढाएका चाँदीका तुलसीपत्र आदि प्रशस्त हुनु स्वाभाविक छ। बढी भएका त्यस्ता केही तुलसीपत्रहरू किची नित्यपूजामा उपयुक्त हुने ५४ तोलाको थाल बनाइएको चर्चा यस अभिलेखमा परेको छ। यसरी प्राचीन वस्तु किची नयाँ वस्तु बनाउने चलन हामीकहाँ धार्मिक जगत्मा चलेको पाइन्छ। यो चलन इतिहासको खोजीको दृष्टिले भने राम्रो होइन। यसरी प्राचीन वस्तु मास्दा त्यससँगै त्यसको इतिहास पनि मेटिने स्पष्ट छ। 卐

[ ३२ संख्या ]

# चिकंमुगलको सरूपसिंह कार्कीको अभिलेख

काठमाडौं चिकंमुगलटोलमा अटकनारायणको मन्दिरभन्दा अलि पर गएपछि पुराना छाँटका घर भएको ठाउँ आउँछ। त्यहाँ बायाँपट्टि छेडोबाट भित्र पसेपछि एउटा चोक आउँछ। त्यस चोकको उत्तरपट्टिको लडमा भित्तामा यो अभिलेख कुँदिएको शिलापत्र टाँसी राखिएको छ। यहाँ शकसंवत् १६९८ (वि.सं. १८३३) दिइएको छ।

'अभिलेख-संग्रह' बाह्रौं भागको ७ पृष्ठमा संशोधन-मण्डलद्वारा यो अभिलेख प्रकाशित भएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ।। ।। श्रीशाके नगनन्दभूपतिमिते १६९८ वारे
२. गुरौ चोत्तराभाद्रे वँ, हरिबोधनीशुभतिथौ मासे तथा कार्ति–
३. के ।। चन्द्रे मीनगते गुरौ शुभगते शुक्रे तथा भार्गवे श्रीमत्श्रीजयमं–
४. दिरस्य रचना विस्तीर्ण्णमारब्धवान् ।।१।। श्रीगोर्षाचलभूपतेरनुचरः
५. सन्तोषिताऽऽभूनरः ।। पक्षे शीतकरः परेऽहितकरः श्रीकीर्तिसिंहा–
६. ऽवरः नाम्ना मन्त्रिसरूपसिंहनृवरो गीते स्वयं शंकरः पूर्णेस्मिन्जय–
७. मन्दिरे विजयते सम्भाव्यलम्बोदरः।। ।। २ ।। वल्गन्तां हयकुञ्जराः प्रतिदिशं नृ–
८. त्यन्तु वाराङ्गनाः पठ्यन्तां स्तुतिगायकाः प्रतिदिनं गर्ज्जन्तु पौराणिकाः ।। वर्द्धन्तां निजबालकाः स्वपुरुषं

६. सीमन्तिनी स्पर्द्धतां निशङ्कूञ्जयमन्दिरे निवसतां शंसन्तु कीर्त्तिञ्जनाः ।।३।। शुभमस्तु ।।

## अनुवाद

श्रीगणेशलाई नमस्कार । शकसंवत् १६९८ (वि.सं. १८३३) कार्तिक शुक्ल हरिबोधिनी एकादशी तिथि, बृहस्पतिवार, उत्तरभाद्र नक्षत्रमा, मीनराशिमा चन्द्रमा गएमा, शुभ......मा बृहस्पति रहेमा, शुक्र शुद्ध भएमा, श्रीजयमन्दिरको निर्माण राम्ररी गरियो ।

श्रीगोरखाका राजाका सेवक, सारा मानिसलाई खुशी पारेका, आफ्ना मानिसलाई आनन्द दिने, शत्रुको अहित गर्ने, श्रीकीर्तिसिंहका भाइ, मानामा अर्का शिवजी जस्ता, गणेशको भक्ति गर्ने असल काजी सरूपसिंह यस जयमन्दिरमा रहनुभएको छ ।

यहाँ कुनाकुनामा हात्ती घोडाहरू चलिरहून्; दिनका दिन पुराणको पाठ भइरहोस्; आफ्ना बालकहरू बढून्; घरकी जहानले निर्धक्कसँग आफ्ना लोग्नेको प्रतिस्पर्धा गरोस्, यस जय-मन्दिरमा बस्नेहरूको कीर्तिको बखान मानिसहरूले गरून् ।

शुभ होस् ।

व्याख्या–

देशको निर्माण गर्नतिर लम्कनुपर्ने अवस्थामा भारादार आदि सरकारी कर्मचारीहरू विलासमा भुले भने देशको विकासमा बाधा आइपर्छ भन्ने कुरा ३२ वर्षसम्मको आफ्नो निरन्तरको उद्योग र त्यसबाट भएको अनुभवद्वारा पृथ्वीनारायण शाहको मनमा जमेको थियो । यसैले आफ्नो "दिव्योपदेश"मा पृथ्वीनारायण शाहले उक्त कुरा स्पष्ट रूपमा पोखेका छन् । भाइ-भारादारलाई पैसा कमाउन पनि नदिनू; मान्छे हेरी इज्जत मात्र राखिदिनू; भाइ-भारादारहरूलाई राग तान आदि व्यसनमा भुल्न पनि नदिनू आदि आशयको कुरा पृथ्वीनारायण शाहले आफ्नो "दिव्योपदेश"मा व्यक्त गरेका छन् ।[१] तर पृथ्वीनारायण शाहको यस निर्देशनको पालन उनको शेषपछि त्यति मात्रामा हुन सकेन । शक्तिमा पुग्न सफल भएका

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३२५,३३१

भाइ-भारादारहरूमध्ये केही आफ्नो घर-खेत जोड्नामा व्यग्र रहन लागे । अफ सबभन्दा विचारणीय कुरा उनीहरूका आदर्श राष्ट्रनिर्माता पृथ्वीनारायण शाहले देखाएको नीतिमार्ग नभई सुखसयल मोजमज्जा गर्नु रह्यो । यस्ता भारादारमध्ये एक सरूपसिंह कार्की पनि पर्दथे भन्ने कुरा यस अभिलेखले जनाउँछ । वि.सं. १८३३मा आफ्नो लागि "जयमन्दिर" नामक ठूलो घर बनाउन लाई सरूपसिंह कार्कीले यो अभिलेख कुँद्न लाएका हुन् । यस अभिलेखमा जुन किसिमको भाव व्यक्त गरिएको छ; सो पृथ्वीनारायण शाहको उपदेशभन्दा उल्टो किसिमको रहेको छ । पृथ्वीनारायण शाहलाई आफ्ना भारादारहरू विलासमा भुल्छन् कि भन्ने डर भएको थियो । यो कुरा उनले "उप्रान्त ॥ मलाई यवटा कुराको संध्यह लागिरहेछ, कुन्कुरो भन्या मुग्लाना नजिकै रहेछ. तेस् अगमा छोकडा पत्रीया रह्याछन् ... राग तानमा बडो ठूलो मोहो हुन्छ र दवलथ पनि षोलिन्छ.........रागको अभ्यास पनि कसैले नगर्नु" भनी स्पष्ट शब्दमा व्यक्त गरेका छन् । सरूपसिंह कार्कीको यस अभिलेखमा भने मेरो घरमा सधैं नर्तकीहरूको नाचगान चलिरहोस् (नृत्यन्तु वाराङ्गनाः) भन्ने कामना व्यक्त गरिएको छ । साथै स्वयं सरूपसिंह कार्की गानामा निपुण थिए ( गीते स्वयं शङ्करः ) भन्ने वर्णन पनि यस अभिलेखमा गरिएको छ । यस्तै भावको वर्णन त्यस बेलाका अर्का प्रसिद्ध भारादार अभिमानसिंह बस्नेतको अभिलेखमा पनि परेको छ ।[२] यसबाट पृथ्वीनारायण शाहको शेषपछि उनका केही भारादारहरूले उनको नीतिनिर्देशनको अनुसरण ठीक ठीकसँग नगरेको कुराको संकेत पाउँछौं ।

स्वरूपसिंह कार्की उठानदेखि पृथ्वीनारायण शाहको सहवास पाएका उनका विश्वासपात्र व्यक्ति देखिँदैनन् । पृथ्वीनारायण शाहको शुरूको समयमा उनले कुनै उल्लेखनीय काम गरेको देखिँदैन । कान्तिपुर विजयपछि मात्र सरूपसिंह कार्कीको गतिविधि अलि बढेको थियो । राजक्रान्तिताका जयप्रकाश मल्लका पालाका एक कर्मचारीले कान्तिपुर मछिन्द्रबहालका सेतो मछिन्द्रनाथका केही गहना गुम पार्ने चेष्टा गर्दा त्यस कुराको उजुरी पृथ्वीनारायण शाहकहाँ पर्‍यो । अनि त्यस कुराको छानबीन गर्ने कुरामा नियुक्त भारादारमा केहरसिंह बस्नेतको साथै यी सरूपसिंह कार्की पनि थिए । यो कुरा मछिन्द्रबहालमा रहेको "शान्तिसफू"बाट थाहा पाइन्छ ।[३] यसबाट सरूपसिंह कार्कीको त्यस ताका केही प्रभाव बढेको झलक पाइन्छ । भक्तविजय काव्यमा भक्तपुर विजयका लागि प्रस्थान गरेका प्रमुख गोरखाली भारादारहरूको

---

२. वि.सं. १८३३ को अभिमानसिंह बस्नेतको तिलङ्गाभवनको अभिलेख तल दिइएको छ ।

३. मछिन्द्र बहाल सेतो मत्स्येन्द्रनाथ-मन्दिरभित्र 'शान्तिसफू' नामक इतिहासका घटना टिपिएका ठ्यासफु, कागतपत्र रहेका छन् । तिनमध्ये एकमा उपर्युक्त घटना टिपिएको छ ।

पङ्क्तिमा सरूपसिंह कार्कीको पनि उल्लेख परेको छ। त्यहाँ रामकृष्ण कुँवर, अमरसिंह थापाहरूको सँगसँगै सरूपसिंह कार्कीको वर्णन गरिएको छ र उनलाई "वीर" भन्ने विशेषण पनि त्यहाँ लाइएको छ।[४]

यताबाट तात्कालिक भारादारीमा सरूपसिंह कार्कीले उल्लेखनीय स्थान प्राप्त गरिसकेका थिए भन्ने थाहा पाइन्छ। यसो हो तापनि त्यस वेला अरू ठूला ठूला भारादारहरूले जस्तो सरूपसिंह कार्कीले कुनै उल्लेखनीय काम गरेको कुरा भने ज्ञात हुन सकेको छैन। तर पृथ्वीनारायण शाहको शेषपछि प्रतापसिंह शाहको शासनकालमा सरूपसिंह कार्कीको पदोन्नति भयो र उनको ठूलो प्रभाव बढ्यो। "जयमन्दिर" भवनको निर्माण आफ्नो उन्नतिको वेलामा उनले गर्न लाएका हुन्।

प्रतापसिंह शाहको समयमा एकीकरण अभियान त्यति अगाडि बढ्न सकेन। उनको पालामा भएको यस सिलसिलाको उल्लेखनीय घटना "सुमेश्वर विजय" एक मात्र रहेको छ। उदयानन्द अर्ज्यालका कविताबाट सुमेश्वर विजयको लागि काजी सरूपसिंह कार्कीको मातहतमा फौज हिंडेको थियो भन्ने थाहा पाइन्छ।[५] त्यस कार्वाइमा उल्लेखनीय काम गर्ने भने अभिमानसिंह बस्नेत हुन्।[६] तर यस कामको मुख्त्यारी सरूपसिंहले पाएको हुँदा सुमेश्वर जित्ने काममा भएको सफलताले सरूपसिंहको झन् प्रभाव बढेको थियो भन्ने कुरा उदयानन्द अर्ज्यालको कविताबाट थाहा पाइन्छ। तर यसको लगत्तै सरूपसिंहको पतन भएको देखिन्छ। प्रतापसिंह शाहको शासनको अन्तिम समयमा सरूपसिंह कार्कीले विदेशिनुपरेको थियो। यस कुराको झलक शशिधर उपाध्यायले प्रतापसिंह शाहलाई लेखेको पत्रबाट पाइन्छ।[७] त्यति माथि पुगेको व्यक्तिको पतन कसरी कुन सिलसिलामा भयो भन्ने कुरा चाहिँ खुल्न सकेको छैन।

卐

---

४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३९४

५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५१३

६. योगी नरहरिनाथ 'इतिहास-प्रकाश' अङ्क १, इतिहास-प्रकाश-मण्डल, काठमाडौं, वि.सं. २०१२, पृ. १४

७. 'ऐतिहासिक पत्रसंग्रह' पहिलो भाग, पृ. २९–३०,३६

[ २३ संख्या ]

# केलटोलको अभिमानसिंह वस्नेतको अभिलेख

काठमाडौं केलटोल बालकुमारीस्थानमा 'तिलङ्गाघर' नामले प्रसिद्ध घर रहेको छ। त्यस घरको भित्रको चोकमा यो अभिलेख कुँदिएको शिलापत्र घरको भित्तामा टाँसिएको छ। यहाँ शकसंवत् १६९८ कुँदिएको छ।

'संस्कृतसन्देश' वर्ष १, अङ्क ५ को ४–६ पृष्ठमा यस अभिलेखको मूल भाग योगी नरहरिनाथद्वारा, अनुवाद बलतमानसिंह बस्न्यातद्वारा छापिएको छ।

## मूलपाठ

१. स्वस्ति, संजातः शिवरामवीर इति यः श्रीपालिवंशोत्तमस्तस्यामी तनयाः प्रणी–
२. तविनयाः शौर्य्यार्य्यवीर्य्याश्रयाः। ज्येष्ठो नाहरसिंह एव तदनु प्रोद्यद्यशा केह–
३. रीसिहो मंत्र्यभिमानसिंहसुमतिर्यस्यानुजो धौकलः ॥१॥ शाकाब्दे वसुनन्दरा–
४. जमिलिते मासे च पौषे सिते विश्वेदेवतिथौ रवौ सुरभिमे योगे तथा ब्र–
५. ह्मणि सुश्रीमन्नभिमानसिंहकृतिना जेत्रा किरातस्य तद्धर्म्यं रम्यतमं वि–
६. निर्मितमिदं सश्रीकमास्तां सदा ॥२॥ देवो यत्र विराजते गणपतिर्विघ्नं विनि–
७. घ्नन् मुदा यत्रार्चाप्रजपाः भवन्ति सततं वेदध्वनिः श्रूयते। मत्तेभाश्वनिना–
८. दसंकुलतरं सन्नृत्यगीतोत्सवोल्लासैः संप्रति मानमन्दिरमिति ख्या–

९. तं च नाम्नाऽभवत् ॥३॥ गजवक्त्रनिवाससमुल्लसितं जपहोमस-
१०. मर्चितदेवयुतम् । श्रुतिशास्त्रपुराणरवप्रथितं नटनृत्यसुगीतगु-
११. णैर्ललितम् ॥४॥ गजवाजिविनोदकृतक्वणनं परितः सुभटालिकृता-
१२. वरणम् । बहुमाननिकेतनमाप्तधनं भवनं प्रतिभाति मनोरम-
१३. णम् ॥५॥ दोहा ॥ सिरपालीको वंशमो बडो वीर सिवराम । जिनके
१४. चारो तनय भउ, शूर सुजसको धाम ॥१॥ नाहरसिंह प्रवीन प्रन केह-
१५. रिसिंह बखान । जिह्न पच्छिम नृप जीतिकै सुरपुर चढे विमान ॥२॥
१६. सिंह श्रीअभिमानजू मंत्री अति अवदात । जिन जीत्यो है पलकमैं
१७. नवलख देश किरात ॥३॥ धौकलसिंह सुबुद्धिमो, कीये सकल विलास।
१८. दाता सुन्दर वीर है, पूरत याचक आस ॥४॥ एम सदन
१९. गजवदन द(इक) वर·········आकर निदान जिनमो पूजा मन्त्रजप, सुनियत वेद पुरान ॥५॥
२०. हयकुञ्जरको निनद अति, मङ्गलगीत विधान । ना.........
२१. कियो कत्य गया·········॥६॥ मानमन्दिर जिन रच्यो श्रीदि............
२२. ......सिंह............करि कोटि धान ॥७॥............
२३. ......कर रविसे विधि............भया यत............
२४. शाके १६९८

## अनुवाद

कल्याण होस् । श्रीपालिवंशमा उत्तम, वीर शिवरामसिंह भए । उनका छोराहरू विनय ( कर्तव्यको ज्ञान ) पाएका, शूरता, वीरताले युक्त भएका थिए । तिनमा जेठा नाहरसिंह, माहिला यशस्वी केहरीसिंह, साहिंला बुद्धिमान् मन्त्री अभिमान सिंह र कान्छा धौकलसिंह थिए ।

शकसंवत् १६९८ (वि.सं.१८३३) पौषशुक्ल दशमी आदित्यवार रोहिणीनक्षत्र ब्रह्मयोगमा, किरातप्रदेश जित्ने सफल श्रीअभिमानसिंहले बनाउन लाएको यो रमणीय भवन सधैं लक्ष्मी-युक्त रहोस् ।

जहाँ गणेश देवता विघ्नलाई नष्ट गर्दै आनन्दपूर्वक विराजमान छन्; जहाँ सधैं पूजापाठ

जप भइरहन्छ; सधैं वेदपाठको ध्वनि सुनिन्छ; मदमस्त हात्ती र घोडाहरुका आवाज जहाँ गुञ्जन्छ; राम्रा नाच गान उत्सवको उल्लास जहाँ भइरहन्छ; सो भवन 'मानमन्दिर' भनी प्रख्यात भएको छ।

गणेशको वासले मङ्गलमय भएको, जप होम देवपूजा भइरहने, श्रुति स्मृति पुराण पाठ भइरहने, नट्वाहरुको नाचगान आदिले गर्दा रमणीय भएको, हात्ती घोडाहरु आनन्दसाथ कराइरहने, चारैतिर तिलकहरु अङ्कित गरिएको, बहुत मान र धनले सम्पन्न भएको यो भवन अतिमनोहर छ।

व्याख्या–

काजी अभिमानसिंह बस्नेतले वि.सं. १८३३ पौषमा केलटोल बालकुमारी स्थानमा "मान मन्दिर" बनाई यो अभिलेख कुँदन लाएका हुन्। यसभन्दा तीन महीना जति अगाडि सरूपसिंह कार्कीले "जयमन्दिर" बनाउन लाई त्यहाँ अभिलेख कुँदन लाएथे। सो अभिलेख माथि परिसकेको छ। अभिमान बस्नेतको यस अभिलेखमा वर्णित कुरा र सरूपसिंह कार्कीका अभिलेखमा वर्णित कुरा प्रायः उस्तै भावका छन्। अभिमानसिंह बस्नेतको यस अभिलेखमा उनका बाबु, दाजुहरूको समेत वर्णन परेको हुँदा ऐतिहासिक सामग्रीको दृष्टिले यस अभिलेखको महत्त्व अलि बढी छ तापनि आदर्शको दृष्टिले अभिमानसिंह बस्नेतले सरूपसिंह कार्कीकै अनुसरण गरेको कुरा यसबाट झल्किन्छ। नेपालको एकीकरण अभियानलाई सफल पार्न पृथ्वीनारायण शाहले जुन नीति लिएका थिए; आफ्नो शेषपछि पनि भाइभारादारले उनको अनुसरण गरून् भनी उनले "दिव्योपदेश"मा जुन निर्देशन दिएथे; उनको शेषपछि सरूपसिंह कार्की आदि भारादारले ती निर्देशनको उपेक्षा गर्न थालेथे भन्ने कुराको चर्चा माथि गरिसकेको छ। सरूपसिंह कार्कीको प्रभावमा परी अभिमानसिंह बस्नेतले पनि पृथ्वीनारायण शाहको नीति, निर्देशनको अनुसरण ठीक ठीकसँग गरेनन् भन्ने संकेत यस अभिलेखले दिन्छ।

सरूपसिंह कार्की र अभिमानसिंह बस्नेतको पृष्ठभूमिमा निकै अन्तर रहेको थियो। अभिमानसिंह बस्नेतको पालन-पोषण एक किसिमले पृथ्वीनारायण शाहकै देखरेखमा भएको थियो भने पनि हुन्छ। साँगाचोकको लडाइँमा वि.सं. १८०३मा शिवरामसिंह बस्नेतको मृत्यु हुँदा उनका साहिँला छोरा यी अभिमानसिंह बस्नेत तीन वर्ष पुगेका पनि थिएनन्। यसो हुँदा 'मरवट' दिने पृथ्वीनारायण शाहको नीतिअनुसार नाबालक अभिमानसिंह बस्नेत आदिको पालन-पोषणको अभिभारा पृथ्वीनारायण शाहले लिएका थिए।[१] अभिमानसिंह बस्नेतका

१. 'ऐतिहासिक पत्रसंग्रह' दोस्रो भाग, पृ. ९४–९६

दाबु केहरसिंहको विवाह कालु पाँडेकी छोरीसँग गर्ने बन्दोबस्त खूब पृथ्वीनारायण शाहले मिलाइदिएको कुराको चर्चा "दिव्योपदेश"मा "अब पाँडे बस्न्यात्‌को जुग बाधि दिनु, तेरी छोरि सिवराम वस्न्यात्‌को छोरो केहेसिंह वस्न्यात्‌लाई देउ भनि मागि बिहे पनि गरि दिया र पाँडे वस्न्यात्‌को जुग बाधि पाडेको ढाल वस्न्यातको तरवार गरि नेपालमा चढाइ गर्‍याको हो" भनी स्पटसँग गरिएको छ ।[२] यसरी पृथ्वीनारायण शाहको देखरेखमा हुर्केका हुँदा पछि केहरसिंह बस्नेतहरूले नेपालको एकीकरण अभियानमा महत्त्वपूर्ण योगदान दिएका थिए । केहरसिंह बस्नेत त पृथ्वीनारायण शाहका अत्यन्त विश्वासपात्र व्यक्ति बनेका थिए ।[३] युवक अभिमानसिंह बस्नेतले पनि स्फूर्तिसाथ युद्धमा भाग लिएथे । विशेष गरी किरात प्रदेश विजय गर्नामा अभिमानसिंहले योगदान गरेथे ।[४] जुन कुराको वर्णन यस अभिलेखमा पनि गरिएको छ । पृथ्वीनारायण शाहको शेषपछि परिस्थितिमा केही अन्तर आयो । नयाँ राजा प्रतापसिंह शाहको विश्वास प्राप्त गर्न सकेको हुँदा सरूपसिंह कार्की आफूभन्दा माथिल्ला भारा-दारहरूलाई उछिनी माथि पुग्न समर्थ भए । त्यस बेला अभिमानसिंह बस्नेत सरूपसिंहका अनुयायी बने । सुमेश्वर-अभियानमा सरूपसिंह कार्कीकै नेतृत्वमा अभिमानसिंह बस्नेतले काज गरेका थिए ।[५]

सरूपसिंहसँगको सहवासले अभिमानसिंह बस्नेतलाई व्यक्तिगत रूपमा निकै लाभ भएथ्यो । केलटोलको घर पहिले जयप्रकाश मल्लका पुरोहित वर्गका भाजुदेव ब्राह्मणको थियो । कान्तिपुर विजयपछि सो जफत गरिएको थियो । अनि अभिमानसिंह बस्नेतलाई बस्न सो घर दिइएको थियो । वि.सं. १८३२मा प्रतापसिंह शाहले पर्ने मूल्यको छैटी ( षष्ठांश ) सरकार दाखिल गरी सुनाबिर्ताको रूपमा सो घरबारी अभिमानसिंह बस्नेतलाई नै बकस दिए ।[६] अनि अभिमानसिंह बस्नेतले उक्त घरलाई "मानमन्दिर"को रूप दिएका हुन् ।

वास्तुकलाको दृष्टिले मानमन्दिरको उल्लेखनीय स्थान रहेको छ । मुख्य गरी तिलङ्गा-भवन कहलाएको मुहुडाको भागको विशेषता रहेको छ । मल्लकालको नेपाली वास्तुकलामा केही नयाँ प्रयोग गरी यो भाग बनाइएको थियो ।

---

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१९

३. तात्कालिक पत्रहरू र वंशावली आदिको वर्णनबाट पृथ्वीनारायण शाहको समयमा केहरसिंहको उक्त स्थान रह्यो भन्ने थाहा पाइन्छ ।

४. 'इतिहास-प्रकाश' अङ्क १, पृ. १२–१४

५. उदयानन्दको वर्णनबाट उक्त कुरा थाहा पाइन्छ ।
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५१३

६. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. ६९–७०

गोरखाली भारादारका रूपमा श्रीपाली बस्नेतहरूले गोरखा-दरबारमा प्रवेश निकै अगाडि नै पाइसकेका थिए तापनि शिवरामसिंह बस्नेतको पालादेखि गोरखा-दरबारमा बस्नेतहरूको झन् प्रतिष्ठा बढ्यो । उनका चारै छोराहरू प्रख्यात रहे । तिनमा केहरसिंह र अभिमानसिंह बस्नेतले झन् ठूलो योगदान दिई प्रतिष्ठा कमाए । यसो हुँदा यस अभिलेखमा संक्षिप्त रूपमै भए पनि शिवरामसिंहदेखिको गुणानुवर्णन गरिएको छ ।

यस अभिलेखको अर्को विशेषता यहाँ संस्कृत पद्यका साथै "दोहा" रहनु पनि एक हो । बस्नेतबाहेकका शाहकालका अरू भारादारहरूका अभिलेखमा यसरी "दोहा"को प्रयोग गरिएको कम पाइन्छ । मल्लकाल र त्यसभन्दा अगिदेखि नै दोहाका रूपमा देवताको गुणानुवर्णन गर्ने; वीर पुरुषको गुणको बखान गर्ने प्रचलन हाम्रो यहाँ थियो । भजनमण्डलीमा यस्ता दोहाहरूको भजन गरिन्थ्यो । त्यही लोकप्रिय प्रचलनलाई अँगाली यहाँ अभिलेखमा समेत "दोहा"लाई समावेश गरिएको देखिन्छ ।

यसरी यो अभिलेख शाहकालका एक कर्मठ भारादार खलकको केही कुरा जान्न उपयोगी रहेको छ ।

卐

[ ३४ संख्या ]

# सीतापोखरीको जगजित् पाँडेहरूको अभिलेख

नुवाकोट सीतापोखरीसँगै एउटा पाटी रहेको छ। सो पाटीको भित्तामा रहेको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ विक्रमसंवत् १८३५ दिइएको छ। अभिलेख निकै अशुद्ध रूपमा कुँदिएको छ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा'को ३३ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख प्रकाशित भएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीशाके १७०० मासे १२ तिथौ ६ वा–
२. रे ५ नक्षत्रे १६ जोगे १५ कृष्णपक्षे लिखि–
३. तं स्थापितं शुभम्मस्तु इति सम्मत् १८
४. ३५।। श्रीशाके चार्कवारे सरपरकम–
५. लद्वंद्ववत्वर्तुलांके श्रीसम्वत् ब्रह्म–
६. नागे तदुपरितृतये पंचमांकावसा–
७. ने शुक्रे मासे तपस्ये प्रभुरणबहादू–
८. रे सुपाले सुमंत्रैश्चंद्श्येपूर्ण धर्मो जग–
९. जितरणजित्शत्रुभंजन्भिरासीत् ।।
१०. रामपत्न्याः सरोभ्यासे सर्वालंकृतपट्टि–
११. का शूलगंगासमीपे च कर्तृणां शुभदा
१२. भवेत् ।।

## अनुवाद

कल्याण होस् । शकसंवत् १७०० विक्रमसंवत् १८३५ चैत्र महीना कृष्णपक्ष नवमी तिथि बृहस्पतिवार मूलनक्षत्र वज्रयोगमा यो शिलापत्र कुँदाई राखिएको हो ।

शकसंवत् १७०० विक्रमसंवत् १८३५ फाल्गुन शुक्लमा राजा रणबहादुर शाहले राम्ररी राज्य गरिरहनुभएको वेलामा जगजित् रणजित् शत्रुभञ्जन पाँडेहरूले धर्म कर्म गरिएको हो ।

सीतापोखरीको सामुन्ने, त्रिशूल गङ्गाको नजीकै सबै किसिमले सिँगारिएको पाटी बनाइयो । यसबाट कर्ताहरूको शुभ होस् ।

### व्याख्या–

यस अभिलेखको रचनाशैली स्तरयुक्त छैन; कुँदन पनि यो अभिलेख अशुद्ध रूपमा कुँदिएको छ । तैपनि शाहकालका भारादारमध्ये एक प्रमुख खलकको कृतिबारे यस अभिलेख-बाट केही कुरा थाहा पाइने हुनाले यस अभिलेखलाई यस संकलनमा समावेश गरिएको हो ।

नुवाकोटडाँडोबाट तीनधारे भई त्रिशूलीतिर झर्ने मूल बाटोमा सीतापोखरी भन्ने "कुण्ड" रहेको छ । त्यसै कुण्डको सामुन्ने पाटी बनाई वि.सं. १८३५मा जगजित् पाँडेहरूले यो अभिलेख कुँदन लाएका हुन् । यहाँ जगजित् रणजित् र शत्रुभञ्जन पाँडेहरूको नामोल्लेख भएको छ । यिनीहरू पृथ्वीनारायण शाहका पालाका प्रख्यात कूटनीतिज्ञ तुलाराम पाँडेका छोराहरू हुन् । पृथ्वीनारायण शाहले उठाएको एकीकरण अभियानमा काजी तुलाराम पाँडेले महत्त्वपूर्ण योगदान दिएथे । तुलाराम पाँडेको प्रख्याति वीर योद्धाका रूपमा त्यति रहेको छैन तापनि शत्रुपक्षका ठूलाठूला मानिसलाई आफ्नो पक्षमा मिलाई काम पट्याउने उनी कुशल कूटनीतिज्ञ थिए । दोलखा आदि कति प्रदेश लडाईँविना नै गोरखाराज्यमा सम्मिलित हुनामा यो तुलाराम पाँडेको हात रहेको थियो ।[१] कान्तिपुर प्रवेश समयमा तलेजुनिर बारुद विस्फोट हुँदा तुलाराम पाँडेको मृत्यु भएथ्यो ।[२] यसरी एकीकरणअभियानको सबभन्दा ठूलो सफलता पाउनै लागेको वेला तुलाराम पाँडेले वीरगति पाएथे ।

---

१. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ४४

२. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १३०

तुलाराम पाँडेका यिनै गुणहरूले गर्दा उनका छोराहरूले पनि गोरखादरबारमा सहजै उच्च स्थान प्राप्त गरेथे। विशेष गरेर बहादुर शाहको हातमा शक्ति आएताका जगजित् पाँडेको अभ्युदय भयो।[३] जगजित् पाँडेले पश्चिमविजयको सिलसिलामा उल्लेखनीय सेवा प्रदान गरेथे। रणजित् पाँडेको चाहिँ बहादुर शाहको पतनपछि बढी उन्नति भएको देखिएको छ।[४]

पुगिसरी आएकाहरूले लोकको हित हुने धारा, पौवा, पाटी आदि कीर्ति राखेर जाने प्रथा हाम्रो यहाँ लिच्छविकालदेखि नै प्रचलित थियो।[५] त्यही लोकभावनाअनुसार जगजित् पाँडेहरूले पनि नुवाकोटमा सीताकुण्डअगाडि बटुवाहरूको लागि सुबिधा होस् भनी पाटी बनाई यो अभिलेख कुँद्न लाएका हुन्। उक्त पाटीको अवशेष अहिले पनि छ तापनि पहिलेको बढ्ता आकर्षक थियो भन्ने संकेत यस अभिलेखमा उल्लिखित "सर्वालंकृतपट्टिका" भन्ने पदले गर्छ। जे होस्; शाहकालका भारादारहरूमा प्रमुख स्थान पाएका जगजित् पाँडे-हरूको कीर्तिको संझना यसले दिलाइरहेकै छ।



३. सं. धनवज्र र ज्ञानमणि नेपाल 'जयरत्नाकर नाटक' पृ. ३१

४. तल आउने वि.सं. १८५५,१८५६ का अभिलेखबाट उक्त कुरा थाहा पाइन्छ।

५. 'लिच्छविकालका अभिलेख' पृ. १७९–१८१,२०८–२१०

[ ३५ संख्या ]

# धैबुङको अभिलेख

नुवाकोट, धैबुङ लहरेपौवाको भित्तामा टाँसिएको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ शकसंवत् १७०४ (वि.सं. १८३९) दिइएको छ।

'प्राचीन नेपाल' संख्या ३ को ३०–३१ पृष्ठमा शंकरमान राजवंशीद्वारा यो अभिलेख प्रकाशित भएको छ। 'नुवाकोटको ऐतिहासिक रूपरेखा'को ३४ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. श्रीरामः॥ ॥ श्रीमान्वै सदयोऽग्निहोत्रितिलको वेदान्तवित्सत्य–

२. वाक् ख्यातः श्रीजयमङ्गलः सुकृतिनां मध्येग्रणीश्चाभवत्

३. यस्य स्त्री सुगुणाम्बिकेव कथिता गौरीति नाम्ना सती तस्यां भूप–

४. तिवन्दिताङ्घ्रिकमलाः पञ्चाभवन् यत्सुताः ॥१॥ कुशाग्र–

५. बुद्धिर्व्रजनाथशर्मा ज्येष्ठो हि शास्त्रेषु सुपारगोऽभूत् ॥ वि–

६. द्वान् द्वितीयो रघुनाथशर्मा श्रीरामपादार्पितचित्तवृत्तिः ॥२॥

७. जगन्नाथशर्मा तृतीयः शरण्यस्तथा लोकनाथश्च–

८. तुर्थः सुशीलः ॥ क्षमावान् हरिः पञ्चमो भव्यरूपः

९. सदा सङ्गताः पितृभक्ता वदान्याः ॥३॥ गु–

१०. णिनी धर्मनिरता गुणज्ञसुतसूः पथि ॥ प्रपां

११. निर्माय सा गौरी कमलापतयेऽर्पयत् ॥४॥

१२. वेदाभ्रसप्तैकमिते १७०४ सुशाके माघे सिते
१३. सर्पतिथौ सुवारे ।। वाचस्पतेः सर्वजनैः सुसे-
१४. व्या सेयं प्रपा रामपुरे दिदीपे ।।५।। अने-
१५. न कर्मणा श्रीनारायणः प्रीयताम् शुभं

## अनुवाद

श्रीराम । अग्निहोत्रीहरूमा श्रेष्ठ भएका, वेदान्त जान्ने, साँचो बोल्ने, धर्मात्माहरूमा अघिसरा प्रसिद्ध श्रीजयमंगल हुनुभयो । जसको गुण भएकी पार्वती जस्तो, गौरी भन्ने पत्नी छिन् ।

जसका राजाद्वारा ढोगिएका पाँच छोरा छन् । तिनमा जेठा तीखो बुद्धि भएका, शास्त्रमा पारङ्गत व्रजनाथ शर्मा छन् । माहिला रामचन्द्रका पाउमा मन लाएका विद्वान् रघुनाथ शर्मा छन् । काहिँला शरण दिने जगन्नाथ शर्मा हुन् । साहिँला प्रसन्न स्वभावका लोकनाथ हुन् । कान्छा सहनशील राम्रा हरिनाथ हुन् । यिनीहरू सधैँ मिलेका, बाबुको भक्ति गर्ने र दानी छन् ।

गुणी, धर्ममा लागेकी, गुण चिन्ने छोराहरूकी आमा ती गौरीले बाटोमा पौवा बनाएर नारायणलाई चढाइन् ।

शकसंवत् १७०४ (वि.सं. १८३९) माघ शुक्ल पञ्चमी बृहस्पतिवारको दिन रामपुर (धंबुङ)मा सबै जनाको लागि बनाइएको यो पौवा सुहाइरहेको छ ।

यस कामले नारायण प्रसन्न होऊन् । शुभ होस् ।

**व्याख्या–**

पृथ्वीनारायण शाहको पहिलो विवाह मकवानपुरका राजा हेमकर्ण सेनकी छोरी इन्द्र-कुमारीसँग भएको थियो । तर यस विवाह सम्बन्धले गर्दा गोरखा र मकवानपुर ठकुराइका

बीच मेलमिलापको बदला कटुता मात्र पैदा भएथ्यो।[१] यस कारण मकवानपुरका सेन-राजाको मेख मार्न पृथ्वीनारायण शाहको दोस्रो विवाह गराइनु आवश्यक सम्झियो र नरेन्द्रलक्ष्मीसँग पृथ्वीनारायण शाहको दोस्रो विवाह छिटो छरितोसाथ सम्पन्न गराइयो पनि।[२] पछि नरेन्द्रलक्ष्मीले नै पृथ्वीनारायण शाहका बडामहारानी हुने सौभाग्य पनि पाइन्। यो विवाह सम्पन्न गराउनामा जयमङ्गल पौडेलको हात रहेको थियो। साथै पृथ्वीनारायण शाह काशी जाँदा पनि जयमङ्गल पौडेलले उनलाई अनेक कुरामा सुविधा मिलाइदिएका थिए।[३] यसै गुणले रिझी महारानी नरेन्द्रलक्ष्मीलाई मन्त्र सुनाउने अवसर जयमङ्गल पौडेल-लाई दिइयो र "देवीगुरु"को नाताले जयमङ्गल पौडेलको राजदरबारमा प्रतिष्ठा रह्यो।[४] यसैले गर्दा उनका छोराहरू र नातिहरूको समेत तात्कालिक राजकाजमा स्थान रह्यो।

यसबाहेक जयमङ्गल पौडेल विद्वत्ताको दृष्टिले र चरित्रबलको दृष्टिले पनि प्रभावशाली पण्डित थिए। यस अभिलेखमा अग्निहोत्रितिलक, वेदान्तवित् आदि विशेषण लाई उनको वर्णन गरिएको छ। पृथ्वीनारायण शाहका दरबारिया कवि ललितावल्लभले भक्तविजय काव्यमा जयमङ्गल पौडेलको वर्णन गर्दा देवीगुरु, सज्जन, विद्वान् आदि भनी लेखेका छन्। जयमङ्गल पौडेलका कृतिहरू देख्न पाइएको छैन तापनि उनी विद्वान् आचारवान् व्यक्ति थिए भन्ने कुरा यस अभिलेखबाट र भक्तविजय काव्यबाट थाहा पाउन सकिन्छ।

जयमङ्गल पण्डितकी पत्नी, व्रजनाथ पण्डितहरूकी आमा "गौरी" भन्ने ब्राह्मणी थिइन्। तिनी पनि धर्मात्मा प्रकृतिकी थिइन्। त्यसै हुँदा तिनीले रामपुरमा (धँबुङमा) पाटी पौवा बनाई यो अभिलेख कुँद्न लाएकी हुन्। यस अभिलेखमा जयमङ्गलबाहेक उनका व्रजनाथ आदि पाँच छोराहरूको पनि वर्णन परेको छ।

जयमङ्गलका पाँच छोरामध्ये व्रजनाथ पण्डितको प्रसिद्धि बढी रहेको थियो। उनी शास्त्र पढेका पण्डित हुनाको साथसाथै महत्त्वाकाङ्क्षी व्यक्ति पनि थिए। उनी दरबारमा आफ्नो प्रभाव जमाउन चाहन्थे। यसैले प्रतापसिंह शाहको मृत्युको लगत्तैपछि व्रजनाथमाथि राजा र राजमाता राजेन्द्रलक्ष्मीको गाथ गादी ताकेको अभियोग लाग्यो र उनलाई ब्राह्मणोचित

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१५–३१६, ६६४–६६८

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६६९–६७१

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६७०

४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३९३

विधि गरी देशनिकाला गरियो ।[५] राजकुमार बहादुर शाहसँग यिनको मनमुटाव थियो । त्यसपछि व्रजनाथ काशी गई बसेका थिए । तर यता बहादुर शाह सत्ताबाट हट्ने बित्तिकै फेरि नेपाल फर्कन पाइन्छ कि भनी यिनले राजदरबारसँग सम्बन्ध जोडेका थिए । पुरश्चरण आदि गर्नाको साथसाथै भारततिरका समाचार राजदरबार पठाउने काम पनि व्रजनाथले गरेथे ।[६] यसरी राजदरबारसँग फेरि सम्बन्ध जोड्न व्रजनाथ सफल भए पनि उनी काशीमै रहे; नेपाल फर्केको बुझिँदैन । पछि रणबहादुर शाह काशी पुगी फर्केर आउँदा मात्र व्रजनाथका छोरा रङ्गनाथहरूले नेपाल फर्कने अवसर पाएथे ।[७]

व्रजनाथ पौडेल निकालिए पनि उनकी आमा गौरीचाहिँ नेपालमा नै रहेकी थिइन् भन्ने कुरा यस अभिलेखले देखाउँछ । वि.सं. १८३९मा रामपुर (धँबुङ)मा पाटी पौवा बनाएको उल्लेख यस अभिलेखमा परेको छ ।

卐

५. 'ऐतिहासिक पत्रसंग्रह' पहिलो भाग, पृ. ३९–४१

६. 'ऐतिहासिक पत्रसंग्रह' पहिलो भाग, पृ. ४३–४४

७. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १७३–१७४

[ ३६ संख्या ]

# विजयपुरको रणबहादुर शाहको पालाको अभिलेख

सुनसरी, विजयपुरको बन्तकालीस्थानसँग एउटा पौवा रहेको छ। सो पौवाको भित्तामा एउटा इष्टिकापत्र टाँसिएको छ। त्यसमा यो अभिलेख कुँदिएको छ। यहाँ संवत् १८३६ दिइएको छ।

'पुरातत्व-पत्रसंग्रह', तेस्रो भागको ११-१२ पृष्ठमा शङ्करमान राजवंशीद्वारा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीशाके १७०२ श्रीसम्वत् १८३६ मीते पौषमा-
२. से कृष्णपक्षे. परिवातिथि तिक्षे नक्षत्ररे प्रीतियोगे शनिच-
३. रवारे तिस दिनमाहा विजैपुरदेशका श्री ३ कारिका म-
४. हामायादेवर श्री ३ माहारानि राजेन्द्ररक्ष्मी इत श्री-
५. श्रीश्रीमाहाराजधिराज रनबाहादुरदेवका प्रता-
६. प भयाका पारामाहा श्री २ जोगनारायन सुवा
७. श्री २ मानसाहि सुवा दुइ जनाको समुच्चन देवर व-
८. नावनभयछ ।। इत श्रीबनेपारीको कल्मि दत-
९. सिङ तेकराम छत्रसिं जयमोहोसिं वोसिं ज-
१०. गतसिं आवार सर्पासं कसराम देविसिं
११. नन्द्र सबै जना ६३ व्यापारी प्रधान दिर्घासिं

१२. विचारी श्रीविमरानन्द श्रीसुर्ज्या थवास श्री
१३. धनादि थापाः ।। नेपालसम्वत् ६०० रि—
१४. खित दरियांसि जैसि सुभम् अस्तु

व्याख्या—

मुकुन्द सेनका छोराहरूमा कान्छा लोहाङ्ग सेन अलि महत्त्वाकाङ्क्षी पुरुष थिए । उनले मकवानपुरदेखि विजयपुरसम्म आफ्नो राज्यविस्तार गरेका थिए । उनले आफ्नो राजधानी मकवानपुरलाई बनाए ।[१] लोहाङ्ग सेनका नाति हरिहर सेनले पनि दक्षिणतिर अलिकता यस राज्यको विस्तार गरे ।[२] यसरी उनको पालामा पूर्वमा सेनराज्य अभ बलियो भयो । यसैले उनी "हिन्दूपति" कहलाए[३] तथा त्यस बेलादेखि पूर्वका सेनहरू "पूर्वका पातसाह" पनि कहलाए ।[४] साथै यिनको समयमा यस राज्यमा गृहकलह पनि शुरू भयो ।[५] यसै प्रसङ्गमा

---

१. तोत्रराज पाण्डे र नयराजपन्त, 'नेपालको संक्षिप्त इतिहास' पृ. ७७
शङ्करमान राजवंशी (सं.), 'सेनवंशावली' श्री ५ को सरकार, पुरातत्त्व र संस्कृति विभाग, काठमाडौं, वि.सं. २०२४, पृ. २४
२. फ्रान्सिस ह्यामिल्टन, 'ऑन् ऐकाउन्ट् अफ् दि किङ्डम अफ् नेपाल' मञ्जुश्री पब्लिशिङ्ग हाउस, नयाँ दिल्ली, ई.सं. १९७१, पृ. १३६
३. 'सेनवंशावली' पृ. ६
४. विजयपुरका राजा विधाता इन्द्र सेन गुहार माग्न वि.सं. १७४८ मा कान्तिपुर आएका थिए । उनलाई तात्कालिक ठ्यासफुमा 'पूर्वका बादशाह' भनिएको छ । जस्तै—
"सं. ८११ आश्विन शुक्ल पञ्चमी अनुराधानक्षत्र बुधवार थ्व कुन्हु पूर्वया पातसाहजु थंस दुहावव न्हुरपुखुरतो श्री २ भूपारेन्द्र मल्ल जुजुनं रस्वर विज्याक मा किसि छम्ह देश बिव."
(ने. सं. ८११ (वि.सं. १७४८) आश्विन शुक्ल पञ्चमी अनुराधानक्षत्र बुधवारको दिन, पूर्वका बादशाह (मोरङका विधाता इन्द्रसेन) कान्तिपुरमा आए । न्हुःपुखु (रानीपोखरी) सम्म गई श्रीश्रीभूपालेन्द्र मल्लले स्वागत गर्न जानुभयो । एउटा ढोई कान्तिपुर देशलाई दिइयो । )
रामजी तेवारी, 'भूपालेन्द्र मल्ल' पूर्णिमा ३ पूर्णाङ्क; संशोधन-मण्डल, काठमाडौं, वि.सं. २०२१, पृ. ४०
५. ह्यामिल्टन 'ऑन् ऐकाउन्ट् अफ् दि किङ्डम अफ् नेपाल' पृ. १३७

महाकुमार शुभ सेन गुहार माग्न नेपाल-उपत्यकामा आए।[६] बाबुलाई कैद गरी गद्दीमा बस्ने अनुभव पाएका प्रतापमल्लले भित्रभित्रबाट शुभ सेनलाई प्रोत्साहन दिए।[७] प्रताप मल्लको मृत्यु पछि ललितपुरका राजा श्रीनिवास मल्ल पनि शुभ सेनका प्रमुख मद्दतगार बने।[८] श्रीनिवास

---

६. तात्कालिक एउटा ठ्यासफुमा शुभ सेन गुहार माग्न नेपाल-उपत्यकातिर लागेको घटना यसरी टिपोट गरिएको छ –

"सम्वत् ७९१ चैत्रकृष्णान मोरङ्या हरिहरसेनया काय महाकुमार शुभसिंह धाथाम्ह पिब्वाङ वव जगय वनिया जोङाव।।"

"सं. ७९१ ज्येष्ठकृष्ण दशमी बुधवार थ्व कुन्हु श्रीश्रीनिवास मल्लजुया प्रमान म्ह ४ खपोया जनम्ह १०० ग्वरखाया मुररीसाहि जगय वनिया व मुकुन्दपुर हतारव दिन गुरो।"

(ने. सं. ७९१ (वि.सं. १७२८) चैत्रकृष्णमा मोरङका हरिहरसेनका छोरा महाकुमार शुभसेन जगय बानियाँ साथ भागेर आए।

ने. सं. ७९१ (वि.सं. १७२८) ज्येष्ठकृष्ण दशमी बुधवारको दिन श्रीश्रीनिवास-मल्लका चार जना भारादार र भक्तपुरका शय जना, गोरखाका मुरारि शाह जगय बानियाँ मकवानपुरमा लड्न गए।)

'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ४३

७. तात्कालिक ठ्यासफुबाट र प्रसङ्गबाट यो कुरा थाहा पाइन्छ।

८. यस विषयमा भाषावंशावली र ठ्यासफुमा यसरी लेखिएको छ–

"संवत् ७९४ (वि.सं. १७३१) आश्विन महीनामा सेन राजाहरूको तकार भई नमिली शुभ सेन राजा आई मद्दत माग्न आउँदा ललितपत्तनका राजा प्रमुख भई भक्तपुर र तनहुँका राजा सामेल भई पूर्वतिर हरिहरसेन राजाका राज्य मोरंगमाथि चढाइ गरी रावा हलेसी आदि १७ ग्राम जिती शुभ सेन राजाकन दिई फर्कि आवा, दोस्रो साल मोरंगबाट ४ हात्ती शुभ सेन राजाले श्रीनिवास मल्लकन चढाई पठावा"

"संवत् ७९४ आश्विन कृष्ण: । चतुर्दशी आदित्यवार कुन्हु येँया यरँया खप्वया तनहुया पेम्ह राजाया थाना बङाव हरिहरसेनया छाताक्वाथ चारका दिन।"

(ने.सं ७९४ वि.सं. १७३१) आश्विन कृष्ण चतुर्दशी आदित्यवारको दिन कान्तिपुर, ललितपुर, भक्तपुर र तनहुँ, यी चार राजाका फौज गई हरिहरसेनको छाताक्वाथ खुलाइयो।)

गौतमवज्र वज्राचार्य 'अप्रकाशित ठ्यासफु' पूर्णिमा १२ पूर्णाङ्क, संशोधन-मण्डल, पृ. २४

मल्लले पनि बाबुसँग विद्रोह गरी राज्याधिकार हात लाएथे ।[९] पूर्वको सेनराज्यको यस गृह-कलहमा गोरखा, लमजुङ आदि राज्यहरू पनि "लाखबिसी" पाउने आशाले गुहार दिन पुगेका भए ।[१०] यस गृहकलहको परिणामस्वरूप पूर्वको सेनराज्य मकवानपुर र विजयपुर दुइ राज्यको रूपमा परिणत भयो । यी दुइ राज्यको साँध कमला नदी रह्यो । मकवानपुरको गद्दीमा शुभ सेन बसे । विजयपुरको गद्दीमा उनका भतिजा विधाता इन्द्र सेन राखिए ।[११] यस अवस्थामा काका भतिजाको ठ्याक नमिल्नु स्वाभाविक थियो । यसैले नेपाल-उपत्यकाका मल्ल राजा र अरू चौबीसी राजाको गुहार लिई एकले अर्कोलाई अँठ्याउन बराबर प्रयास गरिए ।[१२] यसको केही कालपछि मकवानपुरका राजखलकमा पनि कलह भयो र चौदण्डीराज्य खडा भयो । यसरी पूर्वका सेनराज्य मकवानपुर, चौदण्डी र विजयपुर तीन राज्यमा विभक्त भए ।[१३]

श्री ५ पृथ्वीनारायण शाहले मकवानपुर त वि.सं. १८१९ मै दखल गरेथे ।[१४] यसको एघार वर्षपछि मात्र उनको सेनाले चौदण्डी विजय गऱ्यो ।[१५] चौदण्डी जितेको एक वर्षजति पछि वि.सं. १८३१मा पृथ्वीनारायण शाहको सैन्यले विजयपुर पनि कब्जा गऱ्यो ।[१६]

विजयपुर विजय गरेको पाँच वर्षपछि यो अभिलेख राखिएको हो । बनेपा आदि ठाउँबाट विजयपुरमा आई व्यापार आदि गरी बसेका ६३ जनाको समूहले यो अभिलेख कुँदन लाएको हो । तिनमा प्रधान आदि नेवारहरू पनि थिए; खवास, थापा आदि पनि थिए । नेपालको एकीकरणको परिणामस्वरूप एकातिर नेपालको राजनैतिक क्षेत्र विस्तृत हुँदै थियो भने अर्कोतिर आर्थिक क्षेत्र पनि विस्तृत हुँदै थियो । शिल्पकार व्यापारी आदि वर्गलाई अब सीमित क्षेत्रमा मात्र रहनुपर्ने बाध्यता थिएन; अब उनीहरूले नेपालका विभिन्न क्षेत्रमा गई काम गर्ने अवसर पाउन थालेका थिए । विजयपुर जितिएको लगत्तै पछि बनेपाका कर्मी, व्यापारी आदि विजयपुर पुगेको झलक यस अभिलेखले दिन्छ ।

---

९. पशुपति-भण्डारको ताम्रपत्रबाट र एक अप्रकाशित ठ्यासफुबाट उक्त कुरा थाहा पाइन्छ ।
१०. डिल्लीरमण रेग्मी, 'मिडिइभल नेपाल' भाग ३, पृ. ६५
११. ह्यामिल्टन 'अ‍ॉन ऐकाउन्ट अफ् दि किङ्गडम् अफ् नेपाल' पृ. १४०
१२. तात्कालिक ठ्यासफुबाट उक्त कुरा थाहा पाइन्छ ।
१३. 'अ‍ॉन् ऐकाउन्ट अफ् दि किङ्गडम् अफ् नेपाल' पृ. १४६
१४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८४३–८४४
१५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११५६
१६. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११८८

विजयपुरको दन्तकालिकास्थान नेपालका प्रसिद्ध देवस्थलमा पर्दछ। यसै हुँदा सो देवस्थल-लाई आकर्षक पार्न यस भेकका तात्कालिक प्रशासक योगनारायण र मान साहीको नेतृत्वमा स्थानीय व्यापारी आदि समेत मिली कालिकाको देवल बनाइएको कुरा यस अभिलेखमा परेको छ। त्यस बेला गद्दीमा राजा रणबहादुर शाह थिए। राजा बालक हुँदा राजमाता राजेन्द्रलक्ष्मीदेवीले शासनको बागडोर सह्यालेकी थिइन्। यसै हुँदा यस अभिलेखमा "श्री ३ माहारानि राजेन्द्ररक्ष्मी इत श्रीश्रीश्रीमाहाराजधिराज रनबाहादुरदेवका प्रताप भयाका पारामाह्रा" भनी राजमाता र राजामा आदर प्रकट गरिएको छ।

यस अभिलेखमा "विजयपुरदेश" शब्दको उल्लेख परेको छ। यहाँ "देश" भनेर विजयपुरको राजधानीलाई लक्ष्य गरिएको हो। तात्कालिक परिभाषाअनुसार जङ्गल खाई पर्खाल आदिले घेरिएको अर्थात् 'गढ' रूपको, सांस्कृतिक दृष्टिले विकसित बस्तीलाई "देश" भन्ने चलन थियो।[१७] विजयपुर पनि 'वनगढ' रूपको बस्ती थियो। यसै हुँदा यस अभिलेखमा विजयपुर शहरलाई "देश" भनिएको हो। विजयपुरमा 'वनगढ'को अवशेष अहिलेसम्म केही बाँकी नै छ।

लेखाइको दृष्टिले यो अभिलेख अलि तल्लो तहको छ तापनि तात्कालिक केही कुरालाई झल्काउने हुनाले यो अभिलेख केही उपयोगी नै रहेको छ। यस कारण यस अभिलेखलाई यस संकलनमा समावेश गरिएको हो।



१७. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ३–४

[ ३७ संख्या ]

# गोरखा, भीमसेनस्थानको अभिलेख

गोरखा-दरबारको उत्तर-पूर्वपट्टि पनालीथोक भन्ने ठाउँ छ । त्यहाँ भीमसेनको एकतले मन्दिर रहेको छ । त्यहीं यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ । यहाँ वि.सं. १८३९ दिइएको छ ।

## मूलपाठ

श्री ३ भिमसें साहाय: ॥

१. स्वस्ति श्रीशाके १७०४ श्रीसंवत् १८३९ वैशाष

२. शुदि ५ तिथौ पञ्चमि नक्षत्रे भिमसिरा सोभन जो–

३. ग. यो दिरामाहा गोर्षापोषरि थोकका श्रीश्री–

४. भिमसेण देउताकन क्षेयल तोरण त–

५. उघि नेवारका नीवार्नो जयसरी दुवुभि–

६. रिकरण चधायो, वैशाषका दिरण८

७. जांदा वुधवारका दिरा, कसैरे

८. सहन नसकि बिगारिदिया–

९. दिखि पंचमहापातक होरा

१०. ॥ शुभ ॥ मस्तु ॥ सर्व–

११. दा ॥ ॥

व्याख्या—

राम शाहले लिएको नीतिको परिणामस्वरूप गोरखाको आबादी कसरी छिटो बढ्दै गयो भन्ने चर्चा माथि गरिसकेको छ । राम शाहकै पालामा नेपाल-उपत्यकाका केही नेवारहरू व्यापारको सिलसिलामा गोरखा गई रहन थालेथे ।[१] यसपछि व्यापारीबाहेक अरू पेशाका पनि केही नेवारहरू गोरखा गई रहन लागे; तिनमा केहीले गोरखा-दरबारमा समेत प्रवेश पाए ।[२] श्री ५ पृथ्वीनारायण शाहद्वारा एकीकरण अभियान शुरू गरिएपछि गोरखा र पश्चिमका अरू भेकमा पनि नेवारहरू व्यापारको सिलसिलामा गई रहन थालेथे । गोरखामा गई रहेका त्यस्तै केही नेवार व्यापारीका नेवारनीहरू मिली यो अभिलेख कुँदाउन लाइएको हो । गोरखा पनेलीथोकमा रहेको भीमसेन मन्दिरमा क्षेपल र तोरण चढाइएको कुरा यसमा परेको छ । एकतले नेपाली शैलीको यो भीमसेनमन्दिर अहिले पनि छँदैछ । मन्दिरभित्र रहेको भीमसेनमूर्ति केही कलात्मक नै छ । भीमसेनमूर्तिसाथै गणेश आदिका मूर्ति पनि छन् ।

गोरखामा गई रहेका एक थरी नेवार वर्गको क्रियाकलापलाई अलिकता मात्र भए पनि झल्काउने हुनाले यो अभिलेख यस संकलनमा समावेश गरिएको हो । साथै नेवारहरूले नेपाली भाषाको ग्रहण कुन रूपमा गरे भन्ने झलक पनि यस अभिलेखबाट पाइन्छ । यस कारण यो अभिलेख केही अंशमा उपयोगी नै छ भन्न सकिन्छ ।



---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश, पृ. ५५६–५६१

२. तुलसीराम वैद्य र धनवज्र 'गोरखाको ऐतिहासिक सामग्री' पृ. ४०

[ ३८ संख्या ]

# नक्सालको भीम खवासको अभिलेख

नक्साल भगवती-मन्दिरको उत्तरपट्टि भित्तामा टाँसिएको शिलापत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ विक्रमसंवत् १८३९ दिइएको छ ।

'पूर्णिमा' २१ पूर्णाङ्कको ५०–५१ पृष्ठमा दिनेशराज पन्तद्वारा यो प्रकाशित भएको छ ।

## मूलपाठ

श्रीश्रीमहिषमर्दिन्यै नमः

१ संयाते ग्रहरामवारणविधौ श्रीविक्रमाब्दे गुरौ ज्येष्ठे मासि व–
२. लक्षपक्षक(ग)ते यामे तिथौ त्वाष्ट्रभे ।। श्रीमच्छ्रीरणबाहादुराख्यनृपतेः स–
३. न्मुद्रिकोत्पादकः स्वेष्टेशीपरितुष्टये समकरोद् देवालयोद्यापनं ।।१।। श्री–
४. मद्राजेन्द्रलक्ष्मीचरणपरिचरो राजभारासमर्थो भीमोकारयद्देविका–
५. सदनकं रम्यञ्च जीर्णोद्धृतं ।। देवब्राह्मणपूजनं च हुतभुक्संस्थापनं चाध्वरं
६. कृत्वा सम्यगुदीरितं बहुविधं दत्वा शुभां दक्षिणां ।।२।। ॐ अद्य ब्रह्मणो
७. द्वितीयपरार्द्धे श्वेतवराहकल्पे वैवस्वतमन्वन्तरे, अष्टाविंशतितमे कलि–
८. युगस्य प्रथमपादे जंबुद्वीपे भारतवर्षे आर्यावर्त्तदेशे हिमवद्दक्षिणपार्श्वे नेपा–
९. लदेशे श्रीश्रीश्रीपशुपतिसन्निधाने वासुकीक्षेत्रे वाग्मत्याः पश्चिमकूले
विष्णुम–

१०. त्या: पूर्व्वकूले कांतीपुरमहानगरे इहैव पुंण्यभूमौ ज्येष्ठमासे शुक्लपक्षे दशम्यां ति–

११. थौ चित्रानक्षत्रे परिघयोगे यथाकरणमुहूर्तके मिथुनराशिगते सवितरि

१२. कंन्याराशिगते चन्द्रमसि धनुराशिगते देवगुरौ अन्येषु ग्रहेषु यथायथास्था–

१३. नस्थितेषु सत्सु काश्यपगोत्रेण भीमवर्म्मणा श्रीश्रीश्रीस्वेष्टदेवताप्रीतिपू–

१४. र्व्वकयथाशास्त्रोक्तफलप्राप्तिकामनया श्रीश्रीश्रीमहिषमर्द्दिनीभग–

१५. वतीदेव्या इष्टकादिरचितदेवालयं निर्म्मायास्मिन्दिने प्रतिष्ठापितं ॥ ॥

१६. अथ देशभाषा ॥ स्वस्ति श्री ५ रणबाहादुर्साहबहादुरजंगदेव महाराजाधिराजका राज्योद्योत हुदामहा भीम टक्सारिले नंसारै गाउँका श्रीश्रीश्री भगवती देवीका देवल

१७. जीर्णोद्धार गरि देवालय बनाइकन प्रतिष्ठा गर्‍या ॥ विक्रमसंवत् १८३९

१८. ज्यैष्ठशुदि दशहरा १० बृहस्पतिवारका दिन शुभंम् ॥ यो देवल बना–

१९. उदामाहा जिताइ गर्‍या श्रीप्रेमगिरि गुसांइ, श्रीनेपालसंवत् ९०२ शुभम्

## अनुवाद

श्रीमहिषमर्दिनी देवीलाई नमस्कार। वि.सं. १८३९ ज्येष्ठ शुक्ल दशमी बृहस्पतिवार चित्रानक्षत्रमा, राजा श्रीरणबहादुर शाहका टक्सारी, श्रीराजेन्द्रलक्ष्मीका पाउका सेवक, राजभार बोक्न सक्ने भीमले आफ्ना इष्टदेवतालाई प्रसन्न पार्न भगवती अम्बिकाको देवलको राम्ररी जीर्णोद्धार गरी प्रतिष्ठा गरे। त्यस बेला देवता र ब्राह्मणको पूजा गरियो; होम गरियो; शास्त्रमा बताएको अरू विधान पनि गरियो; धेरै दक्षिणा दिइयो।

आज ब्रह्माको द्वितीय परार्द्ध, श्वेतवराहकल्प, वैवस्वतमन्वन्तर अठ्ठाईसौं युगमा कलियुगको पहिलो पाउमा, जम्बूद्वीप भारतवर्ष आर्यावर्त्तदेश, हिमालयको दक्षिणपट्टि नेपालदेशमा श्रीश्रीश्रीपशुपतिको नजीकै वासुकिक्षेत्रमा, वाग्मतीको पश्चिम किनार विष्णुमतीको पूर्वकिनारमा कान्तिपुर महानगरमा, यही पुण्यभूमिमा, ज्येष्ठ शुक्ल दशमी चित्रानक्षत्र परिघयोग पर्नु पर्ने करण मुहूर्त परेको बेलामा मिथुनराशिमा सूर्य रहेमा कन्याराशिमा चन्द्रमा रहेमा, धनुराशिमा बृहस्पति रहेमा अरू ग्रहहरू आफ्नो आफ्नो स्थानमा रहेमा,

काश्यप गोत्रका भीमवर्माले श्रीश्रीश्रीस्वेष्टदेवतालाई प्रसन्न पार्न, शास्त्रमा बताएको फल पाउने इच्छाले श्रीश्रीश्रीमहिषमर्दिनी भगवती देवीको देवल ईंट आदिले बनाई यस दिन प्रतिष्ठा गरियो ।

व्याख्या–

भीम खवासले नक्साल भगवतीको देवलको जीर्णोद्धार गरी वि. सं. १८३९मा यो अभिलेख कुँदाएका हुन् । टक्सारमा हाकिम भएर धेरै काल बसेका हुँदा यिनी "टक्सारी भीम" भनी प्रसिद्ध भएथे । नेपालको एकीकरणपछि टक्सारको महत्त्व बढी रह्यो । हुनत यहाँ टक्सार धेरै अगाडिदेखि कायम थियो । एकीकरणबाट टक्सारको अझ विस्तार गरियो । यस कुराको झलक राजपुरोहित शक्तिवल्लभ अर्ज्यालको वर्णनबाट पाउन सकिन्छ । 'जयरत्नाकर' नाटकमा राजा रणबहादुर शाहको महिमा गाउँदै शक्तिवल्लभले यस्तो बोलेका छन्[१] –

"निरर्गला टंकशाला गृहे यस्य प्रवर्तते ।
तस्मै नेपालनाथाय किं देयं धनमुत्तमम् ॥" ६।१३

(जसको घरमा हरबखत टक्सार चलिरहन्छ; उस्ता नेपालका राजालाई के असल द्रव्य दिऊँ)

यस कारण त्यसवेला टक्सारी पद महत्त्वपूर्ण रहेथ्यो । भीम खवासले धेरै वर्षसम्म सफलतापूर्वक टक्सारका हाकिम भई काम चलाएथे । उनी मुलुकी देवान पनि बनाइएका थिए[२] तापनि उनको कार्यक्षेत्र प्रायः टक्सार नै रह्यो ।

तात्कालिक सामाजिक सोचाइको दृष्टिले 'खवास' हरू आफूलाई खवास भन्न हिच्किचाउँथे; आफ्नो पदोन्नति हुँदै गएपछि अझ बढी हिच्किचाउँथे । पाटने धनवन्त प्रधानका नाति काजी त्रिभुवनले शुरूमा आफूलाई "खवास" लेखेथे । पछि आफ्नो उन्नति हुँदै गएपछि "खवास" नलेखी "प्रधान" लेख्न पुगेथे । यस अभिलेखमा टक्सारी भीम खवासले आफूलाई काश्यपगोत्रका भीमवर्मा भनी लेखाएका छन्; खवास लेखाएका छैनन् । वि. सं. १८५५को पशु-

---

१. सं. धनवज्र वज्राचार्य र ज्ञानमणि नेपाल 'जयरत्नाकर नाटक' नेपाल सांस्कृतिक परिषद्, काठमाडौं, वि.सं. २०१४, पृ. १०२

२. तल दिइएको भीम खवासको अभिलेख र तात्कालिक पत्रबाट उनी 'मुलुकी देवान' पदमा थिए भन्ने थाहा पाइन्छ ।

पतिको ताम्रपत्रमा पनि "विष्णुधरको नाति मङ्गाधरको छोरा टकसारी भीम" मात्र लेखाएका छन्; खवास लेखाएका छैनन् । उनको अर्को एक अभिलेखमा भने "श्रीमुलुक देवान भीम खवास" भनी लेखाएका छन् ।[३] यसबाट पदोन्नति भएपछि पनि आफ्नो थर लुकाउने कालका त भीम खवास रहेनछन् भन्ने थाहा पाइन्छ ।

जे होस्; नक्साल भगवतीको मन्दिर बनाई कुँदाएको यस अभिलेखले भीम खवासलाई पछिसम्म संझाइरहनेछ । नक्सालमा उनको सालिक पनि रहेको छ ।



३. वि.सं. १८४२को यो अभिलेख तल दिइएको छ ।

[ ३९ संख्या ]

# राममन्दिरको अमरसिंह थापाको अभिलेख

जनकपुर, राममन्दिरको वायाँपट्टि भित्तामा टाँसिएको शिलापत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८३९ दिइएको छ ।

'अमरसिंह थापा' (हिन्दीसंस्करण)को २१४ पृष्ठमा सूर्यविक्रम ज्ञवालीद्वारा यो प्रकाशित भएको छ । 'पुरातत्त्व-पत्रसंग्रह' तेस्रो भागको १२ पृष्ठमा पनि यो छापिएको छ ।

## मूलपाठ

।। श्रीसीतापतये नमः ।।

१. स्वस्ति श्रीनिधिपावकेभरजनीनाथै १८३९ मिते स—
२. म्वते भानौ कुम्भगतेऽर्यमर्क्षबुधयो ( : ) कृष्णद्वितीया—
३. तिथौ ।। भूभृद्वृन्दशिरोमणे रणबहादूरस्य सेनापति—
४. र्धर्म्मज्ञोऽमरसिंहको व्यरचयत्सीतापतेर्मन्दिर—
५. म् ।।१।। शुभमस्तु ।। श्रीसम्वत् १८३९ श्रीशाके
६. १७०४ फाल्गुनमाशे कृष्णपक्षे द्वितीयायां तिथौ
७. बुधवालसरे उत्तरफल्गुणीनक्षत्रे धृतौ योगे ।। स्वस्ति
८. श्रीमन्महाराजाधिराज श्रीमहाराजे रणबहादूरशम्शेर
९. जंङ्देवका सेवक आत्रेयगोत्रोत्पल (न्न) भीमसेन—
१०. थापात्मज सर्दार श्रीअम्मरसिंह थापाले श्रीसीता—

११. रामचन्द्र लक्ष्मनजीका मन्दीर बनवाया: । शुभम् ॥

१२. मन्दिर वनवदाको रुपया......

१३. श्रीसुरत् थापा श्रीपिताम्वर पाध्या दरोगा

## संस्कृतभागको अनुवाद

कल्याण होस् ! वि.सं. १८३९ फाल्गुन कृष्ण द्वितीया बुधवारमा राजाहरूमा शिरोमणि भएका रणबहादुर शाहका सेनापति (सरदार), धर्मात्मा अमरसिंह ( थापा )ले रामचन्द्रको मन्दिर बनाउन लाए ।

व्याख्या–

नेपालको एकीकरण अभियानमा उल्लेखनीय योगदान दिने भारादारहरूमा एक अमर-सिंह थापा पनि हुन् । वि.सं. १८२५ मा उनी सरदार बनाइएका थिए ।[1] वि.सं. १८२६मा भक्तपुर विजयका लागि हिँडेका गोरखाली भारादारमध्ये एक अमरसिंह थापा पनि थिए । भक्तविजयकाव्यमा यस कुराको उल्लेख परेको छ ।[2] यसबाट अमरसिंह थापाको प्रसिद्धि त्यसै बेला केही फैलिसकेको थियो भन्ने थाहा पाइन्छ । यी अमरसिंह थापाको प्रख्याति विशेष गरी पश्चिमतिरको लडाईंमा अझ विशेष गरी अंग्रेजसँगको लडाईंमा फैलिएथ्यो तापनि पूर्वविजयमा पनि यिनी संलग्न थिए । पृथ्वीनारायण शाहले अमरसिंह थापाहरूलाई लेखेको एक पत्रमा "पूर्व हाम्नालाई सिहिनेत गर्नामा तिमीहरूबाट कसर रहन्याछैन" भनी बोलेका छन् ।[3] यसबाट पूर्वविजय गर्ने काममा पृथ्वीनारायण शाहले अमरसिंह थापामाथि पनि केही भरोसा गरेका थिए भन्ने थाहा पाइन्छ । हुन पनि पूर्व विजयमा अमरसिंह थापाले पनि केही उल्लेखनीय काम गरेथे ।

पूर्वविजयको काममा अमरसिंह थापाले पनि उल्लेखनीय योगदान दिएका थिए भन्ने कुराको पुष्टि जनकपुर, रामन्दिरको यस अभिलेखले पनि प्रकारान्तरले गरेको छ । अमरसिंह

१. तीव्रराज पाण्डे र नयराज पन्त, 'नेपालको संक्षिप्त इतिहास' पृ. १६३

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३६४

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १०६६

थापाले बनाउन लाएको यो राममन्दिर नेपाली शैलीको भव्य रूपको छ। नेपालको एकीकरणको सिलसिलामा गोरखाली भारादारहरू जहाँ जहाँ गए; त्यहाँ त्यहाँ प्रायः उनीहरूले आफ्नो कृति केही न केही राख्ने गरेको पाइन्छ। यसले गर्दा नेपालको राजनैतिक एकताको साथै सांस्कृतिक एकतालाई पनि बल मिलेको थियो। यो विचारणीय कुरा छ। यस कारण यस राममन्दिरको निर्माणले अमरसिंह थापालाई निकै मात्रामा अमर बनाएको छ भन्दा अत्युक्ति हुँदैन।



[ ४७ संख्या ]

# कास्कीका राजाले गोरखाका राजालाई लेखिदिएको धर्मपत्र

'सन्धिपत्र संग्रह'को ११ पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ। मूल ताम्रपत्र हेर्न नपाइएकोले यहाँ पङ्क्ति मिलाई दिन सकिएन।

## मूलपाठ

(मुद्रामा– स्वस्ति श्रीभवानिचरणभक्त महाराजा सिद्धिनारायण साहदेव)

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमत्सिद्धिनारायण साहदेवले स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे रणबहादूरसाह वहादूरसम्सेर जंगदेवकन तावापत्र लेषि च ह्लाजा,

पर्वत मंगरात आधिषोलो जुम्लो वाइसिका, लहर पसि, गोर्षालाई हान्न पसु, गोर्षलि षायाको लमजुं कावो गराइ उकासनामा पसु, आजउप्रान्त गोर्षा कास्किका बगाल आयाका सपक्ष बढावन नपसु, गोर्षा कास्किका बगाल नआयाका विपक्ष घटावन नपसु, गोर्षलि उद्योग आँट्दाको दिन गोर्षाको आज्ञा मान्न नपसु, गोर्षामाथि भिर पर्दा गुहार गर्नु र रति हालि उकासन नपसु त कास्कि-

लाई स्वस्ति श्रीवेदस्मृतिपुराणोक्त श्रीपशुपति श्रीगुह्येश्वरी श्रीवज्रयोगिनी श्री-चांगुनारायण श्रीतुलजा श्रीपञ्चलिंगको कुदृष्टि हवस्.

पर्वत मंगरात आधिषोलो जुम्ला बाइसिका लहर पसि, गोर्षालाई हान्न नपसु, गोर्षाले षायाको लमजुङ काचो गराई उकासन नपसु, आज उप्रान्त गोर्षा कास्किको बगाल आयाका सपक्ष बढाउन पसु, गोर्षा कास्किका बगाल नआवन्या विपक्ष घटावन पसु गोर्षाले उद्योग आटदाको दिन गोर्षाका आज्ञा मात्र पसु, गोरषामा भिर पर्दा गुहार गर्नु र रति हालि उकासनामा पसु त कास्किलाई स्वस्ति श्रीवेदस्मृतिपुराणोक्त श्रीपशुपति श्रीगुह्येश्वरी श्रीवज्रयोगिनी श्रीचांगु-नारायण श्रीतुलजा श्रीपञ्चलिंगको सुदृष्टि हवस्.

इति सम्वत् १८४० साल वैसाष सुदि १५ रोज ६ मुकाम् कांतिपुर शुभम् ।

एसमा साक्षि कास्किका सब नुनिया. शुभम् ।

व्याख्या–

पृथ्वीनारायण शाहले पूर्वतिरको विजयअभियान सफल पार्न सके जस्तो पश्चिमतिर विजयअभियान सफल पार्न सकेका थिएनन् । पूर्वतिर भएका विजय प्रायः गरी दीगो रहेका थिए; नुवाकोट, मकवानपुर, कान्तिपुर, ललितपुर, भक्तपुर आदि प्रमुख ठाउँमा गरिएका विजय दीगो भएका थिए । त्यसै गरी पश्चिमतिर भने सफलता प्राप्त हुन सकेको थिएन । पृथ्वीनारायण शाहका समयमा पश्चिमतिर पनि केही प्रदेश कब्जा गर्ने काम नभएको होइन; तर सो दीगो भएको थिएन ।[1] त्यहाँ शत्रुपक्षले फेरि प्रत्याक्रमण गरी ती प्रदेश फिर्ता लिने गरेका थिए । यसो हुँदा पश्चिमतिरको विजय अभियान सफल हुन सकेको थिएन ।

पृथ्वीनारायण शाहको शेषपछि राजकुमार बहादुर शाह राजमाता राजेन्द्रलक्ष्मीले पनि आफ्ना कार्यकालमा पश्चिमतिर बढ्ने योजना बनाएथे । तर उल्लेखनीय सफलता प्राप्त हुन

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १०८८

सकेको थिएन। वि.सं. १८३९ मा भएको लमजुङ विजय भने यस सिलसिलामा भएको सबभन्दा ठूलो सफलता थियो।[२] तर अरू चौबीसी राज्य र बाईसी राज्य मिली प्रत्याक्रमण गरी लमजुङ उकास्ला कि भन्ने डर थियो। किनभने गोरखाले पश्चिमतिर पनि सफलता हासिल गरेको यस उदाहरणले चौबीसी, बाईसी राज्यलाई सावधान बनाइदिएको थियो। उनीहरू मिली प्रत्याक्रमण गर्ने निकै सम्भावना थियो। यसै हुँदा सो हुन नपाओस् भनी कास्कीका राजा सिद्धिनारायण शाहलाई डर त्रास देखाई यो धर्मपत्र लेखाइलिएको देखिन्छ।

लमजुङ पहिले सामरिक दृष्टिले गोरखाभन्दा बलियो राज्य कहलाएको थियो।[३] हुन पनि अनेक पटक लमजुङले गोरखालाई आछु आछु खेलाएको थियो। तर वि.सं. १८३९मा लमजुङमा गोरखाले अधिकार जमाएपछि कास्कीका राजा सिद्धिनारायण शाह गले। हुन त पहिले यी सिद्धिनारायण शाहले पनि गोरखाको शक्ति बढ्न नदिन अनेक प्रयास गरेका थिए। पृथ्वीनारायण शाहका भाइहरूलाई उनको विरुद्ध यिनले भड्काएथे। पृथ्वीनारायण शाहको मृत्यु भएको ३ दिनपछि नै उनका माहिला भाइ महोद्दामकीर्तिलाई यिनले धर्मपत्र लेखिदिई गोरखाको विरुद्ध काज गर्न उक्साएका थिए।[४] तर अहिले लमजुङको हारले कास्कीका राजा सिद्धिनारायण शाहको उत्साह सेलाएको देखिन्छ। अब गोरखाको विरुद्ध चल्दा आफ्नो अस्तित्व नरहने देखेर कास्कीका राजाले गोरखाको एक किसिमले शरण लिन पुगेको कुरा यस धर्मपत्रले झल्काउँछ। यस धर्मपत्रमा मुकाम कान्तिपुर लेखिएको हुँदा सिद्धिनारायण शाह खुद कान्तिपुर पुगी यो धर्मपत्र लेखिदिएको देखिन्छ।

यस धर्मपत्रमा जम्मा ६ वटा शर्तहरू परेका छन्। हुनत ती ६ शर्तहरू परस्पर सम्बद्ध हुनाले भिन्नाभिन्नै शर्तको रूपमा लिन सकिँदैन तापनि यस धर्मपत्रमा तिनलाई ६ उपक्रमका रूपमा उल्लेख गरिएका छन्। संक्षेपमा ती ६ शर्तहरू निम्न प्रकारका छन्–

(१) पर्वत मंगरात आँधिखोलो जुम्लो बाईसीको कारवाइमा साथ दिई गोरखाको विरुद्ध आक्रमण नगर्ने.

(२) गोरखाले गरेका लमजुङ विजयलाई दीगो गराउने; यत्सलाई उकास्नतिर नलाग्ने.

---

२. तोत्रराज पाण्डे र नयराज पन्त 'नेपालको संक्षिप्त इतिहास' पृ. ६६

३. धनवज्र र टेकबहादुर श्रेष्ठ 'लम्जुङको एक ऐतिहासिक झलक' 'भ्वाइस् अफ् हिस्ट्री' भाग ३, इतिहास शिक्षण समिति, पृ. ३०

४. 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ८६–६०

(३) गोरखा, कास्कीको यस गूटमा मिल्न आउनेलाई मद्दत गर्न

(४) गोरखा, कास्कीको यस गुटको विरोधीलाई घटाउने

(५) गोरखाले कतै आक्रमण गरे कास्कीले त्यसमा साथ दिने

(६) गोरखामाथि कसैले आक्रमण गरे कास्कीले त्यसको विरुद्ध कार्वाइ गर्ने ।

उपर्युक्त शर्तले पश्चिमतिर गोरखाको अवस्था अझै सुदृढ भएको थिएन; चौबीसी बाईसीबाट प्रत्याक्रमण हुने सम्भावना निकै थियो भन्ने झलक पाइन्छ । यसै हुँदा कास्कीलाई बाईसी चौबीसीको संगठनमा मिल्न नदिई आफ्नो पक्षमा मिलाउनाको लागि उक्त शर्तहरू राखिएको कुरा स्पष्ट छ ।

कास्कीले आत्मरक्षाको लागि यसरी धर्मपत्र गरी गोरखासँग मिल्न गए पनि उसलाई यसबाट लाभ भएन । यसको केही कालपछि गोरखाले सोझै कास्की दखल गरेथ्यो ।[५]

सन्धिपत्र गर्दा त्यसको स्थायित्वको लागि देवता साक्षी राख्ने चलन पुरानो हो । यो चलन मध्यकालमा झन् बढ्यो ।[६] त्यस बेला त छिटो छिटो सन्धि र सन्धिभङ्ग भइरहने हुनाले देवता साक्षी मात्र राखी नपुगी पशुपतिको धर्मशिला छोई, गुह्येश्वरीकुण्ड छोई धर्मपत्र गर्ने चलन पनि चलेथ्यो ।[७] सोही परम्परामा यस धर्मपत्रमा पनि पशुपति गुह्येश्वरी आदि काठमाडौं-उपत्यकाका प्रसिद्ध केही देवताहरूको सुदृष्टि र कुदृष्टि पर्ने कुरा उल्लिखित छ ।

यसरी तात्कालिक इतिहासको दृष्टिले यो अभिलेख पनि निकै उपयोगी रहेको छ भन्ने स्पष्ट छ ।



---

५. तोलराज पाण्डे र नयराज पन्त 'नेपालको संक्षिप्त इतिहास' ६६

६. मध्यकालका सन्धिपत्रहरू केलाई हेरे यो कुरा स्पष्ट हुन्छ ।
'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. १,१७–१८, २२,४०,४४, ६१

७. डिल्लीरमण रेग्मी, 'मिडिईभल नेपाल' भाग ३, पृ. ७२, १०८

[ ४१ संख्या ]

# गोरखाको राजेन्द्रलक्ष्मीको अभिलेख

गोरखा, गोरखनाथ-गुफामा रहेको घण्टामा यो अभिलेख कुँदिएको छ। यहाँ संवत् १८४० दिइएको छ।

'गोरखाको ऐतिहासिक सामग्री'को २१ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा यो अभिलेख प्रकाशित भएको छ।

## मूलपाठ

१. स्वस्ति ।। श्रीगोरषनाथ पृति यो घंट श्री ५ महाजाराधिराज श्रीमहाराजे रणबहादुर साहदेवस माता राजेन्द्रलक्ष्मिदेवीले चह्राएको हो. संवत् १८४० साल फागुण शुदि १५ रोज १ शुभम्।

व्याख्या–

गोरखा-दरबारमा राजपत्नी, राजमाताहरूको राजकाजमा पनि उल्लेखनीय स्थान रहेको पाइन्छ। राजकाजमा समेत भाग लिने यस्ता राजपत्नी, राजमाताहरूमा चन्द्रप्रभादेवीपछि राजेन्द्रलक्ष्मीको उल्लेखनीय स्थान रहेको छ।[१] प्रतापसिंह शाहको असामयिक

१. चन्द्रप्रभादेवीको एक लालमोहर हालै पाइएको छ। पूर्ण राजकीय प्रशस्ति चन्द्रप्रभादेवीमा रहेको कुरा त्यस पत्रबाट थाहा पाइएको छ। यसबाट तात्कालिक प्रशासनमा चन्द्रप्रभादेवीको सोझै हात रहेको ज्ञात हुन्छ।

मृत्युले जुन 'राजव्यसन' गोरखामा देखापर्न लागेको थियो; त्यसलाई राजमाता राजेन्द्रलक्ष्मीको साहस र राजनीतिज्ञताले निकै अंशमा हटाएथ्यो । उग्र आन्तरिक कलह देखापर्न लागेको थियो तापनि राजेन्द्रलक्ष्मीले साहसपूर्वक पश्चिम-विजयको अभियानलाई अगाडि बढाएकी थिइन् । यस सिलसिलामा वि.सं. १८३९ मा भएको लमजुङ विजयले गर्दा राजेन्द्रलक्ष्मीको निकै प्रतिष्ठा जम्नु स्वाभाविक थियो ।[२]

प्रायः गरी धर्मकर्म गर्दा पनि तात्कालिक परिस्थिति केही अंशमा कारण बनेको हामी पाउँछौं ।[३] राजमाता राजेन्द्रलक्ष्मीले वि.सं. १८४० फाल्गुनमा गोरखनाथलाई घण्टा चढाउनुमा पनि लमजुङ विजय कारण रहेको अनुमान हुन्छ । लमजुङ विजयले प्रसन्न भई अथवा लमजुङ विजय होस् भनी अघि भाकल गरेको पूरा गर्न यो घण्टा चढाएको हुन सक्छ । जे होस्; तात्कालिक राजकाजमा प्रमुख भूमिका खेल्ने राजमाता राजेन्द्रलक्ष्मीको कीर्तिको संझना गराउने हुँदा यो अभिलेख यस संकलनमा समावेश गरिएको हो ।



२. 'नेपालको संक्षिप्त इतिहास' ६४–६६

३. यस कुराको चर्चा माथि गएका अभिलेखमा ठाउँ ठाउँमा गरिसकेको छ ।

[ ४२ संख्या ]

# नक्सालको भीम खवासको अभिलेख

## मूलपाठ

१. स्वस्ति अद्य ब्रह्मणो द्वितीयप्रहरार्द्धे स्वेतवराहकल्पे वैवस्वत-
२. मन्तरे अष्टाविंशतितमे चतुर्युगस्य करे प्रथमपादे जम्बुदिपे भ-
३. रतखंडे भारतवर्षे आर्य्यावर्त्तदेशे हिमवद्दक्षिणपादे नेपालमं-
४. डले श्री ३ पसुपतिसंनिधाने वाग्मत्याः पश्चिमकुले विष्णुमत्या
५. पूर्वकुले श्रीमत्कान्तिपुरमहानगरे श्रीगांगुलङ्कु श्रीयं-
६. वुजमलेस्वरभट्टारकस्थाने एहंव पुण्यभुमौ वैसाष-
७. सुदि ११ वृहस्पतिवार एतस्मिन्दिने मखनटोल भेलाछि-
८. को श्रीमुलुक देवान भीम षवासले स्वहस्तेन स्वविद्य-
९. मानेन स्ववाचा प्रतिपन्नभुक्तेन पूर्व्वक यथाशास्त्रोक्तफ-
१०. लप्राप्तिकामनया अस्मिन्धर्मसरामन्दिरं कृत्वा
११. ......प्रिति संप्रदत्तं ॥ अतष्परं देशभाषा, यो दत्त कसै-
१२. ले नासुनु छुंन, नासिदिया पंचमहापातक लागछ, वे-
१३. स गरि दत बनायादेषि आयुरारोग्यमैस्वर्यंजन-
१४. धनसंतान वृद्धि होला ॥ दत बनाउदा चिताकारि
१५. असनटोल नासलननिको धनदत्त नेवार ॥
१६. सम्वत् १८४२ साल वैशाष सुदि ११ रोज
१७. ५ प्रतिस्थादिन, सुभम्

## अनुवाद

कल्याण होस् । आज ब्रह्माको द्वितीय प्रहरार्द्ध, श्वेतवराहकल्प, वैवस्वतमन्वन्तर, अठाईसौं युग, चतुर्युगमध्ये कलिको प्रथम पादमा, जम्बूद्वीप भरतखण्ड भारतवर्ष आर्यावर्त्त देशमा, हिमालयको दक्षिणपट्टि नेपालमण्डलमा श्रीश्रीश्रीपशुपतिको नजीकै वाग्मतीको पश्चिम किनारामा विष्णुमतीको पूर्व किनारामा श्रीकान्तिपुर महानगर श्रीगांगुलं, श्रीयंबु जमलेश्वर भट्टारक स्थानमा यही पुण्यभूमिमा, वैशाख शुक्ल एकादशी वृहस्पतिवार, यस दिन मखनटोल भेलाछिका श्रीमुलुक देवान भीम खवासले आफ्नै हातले आफू उपस्थित रही आफ्नो वचन दिई शास्त्रमा बताएको फल पाउने इच्छाले यहाँ धर्मशाला-मन्दिर बनाई भगवतीलाई प्रसन्न पार्न चढाइयो ।

व्याख्या–

शाहकालको प्रशासनमा उच्च पद पाउने खवासमध्ये एक यी भीम खवास पनि हुन् । धेरै काल टक्सारका हाकिमका रूपमा काम गरेका हुनाले यिनी "टक्सारी भीम" भनी कहलिएका थिए । यो अभिलेख राखिएताका भीम खवास "मुलुकी देवान" पदमा थिए भन्ने कुरा यसअभिलेखबाट थाहा पाइन्छ । तात्कालिक पत्रबाट पनि उक्त कुरा थाहा पाइन्छ ।[१] पछि फेरि एकताका भीमखवास टक्सारका हाकिम मात्र रहेको देखिन्छ । वि.सं. १८५५को पशुपतिभण्डारको ताम्रपत्रमा साक्षी बस्दा "भीम टक्सारी" भनिएको छ ।[२] वि.सं. १८५६ मा नेपालका विभिन्न प्रख्यात देवताहरूलाई गुठी चढाई राखिएका ताम्रपत्रमा साक्षी बस्ने अधिकारीहरूको पङ्क्तिमा "स्वर्णरौप्यमुद्राधिकारस्थः श्रीभीमः" भनी भीम खवासको उल्लेख परेको छ ।[३] वि.सं. १८५७ मा फेरि उनी "मुलुकी देवान" नै देखिन्छन् ।[४]

---

१. श्याम गोतामे, 'नेपाल : केही ऐतिहासिक प्रलेखहरू' त्रि.वि. नेपाल र एशियाली अध्ययन संस्थान, वि.सं. २०३२, पृ. २

२. यो अभिलेख तल दिइएको छ ।

३. यी अभिलेख पनि तल दिइएका छन् ।

४. पशुपति-भण्डारमा रहेको वि.सं. १८५७ एक ताम्रपत्रमा 'पानि हालन्या मुलुक देवान भीम' भन्ने उल्लेख परेको छ । सो अभिलेख तल यथास्थानमा दिइएको छ ।

नक्साल भगवतीस्थानमा भीम खवासका कृति निकै छन् । वि.सं. १८३९ मा भीम खवासले नक्साल भगवतीको मन्दिर बनाउन लाएका थिए ।[५] वि.सं. १८४२ मा त्यहाँ धर्मशाला बनाई यो अभिलेख राख्न लाएका हुन् । त्यहाँ भीम खवासको सालिक पनि रहेको छ ।



५. नक्साल-भगवतीको मन्दिर बनाई राखेको सो अभिलेख माथि गइसकेको छ ।

[ ४३ संख्या ]

# बोर्लाङको रणबहादुर शाहको पालाको अभिलेख

गोरखा, बोर्लाङ गाउँमा चण्डीस्थानसँगै एउटा भग्न पौवा रहेको छ। सो पौवाको भित्तामा यो अभिलेख कुँदिएको शिलापत्र टाँसिएको छ। यहाँ शकसंवत् १७०७ दिइएको छ।

## मूलपाठ

१. श्रीगणेशो जयति ।। मेधावी प्रादुरासीद्भुवि गणकमणिः श्रीकुला—
२. नन्दसर्म्मा तत्पुत्रो धर्म्मकर्म्मा सकलगुणनिधिर्म्मामुशर्म्मा बभूव
३. ।। तत्पत्नी धर्म्मशीला जयति खलु तथा पांथविश्रामहेतोर्जातीधग्रां—
४. ममध्येऽतिचतुरमतया निर्म्मितां धर्म्मशालाम् ।।१।। नाम्ना चैव
५. वसुंधरेति गदिता तस्याः पुनर्माधवे मासे सप्तखसप्तभूपरिमिते शा—
६. केऽक्षयायां तिथौ ।। गोविप्रार्च्चनमूकपङ्गुवधिराऽनाथांऽधसंतोष—
७. णैः सद्भावैर्म्महतां प्रतिश्रयगृहं सम्यक्तया संस्कृतम् ।।२।। तान्द्रां—
८. गस्य तरङ्गिणीपुलिनजं क्षेत्रं प्रपाहेतवे चत्वारिंशतिमूरिकं वडह—
९. न्यानाम्ना प्रसिद्धं मया ।। श्रद्धादत्तमिदं हरिष्यति पुनर्ल्लोभेन यो वा—
१०. ऽधमो जानीयादपराधिनं तमथवा हत्यान्वये संभवम् ।।३।।
११. श्रीशाके १७०७ मासे २ दिनगता १ तिथौ ३ नक्षत्रे ५ योगे ७ वारे
१२. ४ तस दिनमा श्रीवसुंधरावतीले पौवा बनाइकन प्रतिष्ठा
१३. गर्‍याको दिन हो. पौवाको गुठ तांद्रां षोलाको बडहन्या षेत

१४. मुरि चालिस् ४० मध्ये मुरि ३० षेतको बालि पौवालिले षानु
१५. पानि बोकि षुवावनु. मुरि १० षेतको बालिले अक्षयतृती—
१६. याका दिनमा प्रतिवर्ष ब्राह्मण भोज गरावनु. यथासक्य
१७. दक्षिणा दिनु. एति गरि जो रह्याको धान बाटुलो ग—
१८. रि पौवा बिग्रंदा बनावनु एति नगरि पौवाको गुठमा
१९. मेरा संतानले जो लोभ गर्नान्. पंचमहांपातक हो—
२०. ला. जो मेरो गन्याको धर्म्म राषनान् वृद्धि होला. बा—
२१. स बस्न्याहरू सबैले पौवाको रक्षा गर्नु. शुभम् ।।

## अनुवाद

श्रीगणेश ठूला हुनुहुन्छ। ज्योतिषीहरूमा श्रेष्ठ भएका विद्वान् श्रीकुलानन्द शर्मा हुनुभयो। उहाँका छोरा धर्मकर्म गर्ने सारा गुणका खानी भएका मामु शर्मा हुनुभयो। उहाँकी पत्नी धर्मात्मा, चतुर बुद्धि भएकी वसुन्धराले जातीथ भन्ने गाउँको माझमा बटुवाहरूलाई विश्राम गर्न धर्मशाला बनाइन्।

शकसंवत् १७०७ (वि.सं. १८४२) वैशाख महीना अक्षय तृतीयाको दिन ती वसुन्धराले गाई ब्राह्मणको पूजा गरी लाटा लंगडा बहिरा अन्धा अनाथ आदिहरूलाई सन्तुष्ट पारी, ठूलो भक्तिभावले धर्मशालाको राम्ररी संस्कार गराइन्।

ताम्राांग खोलाको बगरको बडहन्या भन्ने चालीस मुरी खेत पौवाको लागि मैले श्रद्धापूर्वक गुठी राखेको छु। यो दत्त कसैले लोभले हन्यो भने त्यो अधम मान्छेलाई अपराधी भनी जान्नू; अथवा त्यसलाई ब्रह्महत्या आदि हत्याको पाप लागोस्।

व्याख्या–

लडाइँको लागि प्रस्थान गर्दा वा अरू कुनै पनि शुभ कार्यको थालनी गर्दा साइत हेरीकन मात्र गर्ने हुनाले राजदरबारमा ज्योतिषीहरूको पनि विशिष्ट स्थान रहन्थ्यो। नेपालको एकीकरण अभियानको सिलसिलामा श्री ५ पृथ्वीनारायण शाहले ज्योतिषीहरूलाई साइत हेर्ने काममा मात्र नलाई राजकाजसम्बन्धी ठाउँठाउँमा दूत भएर जाने, चिठीपत्र लेख्ने आदि

काममा पनि लाएका थिए। यसो हुँदा पृथ्वीनारायण शाहको दरबारमा प्रवेश पाएका ज्योतिषीहरू चल्तापुर्जा भई निस्केका थिए।[१] तिनमा एक जना कुलानन्द ढकाल पनि हुन्। भानु अर्ज्याल जस्तै कुलानन्द ढकाल पनि शुरूदेखि नै पृथ्वीनारायण शाहका साथमा थिए। पृथ्वीनारायण शाहको हातबाट नेपालको एकीकरण हुन सक्छ भनी भविष्यवाणी गर्नेमा यी कुलानन्द ढकाल पनि थिए। यसै हुँदा आफ्नो उपदेशमा पृथ्वीनारायण शाहले यस कुराको चर्चा गौरव साथ गरेका छन्।[२] यसरी नेपालको एकीकरण अभियानमा ज्योतिषी कुलानन्दले पनि उल्लेखनीय योगदान दिएका थिए भन्ने देखिन्छ।

यो अभिलेख कुलानन्द ज्योतिषीकी बुहारी वसुन्धराले धर्मशाला, पौवा बनाई कुँद्न लाएकी हुन्। यसैले यस अभिलेखको शुरूमा कुलानन्दको वर्णन गरिएको छ। कुलानन्द बुद्धिमान् ठूला ज्योतिषी थिए भन्ने कुरा यस अभिलेखमा "मेधावी प्रादुरासीद् भुवि गणकमणिः श्रीकुलानन्दशर्मा" यो सन्मानपूर्ण शब्दद्वारा व्यक्त गरिएको छ। जुन वर्णन धेरै अंशमा सत्य थियो। कुलानन्दका मानुशर्मा भन्ने छोरा भए भनी यस अभिलेखमा उल्लेख गरिएको छ। बाबु जस्तै यी छोराचाहिँ त्यति प्रसिद्ध हुन सकेको देखिँदैन।

गोरखाबाट काठमाडौँ आउने बाटोमा बोर्लाङ भई आउने बाटो उहिले बढी चल्तीको थियो। बोर्लाङभेक त्यस बेला निकै आबाद पनि भएथ्यो। यसै हुँदा कुलानन्दकी बुहारी वसुन्धराले यसभेकबाट आवत-जावत गर्ने बटुवाहरूलाई सुविधा होस् भनी धर्मशाला, पौवा बनाउन लाएकी हुन्। धर्मशाला, पौवाको प्रतिष्ठा गर्दा गाई ब्राह्मणको पूजाको साथसाथै गरीब दुःखी असहायहरूलाई खुवाउने आदि सामाजिक महत्त्वको केही कुरा पनि गरेको उल्लेख यस अभिलेखमा गरिएको छ। पौवाको जीर्णोद्धार आदिको लागि गुठी राखेको उल्लेख पनि यसमा परेको छ। तर आजकाल यो बाटो त्यति चल्तीको नहुँदा पाटीपौवा आदि जीर्ण शीर्ण अवस्थामा छन्।

जे होस्; हुने पुग्नेहरूले लोकको हित हुने पाटी पौवा धारा आदि बनाउने हाम्रो प्राचीन कालदेखिको परम्परालाई कुलानन्द शर्माकी बुहारी वसुन्धराले पनि कायम राखेको कुराको संभना यस अभिलेखले दिलाउँछ।



---

१. दिनेशराज पन्त 'दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे' पूर्णिमा ७ पूर्णाङ्क, संशोधन-मण्डल, पृ.६१–६२

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१६, ३२०

[ ४४ संख्या ]

# वराहक्षेत्रको रणबहादुर शाहको अभिलेख

धरान, वराहक्षेत्रमा प्रसिद्ध वराह-मन्दिरको अगाडि एउटा पाटी रहेको छ । सो पाटीको भित्तामा टाँसिएको शिलापत्रमा यो अभिलेख कुँदिएको छ । शिलापत्र निकै खण्डित अवस्थामा रहेको हुँदा अभिलेखको संपूर्ण पाठ पढ्न सकिएको छैन । यहाँ वि.सं. १८४३ दिइएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीगणेशाय नमः । श्री ५ मद्रणबहादूर नेपालेश्वर.........राजाले वराहमंदिर जीर्णोद्धार......

२. ............... वराहमंदिर बनाया ।। ।। स्वस्ति श्रीराजराजः सकलरिपुजयो राज्यनेपाल.........

३. ...........रितवसुधो...........सार्थनामा ।। पुत्रः प्रतापसिंहः पितृसमबल-(वा)न्

४. .........रणवहादूरसाहेति...........।।१।। राजेन्द्रलक्ष्मी जननी च यस्याति धर्मशीलार्थि...काम.........।।

५. ...........किल कालिका सा ।।२।। रणादिबाहादुरभूपकस्य पितामहेनार्जितपूर्वदेशे ।।.........

६. ...........खजु वीरधीरो य......श्रीबीजेंपुर राजधानी......गुरौ........... यत्र तत्र ।। श्री—

७. ...........।।४।। कोकातो दक्षिणे भागे किटिभिःप्रभभिःसह ।। बराह......

८. ............विराजते ॥५॥ श्रीमन्मुकुन्दो भारतीपरिव्राजकोऽभवत् सिद्ध-वराहभक्तः॥......

९. ...........कोशीसमीपे चतरामठेऽस्ति ॥६॥ श्रीमन्मुकुन्दोद्भववंशसम्भवो महन्त–

१०. ......... तिः ॥ तस्यैकशिष्यः किल हंसभारती द्वितीयशिष्यो बलभद्र-भारती ॥७॥ श्रीहंस...

११. ...... महन्त शिवभारती ॥ श्रीबलभद्रशिष्यस्तु नारायणपतिः...... ॥८॥

१२. ...... स्वतिदृढं श्रीक्रोडमूर्त्तेर्हरेः प्रासादं शिवभारती व्यरचयन्नारायण-प्रीतये ॥ अग्न्यब्धि ......

१३. ........ परिमितेऽब्दे १८४३ माघशुक्ले तिथौ पंचम्यां बुधवासरे शशधरे मीनस्थिते चार्पयत् ॥९॥

१४. ......... नारायण भारतिनामा यतिवरो जटाधारी गौरीशिवचरण पूजा...नकरः ॥ सदा दानी ध्यानी

१५. ........... फलाहारी सोयं हरिनिलयनिर्माणकपरः ॥१०॥ वराहास्पद-निर्माणे.........

१६. वम् ॥ शिवनारायणमतिः पुराणश्रवणादिकम् ॥११॥ अनेन श्रीमद्वराह-प्रासादनिर्माणार्थं

१७. ......... नारायणः प्रीयताम् ॥ ॥ अथ प्रसंगिश्लोकाः। यते राज्ञा नीत्वा धृतकि .. शरीरस्य......

१८. .........व पूजां विधिनियमतोनन्यमनसा ॥ सदा प्रातः स्नायी त्रिकुटगिरि-देशादवमतः स धन्यो

१९. ........नेश्वर इति उपाध्यायो द्विजवरः ॥१॥ दपै थापाभिधः कश्चिदसि-धारिपुरःसरः ॥ मुदा

२०. ......... आगत्येश्वरकार्येऽत्र.........॥२॥ वराहनारायण वासुदेव...... कृत...प्यतियत्नतो—

२१. .........नारायणेना.........तवालये तत्क्षम्यतां भक्तजनप्रियप्रभो ॥३॥ जयनाथकृपासिन्धो

२२. .........रक्षाक्षम ॥ ... नारायण......... ॥४॥ सम्वत् १८४३

२३. ..............................................

२४. ..............................................

२५. .........नेपाल्के कारीगढ ॥ ॥ श्रीशाके १७०८ ॥

## अनुवाद

श्रीगणेशलाई नमस्कार । कल्याण होस् । सारा शत्रुलाई जितेका...... सार्थक नाम भएका, नेपालराज्य ......... ( पृथ्वीनारायण शाह हुनुभयो । ) उहाँका छोरा बाबु जस्तै बलिया प्रतापसिंह शाह हुनुभयो । उहाँका छोरा रणबहादुर शाह हुनुहुन्छ । उहाँकी मुमा धर्मात्मा-स्वभाव भएकी ...... कालिका जस्ती राजेन्द्रलक्ष्मी हुनुभयो ।

राजा रणबहादुर शाहका बाजे (पृथ्वीनारायण शाह)ले आर्जेको पूर्व देशमा...... वीर धीर ...... श्रीविजयपुर राजधानी ......गुरु...... जहाँ ताहाँ ...... ।

कोका नदीको दक्षिण भागमा...... पाँच किटि (?)का साथ वराहस्वामी विराजमान हुनुहुन्छ ।

वराहका भक्त सिद्ध जोगी श्रीमुकुन्द भारती भए । ......कोशीको नजीकै चतरा मठ छ। श्रीमुकुन्दको वंशमा जन्मेका महन्त...... । उनका एक शिष्य हंस भारती हुन्; अर्का शिष्य बलभद्र भारती। श्रीहंस भारतीका...... महन्त शिव भारती भए । श्रीबलभद्रका......... चेला चाहिँ नारायणपति ...... ।

वि. सं. १८४३ माघ शुक्ल श्रीपञ्चमी बुधवार, मीन राशिमा चन्द्रमा रहेको वेलामा शिव भारतीले नारायणलाई प्रसन्न पार्न वराहमूर्ति नारायणको बलियो मन्दिर बनाउन लगाई चढाए । यी शिवनारायण भारती जोगी जटाधारी शिव पार्वतीको चरणको सेवा गर्ने सधैँ ध्यान गर्ने, दान गर्ने, फलाहारी छन् । तिनै शिव भारतीले वराहस्वामीको मन्दिर बनाउन लाएका हुन् । ...... वराहको मन्दिर बनाउँदा ......... शिवनारायणले पुराण सुन्नु आदि काम पनि गरेका थिए । यिनले श्रीवराहको मन्दिर बनाउनाको लागि ......... । नारायण प्रसन्न हुनुहोस् ।

अब केही प्रासङ्गिक श्लोकको अनुवाद । जोगीको राजाले ...... शरीरको...... विधि-विधानअनुसार मन लाईकन पूजा गरे ......सधैँ बिहान नुहाउने, त्रिकूटगिरिबाट आएका ती धन्य ......... नेश्वर भन्ने उपाध्याय ब्राह्मण भए । उनका साथ वर्ष थापा भन्ने कुनै सैनिक पनि थिए । खुशीसाथ ...... आएर ईश्वरको कार्यमा ... ... । ... मिहिनेतपूर्वक वराह नारायण वासुदेव ...... स्थापना गरे । ...... नारायण, हजूरको मन्दिरमा ......भक्तजनलाई मन पराउने हे नारायण प्रभु, क्षमा गर्नुहोस् ।

दयाका खानी भएका हे नाथ, जय होस् । ... रक्षा गर्न समर्थ भएका... नारायण...... ।

विक्रम संवत् १८४३ शक संवत् १७०८ ... ... ... । नेपालका कालिगडले उक्त मन्दिर बनाएका हुन् । ......

व्याख्या–

नेपालका प्रख्यात तीर्थहरूमध्ये एक वराहक्षेत्र पनि हो । यो वैष्णव तीर्थ हो । वास्तवमा पश्चिममा काली गण्डकीको प्रस्रवणक्षेत्र पनि एक प्रकारले 'वैष्णवक्षेत्र' जस्तै बनेथ्यो । माथि शिर मुक्तिनाथदेखि रिडीभेकसम्म त अनेक वैष्णव तीर्थस्थान, मन्दिर आदि हामी पाउँछौँ । सप्तगण्डकी पछि देउघाटदेखि 'नारायणी' नामले परिवर्तित हुनामा समेत वैष्णव सम्प्रदायको प्रसार प्रचार कारण बनेको थियो ।[१] त्यसै गरी पूर्वमा सप्तकोशीको सङ्गमस्थल पनि वराह-क्षेत्रको रूपमा परिवर्तित भएको कुरा पनि धार्मिक इतिहासको दृष्टिले उल्लेखनीय रहेको छ । यस क्षेत्रले 'वराहतीर्थ'को रूप प्राचीनकालदेखि पाएको देखिएको छ । भारतको दिनाजपुरमा पाइएको बुध गुप्तको पालाको एक ताम्रपत्रमा वराहस्वामी, कोकामुखस्वामीलाई गुठी चढाएको उल्लेख पाइएको छ । त्यस ताम्रपत्रमा "हिमवच्छिखरे कोकामुखस्वामिनः ... वराहस्वामिनोपि...... डोङ्गाग्रामे......अतिसृष्टका" भन्ने उल्लेख परेको छ ।[२] यसले वराह-क्षेत्रलाई नै लक्ष्य गरेको हो भन्ने कुरामा कुनै शङ्का छैन ।

यसरी वराहक्षेत्र प्राचीनकालदेखि नै एक पवित्र तीर्थको रूपमा रहेको कुरा सिद्ध हुन्छ ।

---

१. धनवज्र, 'मध्यकालका शुल्का केही अभिलेख' कन्ट्रिब्युशन्ज् टु नेप्लिज् स्टडीज् वर्ष ५, अङ्क १, पृ. १००

२. राजबलि पाण्डे, 'हिस्टोरिकल ऍान्ड् लिटररी इन्स्क्रिप्शन्ज्' चौखम्बा संस्कृत सीरिज् वाराणसी, ई.सं. १९६२, पृ. १०७

नदी स्वतः पवित्र मानिन्छ । त्यसमा पनि अनेक नदीको संङ्गम भएपछि त्यस स्थलले झन् पवित्र तीर्थस्थलको रूप लिन्छ । वराहतीर्थमा सप्तकोशीबाहेक अर्को एक नदी मिल्न आउँछ । त्यो हो कोका नदी । कोका नदी सप्तकोशीको साम्मुन्ने त्यति ठूलो पनि होइन; कोका सामान्य नदी मात्र हो । तर यस नदीको महत्त्व प्राचीनकालदेखि रहन थालेको थियो भन्ने कुरा बिनाजपुरमा पाइएको उपर्युक्त ताम्रपत्रले देखाउँछ । यस प्रसङ्गमा एक अर्को कुरामा पनि ध्यानाकर्षण गर्नु उपयुक्त देखिन्छ । हाम्रो यहाँ यक्ष मल्लको पालासम्म पनि पूर्वका केही प्रदेश 'कोकि' कहलाएको थियो । कोकि प्रदेशभित्र चंपारान र लोहावर पनि पर्दथे । कोकि राज्यले नेपाल-उपत्यकामा हमला गर्ला भनी त्यसको प्रतिरोधको लागि यक्ष मल्लले ने. सं. ५७३ (वि. सं.१५१०)मा गुं विहार (साँखु) मानिगल (ललितपुर) फर्पिङ आदि सामन्त शासकहरूलाई पशुपतिको धर्मशिला छुवाई शपथ खुवाई राखेको धर्मपत्र पशुपति भण्डारमा रहेको छ ।[३] त्यसमा "चंपारान, लोहावर थ्व नेगुडि आदिन कोकि परचक लंस, ...... कोके हाथार युलं वंल आदिन गोन लंन वरसतो ......' भनिएको छ । पूर्वका प्रदेश 'कोकि' कहलाउनामा 'कोका' नदी कारण रहेको देखिन्छ । यसरी कोका नदीको महत्त्व स्पष्ट देखिन्छ । कोका नदीको महत्त्व यसरी किन रहेको हो; सो खोजीको विषय बनेको छ ।

यो अभिलेख निकै खण्डित भइसकेको छ । यस कारण यस अभिलेखबाट थाहा पाउन सकिने धेरै कुरा अब नष्ट भइसकेका छन् । तैपनि बचेको भागबाट थाहा पाउन सकिने कुराको संक्षिप्त चर्चा यहाँ गर्नु परेको छ । यस अभिलेखको उठानमा पृथ्वीनारायण शाह, प्रतापसिंह शाह र रणबहादुर शाहको वर्णन परेको छ । यो अभिलेख राखिएताका राजमाता राजेन्द्रलक्ष्मीको मृत्यु भइसकेको थियो ।[४] तैपनि राजमाता राजेन्द्रलक्ष्मीको पनि यस अभिलेखमा वर्णन परेको छ । राजमाता राजेन्द्रलक्ष्मी साक्षात् कालिका देवी जस्तै हुनुहुन्थ्यो भन्ने यहाँको वर्णनबाट राजेन्द्रलक्ष्मीको व्यक्तित्वबारे केही झलक पाउन सकिन्छ ।

यसपछि यस अभिलेखमा वराहस्वामीको वर्णन गरिएको छ । कोकाको दक्षिणपट्टि वराह स्वामीको मन्दिर छ भनी गरिएको यहाँको वर्णनमा कोकालाई पनि प्रमुखता दिइएको छ ।

यसपछि 'चतरा'मठ र त्यहाँका 'भारती' सम्प्रदायका जोगीहरूको शिष्यपरम्पराको वर्णन यस अभिलेखमा गरिएको छ । तिनमा मुकुन्द भारती प्रख्यात महन्त रहेछन् । तिनको

---

३. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. २१–२२

४. राजेन्द्रलक्ष्मीको मृत्यु वि.सं. १८४२ मा भएको हो ।

शिव्यपरम्पराका शिव भारतीले वि.सं. १८४३मा वर्तमान वराहस्वामीको मन्दिर बनाउन लाएका हुन्। यसो हुनाले यस अभिलेखमा शिव भारतीको निकै वर्णन परेको छ। यस अभिलेखको उठानमा "श्री ५ मद्रणबहादूर नेपालेश्वर...राजाले वराहमंदिर जीर्णोद्धार... वराहमंदिर बनाया" भन्ने उल्लेख परेको हुँदा स्वयं रणबहादुर शाहले नै वराह-मन्दिर बनाउन लाएका हुन् कि भन्ने भान पर्छ। तर अभिलेखमा तल गएर महन्त शिव भारतीले वराहमन्दिर बनाउन लाएका हुन् भन्ने कुरा खुलाएर लेखिएको छ। यसबाट वराह-मन्दिर शिव भारतीले बनाउन लाएका हुन् तापनि यसमा राजा रणबहादुर शाहबाट प्रोत्साहन मिलेको थियो; शायद आर्थिक सहायता राजाबाट प्राप्त भएको थियो कि भन्ने झलक पाइन्छ।

यस अभिलेखमा एक जना उपाध्याय ब्राह्मण र दर्प थापा भन्ने व्यक्तिले यहाँ आई उहिले वराह-मन्दिर आदि बनाउन लाएको चर्चा पनि परेको छ। तर खण्डित हुँदा कुरा खुल्दैन। माथि उल्लिखित गुप्तकालको दिनाजपुरको ताम्रपत्रमा पनि कोकामुखस्वामी र वराह-स्वामीको लागि दुइ मन्दिर बनाउन लाएको वर्णन परेको छ।[५] यसबाट प्राचीन मन्दिर कालवशले जीर्ण भएपछि बीचबीचमा जीर्णोद्धार हुँदै गए भन्ने संकेत पाइन्छ।

यस अभिलेखको अन्त्य भागमा 'नेपालके कारीगढ' भन्ने उल्लेख परेको छ। यसबाट वि.सं. १८४३मा वराह-मन्दिर बनाउन लाउँदा नेपालको राजधानी काठमाडौँ-उपत्यकाबाट कालिगढहरू लगी उक्त मन्दिर बनाउन लाएको रहेछ भन्ने थाहा पाइन्छ। त्यसताका 'नेपाल' भनेर प्रायः राजधानी काठमाडौँ-उपत्यकालाई लक्ष्य गर्ने चलन थियो। नेपालको एकीकरण-पछि नेपालको प्राचीन वास्तुशैली नेपाल-अधिराज्यभरि फैलिन लागेको थियो भन्ने कुराको चर्चा माथि गरिसकेको छ। यस अभिलेखबाट पनि उक्त कुराको केही पुष्टि हुन्छ।

जे होस्; पूर्वमा पाइएका शाहकालका अभिलेखमा यस अभिलेखको महत्त्व बेग्लै रूपमा रहेको छ भन्ने स्पष्ट छ।



५. 'हिस्टोरिकल ऍन्ड् लिटररी इन्स्क्रिप्शन्ज्' पृ. १०७–१०८

[ ४५ संख्या ]

# गोरखाको रणबहादुर शाहको पालाको अभिलेख

गोरखा पनेलीथोकका शिवप्रसाद श्रेष्ठको संग्रहमा रहेको एक ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८४४ विइएको छ ।

## मूलपाठ

१. श्री ३ भिमस्येन साहाय । श्रीशाके १७०९ संम्वत् १८४४
२ पक्ष वैशाकमाख स्वल्क पक्षति–
२. तिथौ २ तदा चेषयोगे १४ वारे १ तद्दिने, अद्र दुतियप्रहरार्धे श्रीसोवरा–
३. हकल्पे जम्बुपिग्ये भरतषंडे अदेवतकदेसे कलियुगे प्रथमचरणे त्रिशू–
४. लगंगायां पश्चिमभागे कालिगंगायां पूर्वभागे व्रह्मपुत्रयां दषिनभागे हरि–
५. क्षत्रयो उत्तरभागे श्रीगोरषनगरे प्रनालिथोकग्रामे श्री ३ भिमस्येनस्था–
६. न संपुर्णः । स्वस्ति श्रीगिरिराजचक्रचूरामनि नरनारायणल्यादि श्रीमन्माहा–
७. राजधिराज श्री ५ मत् रनबाहादुरसाहदेवेषु सदा समरविजयेषु श्रीसाक्ष–
८. भिक्षु पुनजोतिः जगतः वंसिधरको छोरा नन्दु भवानि विष्णु देवि महन्त इ चार
९. भाइका यककजिन सभ कजिन ४ भइ छिम्याकि धनंज माधौ जैसंग्र संषनारा

१०. धनसंधर धनकिष्ण संघसिं धर्नसिं संधर, रामभद्र शम्बु बह्मा,
नैना रामचं–
११. द्र कर्मसि विष्नारां हरि रामचंद्र निस्त्या जिवनारां महिंद्र धनेश्वर महेश्वर
१२. विष्णु किधासिं जैनरसिं नन्दु महेश्वर यति. छिम्याकि
कजिन ४ भइ.........का
१३. देवधर्मकृति वनाया गुठियाने बाधियो दक्षिना भेटि भाग १ तंहना भाग १
१४. प्रोहित भाग १ पूजाहारको भाग १ देव. लानेया घर ११ को
वाडिलिनु. वैशा–
१५. क शुक्ल १२ कार्तिक शुक्ल १२ माहापूजा गर्नु. यो गुठि जो नाघि जाला.
पंचमाहा
१६. (पा)तक अस्ति उदामहा नास्ति नास्ति नास्ति शुभ् ॥४॥

व्याख्या–

राम शाहको पालामं केही नेवारहरू व्यापारको लागि गोरखा गई बसेथे भन्ने चर्चा माथि गरिसकेको छ । व्यापारको लागि बसाइँ सर्ने यो क्रम पछि पनि जारी रह्यो । नेपालको एकीकरणले यस क्रमलाई झन् प्रोत्साहन दियो भन्ने चर्चा पनि माथि गरिसकेको छ । "भीमसेन" व्यापारमा सिद्धि ल्याउने, सफलता ल्याउने इष्टदेवताको रूपमा नेवार वर्गमा पूजिन्छन् । यस कारण नेवार व्यापारीहरू जहाँ गई बस्तछन्; त्यहाँ उनीहरू भीमसेनको सानो, ठूलो मन्दिर, मूर्तिको प्रतिष्ठा अवश्य गर्दछन् । यस कुराको पुष्टि गोरखा पनालीथोकमा भीमसेनको पूजाको लागि गुठी राखेको यस अभिलेखले पनि केही गर्छ ।

यस अभिलेखको शुरूमा परेको गोरखाको परिचयरूपको संकल्प वाक्य विचारणीय छ । तात्कालिक धार्मिक भावनाको झलिकता झलक त्यताबाट पाइन्छ ।



[ ४६ संख्या ]

# गोरखाको अभिलेख

गोरखा-दरबारमा रहेका चाँदीका आसागुर्जामा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८४४ छ ।

'गोरखाको ऐतिहासिक सामग्री'को २१ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा यो अभिलेख प्रकाशित भएको छ ।

## मूलपाठ

१. स्वस्ति श्री ५ गोर्षा दसैंको देवता पृति श्रीकालिदास खड्–
२. काकस्य पुत्र श्रीराघवसिंहले यो आसा चह्रायाको हो
३. सम्वत् १८४४ साल आश्विन शुदि २ रोज २ शुभम्

व्याख्या–

श्री ५ पृथ्वीनारायण शाहका भरपर्दा भारदारमध्ये एक कालु खड्का पनि थिए । उनी मगर खड्का हुन् । उनले कपर्दारी दर्जा पाएका थिए । कालु कपर्दारका सन्तानलाई कपर्दारी नछुटाउनू भनी पृथ्वीनारायण शाहले आफ्नो उपदेशमा बोलेका छन् ।[१] कालु कपर्दारले पश्चिमतिरको काजमा केही जस कमाएका थिए ।[२] वि.सं. १८३०तिर उनी भक्तपुरका अधिकारसम्पन्न

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३२५

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १०८६–१०८८

अमालीदार (बडाहाकिम) पनि नियुक्त गरिएका थिए ।[३]

कालु खड्काको पूरा नाम कालिदास खड्का हो । राघवसिंह तिनै कालु खड्काका छोरा हुन् ।[४] पृथ्वीनारायण शाहको निर्देशनअनुसार बाबुपछि राघवसिंह खड्काले पनि कपर्दारी मान पाएको कुरा यस अभिलेखबाट बुझिन्छ । राजदरबारको भित्री बन्दोबस्त गर्ने, मालसामानको रेखदेखको जिम्मेवारी कपर्दारमा रहेको हुन्थ्यो । यसै हुँदा गोरखा-दरबारमा रहेका भाँडावर्तनमा कपर्दारमार्फत ती सामान बनेको कुरा अङ्कित गरिएको पाइन्छ । पछि भोटु पाँडे कपर्दार बनाइएपछि बनाउन लगाइएका अभिलेखसहितका त्यस्ता भाँडाकुँडाहरूलाई उदाहरणार्थ यहाँ देखाउन सकिन्छ ।[५] तर कालु खड्काका छोरा राघवसिंह खड्काले आफ्नै तर्फबाट गोरखाका दसैँ-देवतालाई प्रसन्न पार्न आसागुर्जा चढाई यो अभिलेख कुँदाएका हुन् । गोरखाको दसैँघरमा यी खड्काले पनि प्रवेश पाएको संकेत यताबाट पाइन्छ ।

कालु खड्का र उनका सन्तानले राम्र लाएका अरू कीर्ति पनि होलान् । तर ती प्राप्त हुन सकेका छैनन् । ती खड्का परिवारलाई सम्झाउने कृतिमा यो आसागुर्जा पनि एउटा सानो नमूना हुनाले यस अभिलेखलाई यस संकलनमा समावेश गरिएको हो ।



---

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११६२

४. यो कुरा यो अभिलेखबाट पनि थाहा पाइन्छ । पशुपति-भण्डारमा रहेको वि.सं. १८५५ को तीनपुस्ते खुलाई लेखिएको ताम्रपत्रबाट पनि थाहा पाइन्छ ।

५. यी अभिलेख तल यथास्थानमा दिइएका छन् ।

[ ४७ संख्या ]

# नुवाकोटको रणबहादुर शाहको अभिलेख

नुवाकोट, भैरवमन्दिरमा धेरै ताम्रपत्रहरू टाँसिएका छन् । तीमध्ये एउटामा यो अभिलेख कुँदिएको छ । यहाँ विक्रमसंवत् १८४५ दिइएको छ ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा' ३५–३६ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो प्रकाशित भएको छ ।

## मूलपाठ

१. श्रीभैरवो विजयतेतराम् ।। श्रीशाके नागपूर्णक्षितिधरधरणीसम्मिते माघमासे शुक्ले पक्षेष्टतिथ्यां नृपतिरणबहादूरदेवो भवान्याः

२. ।। प्रीत्यै तातानुजेन प्रसृतगुणबहादूरदेवेन युक्तो भैरव्यैर्ग्राममृक्थैर्व्यतरदुपचितं सुष्ठु लच्याङ्समाख्यम् ।।१।। लच्याङ्ग्रामस्य सी–

३. माः पूर्वतो राजगोस्थानं धिम्थलीसंज्ञं घर्तिकाट्याडांडोबाग्यासुवाराप्रदेशस्य पश्चिमभागे हरीतकीवृक्षो दारुशिल्पिक्षेत्राति–

४. रिक्तदोर्षु सरित् दक्षिणतो नर्ज्याग्रामसीमा मह्न्यासानुप्रदेशो भाल्याडांडो भञ्ज्याङ् तीर्यग्मार्गो निधिकरजलप्रदेशश्च पश्चिम–

५. तः कपर्चोकडांडासानुः सूक्ष्मपर्वतः सूक्ष्मस्रवंती बोह्न्यासापकोटोपनामकविप्रबंधकक्षेत्रसीमा फलांषुसीमापर्य्यन्तम् उ–

६. त्तरतः शरांथसियार्साप्रदेशयोः प्रान्तो राम्च्याडांडो नेर्गु सानुविप्यंचूलिप्रदेशाः एतन्मध्यवर्तिलच्याङसंज्ञकग्रामः श्रीभैरव्यै

७. निवेदितस्तत्क्षेत्रोत्पन्नप्रतिगृहक रोपायनत्रयदण्डमृतापुत्रिद्वयग्राह्यपंचमहद्-
दण्डावसरप्राप्तं यावद् द्रव्यमुत्पद्यते तस्य भा–

८. गत्रयं विभज्य भागद्वयेनाश्विनशुक्लपौर्णमासीमारभ्य कार्त्तिकशुक्लपौर्ण-
मासीपर्य्यन्तमाणकचतुष्टयतैलाणकद्वयमौल्यव–

९. स्त्रेण श्रीभैरव्यायतने प्रतिदिनमष्टोत्तरशतदीपमाला प्रोज्ज्वालनीया माष-
पंचकपरिमितसिंदुरमाषपंचकधूपमाणकपरिमि–

१०. ताक्षतैकताम्रमुद्रोपक्रीतनैवेद्यार्धताम्रमुद्रोपक्रीतपुष्पैः पूजा च कार्य्या मासान्ते
पूजावसाने छागवलिदानं च कार्य्यम्. अवशिष्टे–

११. न द्रव्येण श्रीभैरव्यै निर्माणाभरणानि निवेदनीयानि, अवशिष्ट एकोंशः
श्रीभैरव्यावेशिततद्ग्रामदौवारिकसंरक्षकैर्यथाभागमुपभो–

१२. क्तव्य एतद्ग्रामांशयोर्यः कश्चन लोभेनोक्तमन्यथा कुर्यात्स श्रीभैरवीकुदृष्ट्या
सान्वयो विनश्येदित्यस्य ग्रामसीम्नि पत्रे च दृष्टसाक्षि–

१३. णो रामदासपंथ, वा(भा) नु अर्ज्याल, भवानीशंकर षनाल जगजीतपांडे
शिवदत्तसाह नन्दराम गुणी कालु उपाध्या कोइराला जयकृष्ण

१४. बोहरा शिवा राना जयकृष्ण थापा. इति संवत् १८४५ साल आषाढ शुक्ल
पूर्णमाशि शुक्रवारे मुकाम शहर कान्तिपुरनगर शुभम् ॥

## अनुवाद

श्रीभैरवी खूब विजयी भई रहनुभएको छ । शकसंवत् १७०८ (वि.सं. १८४३)माघ शुक्ल अष्टमीको दिन, गुणी काका बहादुर शाहसहित भई राजा रणबहादुर शाहले भैरवी भवानीको प्रीतिको लागि लच्याङ भन्ने आमदानी हुने गाउँ चढाउनुभयो ।

लच्याङ गाउँको सीमा– पूर्वतिर धिमथली सरकारी गोठ भन्ने धर्त्तिकाटया डाँडो, बाङ्ग्या सुवारा भन्ने ठाउँको पश्चिम भागमा हर्रोको रूख, काष्ठ कालिगडको खेतलाई छोडेर बोरखु खोलाको दक्षिणपट्टि नर्जा गाउँको सीमा महुन्या डाँडोको इलाका भाल्या डाँडोभञ्ज्याङ-देखिको तेर्सो बाटो, निधिकरको पानी आउने ठाउँ. पश्चिमतिर कपचोक डाँडो सानो पहाड, सानो खोला, बोहरा सापकोटानामक ब्राह्मणको बन्धकीखेतको सीमा, फलांखुसीमासम्म, उत्तरतिर शरांयसि र यार्साप्रदेशको छेउ रामच्या डाँडो नेर्गु डाँडो र विप्यंचूली प्रवेश ।

यति चार किल्लाभित्रको लच्याङ भन्ने गाउँ श्रीभैरवीलाई चढाइयो । खेतको आयस्ता, घरपिच्छे उठाउने कोसेलीरूपका तीन कर, दण्ड कुण्ड, पञ्चखत आदिबाट उठ्ने यावत् रकमहरूलाई तीन भाग लाएर तिनमध्ये दुइ भागले आश्विन शुक्ल पूर्णिमादेखि शुरु गरेर कार्तिक शुक्ल पूर्णिमासम्म चार माना तेल र दुइ आनाको कपडाले भैरवीको मन्दिरमा प्रतिदिन १०८ वत्ती बाल्नू । पाँच मासा सिन्दूर, पाँच मासा धूप, एक माना अक्षता, एक पैसाको नैवेद्य, दुइ दामको फूल राखी पूजा गर्नू । मसान्तमा पूजा सकिएपछि १ बोको बलि दिनू । बाँकी रहेको पैसाले गहना बनाएर श्रीभैरवीलाई चढाउनू । बाँकी रहेको एक भाग श्रीभैरवीको वासस्थान भएको गाउँ ( नुवाकोट )का द्वारे गुठियारहरूले बाँडेर खानू । यो गाउँ र यसको आयस्तामा जो कोहीले लोभ गरी एक थोकको अर्को थोक गर्ला, श्रीभैरवीको कुदृष्टि परी कुलसहित त्यो व्यक्ति नष्ट होला ।

यो गाउँको चार किल्ला छुट्याउँदा र ताम्रपत्र गर्दाका दृष्टसाक्षीहरू यी हुन्- रामदास पन्थ, भानु अर्ज्याल, भवानीशङ्कर खनाल, जगजीत पाँडे, शिवदत्त शाह, नन्दराम गुर्गी, कालु उपाध्या कोइराला, जयकृष्ण बोहरा, शिवा राना, जयकृष्ण थापा ।

वि.सं. १८४५ आषाढ शुक्ल पूर्णिमा शुक्रवार । मुकाम कान्तिपुर शहर । शुभ होस् ।

व्याख्या–

श्री ५ पृथ्वीनारायण शाहपछि नेपालको एकीकरण अभियानलाई अगाडि बढाउने अर्का राजनीतिज्ञ राजकुमार बहादुर शाह हुन् । बहादुर शाहको जन्म वि.सं. १८१४ मा नुवाकोटमा भएको हो ।[१] बहादुर शाहको, बाल्यकाल नुवाकोटमा बितेको थियो । साथै उनको कार्यकालको केही अंश पनि नुवाकोटमा बितेथ्यो ।[२] यसो हुनाले नुवाकोटमा राजकुमार बहादुर शाहलाई संझाउने उनका केही कृतिहरू अहिलेसम्म कायमै छन् । तिनमध्ये राजा रणबहादुर शाहका साथ उनले नुवाकोट भैरवीलाई एक ठूलो लच्याङ ग्राम नै समर्पित गरी राख्न लाएको यो ताम्रपत्राभिलेख पनि एक हो भन्न सकिन्छ ।

वि.सं. १८४२मा राजमाता राजेन्द्रलक्ष्मीको मृत्यु भएपछि राजप्रतिनिधिका हैसियतले राज्याधिकार बहादुर शाहको हातमा आयो । हुन त यसभन्दा पहिले पनि राजकुमार बहादुर

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७८

२. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७८, सामग्रीखण्ड पृ. ७८–८१

शाहले शासन चलाउने अवसर पाएथे ।[३] तर त्यस बेला उनले निर्बन्ध भई काम गर्ने अवसर भने पाएका थिएनन् । वि.सं. १८४२ पछि भने उनलाई काम गर्ने राम्रो मौका मिल्यो । अनि पश्चिम विजयको जुन काम पृथ्वीनारायण शाहबाट पूरा हुन सकेको थिएन; सो काम पूरा गर्न योजनाबद्ध ढङ्गले बहादुर शाह अघि बढे। तदनुसार वि.सं. १८४३ ज्येष्ठदेखि मंसिर-सम्ममा गोरखाली सैन्य कालिगण्डकी तरी गुल्मी अर्घा खाँची धुरकोट इस्मा पर्वत प्युठाना आदि प्रदेश विजय गरी भेरी साँध लाउन सफल भए ।[४] त्यसभन्दा परका जुम्ला, डोटी आदि राज्य बलिया हुनाले अघि बढ्न भित्री तयारी गर्नु आवश्यक थियो । यसो हुँदा पश्चिम-विजय अभियान केही काल थाम्नुपरेको थियो ।

नुवाकोटकी भैरवीलाई एक सिङ्गै ग्राम चढाउने यो पुण्य कार्य पश्चिम-विजयको अभियानकै सिलसिलामा भएको देखिन्छ। पश्चिम विजयको काज फत्य होस् भनी बहादुर शाहले नुवाकोटका धामीमार्फत पुरश्चरण आदि पनि गराएका थिए । यो कुरा तात्कालिक पत्रबाट थाहा पाइन्छ ।[५] लच्याङ ग्राम भैरवीलाई चढाउने काम पनि भेरी साँध लागेको खुशीयालीमा र यसै गरी अगाडिका जुम्ला, डोटी आदि प्रदेश जित्नामा सफलता मिलोस् भन्ने कामनाले गरिएको बुझिन्छ ।

भैरवीलाई लच्याङ ग्राम चढाउँदा त्यस ग्रामबाट सरकारलाई हुने सबै किसिमका आमदानीसमेत उठाउन पाउने गरी चढाइएको थियो। तदनुसार खेतको आयस्ता, घरपिच्छे उठाइने कोसेलीरूपका तीन कर, दण्डकुण्ड र पञ्चखत आदिबाट उठ्ने रकम उठाउन पाइने कुराको उल्लेख यस ताम्रपत्रमा गरिएको छ । ती उठेका रकमलाई तीन भाग लगाई दुइ भागले भैरवीको मन्दिरमा बत्ती बाल्ने नित्य नैमित्तिक पूजा गर्ने र बाँकीले भैरवीलाई गहना बनाउने व्यवस्थाको उल्लेख यस अभिलेखमा परेको छ। तीन भागमध्ये बाँकी एक भाग नुवाकोटका द्वारे र गुठियारले बाँडेर खाने व्यवस्था गरिएको कुरा यस अभिलेखमा परेको छ ।

यसरी सिंगै गाउँ नै देवतालाई चढाउने चलन हाम्रो यहाँ उहिलेदेखि थियो । उदाहरणार्थ पशुपतिनाथलाई यसै गरी चढाइएको बुल्हुँ गाउँलाई देखाउन सकिन्छ ।[६] बुल्हुँ गाउँ

३. 'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. ४०, ४६–४७
'नेपालको संक्षिप्त इतिहास' पृ. ६४

४. रामजी तेवारी, 'वि.सं. १८४३मा भएका मुख्य घटना' पूर्णिमा २ पूर्णाङ्क, पृ. ६१-६७

५. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७६, ८१ (सामग्री खण्ड)

६. धनवज्र (सं.) 'त्रिरत्नसौन्दर्यगाथा' नेपाल सांस्कृतिक परिषद्, पृ. २६५

पशुपतिनाथलाई चढाई राखिएको ताम्रपत्रबाट त्यस ग्रामका सारा जग्गा, सारा आयस्तामा पशुपतिनाथकै अधिकार हुन्थ्यो; दण्डकुण्ड आदि उठाउने अधिकार पनि पशुपतिनाथकै अधीन हुन्थ्यो भन्ने थाहा पाइन्छ।

नुवाकोटकी भैरवीलाई चढाइएको लच्याङ ग्राममा दण्ड आदि गरी उठेको रकमबाट गहना बनाई भैरवीलाई चढाएको आदि उल्लेख तात्कालिक कागतपत्रहरूमा पनि आएको छ। उदाहरणार्थ वि.सं. १८८२ को पत्रलाई देखाउन सकिन्छ। त्यसमा "अदालतका सिपाहिलाई कुट्याबावत् डंड गऱ्याका रुपैया नुवाकोट श्रीभैरवीका गहना बनाउनाकन धामिमार्फत् भरि-देउ" भन्ने आदेश दिइएको छ।[७] अरू पत्रमा पनि यस विषयको चर्चा भएको पाइन्छ।

यस ताम्रपत्रमा भैरवीलाई चढाइएको लच्याङ ग्रामको चार किल्ला खुलाई दिइएको छ। त्यसबाट लच्याङ ग्राम निकै ठूलो थियो भन्ने थाहा पाइन्छ। साथै चार किल्ला खुलाउँदा उल्लिखित कुराबाट यस भेकको आर्थिक कुरा पनि केही खुल्दछ। यस भेकमा सरकारी गोठ थियो; खानी थियो इत्यादि आर्थिक कुराको झलक यसबाट पाइन्छ।



७. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ८८ (सामग्री खण्ड)

[ ४८ संख्या ]

# गुह्येश्वरीको अमरसिंह थापाको अभिलेख

गुह्येश्वरीमन्दिरको मूलढोकाको सामुन्ने दायाँपट्टि एउटा सानो धातुको मन्दिर छ। त्यही मन्दिरको पूर्वाभिमुख ढोकाको बायाँ र दायाँ भागमा गरी यो अभिलेख कुँदिएको छ। यहाँ शकसंवत् १७११ (वि.सं. १८४६) दिइएको छ।

'संस्कृत-सन्देश' वर्ष १, अङ्क ११ को ३४–३५ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

(बायाँपट्टि)

१. श्रीमन्नेपालदेशे शशिकुलतिलको नि–
२. जितारातिवृन्दो नानाभूमीशचूडाम–
३. णिकरनिकरैः संस्फुरत्पीठभूमिः।
४. विद्वद्वृन्दस्तुतश्रीलसितरणबहादूरसाहो
५. नृपेन्द्रो यत्रास्ते प्राप्तवांस्तत्प्रतिनिधिपदवीं
६. श्रीबहादूरसाहः ॥१॥ तत्रेलाचन्द्रशैलोदधिजनि–
७. तशके रौद्रवर्षे तपस्ये मासे पक्षेवदाते भृगुसु–
८. तदिवसे कुंभसंस्थे दिनेशे। पञ्चम्यां शुक्लयो–
९. गेजभवनगविधावश्विभे सिंहगेब्जे, मध्याह्ने
१०. द्वन्द्वलग्ने नृपबलपतिना क्षात्रधर्मे दृढेन ॥२॥

११. आत्रेये गोत्रवर्ये समुदितवपुषा ख्यातशौ–
१२. र्यस्य भूमौ रंजसिंहस्य नप्त्राधिकलि म–
१३. तिमता भीमसिंहात्मजेन । भार्यापुत्रा–
१४. न्वितश्रीविलसदमरसिंहेन थापोप–
१५. नाम्ना प्रीत्यर्थं गुह्यकाल्याः कनक–
१६. मयगृहं ताम्रगर्भं न्यवेदि ॥३॥ शुभमस्तु

(दायाँपट्टि–)

१. श्रीकामाक्षादेवी करुणा करै
२. महिमा अपार जगत्रकि ज–
३. ननी जलदिलव धरौ दास अ
४. मर धर्मा कछु जानत ना–
५. हि, उमाके चरण परै ॥ शुभं

## अनुवाद

श्रीनेपालदेशमा चन्द्रवंशका टीका जस्ता, थुप्रा शत्रुहरूलाई जितेका, अनेक राजाहरूका शिरपेचका मणिले पाउदाजी झलमल्ल भएका ( राजाहरूले ढोगिएका ), विद्वान्हरूले तारीफ गरिएका महाराजाधिराज श्रीरणबहादुर शाह हुनुहुन्छ। जहाँ उहाँको प्रतिनिधिपदवी पाएका (राजप्रतिनिधि) श्रीबहादुर शाह हुनुहुन्छ।

शकसंवत् १७११ ( वि.सं. १८४६ ), रौद्रसंवत्सर, फाल्गुन शुक्ल पञ्चमी शुक्रवार अश्विनीनक्षत्र शुक्लयोग, कुम्भराशिमा सूर्य गएमा, सिंहराशिमा चन्द्रमा गएमा, मध्याह्न, द्वन्द्व-लग्नमा, राजाका सेनापति (सरदार), क्षत्रिय धर्ममा दृढ भएका, असल आत्रेय गोत्रमा जन्मेका, शूर भनी प्रख्यात रंजसिंहका नाति, भीमसिंहका छोरा, कलियुगमा पनि बुद्धिमान् भएका, जहान छोराहरूसहित भएका श्रीअमरसिंह थापाले गुह्येश्वरीलाई प्रसन्न पार्न भित्र तामा भएको सुनको मन्दिर चढाए। शुभ होस्।

व्याख्या—

नेपालको एकीकरण-अभियानमा उल्लेखनीय योगदान दिने भारादारहरूमा अमरसिंह थापाको पनि प्रमुख स्थान रहेको छ । यी अमरसिंह थापा श्री ५ पृथ्वीनारायण शाहकै रेख-देखमा हुर्केका थिए । यी अमरसिंह थापाका पिता भीमसिंह थापा वि.सं. १८१६ को पलाञ्चोकमा लडाईंमा परेका थिए ।[१] त्यस वेला अमरसिंह थापा आठ वर्षका मात्र थिए ।[२] आफ्ना कोही भारादार लडाईंमा परे भने तिनका छोरालाई सरकारी आर्थिक सहायता दिई पालन-पोषणको लागि रेखदेख गर्ने नीति पृथ्वीनारायण शाहले लिएका थिए ।[३] यसलाई 'मरवटप्रथा' भनिन्थ्यो । यसै मरवटनीति अनुसार अमरसिंह थापाले पृथ्वीनारायण शाहको रेखदेखमा हुर्कने अवसर पाएका थिए । यसै हुँदा खुँडा हान्न सक्ने हुने बित्तिकै अमरसिंह थापाले लडाईंको मैदानमा उत्रन शुरू गरेका थिए । वि.सं. १८२५मा अमरसिंह थापा १७ वर्षका भएका थिए । तर आफ्नो योग्यताले गर्दा उनले त्यस साल 'सरदार' पदवी पाएका थिए ।[४] भरखरको युवक-उमेरमै सरदार बनेका अमरसिंह थापाले वि.सं. १८२६ को भक्तपुरको युद्धमा, वि.सं. १८३०–३१को पूर्वविजयको लागिको युद्धमा सक्रिय रूपमा भाग लिएथे ।[५] पूर्वविजयकै सिलसिलामा वि.सं. १८३९ मा अमरसिंह थापाले जनकपुरमा भव्य राममन्दिर बनाउन लाएथे ।[६]

---

१. तोत्रराज पाण्डे र नयराज पन्त 'नेपालको संक्षिप्त इतिहास' पृ. १६३

२. वि.सं. १८०८ मा अमरसिंह थापाको जन्म भएको हो ।

३. दिनेशराज पन्त 'श्री ५ पृथ्वीनारायण शाहको मरवट-नीति' पूर्णिमा २२ पूर्णाङ्क, संशोधनमण्डल, पृ. ११७–११९

"मऱ्यो भन्या उस्का छोरा पुडा हान्न्या नहुन्ज्याल् मरवट् दिनु. षुडा हान्न्या भयापछि जागिरमा उकालिदिनु."भनी पृथ्वीनारायण शाहले आफ्नो उपदेशमा बोलेका छन् । वि.सं. १८२९ को पृथ्वीनारायण शाहको एक रूक्कामा "बाबु कटकमा पऱ्या. सर्कारबाट केही बक्स्या जावोस् त जब मनाउन्या हुँ भनि बिन्ती पठाइछस्. बडीया भनिस्, तैंले दुष मान्या छैन. म रखा गरुला. निमषको सोझो चिताई काज गऱ्यास्. त समर्थ्या नहुन्ज्याल् तपसिलबमोजिमको घायल बक्स्यौं" भनी लेखिएको छ । यसबाट पृथ्वीनारायण शाहको 'मरवट-नीति' बारे बुझ्न मद्दत पाइन्छ ।

४. 'नेपालको संक्षिप्त इतिहास' पृ. १६३

५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३९४
'नेपालको संक्षिप्त इतिहास' पृ. १६३

६. उक्त राममन्दिरसम्बन्धी अभिलेख माथि गइसकेको छ ।

वि.सं. १८४३ मा राजकुमार बहादुर शाहले पश्चिम विजय गर्ने अभियान शुरू गरेपछि अमरसिंह थापाले पनि त्यसमा भाग लिएथे।[७] यता वि.सं. १८४५ मा नेपाली सेनाले भोटमा आक्रमण गऱ्यो। त्यसमा केरुङतिरबाट आक्रमण गर्ने नेपाली सेनामा सरदार अमरसिंह थापा पनि थिए।[८] यस आक्रमणमा नेपाली सैन्य विजय हासिल गर्न सफल भएको थियो। सो सफलतासाथ फर्केपछि सरदार अमरसिंह थापाले गुह्येश्वरीलाई प्रसन्न पार्न सुनको मोलम्मा लागेको एक सानो भव्य धातुको मन्दिर बनाउन लाई यो अभिलेख कुँदन लगाएका देखिन्छ। शायद भोट आक्रमणको लागि प्रस्थान गर्दा वा युद्धक्षेत्रमै छँदा सफलता प्राप्त भए धर्मकृति राख्ने भाकल अमरसिंहले गरेको हुनुपर्छ। लडाइँको मैदानमा जाँदा योद्धाहरू प्रायः यस्तो भाकल गर्ने गर्दथे। यसका अनेक उदाहरण पाइन्छन्।[९]

जे होस्; धर्मकृति राख्न लाउने तात्कालिक भारादारहरूमा यी अमरसिंह थापा पनि उल्लेखनीय छन्। यिनका अनेक धर्मकृति पाइन्छन्। अमरसिंह थापाले गुह्येश्वरीलाई प्रसन्न पार्न मन्दिर बनाई राख्न लाएको यस सानो अभिलेखको उठानमा गद्दीनशीन राजा रणबहादुर शाहको प्रशंसा गराएका छन्। अनि "यत्रास्ते प्राप्तवांस्तत्प्रतिनिधिपदवीं श्रीबहादूरसाहः" भनी तात्कालिक राजप्रतिनिधि राजकुमार बहादुर शाहको उल्लेख गराएका छन्। यसपछि आफ्ना बाजे रंजसिंह, बाबु भीमसिंहको चर्चा यसमा गराएका छन्। यसरी अभिलेख सानो भए पनि त्यसवेलाको इतिहासको एक झलक यसबाट पाइन्छ। अन्त्यमा बस्नेतहरूको अभिलेखमा जस्तै यस सानो अभिलेखमा पनि एक दोहा कुँदन लाइएको छ।



---

७. सूर्यविक्रम ज्ञवाली 'अमरसिंह थापा' (हिन्दी संस्करण) हिमाचल हिन्दीभवन, दार्जिलिङ्ग ई.सं. १९५१, पृ. १४–१६

८. 'नेपालको संक्षिप्त इतिहास' पृ. १२३

९. यस कुराका अनेक उदाहरण पाइन्छन्। उदाहरणार्थ ललितपुरका चौतारा भगीरथ भैयाले फर्पिङ्गका शिखरनारायणलाई गुठी राखेको अभिलेखलाई देखाउन सकिन्छ। मकवानपुर हमला गर्न जाँदा युद्धक्षेत्रमै भगीरथ भैयाले भाकल गरेका थिए; अनि युद्धमा सफलता प्राप्त भएपछि उनले सो गुठी चढाएका थिए। विचारार्थ उक्त अभिलेखको एक अंश यहाँ उद्धृत गरिन्छ–

"थ्व गुथि मकवानपुरि घेरय याङाव चोङाव वेलस थानास, माघपूर्णिमा कुन्हु संकल्प याङा, थ्वनलि फाल्गुण शुक्लया चतुर्थी कुन्हु मकवानपुर चाल दिन जुरो"

(मकवानपुरमा घेरा हाली ठाना बसेको वेलामा माघपूर्णिमाको दिन यो गुठी संकल्प गरिएको हो। यसपछि फाल्गुन शुक्ल चतुर्थीको दिन मकवानपुर खुल्यो।)

डिल्लीरमण रेग्मी, 'मिडिइभल नेपाल' भाग ४, पृ. १९५

[ ४९ संख्या ]

# मुस्ताङ्गी राजालाई रणबहादुर शाहले लेखिदिइएको ताम्रपत्र

'पूर्णिमा' त्रैमासिक पत्रिका, ६ पूर्णाङ्कको ५४–५५ पृष्ठमा दिनेशराज पन्तद्वारा यो ताम्रपत्र प्रकाशित भएको छ। मूल ताम्रपत्र मुस्ताङ्गी राजावलकसँग रहेको छ। यसमा वि.सं. १८४७ रहेको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि-
विराजमान मानोन्नत श्रीमन्महाराजाधि-

२. राजश्रीश्रीश्रीमहाराजे रणबहादूरसंम्सेर्जंङदेवानाम् सदा समरविजयिनाम्।।

३. आगे मोस्तागी राजा वाँग्याल् दोर्जेके तिम्रा बाबु बराजुदेषि आजसम्म
षायाको देश. जुम्लाले मिचि षाया-

४. को देश वादरफट्का पूर्वोत्तर औ भावङ षोला तराप् षोला लाँभु षोला
छार्का गाउँ थपि एति देसको र-

५. जाइ थामि बक्स्युं औ थाक् ठिनी बाह्र गाउँ मनाङ नारनिस्यान् और
अगामा हिजो परापूर्वदेषि जस्ता रि-

६. तसंग दैदस्तुर षाइ आयाको हो. सो पनि थामिबक्स्युं औ जुम्लिले तिम्रा
देशमा आइ बस्ता जबर्जस्तिसंग व्यापार

७. गर्न आवन्यालाई छ्याक्पोल् उघाइ थान्थ्या. त्यो पनि तिमिलाई बक्स्याको छ. तेस्मा हाम्रा भरभारादार फौज केहि का–

८. जले जाँदा टंटा नलावनु श्रौ पश्चिम उत्तर हामिले काज गर्दाको घरि जियधनले श्रापनु दलबल खजाना फौज हाम्रा

९. फौजसंग सामेल गरि हान्या ठाउँ हान्नु. कुह्र्या ठाउँ कुह्रनु. श्रौ हिजो लहासा जुम्लालाइ सिर्तो मामू लि विदा रह्याछौ. जो लहासा–

१०. लाइ एकहत्तर रुपिया तिथ्यौं सो लहासालाई तिर. जुम्(ला)लाई जो तिथ्यौं. सो हाम्रा हजूर सालबसाल रुपया नौ स–

११. य उनन्तिस श्रंकेपि ९२९ घोडा पाच ५ मकरसंक्रांतिका दिन कांतिपूर दाखिल गर्नु गरि ताँवापत्र बक्स्युं. हाम्रा नि–

१२. मकको सोझो चिताइ हुकुम् बजाव. साँधसिवानाभित्रको श्रापनु जिमि पुस्तवरपुस्तसम्म रजाजि जानी भोग्य गर.

१३. इति संवत् १८४७ साल ज्येष्ट शुदि ५ रोज ४ मुकाम कांतिपुर राजधानि शुभम्भूयात्.

व्याख्या–

पश्चिमतिरको एकीकरण अभियान सफल पार्न बहादुर शाहले लिएको नीतिमध्ये आश्रित राज्यप्रति उनको नीति पनि उल्लेखनीय रहेको छ ।[१] पृथ्वीनारायण शाहले नेपालको एकीकरण अभियान चलाउँदा अर्थात् उनी पूर्वतिर विजय गरी बढ्दा आश्रित राज्य नराख्ने नीति लिएका थिए । गोरखाभन्दा पूर्वतिरका मल्लहरूका तीन राज्य, मकवानपुर, चौदण्डी, विजयपुर गरी सेनहरूका तीन राज्य जिती उनले सोझै आफ्नो राज्यमा मिलाएका थिए ।[२] पश्चिमका चौबीसी, बाईसी राज्यहरूलाई पनि यसै गरी जिती सोझै आफ्नो राज्यमा मिलाई नेपालको एकीकरण गर्ने पृथ्वीनारायण शाहले अठोट गरेका थिए । यसरी सोझै विलीन गरी

---

१. दिनेशराज पन्त 'आश्रित राज्यउपर बहादुर शाहले लिएको नीति' पूर्णिमा ६ पूर्णाङ्क, संशोधन-मण्डल, पृ. ५१–५५

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१५

नव नेपाल राज्यको स्थापना हुन सकेको भए राष्ट्रिय दृष्टिले यो हितकर पनि हुने थियो । तर पूर्वतिरका समृद्ध ६ राज्य जित्न सके जस्तो पश्चिमका राज्य जित्न पृथ्वीनारायण शाह सफल भएनन् ।[३] गण्डकीप्रस्रवणक्षेत्रका चौबीसी राज्यहरू र कर्नालीप्रस्रवणक्षेत्रका बाईसी राज्यहरू त्यति धेरै बलिया र समृद्ध थिएनन् तापनि सैनिक दृष्टिले उनीहरू केही बलिया थिए तथा गोरखा पूर्वतिर बढेको कुरामा उनीहरू सतर्क थिए । यसो हुँदा परस्परमा उनीहरूको हानथाप प्रशस्त चलिरहन्थ्यो तापनि गोरखालीसँग मुकाबिला गर्न उनीहरू संगठित पनि हुन्थे ।[४] यसो हुँदा पश्चिमतिरको एकीकरण अभियान सफल हुन सकिरहेको थिएन । राजकुमार बहादुर शाहको हातमा शासनाधिकार आएपछि उनले पश्चिमतिरको विजयका लागि पृथ्वीनारायण शाहद्वारा लिइएको नीतिमा केही परिवर्तन गरे । अब चौबीसी राज्यमध्ये केहीलाई सुविधा दिलाई आफ्नो पक्षमा मिलाई "आश्रितराज्य"को रूपमा पनि राख्ने नीति बहादुर शाहले लिए ।[५] उनको यस नयाँ नीतिको पहिलो प्रयोग पाल्पालाई चौबीसीहरूबाट फुटाई आफ्नो पक्षमा मिलाउनेबाट शुरू भयो । तदनुसार वि.सं. १८४३ मा पाल्पा "आश्रितराज्य" बन्यो र एकीकृत नवनेपालको एक अङ्ग बन्यो । बहादुर शाहको यो नयाँ प्रयोग सफल भयो र भेरी साँध लाउनामा यसबाट उल्लेखनीय सफलता मिल्यो । यस कुराको चर्चा माथि पनि गरिसकेको छ ।

वि.सं. १८४३ मा भेरी साँध लागेपछि गोरखालीहरू तत्काल अगाडि बढ्न सकेनन् । किनभने बाईसी राज्यहरूमध्ये जुम्ला र त्यसभन्दा अगाडि डोटी आदि राज्य केही बलिया थिए । जुम्ला, डोटी आदिलाई अँठ्याउने कुमाउँसँग सन्धि गर्ने आदि काम गर्नाको साथै आश्रितराज्यहरूलाई सन्तुष्ट राख्ने काम पनि यस बेला भयो ।[६]

त्यस बेला एकीकृत नव नेपालमा "आश्रित"रूपमा गाभिन आएका राज्यमध्ये मुस्ताङ राज्य पनि एक थियो । मुस्ताङ त्यति ठूलो राज्य थिएन तापनि भोटसँगको प्राचीन कालदेखिको व्यापार-मार्गमा परेको प्रदेश हुँदा यस राज्यको बेग्लै महत्त्व थियो । यसै हुँदा जुम्लाले मुस्ताङको केही इलाका कब्जा गरिराखेको थियो । मुस्ताङअन्तर्गतका केही इलाकाका व्यापारीहरूसँग जुम्लाले कर पनि उठाई लिने गरेको थियो । जुम्लाको यस मिचाइबाट छुट्कारा पाउन मुस्ताङ चाहन्थ्यो । पहिले पनि पर्वत राज्य बलियो हुँदै आएताका जुम्लाबाट ठिनी फिर्ता लिन

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ६०६–६१२

४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११०३–११०४

५. पूर्णिमा ६ पूर्णाङ्क, पृ. ५१–५५

६. 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ८–९

मुस्ताङले पर्वतसँग मद्दत मागेथ्यो। पर्वतका राजा मलय बमले मुस्ताङको मद्दत पनि गरेथ्यो।[७] तैपनि जुम्लाले मुस्ताङका केही प्रदेश दखल गरी नै राखेको थियो।

यो कुरा बुझेका राजकुमार बहादुर शाहले आश्रित मुस्ताङ राज्यलाई उक्त प्रदेश फिर्ता दिलाइदिने आश्वासन दिए। वि.सं. १८४६ मा जुम्ला जितेपछि मुस्ताङी राजालाई उक्त प्रदेश बहादुर शाहले तत्काल दिलाई पनि दिएथे। यो कुरा वि.सं. १८४६ कार्तिकको पत्रबाट थाहा पाइन्छ।[८] त्यसको सात महीनापछि नेपालसरकारले मुस्ताङी राजा आंग्याल दोर्जेलाई केही जग्गा थपी दिई यो ताम्रपत्र गरिदिइएको हो।

यसरी बहादुर शाहले आश्रित राज्यउपर लिएको नीतिलाई यस ताम्रपत्रले पनि झल्काउँछ। साथै मुस्ताङको तात्कालिक अवस्थामाथि पनि यस ताम्रपत्रबाट निकै प्रकाश पर्छ। नेपाल र तिब्बतको सीमानामा परेको मुस्ताङले आफ्नो अस्तित्व कायम राख्न निकै सन्तुलन मिलाउनुपरेको थियो। एकतिर ह्लासासरकारलाई नाममात्रको सिर्तो तिरी त्यसबाट सुरक्षाको प्रबन्ध गर्नु परेको र धार्मिक सम्बन्ध कायम गर्नु परेको थियो भने अर्कोतिर जुम्लाबाट आफ्नो अस्तित्व जोगाउन जुम्लालाई पनि सिर्तो तिर्नु परेको थियो। यो धर्मपत्र लेखिदिएताका जुम्ला नवनेपालमा गाभिसकेको हुँदा जुम्लालाई तिर्ने गरेको रकम नेपाल सरकारलाई तिर्ने र ह्लासालाई तिर्ने गरेको नाममात्रको सिर्तो भने साबिकबमोजिम ह्लासालाई तिर्दै गर्ने कुरा यस ताम्रपत्रमा उल्लिखित छ। ह्लासालाई तिरिने रकम ७१ रु. र नेपालसरकारलाई

---

७. टेकबहादुर श्रेष्ठ 'पर्वतका केही ताम्रपत्र' कन्ट्रिब्युशनुज् टु नेप्लिज स्टडीज् वर्ष ३ भाग २, पृ. ७७–७८

८. सो पत्र यस प्रकारको छ–

"स्वस्ति श्रीकाजी शिवनारायण षतृ श्रीसर्दार प्रबल रानाकस्य लिषापत्रम्–

आगे मोस्तांगि राजा आंग्याल् दोर्जेके तिम्रो पुरानु मुलुक् जुम्लाले षायाको बाँदरफट्कादेषि पूर्व उत्तर भर्बु षोला तराप् षोला लाँघु षोला छार्का गाउँ श्री ५ महाराजाधिराजबाट बक्स्याको लालमोहोरबमोजिम् हामिले पनि वाहालि चलाइदिञ्‌ आफ्ना षातिर्जम्मासित सुषभोग्ये गर. टहलमा रुजु रहु. केहि जगा रह्याको सर्कार बिंति गरि बनाइदिउंला. इति सम्वत् १८४६ साल कार्तिक शुदि १ रोज २ मुकाम छिलाशिम शुभम्"

दिनेशराज पन्त, 'आश्रित राज्यउपर बहादुर शाहले लिएको नीति' पूर्णिमा ६ पूर्णाङ्क, पृ. ५३–५४

तिर्ने रकम ६२१ रु. र पाँच घोडा थियो भन्ने पनि यस ताम्रपत्रबाट थाहा पाइन्छ ।

नेपालसरकारले पश्चिमतिर र उत्तरतिर काज गर्दा मुस्ताङले धनजनले सहयोग गर्नु पर्ने शर्त पनि यस ताम्रपत्रमा रहेको छ ।

यसरी यो ताम्रपत्र तात्कालिक ऐतिहासिक सामग्रीको दृष्टिले निकै उपयोगी रहेको छ ।



[ ५० संख्या ]

# धूपघडीको रणबहादुर शाहको अभिलेख

छाउनी, नेपाल राजकीय सङ्ग्रहालय (म्यूजियम) मा रहेको धूपघडीमा यो अभिलेख कुँदिएको छ। यहाँ विक्रमसंवत् १८४७ दिइएको छ।

'इतिहास-संशोधनको प्रमाण प्रमेय' को उपोद्‌घातको ६ पृष्ठमा नयराज पन्तद्वारा यो छापिएको छ।

## मूलपाठ

श्रीमद्‌राजाधिराजप्रवररणबहादुरदेवेष्टकृत्यै
कालज्ञानानुरूपं प्रचुरगुणबहादुरदेवाज्ञयेमम् ।
बुध्वा सिद्धान्तसारं व्यरच्यत घटीयन्त्रराजं विभाजं
भानोर्लक्ष्मीपतिः श्रीशिवचरणरतिर्विप्रवंशावतंसः ॥
सम्वत् १८४७ ज्येष्ठशुक्ले १५ शुभम्,

## अनुवाद

श्री ५ महाराजाधिराज रणबहादुर शाहदेवको कामको निमित्त ठूला गुणी बहादुर शाह देवको आज्ञाले पशुपतिका पाउका भक्त ब्राह्मण लक्ष्मीपतिले सिद्धान्तको सार विचार गरीकन सूर्यबाट छुट्टिने समय बताउने यस यन्त्रराज घडी (धूपघडी) लाई बनाए।

वि.सं. १८४७ ज्येष्ठ शुक्ल पूर्णिमा। शुभ होस्।

व्याख्या–

नेपालको एकीकरण अभियानले केही विद्वान्‌हरूलाई पनि जन्माएथ्यो । श्री ५ पृथ्वी-नारायण शाहले उठाएको सोही उद्योगको प्रसङ्गमा हुर्केर बढेर कार्यक्षेत्र पाएर योग्यता देखाउन सक्ने विद्वान्‌हरूमा एक जना लक्ष्मीपति पाँडे पनि हुन् ।[१]

लक्ष्मीपति पाँडेको जन्म वि.सं. १८१५मा भएको हो ।[२] राम्ररी शिक्षादीक्षा पाएका हुँदा बीस वर्षको उमेरमा नै ज्योतिषीका रूपमा उनी कार्यक्षेत्रमा उत्रिसकेका थिए ।[३] राजकुमार बहादुर शाहले उठाएको पश्चिमविजय अभियानमा यी युवक लक्ष्मीपति पाँडेले सक्रियरूपमा भाग लिएका थिए । यस प्रसङ्गमा एउटा उल्लेखनीय कुरामा ध्यान दिनु आवश्यक छ । वि.सं. १८४३ भाद्रपछि पौषअघि मेरी सांध लाग्नेछ भन्ने भविष्यवाणी गर्ने यी लक्ष्मीपति पाँडे नै हुन् ।[४] उनको भविष्यवाणी मिल्यो भने खरिदारी मान र अरू आर्थिक सुविधा पनि दिलाइ-दिने वचन सरकारतर्फबाट उनलाई दिइएको थियो । हुन पनि लक्ष्मीपति पाँडेको भविष्य-वाणी धेरै अंशमा मिल्यो । सो साल मार्ग ७ गते मेरी सांध लाग्यो । यस अभियानमा खूब लक्ष्मीपति पाँडे पनि सम्मिलित भएका थिए । त्यही प्रसङ्गमा उनले 'खरिदारी' मान पाए; यश र अर्थ पनि कमाए । त्यस बेला विजित प्रदेशमा लब्धप्रशमनको लागि लक्ष्मीपति पाँडेले राम्ररी काम पनि गरे ।[५] यसै गरी लक्ष्मीपति पाँडेका उल्लेखनीय योगदान अनेक छन् ।[६]

दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे तात्कालिक अरू विद्वान्‌हरूभन्दा अलि बेग्लै खालका थिए । उनी पढेको विद्यालाई प्रयोग गरी गरी परीक्षा गरी हेर्ने खालका विद्वान् थिए । अर्को शब्दमा भन्ने हो भने उनी 'वैज्ञानिक' रूपका विद्वान् थिए भनी सहजै भन्न सकिन्छ । यस

१. दिनेशराज पन्त 'दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे' पूर्णिमा ७ पूर्णाङ्क, संशोधन–मण्डल, पृ. ६२

२. 'दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे' पूर्णिमा ७ पूर्णाङ्क, पृ. ६६

३. 'दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे' पूर्णिमा ७ पूर्णाङ्क, पृ. ७३–७४

४. 'दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे' पूर्णिमा ८ पूर्णाङ्क, पृ. ३६

५. 'ऐतिहासिकपत्रसंग्रह' (पहिलो भाग) पृ. ४७–४९

६. पूर्णिमा' ७ पूर्णाङ्कदेखि १८ पूर्णाङ्कसम्ममा भने जस्तै दिनेशराज पन्तले लक्ष्मीपति पाँडे र उनका परिवारबारे प्रामाणिक र विस्तृत रूपमा लेख्नुभएको छ । ती निबन्ध द्रष्टव्य छन् ।

कुराको पुष्टि गर्ने अनेक प्रमाण पाइन्छन् । तिनमध्ये वि.सं. १८४७ मा राजकुमार बहादुर शाहको आज्ञाले लक्ष्मीपति पाँडेले बनाएको यो 'धूपघडी' पनि एक हो । यो धूपघडी राष्ट्रिय संग्रहालयमा रहेको छ तापनि अति उपेक्षित अवस्थामा रहेको छ । यसको उपकरण पनि केही लुप्त भएको छ । नेपालको एकीकरण अभियानले वैज्ञानिक विद्वान्लाई पनि जन्माएको उदाहरण प्रस्तुत गर्ने यस कृतिको संरक्षण राम्ररी हुनु आवश्यक देखिन्छ ।



[ ५१ संख्या ]

# भीमेश्वर-भण्डारको अभिलेख

दोलखा, भीमेश्वर-भण्डारमा केही ताम्रपत्रहरू रहेका छन् । तीमध्ये एउटा ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यसमा संवत् १८४९ दिइएको छ ।

'दोलखाको ऐतिहासिक रूपरेखा'को १२५ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख प्रकाशित भएको छ ।

## मूलपाठ

१. ॐ अद्य श्रावनमासे शुक्लपक्षे पंचम्यां तिथौ उत्राफाल्गुनछेत्रे सिद्धिजोग्य जथाकर्न

२. मुहुतरे मंग्रवासरे क्रकतरासिगतसवितरे कन्यारासिगत चन्द्रमसि ।।०।। स्वस्ति श्रीसम्वत्

३. १८४९ तह्निने लिखितं दोलषाको श्रीश्रीश्रीभीमेश्वरस्थाने प्रीति काष्ठमाडौ-को श्रीअनल

४. वुवान्या श्रीअनिरुद्र निवारले पितामाता स्वर्ग प्राप्ति का(म)नार्थ रुपैंञा पचिस २५ गुत चह्ला—

५. ञाँ जोगरछिमि बुद्धिरछिमि तस रुपैंञाको व्याजले वोक्या पुजा गर्नु सनि चरवारको सदैं भज—

६. न गर्नु. भजं गर्न्याहरूले भोज गरि षानु भनि गुठ चह्लाइ राष्या. ऐस दाम कसैले लोभ पाप

७. गर्‍या पंचमाहापातक भयो. भजन गर्‍यां गुठियार द्वाकलुङाको हिरानन्द चक्रवीर्‍रांस विरदत्त

८. सिवानन्द अजितांस येतिले सनिचरवार भजन गर्नु. तेल ब्याजमध्यकं भयो ऐह पुन्यले

९. अनिरुद्धकरण उ ऐहलोग भुक्ति परलोग मुक्ति प्राप्ति भयो. ऐस गुठको साक्षि जावत् चन्द्रार्कमेदि–

१०. नी भगत गर्‍यां स्वर्गं प्राप्त भयो शुभम् ॥

*व्याख्या–*

नेपालभित्रका भीमसेनमध्ये दोलखाका भीमसेन सबभन्दा प्रसिद्ध छन् । दोलखावासीहरु त भीमेश्वरलाई आफ्ना अधिपति देवता नै मान्दछन् ।[१] नेपालका अरू भागका भक्तजनहरु पनि टाढाटाढाबाट पनि दोलखाका भीमेश्वरको दर्शन-पूजन गर्न जान्थे ।[२] नेपालको एकीकरणपछि काठमाडौंका बासिन्दाहरू बढी मात्रामा दोलखा पुगी भीमेश्वरको दर्शन-पूजन गर्न लागे भन्ने झलक यस अभिलेखले दिन्छ । यहाँ काठमाडौंका द्वारे अनिल अनिरुद्ध नेवारले भीमेश्वरको पूजाको लागि गुठी राखिदिएको कुरा परेको छ । यहाँ राखेको गुठीको एक विशेषता रहेको छ । त्यो हो भजनको लागि छुट्टै व्यवस्था हुनु । आफ्नो टोलको नजीकको देवस्थलमा वा अरू विशेष उपलक्ष्यमा प्रसिद्ध देवस्थलमा गई साँझ बिहान भजन गर्ने परम्परा हाम्रो यहाँ उहिलेदेखि चलेको थियो ।[३] यो परम्परा जोगाई राख्नामा यस अभिलेखका दाताले जस्तै भजन-मण्डलीलाई प्रोत्साहन दिन गुठी राख्ने जस्तो क्रियाकलाप कारण रहेको थियो । यसले नेपाली संस्कृतिको एक अङ्गलाई जोगाई राख्न मद्दत मिलेथ्यो ।



---

१. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ७३

२. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ६

३. 'पाञ्चाली शासनपद्धतिको ऐतिहासिक विवेचना' पृ. १७३

[ ५२ संख्या ]

# नुवाकोटको रणबहादुर शाहको अभिलेख

नुवाकोट भैरवमन्दिरमा टाँसिएको सुवर्णपत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ शक-संवत् १७१४ (वि.सं. १८४९) दिइएको छ ।

'इतिहास-प्रकाश' १ अङ्कको ३६–३७ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख प्रकाशित भएको छ । 'नुवाकोटको ऐतिहासिक रूपरेखा'को ३७–३८ पृष्ठमा पनि यो छापिएको छ ।

## मूलपाठ

१. श्रीभैरवी विजयते ।। निराधारोद्धारे सकलसुरसारे कृतजगत्त्रयापत्संहारे हृत-
२. भवविकारे जनिभृताम् ।। दयोदारे दीनोद्धृतिकृतिपरे भैरवि नमो नवा-कोटग्रामा–
३. न्तरकृतविहारे कुरु कृपाम् ।।१।। त्वया सर्व्वं विश्वं रचितमिदमाविर्भवति च त्वया–
४. प्नोत्याकृष्टं सदयि विलयं भैरवि शिवे ।। तवैवालंवात्संहरणपदमम्बाशु दुरितं
५. निरालम्बानां तद् व्रजति जगदावासजनितम् ।। २ ।। त्वमेव जननी जगज्जननि भै–
६. रवि त्वं पिता त्वमेव च गुरुस्सुहृत्त्वमसि मे त्वमात्मासि च ।। त्वमेव रमसे जगन्निखि–

७. लमेकिकाविश्य तन्नहि त्वदपरं परं किमपि भासते मे मतिः ॥३॥ गोरक्षा-
घीशरक्ष्या–

८. मरवरनगरप्रोद्यदुद्दामधामग्रामग्रावाभिरामावनिधरनिकटस्थायिगोर्वा–
पुरीशः

९. नेपालाधीशभालाऽऽस्थिततिलकमपाकृत्य संप्रीतचेताः पृथ्वीनारायणाख्यः क्षि-

१०. तिपकुलमणिर्व्वर्तीति स्म लोके ॥ तस्य प्रास्तां तनूजौ द्युतिजितमदनौ
राजपुत्रा–

११. ग्रगण्यौ ज्यायान् सिंहप्रतापस्तदनुजनिरयं श्रीबहादूरसाहः ॥ ज्यायःपुत्रः
प्रतापी स्व–

१२. जनि रणबहादूरराजाधिराजो बाल्येनेकारिनारीकुचकलशयुगव्यर्थताकारि

१३. येन ॥५॥ गङ्गा सीमा समासीत्तदवसरसमायातचीनाधिपोपि नेपालध्वंस-
नोद्यन्म–

१४. तिरतिबहलान् ध्वंसितान् स्वान् विलोक्य ॥ अङ्के तं स्थापयित्वा शिशुमव-
निपतिं श्रीबहादू–

१५. रसाहे भैरव्युद्दामभावप्रकटितसुमतौ शासति प्रद्रुतोस्मिन् ॥६॥ हेम्नैतद्-
घटितं छदी रण–

१६. बहादूरेण भूमीभृता भावाद् भैरवि भव्यभाविनि बहादूरेण पुण्यात्मना ॥
प्रीत्यै तेर्प्पितम–

१७. स्तु सोपकरणं मातः कपाटं च किं कृष्णश्चर्व्वयति स्म नाल्पपृथुकं भक्त्या
सुदामा–

१८. हृतम् ॥७॥ श्रीशाके वेदचन्द्राचलधरणि १७१४ मिते चैत्रशुक्लाष्टमी-
शाधीशर्क्षे–

१९. क्षेराजाहे नृपतिरणबहादूरसाहेन भावात् ॥ भैरव्यै देवदेव्यै पटलमभिनवं
श्रीब–

२०. हादूरसाहेनायाते चीनवक्रे ररमपि मनसोहिष्टमेतन्न्यवेदि ॥८॥ शुभमस्तु॥

# अनुवाद

श्रीभैरवी विजयी भई रहनुभएको छ । अनाथहरूको उद्धार गर्ने भएकी, सारा देवताहरूमा श्रेष्ठ भएकी तीनै लोकका आपत् हर्ने भएकी, प्राणीहरूको सांसारिक विकार हर्ने भएकी, दयाले गर्दा उदार भएकी, दुःखीहरूको उद्धारमा लागेकी, नुवाकोटग्रामभित्र रहेकी हे भैरवी, हजूरलाई नमस्कार छ; दया गर्नु होस् ॥१॥

यो सारा संसारको सृष्टि हजूरले नै गर्नु भएको हो । हजूरले खिच्नुभयो भने यस संसारको प्रलय पनि हुन्छ । दयालु, कल्याण गर्ने, हे भैरवी माई, हजूरको आश्रयमा आए भने अनाथहरूका सांसारिक पापहरू छिटो नष्ट हुन्छन् ॥२॥

संसारकी आमा भएकी हे भैरवी, हजूर नै मेरा आमा, बाबु, गुरु, साथी सब हुनुहुन्छ । हजूर मेरो आत्मा नै हुनुहुन्छ । हजूर नै सारा विश्वभित्र तल्लीन भएर रमाएर रहनुभएको छ । हजूरदेखि बाहेक मलाई अरू केही पनि सुझ्दैन ॥३॥

गोरखनाथले रक्षा गरिएको, स्वर्ग जस्तो, पहाडी गोरखाराज्यका राजा पृथ्वीनारायण शाह राजाहरूमा शिरोमणि हुनुहुन्थ्यो; नेपालका राजाहरूका राज्य जितेर उहाँ सन्तुष्ट हुनुभएथ्यो ॥४॥

उहाँ (पृथ्वीनारायण शाह)का रूपले कामदेवलाई माथ गरेका राजपुत्रहरूमा श्रेष्ठ दुइ छोरा जन्मनुभयो । जेठा सिंहप्रताप शाह र कान्छा बहादुर शाह हुनुहुन्छ । जेठा(प्रतापसिंह)का छोरा प्रतापी महाराजाधिराज रणबहादुर शाह हुनुहुन्छ । जसले बालककालमै अनेक शत्रुहरूलाई जित्नुभएको छ ॥५॥

भैरवीको ठूलो भक्तिभावले असल बुद्धि प्रकट भएका यी बहादुर शाहले ती बालक राजा (रणबहादुर शाह)लाई काखमा राखी शासन चलाएको बेलामा गङ्गा साँध लागेको थियो । त्यसै बेला नेपाललाई ध्वस्त पार्ने विचारले आएका चीनबादशाह आफ्नो धेरै फौज नाश भएको देखेर भागे ॥६॥

कल्याण गर्ने हे भैरवी माई, राजा रणबहादुर शाह र धर्मात्मा बहादुर शाहद्वारा यी सुनको छाना र सुनको ढोका हजुरलाई चढाइएका छन् । सुदामाले ल्याएको अलिकता चिउरा के कृष्णजीले खानुभएको थिएन र ॥७॥

शकसंवत् १७१४ (वि.सं. १८४९) चैत्र शुक्ल अष्टमी बुधवार आर्द्रानक्षत्रमा, राजा रणबहादुर शाह तथा बहादुर शाहले चीनले आक्रमण गरेको वेलामा भाकल गरेका यी सुनका छाना र ढोका देवदेवी भैरवीलाई भक्तिपूर्वक चढाइएका हुन्। शुभ होस्।

व्याख्या–

पश्चिम विजयमा बहादुर शाहको कार्यकालमा भएको सफलताको केही चर्चा माथि परिसकेको छ। वि.सं. १८४६ मा जुम्ला विजयबाद लगत्तैपछि भने जस्तै गोरखाली सेनाले वि.सं. १८४७ मा डोटी कब्जा गऱ्यो; यसै साल कुमाउँ दखल गऱ्यो।[१] अर्को साल गढवाल–विजयलाई गोरखाली सेना अगाडि बढ्यो।[२] वि.सं. १८४९ मा यो ताम्रपत्र राखिएताका गङ्गा सॉध लागेको कुराको उल्लेख यस ताम्रपत्रमा "गङ्गा सीमा समासीत्" भनी गर्वसाथ गरिएको छ। वास्तवमा यो ताम्रपत्र राखिएताका यमुना सॉध लागिसकेको थियो भन्न सकिन्थ्यो।[३]

यसरी पश्चिमविजयतिर बल दिनु परिरहेको वेलामै अर्कोतिर भोटसँग पनि नेपालको खटपट हुन थालेथ्यो। टकको कुरालाई लिई भोटसँग नेपालको विवाद निकै अघिदेखि उठिरहेथ्यो तापनि दिगर्चाका स्यामर्पा लामालाई नेपालले शरण दिएपछि नेपाल र भोटको बीच विवाद उग्र बन्यो। वि.सं. १८४५ मा नेपालको भोटसँग युद्ध भयो। युद्धमा नेपालको विजय भएको हुँदा भोटले वर्षेनी नेपाललाई पचास हजार बुझाउने गरी संझौता भयो। तर सो रकम भोटले एक वर्ष मात्र बुझाई खेलखाल गर्न लागेको हुँदा वि.सं. १८४८ मा नेपाली सेनाले भोटमा आक्रमण गरी दिगर्चा कब्जा गर्न पुग्यो। दिगर्चा लुट्ने काम पनि त्यस वेला नेपाली सेनाले गऱ्यो। यति गरी नेपाली सेना स्वदेश फर्क्यो।[४]

यस घटनाले गर्दा भोटसरकारको मद्दतको लागि चीनिया सेना ल्हासा आइपुग्यो। त्यस वेलाको परिस्थितिवश नेपाल र चीनको बीच युद्ध हुने निश्चित भयो। वि.सं. १८४९ आषाढमा भोटको मद्दतको लागि चीनिया सैन्य केरुङको बाटो अघि बढ्यो। चीनिया सो

---

१. 'नेपालको संक्षिप्त इतिहास' पृ. १०५–१०६, १०९

२. 'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. ३२,

३. 'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. ६३

४. 'ऐतिहासिक पत्रसग्रह' (पहिलो भाग) पृ. ६३–६४

सैन्य छल-बलले अघि बढ्दै नुवाकोट धैबुङसम्म आइपुग्यो ।[५] यसले गर्दा नेपालको लागि एक ठूलो संकट अगाडि देखापऱ्यो । पश्चिम विजयका लागि गइरहेका जगजीत पाँडे, अमरसिंह थापा आदिलाई लेखिएको एक पत्रमा "उप्रान्त धैबुङसम्म चिनियाको लस्कर आई पुग्दा र हाम्रा मानिसको मनसुभ घट्ता ढुंगा(राज्य)थामन्या घरी पऱ्यो" भनी उक्त संकटलाई राष्ट्रिय संकटको रूपमा उल्लेख गरिएको छ।[६] हुन पनि काठमाडौं राजधानी आइपुग्न एक दिनको मात्र बाटोसम्म विशाल चीनिया फौज आइपुगेको हुँदा नेपाल सरकारको सामुन्ने ठूलो संकट आइपरेको सत्य थियो। यस्तो संकटको वेलामा मुकाविलाको लागि सैनिक तयारीको साथसाथै पूर्वपरम्पराअनुसार देवदेवीहरूको पूजाआजा आदि पनि गर्ने गरिन्थ्यो । त्यही परम्पराअनुसार चीनिया फौज धैबुङ आइपुग्दा राजा रणबहादुर शाह र राजकुमार बहादुर शाह नुवाकोट पुगी नुवाकोटका भैरवीलाई बलि चढाउने र सुनको छाना, सुनको ढोका चढाउने संकल्प गरेका थिए ।[७] साथै यस संकटको घडीमा नेपाली सेनाले मुकाबिलाको लागि भएभरको शक्ति लगायो । वेत्रावती तरी चीनिया सेना अघि बढ्यो । तर वेत्रावतीवारि चोकदे, दूधे थुम्को र गेखुंभा गरी तीन बलिया गढीमा नेपालीहरूले राम्रो सैनिक प्रबन्ध मिलाएका थिए । साथै यस अन्तिम निर्णायक युद्धमा नेपालीहरूले बहादुरीसाथ लडे । यसो हुनाले यसमा जीत नेपालीको भयो । तीनैतिरबाट नेपाली सैन्यले चीनिया सैन्यलाई लखेट्यो । यति भएपछि चीनिया सेनापतिले सन्धि गर्ने कुरा उठाए; नेपालीहरूले पनि त्यसलाई मञ्जूर गरे । त्यस सन्धिअनुसार आफूले दखल गरेको नेपालको प्रदेश चीनले छोड्ने भयो; पाँच पाँच वर्षमा नेपाली दूतमण्डल सौगात लिई चीन बादशाहकहाँ जाने भयो; १८४६को सन्धि रद्द गरियो ।[८]

यस सन्धिको अर्थ चीन र नेपाल सरकारले अलि बेग्लाबेग्लै रूपमा निकाल्यो ।[९] चीनले नेपालमा आफ्नो प्रभाव फैलायौं भनी गर्व गऱ्यो । बहादुर शाहले चाहिँ नेपाल खान आएको चीनलाई बलैले धपायौं भनी यस अभिलेखमा फूर्ति गरेका छन् । नेपाल सरकारले पश्चिमतिरको लडाइँमा खटिएका आफ्ना भारदारहरूलाई चीनसम्बन्धी युद्धको विवरण दिँदै लेखेको पत्रमा पनि "ईश्वरीको कृपाले आयाको वैरी जुक्त बुझ्क ढुंगो ठाडो राखी फर्कायौं" भन्ने भाव व्यक्त गरिएको छ ।[१०] काजी दामोदर पाँडेलाई नेपाल-सरकारले लेखेको पत्रमा पनि "एस

५. 'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. ५८–५६
३. 'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. ५६
७. यही अभिलेखबाट उक्त कुरा थाहा पाइन्छ ।
८. 'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. ७०–७३
९. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७९
१०. 'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. ५७

पाला आयाको श्रीइश्वरीका मेहरले काढिकन धपाउँ भन्या पनि सकिन्या थियो. तर बादसाहसंगको ढुंगाको बिगार पारि राषनु पर राम्रो पर्दैन तसर्थ उसले पनि धाइ गर्न आँट्यो. हामीले पनि धाई गर्न आँट्यू" भनी उक्त आशय नै व्यक्त गरिएको छ ।[११]

जे होस्; नेपाल र चीनको बीचको यस युद्धबाट वास्तवमा दुवै पक्षलाई कुनै विशेष लाभ भएको थिएन । यो एक प्रतिष्ठाको लागि लडिएको युद्ध जस्तो मात्र रह्यो । वास्तवमा तत्काल नेपाललाई यसबाट विशेष हानि नभएको जस्तो देखिए पनि तात्कालिक अवस्थामा अप्रत्यक्ष रूपमा यसको ठूलो असर पर्‍यो । नेपालको पश्चिमतिर बढ्ने अभियानलाई यसबाट ठूलो धक्का पर्‍यो । बहादुर शाहको पतनमा समेत यस युद्धले केही अंशमा असर पारेको थियो । बहादुर शाहले अरू कुरामा दूरदर्शिता देखाए जस्तै यस कुरामा पनि उनले अलि दूरदर्शिता देखाएका भए चीनसँगको युद्ध हुने नै थिएन ।[१२]

चीनसँग लडाईं थामिई सन्धि भएपछि उक्त संकट टऱ्यो र त्यसै साल चैत्रमा राजा रणबहादुर शाह र राजकुमार बहादुर शाह नुवाकोट पुगी भैरवीको दर्शन-पूजन गरे; संकल्प-बमोजिम माथि नुवाकोट भैरवीस्थानमा १०२ राँगाको बलि चढाए; तल देवीघाटमा पनि १०२ राँगाको बलि चढाए । भैरवी स्थानको मन्दिरमा सुनको छाना, सुनको ढोका हाल्न लाए । अनि यसै अवसरमा यो अभिलेख कुँद्न लाएका हुन् ।

यस अभिलेखको उठानमा भैरवीको स्तुति गरेको छ । अनि पृथ्वीनारायण शाहको गुणगान गरी उनले गरेको एकीकरण अभियानको चर्चा गरिएको छ । अनि राजा प्रतापसिंह शाह र बहादुर शाहको वर्णन गरिएको छ । अनि राजा रणबहादुर शाहको पालामा भएका उपर्युक्त घटनाको उल्लेख गरिएको छ ।

यसरी यो अभिलेख तात्कालिक कुरा बुझ्न उपयोगी रहेको छ । यस अभिलेखको लेखन-शैली पनि प्रौढ छ । सुवर्णपत्रमा अक्षर माथि उठाई कुँदिएको यो अभिलेख निकै कलात्मक पनि रहेको छ ।



---

११. नयराज पन्त 'राज्ञा रणबहादुरेण मन्त्रिणे दामोदराय प्रहितं पत्रम्' संस्कृत-सन्देश वर्ष १, अङ्क ५, पृ. ४०–४१

१२. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७६

[ ५३ संख्या ]

# रणबहादुर शाहले भिर्कोटका राजा हरिकृष्ण खानलाई लेखिदिएको धर्मपत्र

यस ताम्रपत्रको मूल हेर्न पाइएको छैन। तर यस ताम्रपत्रको उतार कौसी तोशाखानामा रहेको छ। 'पूर्णिमा' १७ पूर्णाङ्कको ४८ पृष्ठमा दिनेशराज पन्तद्वारा यो छापिएको छ।

## मूलपाठ

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे रणबहादूर शाह बहादूर समसेर्जङ्‌देवानां सदा समरविजयिनाम्.

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि विराजमान मानोन्नत श्रीमत्महाराजा श्रीश्रीश्रीहरिकृष्ण षानके आजसम्म ईन्द्रभूपाल षानकन भिर्कोटको रजाइँ थामि बक्स्याको थीयो. आपना पुर्षाले गऱ्याको धर्म नराषि आफलन पस्ता र उनले हाम्रा हुकुम्मा नचल्‌दा ईन्द्रभूपाल षानकन षोसि तिमिलाई भिर्कोटको रजाइँ थामिबक्स्यौं. तिमिले तिम्रा सन्तानले गोरषाको ढुंगाको सोझो गरन्ज्याल हाम्रा हुकुम्मा चलन्ज्याल तिमिलाई तिम्रा सन्तानलाई हामिले हाम्रा सन्तानले नषोसनु गरि ताम्बापत्र बक्स्यौं. आपना षातिर्जामासंग गादिमा बसी गोषाका ढुंगाको सोझो गरि रजाइँको भोग्य गर. ईति सम्वत १८४९ साल पौष वदि ९ रोज ६ कांन्तिपुर राजधानि शुभम्.

व्याख्या–

श्री ५ रणबहादुर शाहले वि.सं. १८४९ मा हरिकृष्ण खानलाई भिरकोटको रजाईं थामिदिई यो ताम्रपत्र गरिदिएका हुन् । लमजुङ तनहूँ विजयपछि भिरकोट नवनेपालको आश्रित हुन आएको थियो ।[१] वि.सं. १८४३ मा राजकुमार बहादुर शाहले पश्चिमविजय अभियान थाल्दा भिरकोटले साथ दिएको देखिन्छ । यसै हुँदा मेरी सांध लागेको लगत्तैपछि भिरकोटलाई 'जाहारी' नामक प्रदेश थपिदिइएको थियो । उक्त कुरा तलको पत्रबाट थाहा पाइन्छ-

"स्वस्ति श्रीमन्महाराजाधिराजस्य रुक्का–

आगे काजि जिवसाह् जगजित्पाडे पारथ भँडारि अम्बरसिं राना प्रवल राजाप्रति भिर्कोट-लाई जाहारि सतौलाई दार्मु बक्स्यौं. जाहारि र दार्मुका षेतमध्ये षेत बरोबर पारि आजकालको सांध जो हो, सो छुटयाईदेउ. जाहाको नाउ नबिसि लेष्याको छंदै षेत बरोबर पारि बाडिदेउ.

इति सम्वत् १८४३ साल पौष वदि ७ रोज ३ मुकाम काठमाडौं. शुभम्[२]"

आश्रित राज्यलाई सन्तुष्ट पारिराख्ने बहादुर शाहको नीतिअनुसार उपर्युक्त काम भएको थियो । तर पछि भिरकोटले वफादारी पूरा गरेन । शायद नेपाल चीन युद्धताका भिरकोटले विद्रोह गर्ने चेष्टा गरेको बुझिन्छ । यसै हुँदा इन्द्रभूपाल खानलाई खोसी हरिकृष्ण खानलाई भिरकोटको रजाईं दिई यो ताम्रपत्र गरिदिइएको हो । नेपाल सरकार र आश्रित राज्यबीचको सम्बन्धलाई दर्शाउने हुनाले यो अभिलेख उपयोगी रहेको छ । यसै हुँदा मूल ताम्रपत्र हेर्न नपाए पनि यसलाई यस संकलनमा समावेश गरिएको हो ।

卐

---

१. तोत्रराज पाण्डे र नयराज पन्त, 'नेपालको संक्षिप्त इतिहास' पृ. १००

२. दिनेशराज पन्त 'आश्रित राज्यउपर बहादुर शाहले लिएको नीति' पूर्णिमा ६ पूर्णाङ्क, पृ. ५३

[ ५४ संख्या ]

# नुवाकोटको रणबहादुर शाहको अभिलेख

नुवाकोट भैरवीमन्दिरमा टाँसिएको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ विक्रम संवत् १८५० दिइएको छ ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा'को ३९–४१ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख प्रकाशित भएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीशाके १७१५ सौरमानेन आषाढमासे चान्द्रमानेन ज्येष्ठमासे शुक्लपक्षे चतुर्थ्यां पुण्यतिथौ बुधवासरे तिष्यनक्षत्रे व्याघातयोगे एतत् श्रीभैरवीप्रासादछदिः–

२. कपाटप्रतिष्ठाशुभकर्मणि श्रीश्रीश्रीभैरवीप्रीत्यर्थं श्रीश्रीश्रीमन्महाराजाधिराज रणबहादूरदेवेन समर्पितकनकपत्रविनिर्मितछदिषः।। तस्मिन्नेव दिने राजकुमार–

३. श्रीश्रीश्रीवाहादूरदेवेनापि समर्पितसुवर्णपत्रसंवृतकपाटस्य वर्षवन्धनयज्ञादिकर्म्मणः द्वादश शुक्लाष्टमीषु द्वादश कृष्णचतुर्द्दशीषु च पूजासामग्रीसम्पादनाय द्वा–

४. दशविंशति २४० मुरिकापरिमितं करूवादेवसंज्ञकं क्षेत्रं संकल्प्य क्षेत्रसंरक्षणाद्यधिकारः पूजकहस्ते न्यस्तः ।। देशभाषयापि प्रतिवर्षबन्धनका होमादि कर्मकन व–

५. र्ष दिनका बाह्र शुक्लाष्टमी बाह्र कृष्ण चतुर्दशीका पूजाकन करूवादेव षेत मुरि बिस बाह्र २४० तस्को साँध पूर्व विविराबोटया षेतको सांध दक्षिण वांदको सांध पश्चिम पंच–

६. कन्या षेतको सांध उत्तर तेर्छो बाटोको सांध एति मध्यको षेत दुषनटारको दिहि रोपनी दस १० तस्को साँध चारै दिशा चारै लुहुकोल एति मध्यको डिहि गुठ चह्राउं. एस गु–

७. ठका बालीले गुठियारले तपसीलमाफीक साराजाम लाउनु. एस गुठमा राजा प्रजा कसैले लोभानि पापानि गरून् त पंचमाहापातक लागोस्. हाम्रा धर्मको पालना गरून् त उत्तरोत्तर वृद्धि हवस्. शुभं

तपसील

(पहिलो लहर–)

वर्षवन्धन पुजा यज्ञको सामग्री–

देवताके भेट नगद रूपैया..................१

लालपगरि थान ............१ के...........।।।

नरिवल.....................१ के...........=

सिन्दुर तोला ..............२ के...........ऽ–

धुप तोला.....................२ के............ऽ।

सुपारि गोटा ..............४० के............।

श्रीखंड तोला...............२ के...........=

रक्तचन्दन तोला............२ के............ऽ।।

गुगुल धुप तोला............२ के......... ..ऽ।।

भोट्या धुप मुठा............।। के............ऽ।।

पंचामृत.....................  के...........–

पंचरंगि कपरा हात........५ के............।

वालीके कपरा हात.........१५ के............।।

पंचसूत्र जजंकाके धागो तोला ३० के.........।≡

अक्षताके चावल माना......१ के............ऽ।

सर्वोषधी..................  के............ऽ।

सप्तव्रुही माना............१ के............ऽ—॥

घिउ माना..................३ के............।=

(दोश्रो लहर–)

होमके चांवल पाथि.........५ के  ॥=

दिपमालाके तेल रूपैंया.....  ५

धान पाथि...................१ के  ऽ।

छानाका पताकाको धागो मोलके–  ॥

ठूलो ओक्या २ के मोल रूपैया—  ६

तिन दिनका भोजके चिहुरा मुरि– ३ के  ६॥

भुट्याको चिहुरा पाथि...१० के  ।॥

वृष्टि जोर...............१२ के  ।॥

सुरापानके चांवल मुरि.....१ के  २॥

रक्सीके चावल पाथि.......५ के  ॥=

होमका भेटीके............  ॥

नैवेद्यके मिठाइके..........  =

फलफुल रेखि समिधाके.....  ।

भटमास, माछा, अदुवा, हिङ, जिरा,

हासका फुलके  ॥

साग दुध दहि केराके  १

पान सुपारि ल्वांङ जाइफल मेवाके  ।

नुन माना–  १६ के  १।

(तेश्रो लहर–)

शुक्लाष्टमी १२ कृष्णचतुर्दशी १२ चौबिस पुजाके

एही तपसीलबमोजिमको चौबिसै साराजाम लावनु

ओक्या....................१ के............१।

सिन्दुर तोला...............२ के............ऽ।
धुप तोला..................२ के............ऽ।
सुपारी गोटा.............१० के............ऽ॥
नैवेद्यके मिठाइ............ के............।
अक्षताके चावल माना .....१ के............ऽ।
बातिके कपडा मोल........ ............ऽ॥
तेल मोल................. ............ऽ॥
सुरापानके चावल पाथि......३ के............।—।
रक्सीके चावल पाथि.......२ के............।
चिहुरा पाथि...............५ के............॥—
भटमास, माछा, अदुवा, हासका फुल,........।
पुजाको सामग्री............. ............।
चौविस पुजाका जम्मा रुपैया ............७५
इति सम्वत् १८५० जेष्ठ कृष्ण चतुर्थी बुधवासरे शुभं

## संस्कृतभागको अनुवाद

कल्याण होस् । शकसंवत् १७१५ (वि.सं. १८५०) सौरमानले आषाढ, चान्द्रमानले ज्येष्ठ शुक्ल चतुर्थी बुधवार तिष्यनक्षत्र व्याघातयोगमा, श्रीभैरवीको मन्दिरको छाना ढोका प्रतिष्ठा गरेको शुभ कर्मको सिलसिलामा श्री ३ भैरवीलाई प्रसन्न पार्न श्रीश्रीश्रीमहाराजाधिराज रणबहादुर शाहले चढाएको सुनको छाना र त्यही दिन राजकुमार श्रीश्रीश्रीबहादुर शाहले चढाएका सुनका छापाको वर्षबन्धनमा यज्ञ आदि विधान र बाह्र शुक्ल पक्षका अष्टमी र बाह्र कृष्णपक्षका चतुर्दशीको दिन पूजा चलाउनाको लागि २४० मुरी कक्वादेव भन्ने खेत संकल्प गरी सो खेतको देखरेख गर्ने अधिकार पुजारीको जिम्मामा सुम्पिएको छ ।

व्याख्या–

चीनिया फौज नुवाकोट धैबुङसम्म आइपुगेपछि वेत्रावतीको अन्तिम लडाइँमा नेपाली सैन्यले विजय गर्न नसकेको भए नेपालराज्यको अस्तित्वमै खतरा आउने सम्भावना थियो।

यस्तो राष्ट्रिय संकट आएको बेला हाम्रो परम्पराअनुसार देवदेवीहरूको पूजन आदि पनि गर्ने चलन हुँदा राजा रणबहादुर शाह र राजकुमार बहादुर शाहले नुवाकोट पुगी भैरवीको दर्शन पूजा गरेको, भैरवीको मन्दिरमा सुनको छाना, सुनको ढोका चढाएको कुराको चर्चा यसभन्दा अघिको अभिलेखमा परिसकेको छ। उक्त अभिलेख राखेको तीन महीनाजति पछि उक्त सुनको छाना, ढोकाको प्रतिष्ठा गरी त्यसको वर्षबन्धन र अरू नैमित्तिक पूजाको लागि खेत गुठी राखी यो अभिलेख कुँद्न लाइएको हो।

यस अभिलेखमा वर्षबन्धनको दिन होम आदि पूजाको लागि चाहिने सराजाम खुलाएर दिइएका छन्। साथै हरमहीनाको शुक्लपक्षको अष्टमीमा र कृष्णपक्षको चतुर्दशीको दिन गरिने पूजाका सामग्री पनि खुलाएर दिइएका छन्। ती सराजामहरू केलाई अध्ययन गर्‍यौं भने कुन पूजा-पद्धतिले त्यहाँ स्थान पाएको रहेछ भन्ने संकेत हामी पाउन सक्छौं। साथै सराजामका ती सूचीमा पदार्थको मोल पनि खुलाएर दिइएको हुँदा तात्कालिक बजार भाउ बुझ्न पनि यताबाट मदत पाइन्छ। यस अभिलेखमा उल्लिखित पदार्थको मूल्य-सूची हुँदा त्यस बेला साधारणतः चामल एक मानाको १ पैसा पर्दथ्यो; साधारण कपडा एक हातको मोल एक आना पनि पर्दैनथ्यो; घिउ एक मानाको दुइ आना; नून एक मानाको एक आना पर्दथ्यो; बोको १ रू. मा पाइन्थ्यो भन्ने थाहा पाइन्छ। यसै गरी अरू चीजबीजको पनि तात्कालिक बजारभाउ यस अभिलेखबाट थाहा पाइन्छ। यसरी यहाँ उल्लिखित सराजाम सूची धार्मिक कुरा बुझ्न मात्र होइन; आर्थिक कुरा बुझ्न पनि केही उपयोगी छ।

आफूले चिताए जस्तो रूपमा पूजा चलोस् भनी मूल्यसहित खोली सराजाम सूची शिला-लेख, ताम्रपत्र आदिमा खुलाई लेखाउने चलन हाम्रो यहाँ चलेको पाइन्छ। तर यो चलन त्यति वैज्ञानिक भने छैन। एक शताब्दीजतिमै बजार भाउमा धेरै अन्तर आउने हुनाले मूल्य तोकी सराजाम राख्ने यस चलनले साबिकबमोजिम पूजा चलाउन पछि गाह्रो पर्ने हुन्छ। उदाहर-णार्थ यस अभिलेखमा हरेक शुक्लाष्टमीमा र हरेक कृष्ण चतुर्दशीमा बलि दिन १ रू. पर्ने बोकोको उल्लेख परेको छ। यो गुठी राखिएको बेलामा अर्थात् वि.सं. १८५० मा १ रू. ले सामान्य बोको पाईंदो हो। तर यसको एक शताब्दीपछि १ रू. ले सानो बोको पनि पाउन मुश्किल भइसकेको थियो। तर बोकोको लागि १ रू. शिलालेखमा निर्धारित भएको हुँदा पूजा चलाउन मुश्किल पर्ने स्पष्ट छ। अनि देवताको लागि भनेर जबर्दस्ती बोको १ रू. दिई लिने गरिन्थ्यो भन्ने सुनिन्छ। अहिले त एक सामान्य बोकोलाई पनि शयभन्दा बढी तिर्नुपर्ने भएको छ। यस अवस्थामा शिलालेखमा गरिएको व्यवस्थाअनुसार पूजा चलाउन मुश्किल हुनु स्वाभाविक छ। यसै गरी चामल पाँच पाथीको लागि दश आना यहाँ उल्लिखित छ। तर दश आनाले त अहिले आधा माना चामल पनि नआउने हुँदा समस्या हुने स्पष्ट छ।

होम गर्ने पुरोहितलाई दक्षिणा आठ आना दिने कुरा यस शिलालेखमा उल्लिखित छ। तर सामान्य ज्यामीको ज्याला पनि दश रु. पुगेको अहिलेको अवस्थामा दिनभरी होम गरी आठ आना दक्षिणा पाउँदा पुरोहित सन्तुष्ट नहुने स्पष्ट छ।

यसरी कालक्रमले बजार भाउमा अन्तर पर्ने हुनाले मूल्य तोकी पदार्थको उल्लेख गर्ने चलन अव्यावहारिक देखिएको छ।



[ ५५ संख्या ]

# नारायणहिटीको धौकलसिंह बस्नेतको अभिलेख

नारायणहिटी राजदरबारको इलाकाभित्र प्रसिद्ध नारायणको मन्दिर रहेको छ। त्यस मन्दिरको बायाँपट्टि यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यहाँ शकसंवत् १७१५ (वि.सं.१८५०) दिइएको छ।

'संस्कृत-सन्देश' वर्ष १, अङ्क ५ को ७–१० पृष्ठमा यो अभिलेख योगी नरहरिनाथद्वारा छापिएको छ तथा यसको अनुवाद सोही अङ्कको ११–१३ पृष्ठमा बखतमानसिंह बस्नेतद्वारा छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगणेशाय नमः ।। प्रख्यातः शिवराम इत्युदभवच्छ्रीपालिवंशाद्विमे चत्वारो ह्यभवंस्तदीयत–

२. नयाः प्रीत्यैकतामाश्रिताः। ज्यायान्नाहरसिंह एष सुजसा वैरीन्द्रविध्वंसकः शूरो धर्मपरो दयापर इति प्रोद्‌गी–

३. तमेतद्यशः।।१।। संसारे यश एव सारमिति सञ्चिन्त्यैव दानादिभिस्तत्संपाद-यिताभवत्तदनुजः श्रीकेहरीसिंह-

४. कः।। भूपस्याधिकयत्निजस्य धरणिं कृत्वा च भोगं परं वारुण्यां दिशि यो रणे रिपुगणान् विध्वंसयन् स्वर्गतः ।।२।।

५. तत्पश्चाज्जनिरन्वितो गुणगणैः कारुण्यलावण्यभूर्मेधावी ह्यभिमानसिंह-सचिवो दाता महाधार्मिकः।। यो

६. भिल्लान् बहलान् हलाहलबलान् भल्लादिभिर्ध्वंसयन् हालामापिबतः किरातमजयद्देशं समस्तं हठात् ।।३।।

७. आसीद् धौकलसिंह एतदनुजस्त्यागी यशस्वी बली त्रुट्यत्कञ्चुकिबन्धना युवतयः स्रस्तांशुकाः प्रेमतः।। धाव-

८. न्त्यन्यवधूपराङ्मुखमपि क्षिप्रं यमालोक्य तत्सौन्दर्यास्पदमत्र को विरचितस्तस्माद् विधात्रा परः ।।४।।

९. पुत्रश्रीरणधीरसिंहसहितो वैरीभकण्ठीरवो धौरेयो धरणीपमन्त्रिषु धरादेवेषु देवेषु च।। सद्भक्तिर्धरणीपते-

१०. र्निजपतेः सर्वत्र युद्धांगणे योसौ धौकलको हि दुर्धरधनुर्धुन्वान आस्ते पुरः ।।५।। दानं भूरि यतो वनीयककुलं

११. लब्ध्वा निजम्मन्दिरं गच्छत्प्राप्य परेर्थिनः पथि ततो लब्ध्वा बहुस्वं पुनः।। दातॄन् संग्लपयन्ति किंच बहुना यद्दानभीते

१२. रमा मूर्तापि स्वपतेर्वसत्युरसि सा दातेदृशो धौकलः ।।६।। शाकेस्मिन् बाणभूमीधरणिधरधरासम्मिते ज्येष्ठमासे

१३. शुक्ले पक्षे दशम्यां शशितनयदिने शस्तचित्राभिधर्क्षे ।। स्वस्वत्वोत्पत्तिपूर्वं नृपतिरणबहादूरलब्धे स्थलेस्मिन् र-

१४. म्यं हर्म्यं सुकाम्यं शुभफलजनकं धौकलोसौ व्यधत्त ।।७।। पुत्रपौत्रकुलतोपि कलत्रान् कर्मतोपि च हरेः करु-

१५. णातः।। कीर्त्तिरत्र भवितेति विचिन्त्य कीर्त्तिमन्दिरमिदं न्यगदत्सः।।८।। बाला बाल्यार्हलीलामनवरतमदोद्दाममा-

१६. द्यन्मतंगाश्चीत्कारं सत्तुरंगा निजरुचिररवं भूपतेर्मानलक्ष्म्याः।। स्वावासं सत्पुराणध्वनिमवनिसुरा गायका

१७. गानमुक्तिं कीर्तेर्देवप्रसादाद् विदधतु नितरां बन्दिनो मन्दिरेस्मिन् ।।९।। कीर्त्तिं निपीय विततां महता-

१८. ममीषां तद्वर्णनेषु धृतधीरिति धौकलोक्त्या ।। मद्गेहनिर्मितिसमाप्तिशकादिलेख्यं वाणीविलास इति वर्ण-

१९. यति स्म सूरिः ।।१०।। शुभं भूयात् सर्वदेति ।। दोहा ।। सूरसमर समसेर

कर मारे कैयो अङ्ग, शिवरामसिं-

२०. ह साँगा लडत गिरे शीश तजि अंग ।।१।। कीयो पुण्य अपार तप, तिह्नँ तनय भव चार, सरस एक सौ एक,

२१. सब दाता शूर अपार ।।२।। नाहर तैं अतिबल प्रगट नाहरसिंह सुजान । ज्ञान ध्यान भगवान पद दा-

२२. न कृपान मयदान ।।३।। केहरसिंह गाजी भये । वाजी दस दिस नाम, सत-हूँके मयदानमो करी भूपको

२३. काम ।।४।। कवित्य ।। मण्डप समंर समसेर श्रुव लिये कर, सोनित हविष डारैं आहुति अहीतका । वरछन-

२४. की वेदी नचैं जोगिनी धमारि रंचि वेदेकर तालिका वेताल गावैं गीतको कालिका पुरोहित पढावैं मा-

२५. र मार मन्त्र हाक मारैं दुंदुभि जीवनाथ जीत को । वासव विरंचिले विमान दौरे देषि विको. भुकुतिकुमारिका तैं ब्याह

२६. केहरसिंह जगजीतको ।।५।। अभिमन्नु मनो जग अवतरे परे नाम अभिमान । शूर समरमो अचल हैं ज्यो अंगद हु-

२७. नूमान ।।६।। जिन कियो तरबार बल ब्रह्मपुत्र लव साँधि । सन्मुख रिपुको मारिकैं वचैं सो ल्याये बाँधि ।।७।। धौक-

२८. लसिंह अतिवल भये तरवार बहादूर वीर । बहुत पुण्य अरु दान तैं तनया तासु रणधीर ।।८।। मानसरोवर-

२९. मो करत हंसी हंस विलास । कहो नाम सब देशको करत सुरत परिहास ।।९।। कहै हंस हंसी सुनो, वेषो दस वि-

३०. गपाल अमर नगरे तैं आगरो, सोहत सहर नेपाल ।।१०।। चक्रवर्ती भूपाल है रणबहादूरसाह, धौकलसिंह वजीर है

३१. सबको करत निगाह ।।११।। वलिकी रति कलिका करी करन ईषत पर-कास ।। धौकलसिंह फुलाय फुल. सब ज-

३२. ग लेत सुवास ।।१२।। नगरनियर उत्तरतरफ नारायणके पास ।। ताहा रूपमन्दिर कियो नाना होत विला-

३३. स ।।१३।। गज वाजी हैं द्वारमो मस्ति मानिकको ढेर । दईदै हुए ते विभो मानो दुजो कुबेर ।।१४।। शाके सत्र सौ द–

३४. श पंच हैं साल अठाह्नसौ सौ आध । जेठ शुक्ल दशमी चन्द्रसुत कियो भवन अगाध ।।१५।। शुभं ।।

## संस्कृतभागको अनुवाद

कल्याण होस् । श्रीगणेशलाई नमस्कार । श्रीपालिवंशमा प्रख्यात शिवशर्मसिंह भए । तिनका चार छोरा भए; प्रीतिले गर्दा ती चार एक भई मिलेका थिए । तिनमा जेठा नाहर-सिंह नाउँ चलेका, ठूलठूला शत्रुलाई सखाप पारेका, शूरा धर्मात्मा दयालु थिए; यस कारण उनको जस गाइएको थियो ।

नाहरसिंहका माहिला भाइ श्रीकेहरीसिंह भए । संसारमा जस नै सार कुरो हो भनी उनी दान आदिद्वारा जस कमाउनपट्टि लागेका थिए; जो आफ्ना राजाको राज्यसीमा बढाउँदै गई ठूलो भोग पनि गर्दै गई पश्चिमपट्टिको युद्धमा शत्रुहरूलाई ध्वस्त पार्दै आफू स्वर्ग गए ।

ती केहरीसिंहपछि जन्मेका साहिँला भाइ काजी अभिमानसिंह गुणी, दयालु, सुन्दर र बुद्धिमान् पनि थिए । जसले विषालु अस्त्र प्रहार गर्ने, मद खाएर चूर भइरहेका थुप्रै किराती-हरूलाई भाला आदि अस्त्रहरूले ध्वस्त पार्दै सारा किरात प्रदेश बलैले जिते ।

ती अभिमानसिंहपछि जन्मेका कान्छा भाइ धौकलसिंह भए । जो दानी, कीर्ति फैलिएका र बलिया पनि थिए । जो परस्त्रीदेखि विमुख छन् तापनि जसलाई देखेर युवतिहरू प्रेमले गर्दा चोलीको तना चुँडिएको र उपर्ना खसेको पनि वास्ता नगर्दै दौडिन्छन् । तिनलाई जस्तो सुन्दर यस लोकमा विधाताले अरू कसलाई बनाएको छ र ?

छोरा श्रीरणधीरसिंहसहित भएका, शत्रुहरूलाई सखाप पारेका, राजाका मन्त्रीहरूमा श्रेष्ठ भएका, देवता ब्राह्मणहरूमा सद्भक्ति राख्ने ती धौकलसिंह आफ्ना राजाको लागि सर्वत्र लडाईंको मैदानमा अरूले उठाइनसक्नु धनु हातमा लिएर टङ्कार गर्दै शत्रुको सामुन्ने छाती तानेर खडा रहन्छन् ।

जुन धौकलसिंहबाट प्रशस्त दान लिएर आफ्नो घरतिर जान लागेका माग्नेको बथानलाई

बाटोमा भेटी तीसँग माग्न पुगेका अरू मगन्तेहरू तिनबाट थुप्रै धन पाई अबे दातालाई समेत लज्जित पार्छन्; धेरै के भनौं; जसको दानदेखि डराएर स्वयं लक्ष्मी पनि आफ्ना पतिको (विष्णुको) छातीमा लुकेर बसेकी छन् । धौकलसिंह यस्ता दाता हुन् ।

शकसंवत् १७१५ (वि.सं.१८५०) ज्येष्ठ शुक्ल दशमी बुधवार चित्रा नक्षत्रमा, राजा रणबहादुर शाहबाट प्राप्त भएको, आफ्नो पूर्ण अधिकार भएको यस ठाउँमा धौकलसिंहले शुभफल दिने, सबैले चाहने सुन्दर भवन बनाए ।

छोरा नाति कुल जहान, कामकारवाइ सबतिरबाट तथा हरिको कृपाले पनि यसमा कीर्ति हुनेछ भनी ठानेर धौकलसिंहले यस भवनको नाम "कीर्तिमन्दिर" भनी राखे ।

देवताको प्रसादले यस कीर्तिमन्दिरमा बालकहरू सधैं बालक्रीडा गर्दै रहून्; हरबखत मदजल चुहाउने मत्ता हात्तीहरू गर्जंदै रहून्; असल घोडाहरू मधुरोसँग कराउँदै रहून्; राजाबाट प्राप्त मान पदवी र लक्ष्मीले वास गर्दै रहून्; पण्डितहरू असल पुराण आदिको पाठ गर्दै रहून्; बन्दीहरूले कीर्तिगाथा सुनाउँदै रहून् ।

धौकलसिंहले मेरो घर बनाई सिद्धिएको तिथिमितिसहितको अभिलेख राख्नुपर्‍यो भनी मलाई भनेका हुनाले विद्वान् वाणीविलासले यो ठूला बस्नेतहरूको कीर्तिको छानबीन गरी मन लाईकन यो वर्णन गरेका हुन् ।

सधैं शुभ होस् ।

व्याख्या–

नेपालको एकीकरण अभियानमा श्री ५ पृथ्वीनारायण शाहलाई हरकिसिमले साथ दिने उनका विश्वस्त भारदारहरूमा शिवरामसिंह बस्नेतका छोराहरू पनि थिए । वि.सं. १८०३मा साँगाचोकको लडाइँमा शिवरामसिंह बस्नेतको मृत्यु भएको थियो ।[१] लडाइँमा मर्ने सैनिकका सन्तानको पालन-पोषणको अभिभारा सरकारले लिने नीति पृथ्वीनारायण शाहले

१. बाबुराम आचार्य 'श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाह' भाग २, पृ. २३५

लिएका थिए ।[२] यसो हुँदा शिवरामसिंहका छोराहरू पृथ्वीनारायण शाहको रेखदेखमा हुर्के ।[३] शिवरामसिंहका नाहरसिंह, केहरसिंह, अभिमानसिंह र धौकलसिंह गरी चार छोरा थिए । चारै छोराहरू एकसेएक लडाका, राजनीतिज्ञ र स्वामिभक्त भई निस्के । यिनमा केहरसिंह र अभिमानसिंहको योगदान अझ बढी रह्यो ।[४]

यो अभिलेख शिवरामसिंह बस्नेतका कान्छा छोरा धौकलसिंहले "कीर्तिमन्दिर" बनाई राख्न लाएका हुन् । धौकलसिंह कान्छा हुनाले पृथ्वीनारायण शाह ताकाका युद्धमा यिनले भाग लिएको विशेष उल्लेख पाईदैन । तर वि.सं. १८२६ मा भक्तपुरमा आक्रमण गर्दा यी धौकलसिंह पनि त्यसमा सम्मिलित भएथे भन्ने कुरा ललितावल्लभको "भक्तविजयकाव्य"बाट थाहा पाइन्छ ।[५] "भक्तविजयकाव्य"मा धौकलसिंहको स्पष्ट रूपमा नामोल्लेख त गरिएको छैन । तर केहरसिंह बस्नेतको वर्णन गर्दा "बस्न्यायितः केहरसिंहवीरः सहानुजाभ्यां वरवीरहीरः" भनिएको हुँदा धौकलसिंह पनि भक्तपुरयुद्धमा सम्मिलित भएथे भन्ने सिद्ध हुन्छ । यसै गरी धौकलसिंहले अरू युद्धमा पनि केही भाग लिएका थिए । तैपनि बलमुखीका रूपमा उनले विशेष युद्ध लडेको उदाहरण भने शुरूमा पाईदैन । यसो हुँदा केहरसिंह र अभिमानसिंहको जस्तो ख्याति धौकलसिंहको फैलिन सकेको देखिंदैन । बहादुर शाहको पालामा आएर धौकलसिंहको केही प्रख्याति फैलिन थाल्यो । राजपुरोहित शक्तिवल्लभले बहादुर शाहका पालाका प्रख्यात भारादारहरूमा धौकलसिंहको पनि वर्णन गरेका छन् ।[६] त्यस बेला धौकलसिंह काजी बनिसकेका थिए । यस अभिलेखमा पनि प्रभावशाली मन्त्री (काजी)का रूपमा धौकलसिंहको वर्णन गरिएको छ । राजा रणबहादुर शाहबाट बकस पाएको जग्गामा धौकलसिंहले "कीर्तिमन्दिर" बनाएको वर्णन यसमा परेको छ ।

धौकलसिंहले यस अभिलेखमा आफ्नो र आफ्ना बाबु, दाजुहरूको पनि पुरुषार्थको वर्णन गराएका छन् । यस कारण नेपालको एकीकरण अभियानमा उल्लेखनीय योगदान दिने शिव-

---

२. दिनेशराज पन्त 'श्री ५ पृथ्वीनारायण शाहको मरवट–नीति' पूर्णिमा २२ पूर्णाङ्क, पृ. ११७–११६

३. 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ६५–६६

४. तात्कालिक प्रामाणिक ऐतिहासिक सामग्रीहरूबाट यो कुरा थाहा पाइन्छ । केहरसिंहको अभिलेख पाइएको छैन । तर उनका भाइ अभिमानसिंह, धौकलसिंहका अभिलेखमा केहरसिंहको वीरताको प्रशंसा गरिएको पाइन्छ ।

५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३६४

६. 'जयरत्नाकर नाटक' पृ. ८०

रामसिंह आदि बस्नेतहरूबारे केही कुरा जान्न यस अभिलेखले मद्दत गर्छ। यस कारण शाह-कालका उपयोगी अभिलेखहरूमा यस अभिलेखको पनि गणना हुन्छ। धौकलसिंहहरू श्रीपाली बस्नेत हुन्। हाम्रो यहाँ बस्नेतहरूका अरू शाखा पनि छन्। तिनमा श्रीपाली बस्नेतको योग-दान बढी रहेको पाइन्छ। यसैले यस अभिलेखमा धौकलसिंहले "हामी श्रीपाली बस्नेत हौं" भन्ने कुरा लेखाएका छन्। त्यसपछि शिवरामसिंह र उनका चार छोराहरूको वर्णन यहाँ गरि-एको छ। यस अभिलेखमा संस्कृत भागभन्दा दोहा भागमा ऐतिहासिक कुरा बढी खुलाई लेखिएको पाइन्छ। संस्कृत भागमा शिवरामसिंहको वर्णन गर्दा उनी प्रख्यात थिए भन्ने मात्र लेखिएको छ। दोहामा चाहिँ "शिवरामसिंह साँगा लडत गिरे शीश तजि अंग" भनी शिवराम सिंहले साँगाचोकको लडाईंमा वीरगति पाएको कुराको उल्लेख गरिएको छ। केहरसिंहको वर्णन गर्दा पनि संस्कृत भागमा उनी पश्चिमको लडाईंमा परे भन्ने भाव मात्र व्यक्त गरिएको छ; तर पश्चिमको कुन चाहिँ लडाईंमा उनी परे भन्ने कुरा खुलेको छैन। तर दोहामा चाहिँ "केहरसिंह गाजी भये, वाजी दसदिस नाम सतहूँके मयदानमो करौ भूपको काम" भनी सत-हूँको लडाईंमा केहरसिंह परेको कुरा खुलाएर लेखिएको छ। यसै गरी दोहाभागमा ऐतिहा-सिक कुरा बढी परेको छ। अभिमानसिंहको वर्णन भने दोहामा भन्दा संस्कृत भागमा राम्ररी गरिएको छ। अभिमानसिंहले किरात विजय गर्दाको वर्णन संस्कृतभागको बढी उपयोगी रहेको छ। धौकलसिंहको वर्णन गर्दा उनी लडाका थिए भन्ने बाहेक उनी सुन्दर जीउडालका थिए, युवतीहरू उनलाई देखेर मुग्ध हुन्छन् भन्ने भाव यहाँ व्यक्त गरिएको छ। शक्तिवल्लभले पनि धौकलसिंहको वर्णन गर्दा "स्मेराननं" अर्थात् हँसिलो मुख भएका भनी वर्णन गरेका छन्। यसबाट धौकलसिंह आकर्षक व्यक्तित्व भएका थिए भन्ने देखिन्छ।

"वाणीविलास इति वर्णयति स्म सूरिः" भनी यस अभिलेखको संस्कृतभागको अन्त्यमा लेखिएको छ। यस कारण यो अभिलेख त्यस बेलाका प्रख्यात विद्वान्, कवि वाणीविलासले रचना गरेका हुन् भन्ने स्पष्ट भएको छ। माथि गएका सरूपसिंह कार्कीको "जयमन्दिर"को अभिलेख तथा अभिमानसिंह बस्नेतको "मानमन्दिर"को अभिलेख र धौकलसिंह बस्नेतको "कीर्तिमन्दिर"को यस अभिलेखको वर्णन शैलीमा धेरै सादृश्य रहेको छ। उपर्युक्त दुइ अभिलेखमा भने रचयिताको नामोल्लेख गरिएको छैन। यसो विचार गर्दा उपर्युक्त दुइ अभि-लेख पनि वाणीविलास पण्डितले नै लेखेका हुन् कि भन्ने देखिन्छ। नत्र वाणीविलास पण्डित जस्ता सिद्धहस्त कविले अर्काको रचनाशैलीको नक्कल गर्नुपर्ने कुरा आउँदैन। शुरूका अभि-लेखमा वाणीविलास भर्खरका हुँदा आफ्नो नाम कुँदाउन सकेका थिएनन्। अहिले सत्र वर्ष जति पछि वाणीविलासको प्रसिद्धि निकै फैलिसकेको हुँदा उनी आफ्नो नाम अभिलेखमा कुँदाउन सक्ने स्थितिमा पुगिसकेको संकेत यताबाट पाइन्छ।

जे होस्; तात्कालिक कुरा बुझ्न यो अभिलेख निकै उपयोगी रहेको छ।

卐

[ ५६ संख्या ]

# दोलखाको रणबहादुर शाहको अभिलेख

दोलखा भीमेश्वर-भण्डारमा केही ताम्रपत्रहरू रहेका छन् । तिनमध्ये एकमा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८५० विइएको छ ।

'अभिलेख-संकलन'को ७७–७९ पृष्ठमा मोहनप्रसाद खनालद्वारा यो अभिलेख प्रकाशित भएको छ । 'दोलखाको ऐतिहासिक रूपरेखा'को १२६–१२७ पृष्ठमा पनि यो छापिएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहारा–

२. जे रणबहादूर साह बहादुर समसेर जंगदेवानाम् सदा समरविजयिनाम्. आगे सोवर्नकौसिकादेषी, पूर्व ताम्रकौसिकादेषी पश्चिम यतिभि–

३. त्र अभयपुर अस्थान दोलषाका श्री ३ भीमेश्वरकन अघि नेपालका महिन्द्र-सिंह राजाले आश्विनका दसैंकन सिम्रासको मेडपुका प्रजाले षायाको षेत तिन ३

४. षरकसमेतको कुत धान मुरी १२० चाहिन्या सराजामकन विना साधकि-ल्लाको तावापत्र गरी चह्लायाको रहेछ । आज हामिले अघीको सही थामी केही

५. जग्गा थपी साधसिमाना लाई श्री ३ भीमेश्वरका नित्य नैमित्य पूजा र अरू देवताकन अघोदेषी आश्विनका दसैंमा पूजा गऱ्याको नघटाई गुठि राष्यूं गुठिको

६. सांध पूर्व बेलबोट्या षेतमाथिको कांल्हो पिप्ल्या र सहेंल्या षेत मुरि १०० समेत दक्षिण फट्क्या षोलो पश्चिम सैलङ्को, मेडपु नाधीको पानी ढलो, उत्तर ल–

७. ट्क्या षोलो येती चार किल्लाभित्र ब्राह्मणका कुशवाहीक्को षेतको बाली पाषो षरक गाउको आम्दानी उघावनी वाज्वीकौदीको धान् र रुपैया गरी कुत

८. वाधी दियाको रुपैया तिन् सय पाँच् ३०५ येस् रुपैयाले नित्य पूजाका सरा जाम्को रुपैया चवालिस् चौध आना ४४।।।— आश्विन दसैंका पूजाके स

९. राजाम्के रुपैया येक सय चौतिस् तेह्र आना १३४।।।— चैत्र्या दसैंका पूजाको सराजामके रुपैया पवने अठ्ठाइस् २७।।। वैशाष श्रावण कार्तिक

१०. माघ येती चार महिनाका पूर्णिमासी पूजाको सराजामको रुपैया साढे उन्दईस १९।। भीम येकादसीका पूजाको सराजामके रुपैया ६ आना दस

११. ६।।= शिवरात्रि पूजाके रुपैंआ ६ आना दस् ६।।— श्रीपंचमीका पूजाके रुपैया चार आना तिन ४≡ नित्य भजन गर्नाको सराजामके रुपैया

१२. पन्ध्र आना दस् १५।।= नित्य नगरा सहनाई करनाल बजाउँन्याके बाली षर्च रुपैया पैतालिस् ४५ येति षर्चको सबै जम्मा रुपैया तिन् सय पाँ-

१३. च् ३०५ कुतबाट लाउनु बाज्वीकौडिदेषी वाहिक् दंड मोरो अपुताली चाक चकुई सबै रकम् मारी भेटी येती थोकमा पैदावार

१४. भयाका आम्दानी ज्मा गरी तेस्मा आधा देवताको भाँडा गहना देवल सतल राजाका हुकुमबजोजिम बनाउनु आध गुठियारले षा–

१५. नु गुठियार द्वाकलह्ल्̤को गुनेश्वर डोवछेको वंसनारायण क्वाट्छेको मोजन्त विहारछेको इन्द्रनारायण गाउँको मिह्लान्या र षेतको

१६. मोहीनायेक जोगीराम तामाङको सन्तानमा २ कर्म्मच्याचोको सन्तानमा २ गाउँको अमाली षेतको अघिल्लो अधिआँ बाली सध्यार्नु. देवला टहलु-वाका पजनी

१७. देवताका भाँडा गहना भेटी षजना देवल् सतल ताल्चा कुची नित्य निमित्य-का पूजा येतिथोक गुठियारको तालुक येस् गुठको र पुजाको साक्षी श्री-

१८. चन्द्र सूर्य्य गुठको आम्दानी र पुजाका सराजाम्मा जो घटावला. लोभानि पापानि गर्ला. तेसलाइ पंचमहापातक श्री ३ भीमेश्वरको कुदिष्टि गुठि–

१९. का प्रजाले हुलाकको भारी उभो भन्या फल्कु पुऱ्याउँनु उधो भन्या कर्ज्जाङ पुऱ्याउनु. बेतताको टहल गुठियारले अह्राया

२०. माफिकको गर्नु. अरु अमालिको लाग् नास्ति. ईति सम्वत् १८५० साल मिति श्रावण शुदि ५ रोज १ मोकांम कान्तिपुर राजधानि शुभम् ।।

व्याख्या–

नुवाकोट जस्तै भोट जाने बाटोमा परेको एक पुरानो बस्ती दोलखा हो। भोटको डिगर्चाभिकमा जाँदा दोलखाभिकबाट जानु पाइक पर्दथ्यो।[१] तामाकोशी र सुनकोशीको बीचको यो प्रदेशको अर्को नाम "अभयपुर" भन्ने पनि पछि रहेको थियो।[२] दोलखा व्यापारको केन्द्र बनेको र व्यापारीहरूले पुज्ने देवतामा हाम्रो यहाँ "भीमसेन"को उल्लेखनीय स्थान रहेको हुँदा दोलखामा भीमसेनको स्थापना निकै अघि भएथ्यो। दोलखाका भीमसेन साक्षात् छन् भन्ने प्रख्याति फैलिएको हुँदा यहाँका भीमेश्वरको दर्शन पूजनको लागि टाढा टाढाबाट पनि भक्तजन आउँथे; आउँदै पनि छन्।[३]

नेपाल चीन युद्धपछि नुवाकोटकी भैरवीको पूजाआजाको लागि गुठी राखिदिए जस्तै त्यसको लगत्तैपछि दोलखाका भीमसेनको लागि पनि गुठीको बन्दोबस्त गरी यो ताम्रपत्र गरिदिइएको हो भन्ने देखिन्छ। दोलखाका भीमसेनको नित्य, नैमित्तिक पूजाको लागि उहिले कान्तिपुरका मल्ल राजा महीन्द्रसिंहले पनि जग्गा गुठी राखिदिएका थिए; त्यसमा केही जग्गा थपी त्यसको चार किल्ला खुलाई वि.सं. १८५० श्रावणमा यो ताम्रपत्र गरिदिइएको हो।

यस अभिलेखमा भीमेश्वरको नित्यपूजा र नैमित्तिक पूजाको लागि रकम छुट्याइएको छ। यसबाट भीमेश्वरस्थानमा गरिने मुख्य मुख्य दिनका विशेष पूजाबारे केही कुरा थाहा पाइन्छ। नैमित्तिक पूजामध्ये दसैंको पूजाको लागि सबभन्दा बढी रकम छुट्याइएको छ।

---

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ९८

२. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ११७, १२०, १२४, १९६

३. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ६,

यसबाट दोलखामा दसैं विशेष रूपमा मनाइन्छ भन्ने संकेत पाइन्छ । हुन पनि दोलखामा काठमाडौं-उपत्यकामा प्रचलित धेरैजसा चाडपर्वहरू मनाइन्छन् तापनि दसैं सबभन्दा बढी उल्लास साथ मनाइन्छ ।[४] दसैंका विधिविधान सम्पन्न गरिने स्थलमध्ये भीमेश्वर स्थानको प्रमुखता रहेको छ । दसैं बाहेक भीमएकादशी पनि दोलखामा राम्ररी मनाइन्छ । यो दिन मेला नै लाग्छ । यसो हुँदा यस अभिलेखमा त्यस दिन गरिने भीमसेनको पूजाको लागि पनि रकम छुट्याइएको छ । यसै गरी शिवरात्रि, श्रीपञ्चमी, वैशाख श्रावण कार्तिक माघ महीनाका पूर्णिमाका दिनका पूजाको लागि पनि रकम छुट्याइएको छ ।

दोलखा भीमेश्वरस्थानमा साँझ बिहान नित्य भजन गरिन्छ । नित्य पूजामा नगरा सहनाई आदि बाजा बजाइन्छन् । यस सांस्कृतिक क्रियाकलाप साबिकबमोजिम चलिरहून् भनी यस अभिलेखमा भजनको लागि र बाजा बजाउनाको लागि पनि रकम छुट्याइएको छ ।

गुठी राखिएको रकममध्ये केहीले देवल, सतल आदिको जीर्णोद्धार गर्ने, केहीले देवता-लाई गहना बनाई चढाउने उल्लेख पनि यस अभिलेखमा परेको छ । सांस्कृतिक परम्पराको रक्षा गर्ने गुठी प्रथाको यो उल्लेखनीय पक्ष हो ।

अघिदेखि प्रचलित धार्मिक, सांस्कृतिक परम्पराको संरक्षण र संवर्द्धन गर्नामा शाह राजा-हरू अत्यन्त उदार थिए । यस कुराको पुष्टि गर्ने अनेक उदाहरण पाइन्छन् । दोलखाका प्रसिद्ध भीमसेनको नित्य, नैमित्तिक पूजा चलाउन र अरू सांस्कृतिक पक्षको संरक्षणको लागि श्री ५ रणबहादुर शाहले गरिबिइएको यस ताम्रपत्रले पनि उक्त कुराको पुष्टि गर्छ ।



४. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ७१–७२

[ ५७ संख्या ]

# गोरखाको अभिलेख

गोरखा-दरबारमा रहेका एक थालमा यो अभिलेख कुँदिएको छ। 'गोरखाको ऐतिहासिक सामग्री'को २२ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा यो प्रकाशित भएको छ।

## मूलपाठ

१. सम्वत् १८५० साल मार्गसिर वदि १२ रोज ६ यो थलिया दर्बारको हो. कसैले लोभानि गऱ्या पंचमहापतक. मार्फत कपर्दार भोटू पाँडे ॥६६

व्याख्या–

भोटु पाँडे कपर्दार भएको बेला वि.सं. १८५०मा थाल बनाई यो सानो अभिलेख कुँदून लाइएको हो। गोरखा-दरबारमा यस्ता अभिलेख युक्त भाँडाकुँडाहरू अनेक रहेका छन्। तिनमा कपर्दार भोटु पाँडेको कार्यकालमा बनाइएका भाँडाकुँडा पनि धेरै छन्।

यो सानो अभिलेखले पनि गोरखा-दरबारमा आएको परिवर्तनको एक झलक देखाउने हुनाले यसलाई यस संकलनमा समावेश गरिएको हो। श्री ५ पृथ्वीनारायण शाहको राज्यकालको उत्तरार्धमा कपर्दार पद कालु खड्काले पाएका थिए। उनले आफ्नो योग्यताले पृथ्वीनारायण शाहलाई रिझाएका हुनाले कालु खड्काको सन्तानलाई कपर्दारी नछुटाउनू भनी पृथ्वीनारायण शाहले आफ्नो उपदेशमा बोलेका छन्।[1] तदनुसार कालु खड्कापछि उनका छोरा राघवसिं

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ.३२५

खड्काले कपर्दारी पाएका पनि थिए। वि.सं. १८४४ सम्म राघवंसि खड्का नै कपर्दार थिए भन्ने कुरा माथि गएको अभिलेखबाट थाहा पाइन्छ। तर पछि कालु खड्काका सन्तानबाट कपर्दारी झिकी भोटु पाँडेलाई "कपर्दारी" पद दिइएछ भन्ने कुरा यस अभिलेखबाट र अरू अभिलेखबाट पनि थाहा पाइन्छ। भोटु पाँडे तुलाराम पाँडेका छोरा हुन्। यसो हुँदा भोटु पाँडे-हरू पनि गोरखा-दरबारका भरपर्दा व्यक्तिहरूमा पर्दथे। आफ्नो योग्यताद्वारा तथा राजभक्ति-द्वारा भोटु पाँडेले पनि शाह राजाहरूलाई रिझाएका थिए। यसो हुँदा भोटु पाँडे कपर्दारी पदका लागि योग्य व्यक्ति थिए। योग्य व्यक्ति उचित पदमा पुग्नु राम्रै परम्परा मानिन्छ। जे होस्; कालु खड्काका सन्तानले केही काल कपर्दारी पद पाउन नसकेको कुरा भने उपर्युक्त उदाहरणबाट देखिन आएको छ। यसबाट श्री ५ पृथ्वीनारायण शाहको उपदेशप्रति अलि उपेक्षा हुन थालेको कुरा प्रकारान्तरले देखिन आएको छ।

卐

[ ५८ संख्या ]

# पलाञ्चोक-भगवतीको अभिलेख

पलाञ्चोक भगवतीको मन्दिरको ढोकामा यो अभिलेख कुँदिएको छ। 'पुरातत्व-पत्र-संग्रह' पहिलो भागको ४७ पृष्ठमा शङ्करमान राजवंशीद्वारा यो अभिलेख छापिएको छ। यहाँ शकसंवत् १७१६ (वि.सं. १७५१) दिइएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीशाके १७१६ वैशाख सुदि चण्डिपूर्णिमा व्रिस्पतीवारका दीनमा श्रीश्रीश्रीभगवतीमाइका चरनतल अग्रमा पित्तलकोटाका द्वार बनाइकन कासिराम थापा कुसुमावतीका पुत्र युधिष्ठिर थापा स्वपत्नि सरस्वति

२. सहीत पुत्र श्रीश्रीलोचन थापा श्रीवैलोचन थापा श्रीगभीरसिं थापा श्रीभगवतसीं थापा पौत्र श्रीसासासीं थापा श्रीनाहान्सींह थापासहीत भैकन चह्रायाको द्वारा हो. नष्ट भ्रष्ट गर्न्याकन पंचपातक चह्राउन्याकन चार फल पावला. शुभम्।

व्याख्या–

नेपालका शाक्त सम्प्रदायका देवस्थलमा पलाञ्चोक भगवतीस्थलको प्रमुख स्थान रहेको छ। लिच्छविकालमै यो स्थल प्रसिद्ध भइसकेको थियो भन्ने कुरा यहाँको लिच्छविकालको अभिलेखले देखाउँछ।[१] मध्यकालको पूर्वार्द्धमा यसको धार्मिकबाहेक राजनैतिक दृष्टिले पनि महत्त्व

१. 'लिच्छविकालका अभिलेख' पृ. ६७, ७०

बढ्यो । यो एक "राजदुर्ग"को रूपमा पनि रह्यो ।[२] पलाञ्चोकको धार्मिक महत्त्व चाहिँ अहिलेसम्म कायमै छ ।

काशीराम थापाको परिवारले पित्तलको द्वार बनाई यो अभिलेख कुँदाएको हो । यी काशीराम थापा कान्तिपुरका अन्तिम मल्ल राजा जयप्रकाशका प्रख्यात उमरा काशीराम थापा नै हुन् कि भन्ने अनुमान हुन्छ । नुवाकोट युद्धसँग सम्बद्ध उक्त काशीराम थापा पलाञ्चोक भेकका थिए ।[३] यदि यो कुरा सत्य हो भने शाहकालमा काशीराम थापाका सन्तानहरूले यहाँ स्वतन्त्रतापूर्वक रहने अवसर पाएको यसबाट झल्किन्छ । यसै कारण यस अभिलेखलाई यस संकलनमा स्थान दिइएको हो ।



२. 'पूर्णिमा' ७ पूर्णाङ्क पृ. ३४

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ७५६

[ ५६ संख्या ]

## हनूमान्ढोकाको रणबहादुर शाहको अभिलेख

हनूमान्ढोका, श्वेतभैरवको घाँटीमा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८५२ दिइएको छ ।

'त्रिरत्नसौन्दर्यगाथा'को १४८ पृष्ठमा धनवज्र वज्राचार्यद्वारा यो अभिलेख प्रकाशित भएको छ । 'हनूमान्ढोका राजदरबार'को २६४ पृष्ठमा पनि यो छापिएको छ ।

### मूलपाठ

१. स्वस्ति श्रीसम्वत् १८५२ साल भाद्रशुक्लपक्षे द्वादश्यां तिथौ शुक्रवासरे धनिष्ठानक्षत्रे धृतियोगे एतस्मिन्दिने श्रीभैरवमूर्तिनिर्माणपूर्वकप्रतिष्ठा विहिता श्रीरणबहादूरभट्टारकेनेति श्रीशाके १७१७ शुभम् ॥

### अनुवाद

वि.सं. १८५२ शकसंवत् १७१७ भाद्र शुक्ल द्वादशी शुक्रवार धनिष्ठा नक्षत्र धृतियोगका दिन श्रीरणबहादुर शाहदेवले भैरवमूर्ति बनाउन लाईकन प्रतिष्ठा गर्नु भयो ।

व्याख्या–

वि.सं. १८५१ वैशाखमा राजा रणबहादुर शाहले आफैं राज्य चलाउने इच्छा प्रकट गरे ।[१] यसभन्दा अगाडि राजकुमार बहादुर शाहले राजप्रतिनिधि भई शासन चलाएका

१. चित्तरञ्जन नेपाली 'श्री ५ रणबहादुर शाह' पृ. १८

थिए ।[२] १८ वर्ष नाघेका समर्थ हुन लागेका राजा रणबहादुर शाहले स्वयं राज्य चलाउने इच्छा प्रकट गरेपछि राजकुमार बहादुर शाहले राज्यको बागडोर श्री ५ रणबहादुर शाहलाई सुरुक्क सुम्पिदिए । चीनयुद्धपछि नै राजकुमार बहादुर शाहको प्रतिष्ठा घट्न लागेको थियो। यसो हुँदा सत्ताबाट हट्नुसिवाय राजकुमार बहादुर शाहलाई अर्को बाटो पनि थिएन ।

शासनभार स्वयं बोक्नुपर्दा राजा रणबहादुर शाहको शरीरमा त्यसले केही असर पारेको देखिएको छ । वि.सं. १८५२ को शुरूदेखि नै रणबहादुर शाह बिरामी हुन लागेका थिए । यो कुरा तात्कालिक पत्रबाट थाहा पाइन्छ ।[३] वि.सं. १८५२ को आमदानी खर्च टिपेको एक कागतमा राजा रणबहादुर शाहको औषधोपचारको कुरा टिपिएको छ । ल्हासामा रहेका चीनिया अम्बाले लेखेको पत्रमा पनि "उप्रान्त अस्तिदेखि आफु वाङको विसन्च वात वेथाको घुंडा बहुतै दुषतछ भन्या सुन्यौ आजसंम संच विसंच भयाको केही थाहा पाइन. निको भयो भयेन" भन्ने उल्लेख परेको छ ।[४] यसरी वि.सं. १८५२ को शुरूदेखि केही महीनासम्म रण-बहादुर शाहलाई बिसंचो भएथ्यो । विशेष गरी आमवातले उनलाई सताएथ्यो ।

भूतप्रेतको लागोभागोबाट पनि रोग लाग्छ भन्ने लोकधारणा त्यस बेलासम्म थियो । त्यसैले रोगशान्तिको लागि औषधोपचारको लागि देवदेवीहरूको पूजाआजा पनि त्यस बेला गरिन्थ्यो । राजा रणबहादुर शाहले वि.सं. १८५२को इन्द्रयात्राको अवसरमा विशाल श्वेतभैरवको यस मूर्ति स्थापनामा रोग शान्तिको कामना पनि एक कारण रहेको थियो भन्ने देखिएको छ । तात्कालिक पण्डित सुन्दरानन्द बाँडाले "त्रिरत्नसौन्दर्यगाथा"मा यस श्वेत भैरवको निर्माणको हेतु इन्द्रजात्राको शोभा बढाउनुको साथै रोगशान्तिको उद्देश्यले पनि यस भैरवमूर्तिको स्थापना गरिएको हो भन्ने कुराको चर्चा गरेका छन् ।[५]

हुन पनि हनूमान्ढोका देगुतलेको मन्दिरको तल्लो भागमा रहेको यस विशाल श्वेत-भैरवको मूर्तिले इन्द्रजात्राको शोभा पनि बढाइरहेको छ । ठूलो आँखिझ्यालभित्र रहेको यी श्वेतभैरवको मूर्ति इन्द्रजात्राको वेलामा मात्र खुलाएर राखिन्छ ।[६] रणबहादुर शाहले बनाउन

---

२. तोत्रराज पाण्डे र नयराज पन्त 'नेपालको संक्षिप्त इतिहास' पृ. १२६

३. शङ्करमान राजवंशी, 'वि.सं. १८५२को एउटा ऐतिहासिक कागत' पूर्णिमा १८ पूर्णाङ्क, संशोधन-मण्डल, पृ. १३१–२३२

४. चित्तरञ्जन नेपाली 'श्री ५ रणबहादुर शाह' पृ. १०९–१११

५. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १४७–१४८

६. गौतमवज्र वज्राचार्य 'हनूमान्ढोका–राजदरबार' पृ. ६१–६२

लाएको धातुनिर्मित श्वेतभैरवको यो मूर्ति इन्द्रजात्राको वेलामा प्रदर्शन गरिने अरू भैरवमूर्तिहरूमा सबभन्दा ठूलो र आकर्षक छ । एक तात्कालिक टिपोटमा "ठूलो भैरव ढालदा सुन किनाकन कपर्दार भोटु पांडेले लैगयाको महिन्द्रमलि रुपैया चार हजार डेढ रूपैया" भन्ने उल्लेख परेको छ ।[७] यसरी सुनको मोलम्बा लाउन मात्र पनि चार हजार जति उहिले लागेको स्पष्ट छ । उहिलेको चार हजार अहिलेको ४ लाखभन्दा निकै बढी हुन आउँछ ।

यसरी यस सानो अभिलेखबाट पनि तात्कालिक अवस्थाको अलिकता झलक हामी पाउँछौं ।



७. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १४८

[ ६० संख्या ]

# मान्खुको लक्ष्मीपति पाँडेको अभिलेख

काठमाडौंबाट ८ कोस जति पश्चिममा धाविङ जिल्लामा मान्खु पर्दछ। त्यहाँ रहेको एक पाटीमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यहाँ शकसंवत् १७१७ (वि.सं. १८५२) दिइएको छ।

'पूर्णिमा' १८ पूर्णाङ्कको १४७ पृष्ठमा दिनेशराज पन्तद्वारा यो अभिलेख सानुवाद छापिएको छ।

## मूलपाठ

श्रीनित्याक्षरसच्चिदद्वयपरानन्दार्पितात्मा कृतिः
कृष्णानन्द इलासुरोऽखिलगुणस्तज्जस्तदादेशतः।
शैलेलाब्दमिते शके क्षयकृदि व्वर्षेऽनुमत्या तपो-
मास्यर्केहनि पुण्यपस्त्यमकरोद् दैवज्ञलक्ष्मीपतिः ॥१॥

भरद्वाजगोत्र-भारद्वाजांगिरसबार्हस्पत्येतित्रिप्रवरान्वितमाध्यन्दिनीशाखि-पाण्डेयोपनामकदैवज्ञवर्य्यश्रीमत्कृष्णानन्दशर्मात्मज-दैवज्ञशिरोमणिश्रीमल्ल-क्ष्मीपतिशर्मा श्रमापन्नाध्वगानां विश्रामाय स्वपित्राज्ञया सात्रपुण्यपस्त्यम-करोदिति ॥२॥

सन्तः स्मृत्युक्तितोसन्तो नृपभीत्या निकेतनम्
रक्षन्त्येव तथापीति विज्ञप्तिर्मम रक्षताम् ॥३॥
शुभं भवतु पद्यं बुध्वा तदनुशारिणाम् ॥ ॥

## अनुवाद

नित्य अविकारी सत् चित् अद्वितीय आनन्दरूप परब्रह्ममा मन लाउनुभएका, विद्वान्, गुणी ब्राह्मण कृष्णानन्द हुनुहुन्छ । उहाँका छोरा ज्योतिषी लक्ष्मीपतिले उहाँको आज्ञाले शाके १७१७ (वि.सं. १८५२)मा, क्षय नाम भएको संवत्सरमा, माघ महीनामा, सूर्यको वार तथा तिथि ( आदित्य वार तथा सप्तमी तिथि)मा पौवा बनाए ।

भारद्वाज गोत्रमा जन्मेका भारद्वाज आङ्गिरस बार्हस्पत्य तीन प्रवर भएका माध्यन्दिनी शाखाका पाँडे थर भएका, असल ज्योतिषी श्रीकृष्णानन्द शर्माका छोरा दैवज्ञशिरोमणि श्रीलक्ष्मीपति शर्माले थाकेका बटुवाहरूको विश्रामको लागि आफ्ना बाबुको आज्ञाले पौवा बनाए ।

यो पौवालाई सज्जनहरूले धर्मशास्त्रको भनाइबाट र दुर्जनहरूले राजाको डरबाट रक्षा गर्नेछन् तापनि सबै जनाले यो रक्षा गर्नु होला भन्ने मेरो प्रार्थना छ ।

पद्यलाई बुझेर त्यसअनुसार गर्नेको भलो होओस् ।

**व्याख्या–**

लक्ष्मीपति पाँडे एकातिर सफल ज्योतिषी थिए भने अर्कोतिर राजनीतिज्ञ पनि थिए । "मेरी साँध" लाग्ने उनको भविष्यवाणी निकै मात्रामा सिद्ध भएको हुँदा उनले असल ज्योतिषीका रूपमा एकातिर ख्याति मान पाउँदै गए भने अर्कोतिर "खरिदार"का रूपमा उनले प्रशासनमा पनि सफलता पाउँदै गए ।[१] साथै उनी सफल राजदूत पनि बने । वि.सं. १८४४मा कुमाउँसँग सन्धि गराउनामा लक्ष्मीपति पाँडेको विशेष हात रहेको थियो ।[२] राजदरबारमा पनि प्रायः सबै पक्षको सहानुभूति पाउन उनी सफल थिए । राजकुमार बहादुर शाहको कार्यकालमा उनी शासकवर्गका विश्वासपात्र बनेका थिए भने श्री ५ रणबहादुर शाहले आफैं राजकाज सम्हालेपछि पनि उनी विश्वासपात्र नै बनेका देखिन्छन् । "दैवज्ञशिरोमणि" जस्तो

---

१. दिनेशराज पन्त 'दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे' पूर्णिमा ८ पूर्णाङ्क, पृ. ३६–४१

२. दिनेशराज पन्त 'दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे' पूर्णिमा ६ पूर्णाङ्क, पृ. ४१

सम्मानजनक पदवी लक्ष्मीपतिले श्री ५ रणबहादुर शाहबाट पाएका हुन् ।[३] साथै लक्ष्मीपति पाँडे ''वैज्ञानिक'' रूपका विद्वान् थिए भन्ने चर्चा पहिले गरिसकेको छ ।[४]

लक्ष्मीपतिले गरेका धार्मिक कृत्यहरूको विचार गर्दा पनि उनी अलि भिन्न प्रकृतिका देखिएका छन् । पशुपति, गुह्येश्वरी आदि प्रसिद्ध तीर्थस्थलमा शिवलिङ्ग पाटी पौवा आदि बनाउनतिर नलागी मान्खुमा शिवलिङ्ग, धारा, पाटी-पौवा आदि बनाउन उनी पुगेका छन् । मान्खुतिर लक्ष्मीपतिको जग्गा जमीन प्रशस्त थियो। यसो हुँदा आफूले गरेको धार्मिक कृत्यले त्यहाँका बासिन्दालाई केही सुबिधा होस् भनी लक्ष्मीपतिले चिताएको देखिन्छ ।[५]

मान्खुमा धारा पाटी पौवा आदि बनाउनामा लक्ष्मीपतिका बाबु कृष्णानन्द पाँडेको पनि निर्देशन रहेको बुझिन्छ । लक्ष्मीपतिलाई अगाडि बढाउनामा कृष्णानन्द पाँडेको पनि निकै हात रहेको थियो । कृष्णानन्दले पनि राजदरबारमा निकै प्रतिष्ठा कमाएका थिए । छोरा-हरू उपर निगाह होस् भनी कृष्णानन्दले काशीबाट विन्तिपत्र चढाएकोमा सरकारतर्फबाट "तिम्रा छोरा थरघरका सरहले हाम्रा पीछा छन् बाहिङा बाभनका सरहमा जावैनन्. आनन्दसँग श्रीकाशीवास गरी हाम्रो जय मनाउ" भन्ने आश्वासन दिइएको थियो ।[६] यसबाट लक्ष्मीपतिले पाएको सम्मानको पनि झलक पाइन्छ। पाँडे, पन्थ, अर्ज्याल, खनाल, राना, बोहरा यीर्ह थरीलाई गोरखा-दरबारमा "थरघर" भनी अघिदेखि सम्मान दिइएको थियो। लक्ष्मीपति पाँडे ती थरघरमा पर्दैनथे तापनि तीसरह व्यवहार गरिएको थियो भन्ने कुरा माथि उद्धृत वाक्यले दर्शाउँछ ।



३. 'दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे' पूर्णिमा ९ पूर्णाङ्क पृ. ४६

४. वि.सं. १८४७ मा धूपघडी बनाई कुँदिएको अभिलेखको व्याख्यामा माथि यस कुराको चर्चा गरिएको छ ।

५. दिनेशराज पन्त, 'दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे' पूर्णिमा १८ पूर्णाङ्क, पृ. १४२–१४३

६. 'दैवज्ञशिरोमणि लक्ष्मीपति पाँडे' पूर्णिमा ७ पूर्णाङ्क, पृ. ६४

[ ६१ संख्या ]

# नुवाकोटको दामोदर पाँडेको अभिलेख

नुवाकोट भैरवमन्दिरमा केही घण्टाहरू भुण्ड्याइएका छन्। तीमध्ये बायाँतिरको घण्टामा यो अभिलेख कुँदिएको छ। अभिलेख अलि अशुद्ध रूपमा ढालिएको छ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा' को सामग्रीखण्डको ४२ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख प्रकाशित भएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीसाके १७०८ माले ७ दीन ४ ता ख वार रत ३ पत्रे ४ तद्दिन श्रीमुलुकी देवान दामोदर पाँडेले श्रीभैरवप्रीती यो घंट चह्राया. इति सम्वत् १८५३ शुभम्। इश्वरीसाहाय शुभ

व्याख्या—

श्री ५ पृथ्वीनारायण शाहका दाहिने हात जस्ता प्रसिद्ध काजी कालु पाँडेका कान्छा छोरा दामोदर पाँडे आफ्नो वीरता, दृढता आदि गुणले गर्दा नेपालको आधुनिक कालको इतिहासमा प्रसिद्ध छन्। कीर्तिपुरको पहिलो लडाईंमा वि.सं. १८१४मा बाबु कालु पाँडे मर्दा दामोदर पाँडे गर्भमै थिए। यसो हुँदा बाबुको साक्षात्कार उनले गर्न पाएनन्। तर पृथ्वीनारायण शाहको देखरेखमा हुर्कने अवसर पाएका हुँदा दामोदर पाँडे योग्य लडाका भई निस्के। राजकुमार बहादुर शाहको कार्यकालमा दामोदर पाँडेले आफ्नो योग्यता देखाएथे। विशेष गरेर भोट-संगको लडाईंमा र चीनसंगको लडाईंमा दामोदर पाँडेले वीरता, युद्धकौशल देखाई प्रतिष्ठा

कमाएथे ।[१] त्यस वेला दामोदर पाँडेको प्रतिष्ठा कति थियो भन्ने कुरा चीनसँग युद्ध थामी सन्धि हुन लागेको वेलामा नेपाल सरकारले दामोदर पाँडेलाई लेखेको पत्रबाट स्पष्ट झल्किन्छ ।[२] विचारार्थ त्यस पत्रको एक अंश यहाँ उद्धृत गरिन्छ—

"......चिन वादसाह भन्याको सानो होइन. ठुलो वादसाह हो. एस्पाला आयाको श्रीईश्वरिका मेहरले काढिकन धपाउँ भन्या पनि सकिन्या थियो. तर उसले पनि घाइ गर्न आँट्यो. हामिले पनि घाई गर्न आँट्युँ......तनहुँ लम्जुङ्मा पनि घा गर्न काजिहरू जाँदै थिया. आज वादसाहछेउ काजि नपठाइ पुग्दैन. यो हाम्रा चित्तले पनि देष्यो. जाहा अरू काजिहरूलाई भंदा जेठो काजि बिर्ता पाउन्या दाम्धर पाँडे जाला भन्या. तसर्थ तैंले जान पर्‍यो. ढिल गर्‍या ढुङ्गाको बिरिन्याछ. तैंले तेतैंबाट हिड्नुपर्ला. अह्राउनका अर्थलाई हाम्रा दर्बारको पाँडे होस्. ढुङ्गाको सम्रन्या तलाई जस हुन्या तं नजान्या केहि छैनस्. जान्यैछस्."

यसबाट दामोदर पाँडेको व्यक्तित्व र प्रतिष्ठाको झलक पाइन्छ । दामोदर पाँडेको अन्त्य नराम्रोसँग भयो[३] तापनि सिद्धान्तमा दृढ रहने उनको व्यक्तित्व त्यताबाट पनि झल्किन्छ ।

दामोदर पाँडेलाई संझाउने उनका कीर्तिहरू अलि कम पाइन्छन् । यसो हुनाले दामोदर पाँडेले नुवाकोट भैरवीलाई घण्टा चढाई कुँदाइएको यो सानो अभिलेख भए पनि यहाँ समावेश गरिएको हो । ढाल्नेको असावधानीले यो सानो अभिलेख अशुद्ध रहेको छ । मिति नै शाकेमा एक थोक विक्रममा अर्को थोक कुँदिएको छ । त्यसो भए तापनि यस अभिलेखले अलिकता मात्र भए पनि दामोदर पाँडेको संझना दिलाई नै रहनेछ ।

卐

१. 'जयरत्नाकर नाटक' पृ. १३३
'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. ६४–६५, ७१–७२

२. नयराज पन्त, 'राज्ञा रणबहादुरेण मन्त्रिणे दामोदराय प्रहितं पत्रम्' 'संस्कृत सन्देश' वर्ष १, अङ्क ५, पृ. ४०–४१

३. 'नेपालको संक्षिप्त इतिहास' १३९–१४०

[ ६२ संख्या ]

# काठमाडौं ठूलो घण्टाको रणबहादुर शाहको अभिलेख

'इतिहास-प्रकाश' १ अंकको ६४ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख प्रकाशित भएको छ। 'त्रिरत्नसौन्दर्यगाथा'को २८१–८२ पृष्ठमा र 'हनूमान्ढोका राजदरबार'को २६४ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

श्रीजगज्जनन्यै नमः ॥

ब्रह्मेन्द्रादिसुपर्व्वमौलिविगलन्मन्दारमाल्योत्कर–
प्रोद्यत्सान्द्रपरागरागविलसत्पादारविन्दद्वया ।
भक्तश्रेणिभवाब्धिसाध्वसतमप्रध्वंसहंसप्रभा
श्रीमद्भूधरसार्वभौमतनया काचिच्चिरं पातु वः ॥१॥
श्रीशाके निधिमेदिनीघनमिते मासि प्रशस्ते शुचौ
भास्वत्सूनुतिथौ शशाङ्कदिवसे पक्षे वलक्षे शुभे ।
नक्षत्रेऽनिलदैवते सुविहिते सत्सिद्धियोगे गुरौ
मीनस्थे मिथुनस्थिते प्रणमतां श्रेयस्करे भास्करे ॥२॥
श्रीमन्मन्मथशासनप्रणयिनीपादारविन्दद्वय–
ध्यानाप्तानुपमप्रमोदजलधिर्भू देवकल्पद्रुमः ।
प्रत्यर्थिक्षितिपालवृन्दविपिनोन्मीलत्प्रतापानलः
श्रीमानेष विराजते रणबहादूरः क्षितीन्द्रो भुवि ॥३॥

यस्य क्षोणिपतेः सुधांशुकिरणश्रीहारिकीर्त्तेरियं
धर्म्मज्ञा सहधर्म्मिणी विजयते श्रीराजराजेश्वरी ।
भव्या यस्य च भोगिनी विलसति ज्येष्ठा सुवर्णप्रभा
श्रीमत्कान्तवती विभाति सुकृतोत्कृष्टा कनिष्ठाऽपरा ।।४।।
तेनोर्व्वीरमरणेन विश्वजननीश्रीपादपद्मोल्लस–
त्स्वच्छान्तःकरणालिना गुणगणागारेण पुण्यात्मना ।
भूलोकाद्भुतनिर्म्मितिः पृथुरियं गर्ज्जत्पयोदध्वनिः
श्रीदेव्यै चिरमर्प्पिता सुघटिता घण्टास्तु तत्प्रीतये ।।५।।

शुभमस्तु ।।

## अनुवाद

परमेश्वरीलाई नमस्कार । ब्रह्मा इन्द्र आदि देवताका मुकुटबाट खसेका कल्पवृक्षका फूलका मालाहरूबाट झरेका बाक्ला धूलोका रजले छुवँ चरणकमल सुहाएकी, भक्तहरूका भवसागरको भयरूपी अन्धकार हटाउनमा सूर्य जस्तैं तेज भएकी, यस्तैं भनी ठम्याउन नसकिएकी श्रीपार्वतीले धैरै कालसम्म यहाँहरूलाई रक्षा गरून् ।

शकसंवत् १७१९ ( वि.सं. १८५४ ) आषाढ शुक्ल दशमी सोमवार स्वातिनक्षत्र सिद्धियोगमा बृहस्पति मीनराशिमा बसेमा सूर्य मिथुनराशिमा बसेमा ।

श्रीभवानीका चरणकमलको ध्यानले बेजोड आनन्द पाएका, ब्राह्मणका कल्पवृक्षजस्ता (दानी), शत्रुराजारूपी वन उडाउनमा डँढेलो जस्तो प्रताप भएका श्रीरणबहादुर शाह संसारमा सुहाइरहनुभएको छ ।

जून जस्तो सफा कीर्ति फैलिएका जुन महाराज (रणबहादुर शाह)का धर्मात्मा बडामहारानी राजराजेश्वरी हुनुहुन्छ । जसकी जेठी रानी सुवर्णप्रभा हुनुहुन्छ । भाग्यले गर्दा मान बढेकी अर्की कान्छी रानी कान्तवती हुनुहुन्छ । जगज्जननी श्रीदुर्गाका पाउका भक्त, गुणी धर्मात्मा ती महाराज (रणबहादुर शाह)ले पृथ्वीतलको अद्‌भुत निर्माण भएको गर्जंदो बादलको जस्तो आवाज गर्ने रा‍ज्रोसँग बनाइएको यो घण्टा देवीलाई चढाउनुभयो । यो घण्टा

धेरै कालसम्म देवीलाई प्रसन्न पारी रहिरहोस् ।

कल्याण होस् ।

व्याख्या–

देवदेवीलाई प्रसन्न पार्न भक्तजनले घण्टा चढाउने चलन हाम्रो यहाँ निकै प्रचलित छ । लिच्छविकालमा यसरी घण्टा चढाइएको उदाहरण पाइएको छैन । मध्यकालको उत्तरार्द्धदेखि घण्टा चढाउने चलन बढी चलेको देखापरेको छ । यस बेला घण्टा चढाउनु ठूलो पुण्यको काम भनी यसको महिमा गाइएको पाइन्छ ।[1] यसो हुँदा नेपालका प्रसिद्ध देवमन्दिरमा भक्तजनले चढाइएका ठूला साना घण्टाहरू हामी प्रशस्त पाउँछौं ।

यसै परम्परामा राजा रणबहादुर शाहले काठमाडौंकी वेगुतले देवीलाई घण्टा चढाई यो अभिलेख कुँद्न लाएका हुन् । जे काम गरे पनि ठूलै रूपमा गर्नुपर्ने रणबहादुर शाहको स्वभावअनुसार यो घण्टा विशाल रूपमा बनाइएको छ । ललितपुर, भक्तपुर, कान्तिपुरका अहिलेसम्म देखिएका ठूला घण्टाहरूमा रणबहादुर शाहले बनाउन लाएको यो घण्टा सबभन्दा ठूलो छ ।[2] ललितपुरका घण्टाहरूमा सबभन्दा ठूलो घण्टा विष्णुमल्लले वि.सं. १७९३ मा बनाउन लाएका हुन् ।[3] वि.सं. १७८३ मै रणजित् मल्लले बनाउन लाएको घण्टा भक्तपुरका घण्टामध्ये सबभन्दा ठूलो देखिएको छ ।[4] तर,ती दुइ ठूला घन्टाभन्दा पनि रणबहादुर शाहले वि.सं. १८५४ आषाढमा बनाउन लाएको यो घण्टा निकै ठूलो रहेको छ । यसै हुँदा यस अभिलेखमा "भूलोकाद्भुतनिर्म्मिति" भनेर यस कुरालाई लक्ष्य गरिएको छ । रणबहादुर शाहले

---

१. उदाहरणार्थ भक्तपुरका राजा रणजित् मल्लको दोलखाको अभिलेखलाई देखाउन सकिन्छ । त्यसमा घण्टा चढ़ाउनुको महिमा यसरी गाइएको छ–

"कोटयश्वमेधयज्ञस्य, राजसूयशतस्य च ।
कन्यादानसहस्रस्य फलं घण्टप्रदो लभेत् ।।"

'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. १२३

२. 'नेपालको संक्षिप्त इतिहास' पृ. १२८

३. 'इतिहास–संशोधनको प्रमाणप्रमेय' पृ. १९५

४. 'इतिहास–संशोधनको प्रमाणप्रमेय' पृ. १९५

दुइ वर्षअघि श्वेतभैरव बनाउन लाउँदा पनि सबभन्दा ठूलो हुने गरी बनाउन लाएका थिए ।[५]
यसबाट हामी रणबहादुर शाहको स्वभावको एक झलक पाउँछौं ।

यस अभिलेखमा रणबहादुर शाहले आफ्ना महारानीहरूको पनि गुणगान गर्न लाएका छन् । यस वर्णनबाट राजराजेश्वरी रणबहादुर शाहका बडामहारानी, सुवर्णप्रभा र कान्तवती महारानी हुन् भन्ने थाहा पाइन्छ । कान्तवतीलाई विधिवत् महारानी घोषित गर्ने उद्देश्यले यस अभिलेखमा महारानीहरूको वर्णन समावेश गराइएको बुझिन्छ । त्यस बेलाको सामाजिक धारणाअनुसार कान्तवतीले रणबहादुर शाहकी महारानी घोषित हुन पाउनु असामान्य कुरो थियो । यसो हुँदा यस अभिलेखका रचयिताले कान्तवतीको वर्णन गर्दा 'सुकृतोत्कृष्टा' (भाग्यले गर्दा मान बढेकी) भनेर उक्त कुरालाई लक्ष्य गरेका छन् ।

यसरी तात्कालिक अलिकता कुरा बुझ्न यो अभिलेख पनि उपयोगी नै छ ।



५. यसको अभिलेख माथि गइसकेको छ ।

[ ६३ संख्या ]

# गोरखाको अभिलेख

गोरखा-दरबारमा रहेको थालमा यो अभिलेख कुँदिएको छ। 'गोरखाको ऐतिहासिक सामग्री'को २२ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा यो अभिलेख प्रकाशित भएको छ।

## मूलपाठ

१. संवत् १८५४ भाद्र सुदि ९ यो थलिया गोर्षादरवारमा कन्याभोजनको हो. कसैले लोभ गऱ्या पंचमहापतक. मार्फत कपर्दार भोटु पांडे.

卐

[ ६४ संख्या ]

# गोरखाको अभिलेख

गोरखा-दरबारमा रहेको कोपरामा यो अभिलेख कुँदिएको छ। 'गोरखाको ऐतिहासिक सामग्री'को २२ पृष्ठमा यो प्रकाशित भएको छ।

## मूलपाठ

१. सम्वत् १८५४ भाद्र सुदि ६ रोज यो कोपरा गोर्षादरवार दसैंको हो. कसैले लोभ गन्या पंचमाहापातक. मार्फत कपर्दार भोटू पांडे

व्याख्या–

गोरखा-दरबारमा रहेका दुइ भाँडा-कुँडाका अभिलेख यी हुन्। एउटै मितिमा कपर्दार भोटु पाँडे मार्फत यी भाँडा-कुँडा बनाइएका हुन्। यस कारण यी दुइ अभिलेखको व्याख्या यहाँ एकै ठाउँमा दिइएको हो। यी साना अभिलेखले एकातिर गोरखा-दरबारमा हुने धार्मिक क्रियाकलापको अलिकता झलक दिन्छन् भने अर्कोतिर कपर्दार भोटु पाँडेको संझना पनि केही दिलाउँछन्। दसैंभन्दा केही अगाडि बनाउन लाइएका यी भाँडा दसैंको लागि नै हो भन्ने स्पष्ट छ। एउटामा त "गोर्षादरवार दसैंको हो" भनी स्पष्टसँग लेखिएकै पनि छ। गोरखा-दरबारमा सम्पन्न हुने धार्मिक क्रियाकलापमा "दसैं"को ठूलो महत्त्व रहेको छ। त्यस अवसरमा "कन्या भोजन" गराउने चलन पनि रहेछ। यसैले थालमा कुँदिएको अभिलेखमा "यो थलिया गोरखादरबारमा कन्याभोजनको हो" भनी लेखिएको छ।

कपर्दार भोटु पाँडे तुलाराम पाँडेका कान्छा छोरा हुन् ।[१] नेपालको एकीकरण अभियानमा तुलाराम पाँडेको योगदान उल्लेखनीय रहेको छ । वि.सं. १८२५मा कान्तिपुर प्रवेश गर्दा तुलाराम पाँडेले वीरगति पाएथे ।[२] तुलाराम पाँडेका जगजीत् पाँडे आदि चारै छोराहरू योग्य भई निस्केका थिए । कान्छा यी भोटु पाँडेले पनि अनेक युद्धमा भाग लिएथे । वि.सं. १८४९मा भएको चीन-नेपाल युद्धमा नेपाल तर्फबाट भाग लिने भारादारहरूमा यी भोटु पाँडे पनि थिए । चीनिया फौज धैबुङसम्म आइपुग्दा उनीहरूले युद्ध थाम्ने, सन्धि गर्ने प्रस्ताव राखेथे । नेपालीहरूले सो कुरो मञ्जूर गरे; अनि सन्धिको कुरा गर्न यताबाट एक प्रतिनिधि-मण्डल धैबुङ पठाइयो । सो प्रतिनिधि-मण्डलमा एकजना भोटु पाँडे पनि थिए । तर सन्धिको कुरा मिलेन । प्रतिनिधि-मण्डलका दुइ सदस्यलाई चीनियाहरूले फिर्ता पठाए । यी भोटु पाँडेलाई भने चीनिया अधिकारीले छेकिराखे ।[३] त्यस वेला भोटु पाँडेलाई केही चिन्ता त परेथ्यो । तर उनी डराएनन् ।

यसपछि भोटु पाँडे कपर्दार बनाइए। "कपर्दार" पद सन्मानजनक नै थियो । कपर्दार भनेको एक किसिमले भित्री दरबारका रखवाला हुन् ।[४] आफना विश्वस्त मानिसलाई मात्र यो पद दिइन्थ्यो । पछि भोटु पाँडे प्रमुख खजान्ची (महाकोषाध्यक्ष) पदमा नियुक्त गरिएका थिए ।[५] शाह राजपरिवार प्रति भोटुपाँडेको असीम श्रद्धा र भक्ति रहेको थियो । यी भोटु पाँडेले श्रद्धासाथ शाह राजपरिवारका अनेक सालिक पशुपतिमा राखेका थिए ।[६]



---

१. भोटु पाँडेको विष्णुमतीको वि.सं. १८६७ अभिलेखबाट यो कुरा थाहा पाइन्छ । यो अभिलेख तल दिइएको छ ।

२. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १३०

३. 'ऐतिहासिक पत्रसग्रह' पृ. ५९, ६०

४. 'नेपालको संक्षिप्त इतिहास' पृ. ६७

५. तल दिइएका वि. सं. १८५६ का ताम्रपत्रहरूमा साक्षी बस्नेमा भोटु पाँडे पनि छन् । त्यहाँ उनलाई 'महाकोषाध्यक्ष' भनिएको छ ।

६. ती सालिकसम्बन्धी अभिलेख तल यथास्थानमा दिइएका छन् ।

[ ६५ संख्या ]

# सिन्धुलीगढीको रणबहादुर शाहको अभिलेख

सिन्धुलीगढी पुलीसचौकीमा रहेको शिलापत्रमा कुँदिएको यो अभिलेख मोहनप्रसाद खनालद्वारा 'अभिलेख-संकलन'को ७९–८० पृष्ठमा छापिएको छ। हामीले यस अभिलेखको पाठ रुजु गर्न सकेनौँ।

## मूलपाठ

१. स्वस्ति श्रीसंवत् १८५४ साल कार्तिक कृष्ण द्वि–
२. तिया – – – – – – – – वासरे श्री–
३. मन्महाराजाधिराज श्री ५ महाराजे रणबादुर
४. शाहदेवस्य पौवागृह बनावन्या फिदुवि स–
५. र्दार श्रीगद – – – – – – मङ्गलमस्तु ॥ ॥

व्याख्या–

पूर्वतिरबाट काठमाडौँ-उपत्यकामा पस्ने प्रमुख बाटोमा परेको हुँदा 'सिन्धुलीगढी'को ऐतिहासिक महत्त्व रहेको पाइन्छ। सिन्धुलीगढीको आसपासमा अनेक उल्लेखनीय युद्ध भएथे। पूर्वतिरको सामरिक महत्त्वको गढी हुँदा मल्ल राजाहरू पनि सिन्धुलीगढी हात लाउन संघर्ष

गरिरहन्थे ।[१] श्री ५ पृथ्वीनारायण शाहले किनलकको मातहतमा आएको अंग्रेजी सैन्यलाई हराएको प्रख्यात स्थल पनि सिन्धुलीगढी नै हो ।[२]

सिन्धुलीगढीको यस्तै कुराले गर्दा श्री ५ रणबहादुर शाहले पनि सिन्धुलीगढीमा "पौवागृह" बनाउन लाएका रहेछन् भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ । श्री ५ रणबहादुर शाहलाई संभाउने कृतिमा सानो भए पनि यो पनि एक हुन आएको छ । यस कारण यस अभिलेखलाई यस संकलनमा समावेश गरिएको हो ।



---

१. मल्ल राजाहरूले सिन्धुली जित्ने संघर्ष गरेको कुरा तात्कालिक अभिलेख र ठ्यासफु आदिबाट थाहा पाइन्छ। उदाहरणार्थं कान्तिपुरका राजा पार्थिवेन्द्र मल्लको तलेजुको अभिलेखलाई देखाउन सकिन्छ । सिन्धुलीमा अधिकार जमाएको कुरा त्यहाँ यसरी वर्णन गरिएको छ–

"मध्येश्रृङ्गं लसन्तं शिखरिणि सिंधुलीदुर्गमत्यन्तदुर्गं"

यो जग्राह प्रतापप्रबलतरसहायैकबोधैः सुयोधैः ।।"

(जुन पार्थिवेन्द्र मल्लले आफ्नो बाहुबल नै मुख्य सहायक भएका असल योद्धाहरूद्वारा पहाडको टुप्पोमा रहेको, जान गाह्रो सिन्धुलीगढी दख्खल गर्नु भयो ।)

संशोधन–मण्डल, 'इतिहाससंशोधनको प्रमाणप्रमेय' पृ. १४३–१४४

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १०२६–१०३०

[ ६६ संख्या ]

# पशुपतिको रणबहादुर शाहको अभिलेख

पशुपतिनाथको भण्डारमा यक्ष मल्लदेखि यताका सयौं ताम्रपत्रहरू रहेका छन् । तिनमध्ये एक ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ विक्रमसंवत् १८५५ दिइएको छ ।

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि-विराजमान मानोन्नत

२. श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे रणबहादुरसाह बहादुर समसेर जङ् देवानाम् स–

३. दा समरविजयिनाम्.........आगे कपर्दार भोटू पांडेके तैले काठमाँडौका अम्बलको कुत तिरि षा–

४. याको गाँगुको पानिषेत रोपनी चार ४ तस्को कुत रुपैया दुई २ त्यो कुत तिन्याको रुपैया माफ् गरि

५. तैले गौचर राष्याको षेतमा वरिस्यानि जनैपुर्निमाका भोलि पडिवाका दिनमा गाईलाई गहुम

६. र नुन षुवाऊनानिमित्य त्यो षेत गुठिं राषिबक्स्यौं. त्यो षेतमा जो लोभ गर्ला तेसलाई पातक ला–

७. गला. त्यो षेतका बालि वरिस्यानि जो गाईलाई षोवावैन तेसलाई पातक लागला ईति सम्वत्

८. १८५५ साल मिति दुतिश्रावण सुदि १२ रोज ५ शुभं......

व्याख्या–

राजनैतिक क्षेत्रभन्दा सांस्कृतिक र धार्मिक क्षेत्रमा कपर्दार भोटु पाँडेको योगदान बढी रहेको छ। यो कुरा उनका अनेक अभिलेखबाट सिद्ध हुन्छ। एकातिर उनी शाह राजा र राजपरिवारमा असीम श्रद्धा राखी उनीहरूका तालिक राख्न पुग्छन् भने अर्कोतिर उनी जनतालाई सुविधा होस् भनी पुल बनाउन पुग्छन्। विष्णुमतीको पुल बनाई राखेको अभिलेखमा "बाटो हिंन्या गाइ मानिस किमिलाहरू सुखसित हिडुन्भनि नदि वारि पारिका पाटिले सहित विष्णुमतीका पुराणु बिगऱ्याका सांगु राम्रो गरि नआ बनाऔं" भनी मानिसलाई मात्र होइन गाईहरूलाई पनि सुविधा होस् भन्ने भाव व्यक्त गरिएको छ।[१] गाई प्रति यही श्रद्धाभावले भोटु पाँडेले "गौचर" राखेको उल्लेखमा यस अभिलेख परेको छ। आफ्नो तर्फबाट मात्र "गौचर" राख्दा पछि त्यसको सुरक्षा नहोला भनी राजा गुहारी राजाको तर्फबाट यो ताम्रपत्र राख्न लाइएको हो। यसबाट तात्कालिक राजा श्री ५ रणबहादुर शाहलाई कपर्दार भोटु पाँडेले राम्ररी रिझाएका थिए भन्ने कुरा प्रकारान्तरले बुझिन्छ।

श्रावणपूर्णिमाको भोलिपल्ट "गाईजात्रा" पर्व मनाउने चलन हाम्रो यहाँ मध्यकालको पूर्वार्द्धदेखि नै प्रचलित रहेको छ। त्यस दिन गाईलाई गहुँ, नून खुवाउन गुठी राखेको उल्लेख पनि यस अभिलेखमा परेको छ। हाम्रो यहाँ प्राचीनकालदेखि नै गाई पाल्ने प्रचलन बढी थियो। गाईप्रति अरू पालुतू प्राणीहरूभन्दा भिन्नै भावना जनतामा रहेको थियो। गाई पूज्य प्राणी हो भनी जनता संझन्थे। "गोहत्या" ठूलो पापमा गनिन्थ्यो। यसैले गाईलाई केही खुवाउनु पुण्यको काम हो भन्ने धारणा थियो। यस कारण हुने पुग्नेहरू "गौचर" राख्थे। गाईलाई खुवाउन बाटामा ठाउँठाउँमा सिंधे नून राख्ने चलन केही काल अगाडिसम्म थियो। लिच्छविकालका अभिलेखमा पनि "गवां लवणदानस्थान"को उल्लेख आएको छ।[२] त्यही परम्परामा कपर्दार भोटु पाँडेले गौचर राखेको र गाईजात्राको दिन गाईहरूलाई नून, गहुँ खुवाउने गुठी राखेका हुन्।

卐

१. विष्णुमतीको उक्त अभिलेख तल यथास्थानमा दिइएको छ।

२. 'लिच्छविकालका अभिलेख' पृ. ५३५–५३६

[ ६७ संख्या ]

# पशुपति भण्डारका ६ अभिलेख

पशुपतिनाथको भण्डारमा सयौं ताम्रपत्रहरू रहेका छन् । तिनमध्ये ६ ताम्रपत्रमा यी अभिलेख कुँदिएका छन् । यहाँ वि.सं. १८५५ दिइएको छ ।

## मूलपाठ

१. लिषितं भिम टक्सारी आगे श्रीमहाराजा श्रीरणबहादुर साहले श्रीगीर्वाण-युद्धविक्रम साहलाई रजाइ गर्दि बक्सदा गरिबक्स्या–

२. का बन्दोबस्तको मोहोर तांवापत्रबमोजीमका करारबन्धेजमा मैले नरह्या

३. विमनु भया वषेदा गर्नामा पर्‍या श्रीइष्टदेवता श्रीपशुपति श्रीगुह्यश्वरी श्रीपांचायन देवताका कोप कुदृष्टिले म र अघिका

४. मेरा पुस्त सात ७ औ एस बन्धेजमा नरहन्या छोरा नातिको क्षय भै कोटि जन्म गु–

५. हुको किरा भै नरक भोग गर्नु परोस्, श्रीमहाराजा गोर्वाणयुद्धविक्रम साहले ठुलो भै काज काम गर्न लाग्या प–

६. छि अन्याय अनराहासंग दवाइ गर्दाको विमनाउवाहिक हजूरबाट गरी-वक्स्या–

७. का बंधेजमा रहनाको कवूल गरी धर्म करारको तांवापत्र लेषि चह्राया. हजूर–

८. बाट गरीवक्स्याका वंधेजमा रहनामा पसु त मेरा संतानपर्यन्तको श्रीइष्ट देवता श्रीपशुपति श्रीगुह्यश्वरी श्रीपांचायन देवता–

९. का सुदृष्टिले उत्तरोत्तर वृद्धि बढ्ति हुंदो जावस्. इति सम्वत् १८५५ साल माघ सु–
१०. दि १५ रोज ४ शुभम्–
(बायाँपट्टि–) विस्नुधरको नाति गङ्गाधरको छोरा भिम्ले सहि लेषि चह्राया. सम्वत् १८५५ सालमा

[ ६८ संख्या ]

## मूलपाठ

श्रीदुर्गासहाय

१. लिषितं षजांची श्यामलाल आगे श्री ५ महाराज श्रीरणबहादुर साहले श्रीगीर्वाणयुद्धविक्रम साहलाई रजाइ गादि बक्सदा गरी
२. बक्साका बंदोवस्तका मोहोर तांबापत्रवमोजीमका करार वंधेजमा मैले नर-
३. ह्या विमनु भया बषेडा गर्नामा पस्या श्रीइष्टदेवता श्रीपशुपति श्रीगुह्यश्वरी श्रीपांचायनदेवताका कोप कुदृष्टिले म र अधिका
४. मेरा पुस्त ७ सात् औ एस बन्धेजमा नरहन्या छोरा नातिको क्षय भै कोटि जन्म
५. गुहको किरा भै नरक भोग गर्नु परोस्, श्रीमहाराजा गीर्वाणयुद्धविक्रम साहले ठुलो भै काज काम गर्न ला–
६. ग्यापछि अन्याय अन्‌राहासंग दवाइ गर्दाको विमनाउबाहिक हजूरबाट गरी
७. वक्स्याका बन्धेजमा रह्नाको कबूल गरी धर्मकरारको तांबापत्र लेषि चह्राआ. ह–
८. जूरबाट गरीबक्स्याका बन्धेजमा रह्नामा पसु त मेरा सन्तानपर्यन्तको श्रीइष्ट देवता श्रीपशुपति श्रीगुह्यश्वरी

९. श्रीपांचायन देवताका सुदृष्टिले उत्तरोत्तर वृद्धि वढ्ति हुंदो जावस्, ईति स–

१०. म्वत् १८५५ साल माघ सुदि १५ रोज ४ शुभम्

(बायांपट्टि–) दसरथ पाध्याका नाति सिवानन्द पाध्याका छोरा षजांचि स्यामलाल पाध्याले सहि लेषि चह्लाया, सम्वत १८५५ सालमा

[ ६९ संख्या ]

## मूलपाठ

श्रीदुर्गासहाय

१. लिषितं माधौसिं राना आगे श्रीमहाराजा श्रीरणबहादुर साहले श्रीगीर्वाण युद्धविक्रमसाहलाई रजाइ गादि बक्सदा गरीबक्स्याको बन्दो–

२. बस्तको मोहोर तांवापत्रबमोजीमका करारबन्धेजमा मैले नरह्या विमनु भया ब–

३. षेडा गर्नामां पस्या श्रीइष्टदेवता श्रीपशुपति श्रीगुह्यश्वरी श्रीपांचायनदेवताका कोप कुदृष्टिले म र अघिका मेरा पुस्त ७ सात श्रो ए–

४. स बन्धेजमा नरहन्या छोरा नातिका क्षय भै कोटिजन्म गुहुको किरा भै नरक भोग गनुं

५. परोस्. श्रीमहाराजा गीर्वाणयुद्धविक्रमसाहले ठुला भैकाज काम गर्न लाग्या पछि अन्याय अनराहासंग दवाइ

६. गर्दाका विमनाउबाहिक हजुरबाट गरिबक्स्याका बंन्धेजमा रह्नाको कबूल गरि ध–

७. र्मकरारको तांवापत्र लेषि चह्लाञा. हजूरबाट गरिबक्स्याका बन्धेजमा रह्नामा

८. पसु त मेरा सन्तानपर्यन्तको श्रीइष्टदेवता श्रीपशुपति श्रीगुह्यश्वरी श्रीपांचायनदेवताका सुदृष्टिले उत्तर वृद्धि बढ–

९. ति हुदो जावस्. इति सम्वत् १८५५ साल माघ शुदि १५ रोज ४ शुभम्
(बायांपट्टि) मनराज रानाका नाति देवु रानाको छोरा माधोसिंले सहि लेषि चह्राआ. संवत् १८५५ सालमा

[ ७० संख्या ]

## मूलपाठ

श्रीदुर्गासहाय

१. लिषितं जसराम षवास, श्रागे श्रीमहाराजा श्रीरणबहादुरसाहले श्रीगीर्वाणयुद्धविक्रमसाहलाइ रजांइ गादि बक्संदा गरीब–

२. क्स्याका बन्दोवस्तका मोहोर तांँबापत्रबमोजिमका करार बंधेजमा मैले नरह्या बिम–

३. नु भया बषेडा गर्नामा पस्या श्रीइष्टदेवता श्रीपशुपति श्रीगुह्येश्वरी श्रीपांचायन देवताका कोप कुदृष्टिले म र मेरा अधिका पुस्त

४. सात ७ श्रौ एस बंधेजमा नरहन्या छोरा नातिको क्षय भै कोटिजन्म गुहुका किरा

५. भै नरक भोग गर्न परोस्. श्रीमहाराजा गीर्वाणयुद्धविक्रमसाहले ठुला भै काजकाम गर्न लाग्यापछि श्र–

६. न्याय श्रनुराहासंग दवाइ गर्दाका बिमनाउ बाहिक हजुरबाट गरीबक्स्याका

७. बंधेजमा रहनाको कबुल गरी धर्मकरारको तांँबापत्र लेषि चह्राआ. हजुर–

८. बाट गरीबक्स्याको बंधेजमा रहनामा पसु त मेरा सन्तानपर्यन्तको श्रीइष्टदेवता श्रीपशुपति श्रीगुह्येश्वरी श्रीपांचायनदेवता–

९. का सुदृष्टिले उत्तरोत्तर वृद्धि बढति हुंदो जावस्. इति संवत्
१०. १८५५ साल माघ शुदि १५ रोज ४ सुभम्,
(बायाँपट्टि) पुरन्को नाति अमंसिको छोरा जसरामले सहि लेषि चह्र्या.
संवत् १८५५ सालमा

[ ७१ संख्या ]

## मूलपाठ

श्रीदुर्गासहाय–

१. लिषितं बुढा दलमर्दसाही. आगे श्रीमहाराजा श्रीरणबहादुरसाहले श्रीगीर्वाणयुद्धविक्रमसाहलाई रजाइ गादि बक्स–
२. दा गरिबक्स्याका बन्दोबस्तका मोहर ताँवापत्र बमोजीमका करार बंधे–
३. मा मैले नरह्रा विमनु भया बंषेडा गर्नामा पस्या श्रीइष्टदेवता श्रीपशुपति श्रीगुह्येश्वरि श्रीपांचायन देवताका को–
४. प कुदृष्टिले म र अधिका मेरा पुस्त सात ७ औ एस् बन्धेजमा नरहन्या छो-
५. रा नातिको क्षय भै कोटि जन्म गुहुका किरा भै नरक भोग गर्नु प–
६. रोस्. श्रीमहाराजा गीर्वाणयुद्धविक्रमसाहले ठूला भै काजकाम गर्न लाग्या-पछि अन्याय अ–
७. नराहासंग दवाई गर्दाका विमनाउबाहिक हजुरबाट गरिवक्स्या–
८. का बन्धेजमा रहनाको कबूल गरि धर्मकरारका तामापत्र लेषि
९. चह्राञा. हजूरबाट गरिवक्स्याका बन्धेजमा रहनामा पसुं त मेरा स–
१०. न्तानपर्यन्तको श्रीइष्टदेवता श्रीपशुपति श्रीगुह्येश्वरि श्रीपांचायनदेवताका सुदृष्टिले उत्तरोत्तर वृद्धि बढति

११. हुंदो जावस्. इति सम्वत् १८५५ साल माघ शुदि १५ रोज ४ शुभम्
(बायाँपट्टि–) श्रीजलालसाहका नाति श्रीदानसाहका छोरा श्रीबुढा दलम-
र्दन साहले सहि लेषि चह्राञा. सम्वत् १८५५ सालमा.

[ ७२ संख्या ]

## मूलपाठ

श्रीदुर्गासहाय

१. लिषितं थाइलीमल्ल आगे श्रीमहाराजा श्रीरणबहादुरसाहले श्रीगीर्वाणयुद्ध
विक्रमसाहलाइ रजाइ गादि बक्सदा गरी बक्स्या–
२. का वन्दोवस्तका मोहोर तावापत्रबमोजीमका करार बन्धेजमा मैले नरह्या
३. विमनु भया बषेडा गर्नामा पस्या श्रीइष्टदेवता श्रीपशुपति श्रीगुह्येश्वरी
श्रीपांचायन देवताका कोपदृष्टिले म
४. र अघिका मेरा पुस्ता सात ७ औ एस् बन्धेजमा नरहन्या छोरा नातिको
नप
५. भै कोटिजन्म गुहुका किरा भै नरक भोग गर्नु परोस्. श्रीमहाराजा गीर्वाण-
युद्धविक्रमले ठूलो
६. भै कामकाज गर्न लाग्यापछि अन्याय अनराहासंग दवाइ गर्दाको वीमनाउ-
बाहि–
७. क हजूरबाट गरिवक्स्याका बन्धेजमा रहनाको कबूल गरि धर्मकरारको
ताँवापत्र
८. लेषि चह्राञा. हजूरबाट गरीवक्स्याका बंधेजमा रहनामा पसुंत मेरा
९. सन्तानपर्यन्तको श्रीइष्टदेवता श्रीपशुपति श्रीगुह्येश्वरी श्रीपांचायनदेवता-
का सुदृष्टिले उत्तरोत्तर वृद्धि बढति हु–

१०. दो जावस् इति संवत् १८५५ साल माघ सुदि १५ रोज ४ सुभम्
(बायाँपट्टि–) मलयवम्वको नाति रमेशमल्लको छोरा शत्रुभंजन मल्लले सहि लेषि चह्राञा. सम्वत् १८५५ सालमा

व्याख्या–

श्री ५ रणबहादुर शाहले वि.सं. १८५५ फाल्गुनमा डेढ वर्षका छोरा श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राखेका थिए। कसरी कुन अवस्थामा रणबहादुर शाहले गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राखे भन्ने कुराको चर्चा तल अर्को अभिलेखमा गरिएको छ। यस कारण यहाँ दोहऱ्याउनु आवश्यक देखिँदैन। राज्याभिषेक गर्नुभन्दा पहिले गीर्वाणयुद्धविक्रमलाई "युवराज" घोषित गरिएको थियो। साथै गद्दीमा राख्नुभन्दा केही दिनअगाडि नै सारा भारादारहरूलाई पशुपतिको धर्मशिला छुवाई श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई राजा मान्छौं भन्ने प्रतिज्ञा गराइएको थियो। त्यस बेलाका प्रायः सारा भारादारहरूले भिन्नाभिन्नै धर्मपत्र लेखी गीर्वाणयुद्धविक्रम शाहलाई राजा मान्ने कुरामा आफू सर्वात्मना सहमत भएको वचन दिएका थिए। माथि दिइएका यी ६ ताम्रपत्रहरू त्यसै कुराका नमूनारूपका हुन्। पशुपति-भण्डारमा यस्ता ताम्रपत्रहरू प्रशस्त छन्। सबैमा उही बेहोरा परेको हुँदा ती सबै यहाँ दिनु अनावश्यक देखिएकोले नमूनाका रूपमा ६ वटा अभिलेख मात्र यहाँ दिइएका हुन्।

त्यस बेलाको राजनैतिक अवस्थामा आएको नयाँ मोडलाई संकेत गर्ने हुनाले यी ताम्र-पत्रहरू तात्कालिक इतिहास प्रामाणिक रूपमा जान्न निकै उपयोगी छन् भन्ने स्पष्ट छ।



[ ७३ संख्या ]

# पशुपतिको रणबहादुर शाहको अभिलेख

पशुपतिनाथको भण्डारमा सयौं ताम्रपत्रहरू रहेका छन् । तिनमध्ये सबभन्दा ठूलो ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८५५ दिइएको छ ।

'श्री ५ रणबहादुर शाह'को १२३–१३० पृष्ठमा चित्तरञ्जन नेपालीद्वारा यो अभिलेख छापिएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज रणबहादुरसाह बहादुर समशेर्जङ देवानां सदा समरविजयिनाम्–

२. आगे गुरु प्रोहित चौतारा काजि भारा पंच थर घर प्रजा चार वर्ण छत्तीस जात गैरहप्रति. मैले राज्यको भोग जति गर्न्या हो. सो गर्‍यां. अबउप्रान्त संसार त्याग गरी परलोक सुधार्ननिमित्त देवतापर भक्ति लाई तपस्या गर्दछु. राज्यका संभारलाई मेरा इच्छाले श्रीकान्छि रानितिरका पुत्र श्रीगीर्वाणयुद्धविक्रम शाहलाई मेरा भरमुलुकको रजाई गादि बक्स्यां. यो जान्या बुझन्या नहु–

३. नज्यालसंम कर्त्ता जेष्ठ रानिले राजा श्रीगीर्वाणयुद्धविक्रम शाहलाई काषमा राषि नायबि गर्नाको अषतियार बक्स्यां. श्रीगुरु पुरोहित भारा थरघर प्रजापंच चार वर्ण छतिसै जात सबै गैरह छोटा बडाले जस्ता तरहसंग आजसंम

मेरा हुकुममा चलि मानिरह्याका थियौ. आजउप्रान्त तस्को द्विगुणा गरी आफुले गर्‍या लेष्याको,कबूल धर्म सम्झि निमकको भाउँदो गर्ना–

४. को बंधेज सवाल लेषि बक्स्यौं.

५. चौताराले गर्न्या काज. काजिहरूको जागिरी बाहाली गर्दा जौना काजिले घा घर्सार न्या कटक बिगार्छ. उसैलाई श्रीराजाका हजूरमा विन्त गरी हुकुम् लि षोस्नु. निमकको सोझो बुद्धिमन्त चतुर शूरो काज लायक मंत्र-णामा पोषत भयाको मानिसलाई तज्बिज गरी थामिन्या पगरीसित मतो गरी श्रीराजाका हजूरमा विन्ति पारी हुकुम लि दर्सन गराउनु. काजिहरूले निमक छाडि काम का–

६. ज बिगार्नामा पस्या. बूझि निश्चय ठहराइ श्रीराजाका हजूर बिन्ति गरी हुकुम लि विराउमाफिकको सासना गर्नु. ढुंगाको सप्रन्न्या बन्न्या कुरो हजूरमा पनि बिंति गर्नु. काजि भारालाई पनि बन्न्या सप्रन्न्या कुरो भन्नु. ......४ काजिले गर्न्या काज.चौतारालाई मतोमा राषि ४ काजिले घा घर्सार न्या कटक ज्या परिआउँछ. निमक र आफु आफुले लेष्याको तावापत्र सं–

७. झि ढुंगाको बन्न्या सप्रन्न्या सब्य काम सल्लाहसित काज गर्न्या रानिछेउ बिंति गरि गर्नु. पूर्व पश्चिमका संभार मुलुकका बंदोवस्तलाई ४ काजिका लायक भाइ २ मा एकाले सर्दारसमेत भै पश्चिम. एकाले सर्दारसमेत पूर्व जाई वर्ष २।२ का पालासंग बस्नु.

८. श्रीराजा जान्न्या नहुन्ज्याल सबैले मिलि रहनु. पेटमा कत्ति कापट्य नराषि सबै मिलि सुमना भै काज गर्नु. ढुष्याबाहिक सबैले दर्बार आई एकै कचहरी एकै गोल भै परिआयाको कुरो गर्नु. कचहरीबाहिक अन्त बसि फुटफाट भै कुरा गर्न्या कसैले कसैसंग नगर्नु. घरमा काज नभै काज

९. छ भनि नबुषि दुषदछु भनि ढाँटि घर नबस्नु. भैवादसंग मिल्न्या मतो जतो गर्नु. काज परिआयामा असल जातका भैवादसित लडाईका काज-बाहिक अरू काज घर्सारको मतोजतो नगर्नु. सुपाव षेल्न्यालाई कचहरीमा पनि राषनु काज पनि लाउनु. ज्या परिआयाको काम जानि बुझि नल-न्याउनु चाडो छुट्टि गर्नु. जो सुकैले हवस् देश बढन्या आम्दनि हुन्या

बढिया बन्न्या कुरा गन्या साना

१०. तिनाको पनि कुरा सुन्नु. चाहिदो जारि गर्नु. निमकका सोझा अकलदार मानिसलाई बढिया बढिया काम सिषाउनु. कचहरीमा पनि राषनु. लेष्या बांध्याको बंधेजमा नरहि बिराउ गर्न्यालाई श्रीराजाका काममा काजि सर्दारले अह्रायाको नमान्न्या भैवादभित्र पस्न्या घरघर कुरा कागत हिंडाइ राजिक गरी षेल मचाउन्या लायाको काज छोडि उल्टो काज गर्न्या आपुसमा झगरा गरी षामिद्का बि–

११. गार्न्या आफ्ना देस दर्बारका छेद भेद बिराना मुलुकमा लेष पह्न गर्न्याहरूलाई घुस् षान्या अन्या गर्न्या विचारीलाई लायाको काज नगर्न्या अरू अरू भित्र पस्न्या काफर सुबेदारलाई काजिले चौतारा लाई राषि ठहराई हजूरमा विन्ति पारी बिराउ र जात विसेद हेरी काट्नालाई काट्नु. धार्नालाई धार्नु. मुडनालाई मुड्नु. आँषा झिकनालाई आँषा झिकनु. देसनिकाला गर्न्यालाई देसनिकाला गर्नु. चौता–

१२. रा काजिले पनि एति सबै कुराको समझना राषि बुझविचार गर्दै रहनु, अरू केहि नयाँ ठुला काज परिआउँदा गादिको बन्न्या सप्रन्या पगरीलाई जस हुन्या भाराका सम्मतले रानिको हुकुम लि आटि गर्नु. मुलुक सब आबाद गराउनु. बट्करा दि थामि काला बन्जार बसाउनु. कुलो लागन्या ठाउँमा षेत बिह्लाउन लाउनु. मुलुक गुलजार गराई रैयत राजि राषि जंमा बडाउनु चोरि ढाटि षान्यालाई

१३. तेवर दाम पनि लिनु. सासना पनि गर्नु. बेजाइ बढता कलम बढाई रैयत पिराइ रकमै बिगार्न्यालाई माल सबै सोषत गरी लि हात काटि नानातरहको सास्ति गर्नु. मोहोर कारोबारी काजिले दर्बारैमा आफ्ना जिम्मा राषनु. चिठि रुक्का चारै काजिले जाँचि मोहर गराउनु. श्रीराजाको बन्न्या सप्रन्या काज कुरो आफुले जान्न्यासंम बोल विंति बढिया काज गर्नु. जुन पगरीले ज्या काम गर्ने अंगीकार हो उ

१४. काज उसै पगरीबाट गराउनु. उस्का हातबाट नपुगो आया लायकको मानिस काज पुर्‍याउन सकन्यालाई पगरी दि काज लाउनु. अर्काको रकम काम

दबाउन मिचन कसैलाई नदिनु. जति बाटा बन्द गर्‍याका हुन्, तस्मा अरू निका मानिस राषि अघिका मोहोरमा भयाबमोजिमलाई आउन जान दिनु. अरूलाई जफबन्द गरी थुन्नु, सहि दि काजलाई एताबाट झिकाया पठाया-बाहिक कसै–

१५. लाई आउन जान नदिनु. कोहि नसि भागि जान्यालाई जान दिया छोडन्या-लाई काटिदिनु. कर्त्ता रानिको हुकुम लि चौतारा काजि बसि पजनि गर्दा निमकको सोझो सुरो कसैभित्र नपस्याको राजैको भाउदो गर्न्या भारालाई थामनु. बषेडा गर्न्या काज नआउन्यालाई षोसि विराउमाफिक काट्नालाई काट्नु धार्नालाई धार्नु सास्ति गर्नालाई सास्ति गर्नु – – – –

१६. सर्दारले ४ काजि चौतरियाका सल्लाहसित अघिबमोजिम् थरघर उमराको पजनी लायकको सूरो हेरी थामनालाई थामि षोसनालाई षोस्नु. गढ गौंडा बनाइ राषनु. घरानिया जान्या बूझन्या धर्म चिह्नो जाचियाको मानिस गौंडामा राषनु. परिआयाको सानु ठूलो काज चौतरिया काजिका सल्लाहले गर्नु – – – – –

१७. वल्लभ वैद्य यज्ञवल्लभ वैद्य राधावल्लभ वैद्य एकदेव वैद्य झिल्लीझंकार वैद्य सांढ्या वैद्य मिल्ह्या वैद्य आनन्द वैद्यले बिहान ब्यालुका रोजिन्ना २ वेर सब परिवारका नाडी हेरी संच विसंचको, विचार गरी व्यथाअनुसारको औषधि शास्त्र हेरी ठहराई बनाई टक्र्याउनु. भान्सा कोटभंडारमा सुसार्‍या केटाहरूलाई पनि जिउनारलाई एस्तो चिज टक्र्याउनु भनि उर्दि दिनु. साढ्या वैद्यले आफ्–

१८. ना कुलदेवतालाई चोषि नीति भाव भक्ति गरी नषुस्याइ प्रसन्न राषि मेरा परिवार सबको रषरक्षा गर्दै रहनु. देवता षुन्सियाका छन् आउदैनन् भनि रष रक्षा गर्नमा कपट राषि पछि सर्न्या नगर्नु. सुत्न र भात पालासंग जानु. अघि पछि सबैले हाजिर रहनु. आफुले जान्यासम्मको पेटमा कत्ति कसर नराषि तरह तरहको बढिया भारो भारो औषधि बनाउनु. कुपथको

१९. पनि विंति गर्दै रहनु. आपुसमा कपाल हालाहाल् गरी औषध ठहर्‍याउन टक्र्याउन बेर गर्न्या चित्त लाई औषध नगर्न्यालाई जातविसेद हेरी आंषा

काढ्नालाई आषा काढनु. काटनालाई काटनु. मुडनालाई मुडनु – – – –
शुकदेव जैसि गौरीपति पांडे श्रीराम जैसि कुबेर जैसि राजिवलोचन जैसि
जयमंगल जैसि अरू पन्ह् दाका दर्वारमा प्रवेश भया–

२०. का सबै जैसिहरूले आफु आफुले पढ्या जान्यासम्मको पेटमा कत्ति कसर नराषि नलुकाई मेरा परिवारसम्मको ग्रहगोचर लागोभागो एस्ता तरह्ले भयाको छ. एति दिन रहला. एतिसम्म बढला याहादेखि घटला भनि विचार गर्दा आयाको नीको ननिको जस्ताको तस्तो पेटमा कत्ति कापट् नराषि सबैले एकवाक्यमा गरी विंति गर्नु. वटिया ग्रहगोचर ठह्र्या ठूलो उपाय दान जप

२१. पाठ पूजा बिन्ति गरी गराउनु, एस्तै हो भनि नठहराई पस्या दुष्ट ग्रह नटार्न्या दान मात्रै गराउन्या गर्न्या तस्लाई आषा झिक्न्या मुडन्या सासना गर्नु ...... फीलषानाका र अस्तबलषानाका दरोगा सवारी डिट्ठा साहानी चिरुवादार माहुत्या घाँसिहरूले गर्न्या काज. पाल्याका हात्ति घोडा जति छन्. तन सबैलाई मसाला दाना घास पनि वे–

२२. ला वेलामा षुवाउनु. बस्न्या जगा पनि सैनि सोहोरी साफ गरो राषनु केही व्यथा लाग्दा दुष्दा पिर्दा काजिहरुछेउ भनि जान्या जान्या वैद्यलाई डाक्न पठाइ ठूला औषधि झारफुक् पाठ पूजा तन मन लाई गराउनु. चाहियाको औषधि मसाला गैरह सराजाम काजि षजांचिछेउ पियादा मागि ल्याइ काज लाउनु. सवारी सिकारीमा भयाका हात्ति घोडा कसि तयार गरी अवसर पा–

२३. या हजूरमा विंति गरी नपाया काजिहरुछेउ सोधि देसी विदेसी घरका लायक मानिसलाई सवारी गराउनु. हुकुम् र काजिहरुका सल्लाह् विना हाराजुछ गरी जसलाई पायो तस्लाई चढ्न नदिनु. हात्तिलाई वनेठि भालाको हात र बस् उठ् दौड सिषाई रत्याइ राषनु. षेदामा पनि धेरै पनि बढिया ठूला ठूला मत्ता पनि सालवसाल भरिसक्य गरी बाँधनु. ठूला ठूला बढिया सवारी सिकारी वे–

२४. दामाफिक्को नउठाउनु. सुन्दरीप्रसाद जत्रा ठूला हात्ति गोटा १० मद

चुहुन्या मस्त गराइ फीलषानामा राषनु. दान उठौनामाफिकको अटकलि राषिकन शिवा ई हात्ति बेचि रुपया ल्याउनु. घोडालाई पनि जातअनुसार-को तरहको चाल सिषाई सधाई राषनु. दानमाफिकका रंग रंगका घोडा दानका वेलामा पुऱ्याउनु. अस्तवलषानामा नभयामा काज् नअड्काउनु, षोजमेल गरी का–

२५. ज चलाउनु. पछिबाट काजि षजांजिछेउ भनि रीन तिरी माङ्नु. दरोगा सवारी माहुत चिरुवादार नाइक्याले फील्षाना अस्तवल्षानमै सुतनु. हात्ति घोडाको टहल नगर्न्या माहुत चिरुवादार घासिलाई मुषबाट गुहु डकार आउन्ज्यासम्म थिचनु. ताकित नगर्न्या काज अड्काउन्या दरोगा सवारीलाई पनि काजिहरूले विति गरी षोस्नु. तंबीह गर्नु.........

२६. सब सुबेदार कम्पनीले दर्बारका ढोका ढोकामा सुतनु पालासंग देसी बिदेसी चोर छिनार आयाको विचार गरी ठहराइ तस्ता मानिस पक्रनु. भैवाद भाराभित्र नपस्नु. माया मुल्हाजा डर कसैको नराषनु. चौतरिया काजि सर्दारले अह्रायाको फगत सर्कारिया काज मात्रै तत्पर भै गर्नु. कम्पनीको जमादार सिपाहीको फारफोर गर्दा काजिहरूका सल्लाहसंग लायकका सूरा मानीस–

२७. लाइ दिनु. कमारा बांधा वेपुवालाई नहालनु सिरिप राजा भनि मात्रै रहनु. जांड भाङ् नषानु. जुवा नषेलनु. व्यर्थ डुल्न्या नगर्नु. भैवादकांहा जान्या एकान्त बस्न्या पक्ष गरी बोल्न्यालाइ चिवा गरी पक्रि ल्याउनु. पक्रन्या औसर नपऱ्या जल्ले फेला पाऱ्यो तसले दुबैलाइ पर्रा लाई उडाइदिनु. तेति गर्न नसकन्या सुबेदार्लाई कार्टिदिनु. तावापत्रबमोजिम नरहन्या र गर्न नसकन्या भरालाइ पर्रा लाई उडाइदिनु.

२८. आफ्ना विवाइता स्वास्निलाई अर्काले गऱ्याको जानि जार हान्न नसकन्या र जार हानि नाक काटन नसकन्या ढालबन्दलाइ जन्मभरी जागीर नदिनु. आजउप्रान्त भाउज्यू बिगार्न्यालाई काट्ना लाई काट्नु मुड्न्यालाई मुड्नु. देउदेउताको पाउ छोइकन पचाउन्या र किरिया हालि किरिया पचाउन्या मानिसलाई फलासि तताई मुषबाट हाली कंठा परीबाट जिभ्रो नि–

२९. स्कन्या गरी ठोकनु...........७ टक्सारीले गर्न्या काज. महाजन जति छन्. सवैलाई मिठो मसिनु गरी भोट हात लिन्या काम गरी टक्सार चलाउन्या काम गर्नु. आहाका चलनको घटिया चास्नि नगर्नु. छाप मार्न्या बाडालाई पनि चासनी बिगाऱ्या हात काटियला भनि उर्दि दि राषनु, मेरा परियार सवका जियमा सं–

३०. च विसंच हुंदा देउ देउताको काज शांति स्वस्त्ययन दान सौगाद उठाउना-को आपना रकमको सराजाम माल कत्ति नम्रड्काई चाँडो सरसापट गरी-कन पनि दिनु. आपना फाजिल पस्यामा बहि बुझाइ फाजिल ठहऱ्या काजि षजांचिछेउ रिन तारि मागनु. छाप मारदा मोहोरको छापभन्दा दामको छाप अर्घ्यालो गरी मारनु. माहाजन टक्सारका रकमका मानिलाई वि–

३१. जाइ र अन्राहासंग कसैले मिच्न नदिनु. माहाजनलाइ तसल्लह भोट मधेस चलाइ महसुल बढाउन्या काम गर्नु........८ दफ्दरषानाका डिट्ठा भैया-हरूले गर्न्या काज. ५० सालदेषि पुढोका कागज बेस गरी बुझि बाजषि पारी रफा गर्नु. तहाँ उप्रान्तको साल सालको बहि बुझी दाम चुक्याकालाई डिट्ठाछे–

३२. उ भनि हजुरमा विति पारि फारषत गराई दिनु. वाजवि आउदो रुपैया वाडो असूल गर्नु. अबउप्रात रकमदारसित मिलि मोलमा दरफेर पारि रुपैया घटाइ कागज बिगारि घूस् चोरि षान्या भैयाका पट्टिलाई बिराउ विशेषको सासना कतिलाइ छाला काट्नु. कतिलाइ हात काट्नु कतिलाइ हाड पुऱ्याइ दामि निकालिदिनु. सालसालका तोसाषानाको

३३. बहि चांडो नबनाया महिनावारि वासिल वाकि फर्छाइ नल्याया चाहिदामा माग्याको कागत चांडो नल्याया. दर्वारको लायाका काम छोडि विलंब गरि अरु काज गर्न्या जांड भांग षाया, जुवा षेल्या, आजभोलि आहां भयाका भैयावाहिक विनाहुकुमले अरू कायथ झिकाया, वहिपत्र लुकाया, आहाको छिचरो पातलो देसमा लेष्या, बिराउ विसेष हात काट्नु.

३४. गुहु पुवाउनु हुस् तुल्याइ गदाहामा चह्राइ देस फिराइ निकाला गरिदिनु... ९ विचारीहरूले गर्न्या काज. जो परियाको झै झगरा पंच राषि पित्र र

पुत्र समुझि निसाफका राहाले पछे रिस नगरि अन्न्या नपारि कुरो बेस गरि केलाइ झगरा चांडो चांडो तोरि वाजवि आमदनि ल्याउदै रहनू. एक पटक छिन्याको कुरा फेरि सुन्न पऱ्या अगाउको कुरो

३५ छिन्या पंच विचरिलाइ कायल गरि अन्या पारि छिंन्यालाइ दंड तागिर गरि तव कुरा सुन्नु. दुनीआ र रकमका कुरा आफ्ना अम्बलमा हुंदा हुंदै च्याति ल्याउन्या नगर्नु. आमिलले बिजाइ गऱ्यो भनि फिऱ्याद गर्न आयाको झगरा आमिलसमेत डाकि जोरि कायल मुकायल गर्नु र आमिलको बिजाइ ठहऱ्या आमिललाइ डाडनु. आमिलले ता न्यायै गऱ्याको ठहऱ्या फिऱ्याद गर्न आ–

३६. उन्याको कुरा पनि नसुन्नु. उसलाइ डाड पनि गर्नु. – – – – – १०. छेभडेलले गऱ्र्या काज. देवल सांघु पाटि दर्वार धर्मसाला पौवा बनाउदा फर्माइसमाफिकको राम्रो बलियो परसम्म टिकन्या चाडो गरी बनाउनु. सर्कारी फर्माइसमाफिकको राम्रो बलियो परसम्म टिकन्या चाडो गरी बनाउनु. सर्कारीया जग्गा ज्या केहि छन्. भतक्या बिगऱ्या चुह्याको हेरि विचार गरि सालबसाल टाल्हटोल्ह गर्दै

३७. रहनु. परापूर्वदेषि भैआयाको छेभडिलको रकम गरि तस्का आमदनिले इटाचपलिबाट छिभडिलले दिन्या रकम जो छन् सो कत्ति नअटकाइ काम चलाउनु. आमदनि छैन क्याले गरूं भनि काज अडकाउनु नपस्नु. परियारको देवदेवताको सान्ति स्वस्त्ययनको काज षोजमेल गरि पुऱ्याउनु. पछिबाट आमदनि भयामा लाग्याको रिन तार्नु. साल बसाल बहि बुझाइ

३८. फार्षति लिन्या गर्नु. नेपाल भरिका देवल धर्मसाला वाटिका गुठ गुठियार कायम छदैंमा गुठको आमदनि गुठियार लेषाइ जग्गा बिग्ऱ्याको जो छन् सो षोजि हेरि ठहराइ गुठियारले षायाको भया कायलमुकालय गरि षायाको बालिको दोवर लि उहि जग्गा बनाउन लाउनु आजदेषि उप्रांन्त साल बसाल गुठका आमदनिले गऱ्र्या काज नगऱ्या तेरा हातबाट षोसियला भनि चेता–

३९. इदिनु. सहरमा चोरी हुंछ. तसर्थ रातबिरात महान नाइक्या सहरमा फिराइ

दुइ पहर रातदेषि पुछो फिर्न्यालाई पक्रि काजकामले हिडन्या साधुलाई छाडिदिनु. चोरलाई र नजान्या ठाउ गै चान्द्रायन पार्न्या छिनारलाइ कायल मुकायल गरि हुकुम बमोजिमको सासना गर्नु......११. तावापत्रमा

४०. बंधेज र हुकुम साना ठुला काजमा अलिकति नमान्या डबोल गर्‍या पनि काटना जातलाइ काटि उस्का परिवार दमाइ कामिलाइ उठाइदिनु. मुडना जातलाइ मुडि उस्का परिवार समेतलाई डोकामा हालि भेडाहा तारिदिनु. काज नगर्न्या अर्कालाइ भन्याको छ भनि टार्नामा पर्‍न्याका मुषमा हाडसम्म पुग्न्या गरी डामिदिनु.

४१. इति सम्वत् १८५५ साल मिति फागुन सुदि २ रोज ६ शुभम्भूयात्.

[ ७४ संख्या ]

## पशुपति–भण्डारको रणबहादुर शाहको ताम्रपत्र

(दोस्रो खण्ड)

१. बामनहेरू धर्ना बस्नु नपावस्. त्या पारि अघ्याइ कुरा छिनिदिनु. दर्बार्मा धर्ना बस्न्यालाइ जति जना मतो गरि बस्दछन्. उति जना सबैलाइ धिचरामा हातमा षुटामा नेल हालि मुष डामि गाला डामि निधार डामि चिउरो डामि गुहु षुवाइ सुंगुरको मासु षुवाइ जाड षुवाइ जुत्ता षुवाइ परिवार-समेत षर्षन्मा हालि भेडाहा तार्नु.

२. सर्व्वस्व लिनु. काजिदेषि उधो थानाबार्देषि उभो जो घुस् षाला. तसलाइ मार्न्या जात भया धार्नि १ सिसा पगालि पियाउनु. नमार्न्या जात भयादेषि धिचरामा हातमा षुटामा नेल हालि मुष डामि गाला डामि निधार डामि चिउरो डामि नाक डामि गुहु षुवाइ सुंगुर्को मासु षुवाइ जाड षुवाइ जुत्ता षुवाइ परिवारसमेत षर्षन्मा हालि भेडाहा तार्नु. सर्व्व–

३. ख लिनु. ठकुरी षलकले ठूलो ठूलो बिराउ गऱ्यादेखि ह्यास्नु. लडाञी भिडाञी अरू चाँडा काममा षटायापछि लम्झयाउन्यालाइ सायत परछ भनि आन्याकान्या गर्न्या मानिसलाइ चौतारा काजि सर्दार सुबेदार सिपाहि गैरह हुकुम टार्न्यालाइ तिवारि विचारिको जस्तो गरि मुष दाम्नु. लोगन्या स्वास्नी दुइ जना मात्र भयाका छोरा छोरि केहि नभयाका चाहिको

४. लोगन्या मर्दा स्वास्नीले सत्यमा रहंज्याल उस लोगन्याका दाज्यू भाइले अपुतालि पऱ्यो भनि संपति नषानु............श्रीराजाले गर्न्या काम चालिस वर्षसम्म आफुले रजाई गर्नु. चालिस वर्ष पुग्यापछि आफना साहेबलाइ रजाई दिनु. आफुले मोष्य पर्लोग सुधारन्या काम गर्नु. कदाचित बस्न मन नभया राजाले दियाको षाई बसनु. झगरा नगर्नु. साहेबले पनि चालिस वर्ष रजाई गर्दा बि –

५. चमा बाबाका रजाईमा दागा नगर्नु. बाबाका तावे हुकुममा रहनु. येहि बंदेजमा रहनु. आपस्मा कदाचित झगरा नगर्नु. श्रीजेठा रानि श्रीमाहिला रानिले तावापत्रमा लेष्याको जस जसले बिराउंछ. तावापत्रमा ज्या सास्ना गर्नु भनि लेष्याको छ, कति नढिलाइ चाडो सास्ना गर्नु. श्रीराजाका सोझो गर्नु. आफुले पनि आफ्ना सत्यधर्म नडगाइ रहनु. अधर्म गर्नामा नपसनु. श्रीराजामाथि पाप नचिता –

६. उनु. यति काम नगऱ्या कोटि जन्मसम्म लुत्याया कुकुर्नि भै नर्क षाइ रहनु. श्रीराजाका काम सपार्न्यालाई सपाऱ्यामाफिक् रिझ दिनु. श्रीराजाको जियमा, देसमा, ढुंगामा, घामा ढांटिकन बोल्न्याकन पंच राषि निरोपन गर्नु र ढाटिकन बोल्याको निसाफमा श्रीराजाको देसको घा गर्दामा बढिया सब्य ठहऱ्या भन्या उसलाइ केहि नगर्नु. ढांट्याको ता घटिया ठहऱ्या भन्या उसलाई मु –

७. ष डाह्मी निकाला गरिदिनु. जो यो ताँवापत्रमा लेष्याका नाघछ. तसलाइ निसंतान गरि लोगन्यालाइ काट्नु. स्वास्निलाई दमाई कामि लाइ उठाइ-दिनु. जो राजा यति गरैन सो मौञा. राजा र चौतरिया भाइ.........का संतान छन्ज्याल् अरू गोतिया भैयाका संतानलाइ कहिले कसैले नमान्नु.

काम पठायामा नग्राइ उतै रहन्याहेरूलाइ काटनाहुन्नु. तावापत्रमाको बं –

८. देजमा जसले नाघला. बाभनलाइ मुडनु. घर षन्नु. अरू जातलाई काट्नु. घर पनि षन्नु. उनका कविलालाई दमाई लाइदिनु. कुलकबिलासमेत भेडाहा तार्नु. काम पऱ्यामा पऱ्याको काज केन गरौ भनि सोध्यामा त्यो काम हाम्रो होइ(न) भन्न्या, हामी जान्दौन भन्या, कोननि भन्या मैले ता भनि दिथ्या भन्न्या, पठायाको छ भन्न्या, गयाको छ भन्न्या, हाम्रो रकम होईन भन्न्या, चुपो लागीरहन्या, काममा अषइन्

९. गर्न्या, ताकितिमा नरहन्या, सुनिकन नसुन्या जहि गर्न्या. ई मानिसलाइ काटना जातिलाइ काटनु. तिनका कबिला दमाईलाई दिनु. नकाटन्या जातिलाई डामनु. मुडनु. तनको घर पनि फालनु. बामनलाइ आफुले जान्याको कुरो जन्त्र मन्त्र औषधिका कुरा सोधदा म त जान्दीन भनी आल्टाल गरी आफुले जान्याको काज नगर्न्यालाइ जातिविसेषको सासना गर्नु. ज्या भगरा प–

१०. न्यो सो कुरा जोर्बटोल गर्दा २ दिन ढिल भया पनि जान्याको ३ दिनमा भगरा नछिन्न सकन्या बिचारीलाइ काटनालाइ काटनु. मुडन्यालाइ मुडनु ।। साहृया वैद्य लक्ष्मीनारायण दाहालले.........लाइ बाइस वर्ष केही हुन्याछैन मेरा देउताले भनिकन काशी गया भन्या उस्ले भन्याका पाचौं मैन्हामा.........का परलोक हुँदा ढांट रहेछ भनि तेसलाइ डाह्रि गाइको मा–

११. निसको मासु छत्तिस जातको गुहु जाड षुवाइ चारपाट्या मुडि आंषामा सिउडिको दुद हालि-न्डाइ देस घुमाइ भाइभतिजासमेत निकालि धपाया. एस्को स्वास्नि दमाइलाइ सौप्या. अबउप्रान्त जो यस्ता गरी ढाँटला. उसलाइ यस्तै सास्ति गर्नु ।। मेल्मा वैद्यले.........लाइ बेथा नचिन्हि क्षयरोगलाइ विषमज्वर हो भनि तसैको ओषती गर्दा बेथा बढि

१२. परलोक हुनुभयो र तेसको घरमा आगो लाइ हाति लाइ ढडाइ मेल्माका जिउ टुक्टुक् गरि काटि जाजरूर कुंडमा हाल्या. एस्कि स्वास्नि पौढ्यालाइ सौंपियो. अबउप्रान्त जो वैद्य बेथा नचिन्हि, एक बेथा छ अर्का वेथाको

श्रोषति गर्छ, उस्‌लाइ यस्तै सास्ति गर्नु ॥ श्रीनेवास जैसि पुर्षोत्तम भद्र कृपाराम जैसिले..........लाइ पाटनबाट काठमाडौ सार्न्या बेथा निको
१३. हुन्याछ भन्या र सार्न्यापछि बेथा बढि परलोक हुनुभयो. सात्रमा भयाको नबुझि यस्तो कुरा ढाटि भन्दा मुषमा गुहु हालि पाया. अब उप्रान्त सात्रमा नभयाको ढाटि जो भंला तस्लाई एस्तै होला: ॥ मानिसलाई काम लाउँदा मोचिलका लेषन्या काम पर्‍यामा मोचिलका लेषि लिनु. मोचिलकामा लेषि दियाको काम बेहोर्न नसक्या मोचिलकामा लेषिग्राको ज्या सासना छ उसै माफिक
१४. सासना गर्नु. मोचिलका जस जस थाइ लेषिछ, सब सन्दुकमा संभारसित राषनु ॥ भादगाउ काठमाडौ पाटनका.........६ का थानमा भित्र दर्वारका उप्रेतले पसदा बाहि उपाध्याहरूथाइ मंत्र लि भित्र पसनु. उसै नपसनु ॥ श्रीराजाले राजकाज गर्दा भैंवाद बाभन् मगर नेवार येतिका भर परि काज नगर्नु, कुनै कुरामा कदाचित् भर नपर्नु ॥ मानिसलाई काम अह्राउदा
१५. काम छोडी दर्द बिति गर्न्यालाई जात विसेष सासना गर्नु. काज पुर्‍याया पछि दर्द गर्नु ॥ जारि काम गर्न्या वामन भया पनि काटनु. श्रीराजाले पनि ताँमापत्रमा लेष्याभंदा सपुत भै बढता काम गर्नु. तामापत्रमा लेष्याको नबेहोर्‍या श्रीराजाले पनि स्वास्निको पोसाक पहिरि कोठामा बसनु. महा-रानिहरूले राजकाज गरिदिनन्. महारानिहरूले पनि राजकाज गर्न न-
१६. सक्या राजाका भाईले राजकाज गरिदिनु. अरू दुनियालाई तामापत्र नाघछ बिराउन्यालाइ तामापत्रमा लेष्याको सासना गर्नु. श्रीमहारानिहरूबाट तामापत्र नाघन्यालाई सासना नगर्‍या बिराउन्या जो हो सो पोई हो भनि जानन्. श्रीमहारानिहरू बिर्धं भयापछि राजकाज चलैन. तसर्थले अगावैदेषि महारानिहरूले बोहारिहरूलाई राजकाज बेस गरि सिषाउनुः॥
१७. ज्या काम जसलाई अढायो. तेस्‌ले ताकिति नगर्‍या काटनु ॥ श्री ५ महा-राजालाई तुकारी बोलन्यालाई मुजिबाट जिभ्रो झिकिदिनु. ताँवापत्र जस्ले नाघछ. तस्को निर्मूल गर्नु. रिझाया माफिकको रिझ पनि दिनुः॥ चौतरा काजि सर्दार षजान्चि कपर्दार सुवा सुवेदार विचारी डिठा टक्सारी द्वार्‍या

भन्सारी जमादार हवाल्दार अजिटन सिपाही उमरा तिलग ढलेत जति

१८. निमकदार छन्. ततिले मानीसको मोह हेरी नचिह्लाइ रूपैया आउदो बगा-
बन्यालाई जातविसेष छोरिको छोरासमेत् तरह तरहको सासना गर्नु.
उप्रान्त भला भन्दा सव दुनिआले आफुले जान्यासम्म पेटमा कत्ति कपट
नराषि.........को आयुर्दा, देस बढन्या, राहारितिसंग आमदनि बढन्या
कुरा सवैले तत्मन्लाइ गर्नु. भित्र नपुगन्याले एस् बात-

१९. को अर्जि कपर्दार द्वान्यामार्फत चढाई पठाउनु. यो काज गर्नामा जो विलम्ब
गर्नामा पस्ला. तसलाई ताँमापत्रको पाप लागला: आजकाल जस्ता गरी
सात पुस्ताको धर्म्म गराइ ताँवापत्र लेषाइ आपना काबु राषि हाम्रा
सन्तांमा. एति नगरि जो रजाइ गरला. सो हाम्रा कुलको पनि होइ न, जार
पुत्र हो. जौना राजाले धर्म्मसहित तावापत्र लेषाइ धर्म्म गराई जो रजाजी ग-

२०. र्ला स्व हाम्रा कुलको सपुत हो. आफ्ना आपना पालामा हाम्रा संतानमा
जो राजा हुन्छ. एस्तै गरि ताँवापत्र लेषाई रजाइ गर्नु. एति हाम्रा संतानमा
जो गर्न सकैन, हाम्रा संतान पनि होइन जारपुत्र हो. पछि राजाले भैवाद-
हरूलाई जबरजस्तिसंग भात षुवावनान् नषुवावनु. आफ्ना आपना जातमा
रहनु. जवरजस्ति गरी भात षुवाया पंच महापातक: । अवदेषि

२१. दर्बार्मा जति लोगन्या छन् मीश्रज्यू भट्टज्यूसंग दिक्ष्या सुन्नु. स्वासनीहरूले
मिश्रज्यू भट्टज्यूका विषये देवताको सवै जान्या स्वासनीलाई ल्याइकन
दिक्ष्या सुन्नु. स्वासनीले लोगन्यासंग दिक्ष्या सुन्नु नास्ति; श्रीनरभुपाल
साहको नाती श्रीकितिमोहद्दाम साहको छोरा बलभद्र साहले धर्म्मपत्र लेषि
चह्लायाँ ।। श्रीपृथ्वीनारायण साहको नाति श्रीप्रताप-

२२. सिंह साहको छोरा विदुर साह सेरवहादुर साहले धर्मपत्र लेषि चह्लाजा ।।
विस्नु साहीको नाती जिवसाहीको छोरा प्रानसाहीले धर्मपत्र लेषि चह्लाजा ।।
रणसाहीको नाती सिउनारायण साहीको छोरा पुरन साहीले धर्म्मपत्र लेषि
चह्लाजा ।। जलाल साहीको नाति दान साहीको छोरा दलमर्दन साहीले
धर्म्मपत्र लेषि चह्लाजा ।। दलसाहीको नाती

२३. नन्दु साहिको छोरा हिन्दुले धर्म्मपत्र लेषि चह्राञा: ॥ कालु पांडेका नाती वंसराज पाँडेको छोरा रणबम्ब पाँडेले धर्म्मपत्र लेषि चह्राञा: ॥ विंतु गुरुंको नाती सुदान गुरुंको छोरा नरसिंहले धर्म्मपत्र लेषि चह्राञा: ॥ विसन पांडेका नाती तुलाराम पांडेको छोरा रजजित पांडे भोटु पाँडेले धर्म्मपत्र लेषि चह्राञा: ॥

२४. तुलाराम पाँडेको नाती जगजित पाँडेका छोरा दलभंजन पाँडेसमेत हामी चार भाईले धर्म्मपत्र लेषि चह्राया ॥ कालु पांडेको नाती रणसुर पाँडेको छोरा सर्वजित् पाँडेले धर्म्मपत्र लेषि चह्राञा: ॥ जन्मेजयको नाती विस्नुन्या-को छोरा सुबुद्धिले धर्म्मपत्र लेषि चह्राञा: ॥ देवानन्द जैसीको नाती लक्ष्मीनारायण जैसीको

२५. छोरा विद्याविनोदले धर्म्मपत्र लेषि चह्राञा ॥ सुन्दा रायेको नाती फौजसिंहको छोरा रणदलसिंहले धर्म्मपत्र लेषि चह्राञा: ॥ रन्या बस्न्यातको नाती विरभद्र बस्न्यातको छोरा बदलसिंह बस्न्यातले धर्म्मपत्र लेषि चह्राञा: ॥ माधौपाध्याको नाती सदानन्दको छोरा दामोदर घिमिन्याले धर्म्मपत्र लेषि चह्राञा: ॥ लछिमन अ–

२३. धिकारीको नाती विस्या अधिकारीको छोरा जस्या षवासले धर्म्मपत्र लेषि चह्राञा: ॥ चन्द्रमनि रानाको नाती सग्राम रानाको छोरा मानसिं रानाले धर्म्मपत्र लेषि चह्राञा: ॥

(१) गुनदेवको नाति धिर्ज–
को छोरा लक्ष्मिनारायन–
ले धर्म्मपत्र लेषि चह्राञा

हरि षडकाको नाती
कालु षडकाको छोरा रावौ–
सिं षड्काले धर्म्मपत्र लेषि
चह्रायां

डम्बर घलेको नाती
कालु घलेको छोरा अं–
गद घलेले धर्म्मपत्र
लेषि चह्राञा.

वामदेव जैसिको ना–
ति रामेस्वर जैसिको
छोरा उमापति जैसिले
धर्म्मपत्र लेषि चह्राञा

घनश्याम महतके
नाति चामु महत्को
छोरा बाजवर्न महत्ले
धर्म्मपत्र लेषि चह्राआ.

दशरथ विष्टको नाति रा–
मचन्द्र बिष्टको छोरा जय–
भिम् विष्टले धर्म्मपत्र ले–
षि चह्राआ.

श्रीनरभुपाल साहको
नाती श्रीकृत्तिमोहद्दाम
साहको छोरा भोटुले घ–
र्म्मपत्र लेषि चह्राआ.

जसकर्न षत्रिको नाति गर्जसि
षत्रिको छोरा दलजित षत्रिले
धर्म्मपत्र लेषि चह्राया.

दशरथ उपाध्यायको नातो
घनश्याम उपाध्यायको छो–
रा चन्द्रशेषर उपाध्यायले
धर्म्मपत्र लेषि चढाआ

प्रबल बानिआको नाति
रणसिं बानिआको छोरा
किस्नसिं वानिआले धर्म्म–
पत्र लेषि चह्राआ.

धर्म्मानन्द पाँडेको नाती रमा–
नन्द पाडेको छोरा वलभद्र
पाडेले धर्म्मपत्र लेषि चह्राआ.

विरभद्र थापाको नाति अम्व–
रसिं थापाको छोरा नैनसिंह
थापाले धर्म्मपत्र लेषि चह्राआ.

अचल थापाको नाति
गैडा थापाको छोरा भ–
वानीदत्त थापाले धर्म्म–
पत्र लेषि चह्राया.

(२) गुनदेवको नाती धिर्ज–
को छोरा लक्ष्मनले घ–
र्म्मपत्र लेषि चह्राआ.

भारथ रानाको नाती
लछुमन रानाको छोरा
प्रतिमन रानाले घ–
र्म्मपत्र लेषि चह्राआ.

नाहार राउतको नाति
बदन् राउत्को छोरा
कोकिल राउत्ले ध–
र्म्मपत्र लेषि चह्राञा

अकवर महत्का ना–
ति वंशु महत्को छो
रा केदार महत्ले
धर्म्मपत्र लेषि चह्राञा

मलै वस्न्यातको नाति राम
बस्न्यातको छोरा श्रीकृष्ण
बस्न्यात्ले धर्म्मपत्र ले-
षि चह्राञा.

जैराज रानाको नाती ब-
न्धु रानाको छोरा सुरवी-
र रानाले धर्म्मपत्र लेषि
चह्राञा

अग्निधर पाध्याको नाति दशरथ
पाध्याको छोरा श्रीकान्त पाध्याले
धर्म्मपत्र लेषि चह्राया.

(३) चन्द्रचुड पंडितको ना-
ती जलसायि पंडितको
छोरा करुनाकर पंडित-
ले धर्म्मपत्र लेषि चह्राञा

कासीराम बस्न्यात्को
नाती रणसिं वस्न्यात्–
को छोरा कविराज ब–
स्न्यात्ले धर्म्मपत्र ले–
षि चह्राञा.

देउधर पाध्याको नाति
कालु पाध्याको छोरा गोवि-
न्द पाध्याले धर्म्मपत्र लेषि
चह्राञा.

गौरेश्वर पंथको नाति चतु-
र्भुज पंथको छोरा गोविन्द पं-
थले धर्म्मपत्र लेषि चह्राञा.

रंजै षत्रिको नाती अकवर ष-
त्रिको छोरा रामचन्द्र षत्रिले ध-
र्म्मपत्र लेषि चह्राञा.

नरसिं देवाको नाति
जंपसिं देवाको छोरा
कविराज देवाले धर्म्म–
पत्र लेषि चह्राया.

सत्यधर पण्डितको नाती
चक्रपाणि पण्डितको छोरा
दैवज्ञकेसरि पण्डितले
धर्म्मपत्र लेषि चह्राञा

जगन्नाथ षतृको ना-
ती अर्जुन् षतृको छो-
रा धन्या षवासले ध-
र्म्मपत्र लेषि चह्राञा

हरिदेउ षतृको नाती
चामु षतृको छोरा दश-
रथा षतृले धर्म्मपत्र
लेषि चऱ्हाञा.

प्रबल वानिञाको ना-
ति रणसिंह वानिया-
को छोरा नैनसिं वानि-
ञाले धर्म्मपत्र लेषि
चऱ्हाञा

विरवल षड्काको नाति चा-
मु षड्काको छोरा केहर-
सिं षड्काले धर्म्मपत्र ले-
षि चऱ्हाञा.

बलान् घर्तिको नाति म-
ने घर्तिको छोरा केहरसिं
घर्तिले धर्म्मपत्र लेषि
चऱ्हाञा.

जितारि षतृको नाती जस्-
कर्न षतृको छोरा केहर-
सिंले धर्म्मपत्र लेषि चऱ्हाञा

कर्नु थापाको नाती हरि-
हर थापाको छोरा देवद-
त्त थापाले धर्म्मपत्र लेषि
चऱ्हाञा

रंजै षत्रिको नाति भोट्टु षत्रि-
को छोरा बांका षत्रिले धर्म्मप
त्र लेषि चऱ्हाया.

जैराज बस्न्यातको नाति सि-
उराज बस्न्यातको छोरा धौ-
कलसिंले धर्म्मपत्र लेषि चऱ्हाञा.

वंसाराज षडका-
को नाति विक्रम्
षड्काको छोरा
रंसिं षड्काले ध-
र्म्मपत्र लेषि चऱ्हाया.

(४) बली षडकाको नाती
हरि षडकाको छोरा

विचित्रसेनको नाती
जितवाहनसेनको छोरा

थर्नासि षडकाले ध-
र्म्मपत्र लेषि चऱ्हाआ.
सिवराम तिवारिको
नाती कवलापति ति-
वारिको छोरा जग्यनि-
धि तेवारिले धर्म्मपत्र
लेषि चऱ्हाआ.

भैरवसेनले धर्म्मपत्र
लेषि चऱ्हाआ.
अर्म्वसि विष्टको नाति धं-
राज विष्टको छोरा माहासिं
विष्टले धर्म्मपत्र लेषि चऱ्हाआ

पिताम्बर जैसिको ना-
ति प्रयाग जैसिका छोरा
श्रीपति जैसिले धर्म्म-
पत्र लेषि चऱ्हाआ.

नरिन्द्र वस्न्यातको नाती रणभी-
म् वस्न्यातको छोरा कमानसि वस्न्या
तले धर्म्मपत्र लेषि चऱ्हाआ

अहिराम कमरको नाति
रामकृष्ण कमरको छोरा
रंजित कमरले धर्म्मपत्र
लेषि चऱ्हाया

पारथ भंडारिको नाति जसि-
वंत भडारिको छोरा जवर-
भंडारिले धर्म्मपत्र लेषि
चऱ्हाआ.

अग्निधर पाध्याको पनाति दशर-
थ पाध्याको नाति शिवानंद पाध्या-
को छोरा श्यामलालले धर्म्मपत्र लेषि
चह्राआ.

(५) जवल वानिआंको नाति गर्जसि
वानिआको छोरा चंद्रसि वानिआ-
ले धर्म्मपत्र लेषि चऱ्हाआं

धनै पांडेको नाति रामकिस्न
पाडेको छोरा हरि पांडेले ध-
र्म्मपत्र लेषि चऱ्हाआ.

लाल रानाको नाति रंविरको छो
रा भिमाले धर्म्मपत्र लेषि चऱ्हा
या.

शिवनारायण पाध्याका नाति
हरिकृष्ण वैद्यका छोरा यकसुर्य-
ले धर्म्मपत्र लेषि चऱ्हाआ.

(६) सर्वजित् रोकायाले धर्म्मप-
त्र लेषि चन्हाञा.
शिवराम बस्न्यातको नाति
केहरिसिं बस्न्यातको छोरा
कीर्तिमानसिंले लेषि चन्हा
या. सम्वत् १८५५ सालमा

जैकामको नाति अम्बरको छोरा
गर्मुले धर्म्मपत्र लेषि चन्हाञा

व्याख्या-

अढाई वर्षको उमेरमा गद्दीमा बसे तापनि श्री ५ रणबहादुर शाहले शासनको बागडोर २० वर्ष पुग्ने लागेको वेलामा वि.सं. १८५१ वैशाखमा मात्र आफैले सह्यालेका हुन् ।[१] यसभन्दा अघि कहिले राजमाता राजेन्द्रलक्ष्मीले र कहिले राजकुमार बहादुर शाहले राजप्रतिनिधिका हैसियतले शासन चलाएका थिए ।[२] श्री ५ रणबहादुर शाहले त्यस वेला प्रचलित साधारण शिक्षा लिएका थिए तापनि राजकाज चलाउन मद्दत हुने खालको उचित शिक्षा पाएका थिएनन् । यस कारण श्री ५ रणबहादुर शाह दूरदर्शी राजनीतिज्ञ बनेनन् । उदारहृदय, दातृत्वस्वभाव, अन्याय सहन नसक्ने, अन्धपरम्परालाई तोड्न सक्ने शक्ति आदि अनेक मानवीय गुण भएर पनि उनमा राजामा हुनुपर्ने सबभन्दा मुख्य गुण दूरदर्शिता, राजनीतिज्ञता भने चाहिँदो मात्रामा हुन सकेन । उनी भावुकप्रकृतिका, मनमा लागेपछि त्यसलाई गरी छोड्ने बानीका बने । यसो हुँदा तात्कालिक राजनीतिमा उथलपुथल आउन थाल्यो; परम्परागत शासनमा अन्तर आयो; भीमसेन थापाको उदयको साथ साथै अधिनायकवादले जन्म लिने अवसर पायो; नेपालको इतिहासले अर्कै मोड लिन थाल्यो ।[३]

श्री ५ रणबहादुर शाहले कान्तवतीलाई "कान्छी महारानी" घोषित गरेका र श्री ५ रणबहादुर शाहको मन परेकी हुँदा उनको मान बढेको चर्चा माथिल्लो अभिलेखको व्याख्यामा गरिसकेको छ । त्यो अभिलेख राखिएताका (वि.सं.१८५४ आषाढमा) कान्तवती गर्भिणी भइसकेकी थिइन् । त्यसको तीन महीना पछि वि.सं. १८५४ आश्विनमा कान्तवती तर्फबाट राजा

---

१. चित्तरञ्जन नेपाली, 'श्री ५ रणबहादुर शाह' पृ. १८,२२
२. तोत्रराज पाण्डे र नयराज पन्त, 'नेपालको संक्षिप्त इतिहास' पृ. ६४–६५
३. 'पाञ्चाली शासनपध्दतिको ऐतिहासिक विवेचना' पृ. २२२–२२४

रणबहादुर शाहका छोरा गीर्वाणयुद्ध विक्रमको जन्म भयो।[४] छोरा जन्मेको केही महीनापछि कान्तवती बिरामी हुन थालिन्। औषधोपचारले रोग केही शान्त भए पनि निको हुन सकेन। आखिर कान्तवतीलाई क्षयरोगले पक्डयो। त्यस बेला क्षयरोग असाध्य जस्तै मानिन्थ्यो। यसो हुनाले कान्तवतीको रोग निको भएन। रणबहादुर शाह जस्ता भावुक, मायालु स्वभावका व्यक्ति यस घटनाले विह्वल हुनु स्वाभाविक थियो। यसो हुँदा रानी कान्तवतीलाई प्रसन्न राख्न जुन-सुकै कदम उठाउनुपरे पनि रणबहादुर शाह पछि नहट्ने भए। स्वभावतः मातृहृदय आफ्नो सन्तानको अभ्युदय भएको हेर्न चाहन्छ। यसै हुँदा बिरामी कान्तवतीलाई आफ्ना छोरा राजा भएको हेर्ने चाहना भयो। यो कुरा कान्तवतीले आफ्ना पतिको सामुन्ने प्रकट पनि गरिन्। तात्कालिक प्रसिद्ध कवि विद्वान् वाणीविलासले लेखे[५] जस्तै आफ्नो प्राणभन्दा पनि प्यारी रानीको इच्छा पूरा गर्ने वचन श्री ५ रणबहादुर शाहले दिए।

तात्कालिक अवस्था अनुसार श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राख्नु सजिलो र साधारण कुरा थिएन। यसको लागि निकै प्रबन्ध गर्नु आवश्यक थियो। एक किसिमले सामाजिक क्रान्ति जस्तै गर्नु आवश्यक थियो। तर श्री ५ रणबहादुर शाह यसको परिणाम जस्तै भए पनि आफ्नो वचन पूरा गर्नमा दृढ र दत्तचित्त रहे; आफूले राज्यत्याग गरी छोरा श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राख्ने दृढ निश्चय श्री ५ रणबहादुर शाहले गरे।

राज्याभिषेकको साइत वि.सं. १८५५ फाल्गुन शुक्ल द्वितीया निर्धारित भयो। यसभन्दा केही दिन अगाडि नै सारा ठूला ठूला भारादारहरूलाई पशुपतिको धर्मशिला छुवाई गीर्वाणयुद्ध विक्रमलाई राजा मान्ने कबोल गराइयो तथा ठूला ठूला प्रत्येक भारादारहरूले भिन्नाभिन्नै धर्मपत्र लेखी गीर्वाणयुद्धविक्रमलाई राजा मान्ने कुरामा आफू सर्वात्मना सहमत भएको वचन दिए।[६] गुरु गजराज मिश्र आदि सीमित भारादारले धर्मपत्रमा सही हालेनन्[७] तापनि प्रायः धेरै जसा ठूला ठूला भारादारहरूले राजाको आज्ञा शिरोपर गर्ने वचन दिए। यद्यपि भारादारहरूको तात्कालिक मनोभावनाअनुसार उक्त कुरा मञ्जूर गर्नु साधारण कुरा थिएन। तैपनि राजाज्ञाको उल्लङ्घन कहिल्यै नगर्दै आएको परम्पराअनुसार नतमस्तक भई भारादारहरूले भित्र अनिच्छा भए पनि श्री ५ रणबहादुर शाहको आज्ञालाई शिरोपर गरे। राजसंस्थाप्रति नेपाली-

---

४. 'त्रिरत्नसौन्दर्यगाथा' पृ १५३

५. तल दिइएको भीमसेन थापाको प्रसिध्द स्तम्भलेखमा वाणीविलासले उक्त कुरा व्यक्त गरेका छन्।

६. यस कुरा सम्बन्धी केही ताम्रपत्र माथि दिइएका छन्।

७. योगी नरहरिनाथ 'इतिहास प्रकाक' अङ्क १. पृ. १६

हरूको हृदयमा अपार आस्था रहेको कुराको यो एक अनुपम उदाहरण हो भनी मात्र सकिन्छ ।

भारादारहरूलाई धर्मपत्र गराइसकेपछि पूर्व निश्चित साइतमा अर्थात् वि.सं. १८५५ फाल्गुन शुक्ल द्वितीयाको दिन श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राख्ने कार्य सम्पन्न गरियो ।[८] त्यसभन्दा अघि त्यही दिन श्री ५ रणबहादुर शाहले आफ्नो नाउँबाट अन्तिम घोषणाको रूपमा यी ताम्रपत्र कुँदाई पशुपतिनाथको मन्दिरमा टाँस्न लाएका हुन् ।

आकार प्रकारमा अहिलेसम्म नेपालमा देखिएको ताम्रपत्रमा यी सबभन्दा ठूला रहेका छन् । आकारमा ठूलो भएर मात्र यी ताम्रपत्र उल्लेखनीय भएका होइनन्; यिनमा कुँदिएको उल्लेखनीय व्यवस्थाले गर्दा यी ताम्रपत्र शाहकालका प्रशासनव्यवस्था आदि कुरा बुझ्न अत्यन्त उपयोगी भएका छन् । यी ताम्रपत्रको विस्तृत व्याख्या गर्ने हो भने निकै कुरा लेख्ने ठाउँ छ । तर यहाँ अहिले विस्तृत रूपमा व्याख्या गर्न नभ्याएकोहुँदा यसमा परेका मुख्य मुख्य कुराको संक्षिप्त चर्चा मात्र गरिन्छ ।

गुरु पुरोहित चौतारा काजी भारापन्थ थरघर आदि सारालाई सम्बोधन गरी यी ताम्रपत्र शुरू गरिएका छन् । आफूले राज्य त्याग गर्नाको कारण केही त देखाउनुपर्ने हुनाले यहाँ "मैले राज्यको भोग जति गर्न्या हो, सो गर्‍यां. अबउप्रान्त संसारत्याग गरी परलोक सुधार्ना निमित्त देवतापर भक्ति लाई तपस्या गर्दछु" भनी रणबहादुर शाहले बोलेका छन् । हुन पनि यसपछि रणबहादुर शाहले संन्यास ग्रहण गरेका थिए; उनी शुरूमा "निर्गुणानन्द स्वामी" र पछि काशी गएपछि "महानिर्वाणानन्द स्वामी" कहलाएका थिए ।[९] तर संन्यास ग्रहण गर्नाका लागि सांसारिक विषय भोगदेखि विरक्त भई जुन ज्ञानमय भावना मनमा स्थायी भएर रहनुपर्थ्यो, सो अवस्था रणबहादुर शाहको थिएन । यसो हुँदा स्वामी बने तापनि यस ताम्रपत्रमा घोषणा गरिए जस्तै श्री ५ रणबहादुर शाह संसारको प्रपञ्च छोडी तपस्या वा ब्रह्मचिन्तनमा लागेनन्; प्रपञ्चतिर नै लागे ।[१०]

आफूले राज्यत्याग गर्नाको कारण देखाई सकेपछि कान्छी रानीतिरका पुत्र श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राखेको तथा उनीप्रति साराले वफादारीमा रहने आज्ञा यहाँ दिइएको छ । यस बेला गीर्वाणयुद्धविक्रम शाह डेढ वर्षका मात्र थिए । त्यसो हुनाले उनी समर्थ नहुन्जेल

---

८. 'त्रिरत्नसौन्दर्य गाथा' पृ. २८५

९. गौतमवज्र वज्राचार्य, 'इतिहास-संशोधन' ५२ संख्या

१०. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ८०–८१

जेठी रानी (राजराजेश्वरी)लाई नायबी चलाउने अधिकार सुम्पिएको कुरा यहाँ परेको छ।

यसपछि चौतारा, काजी, सरदार, वैद्य, ज्योतिषी, दरोगा, सुबेदार, टक्सारी, डिट्ठा बिचारी, छेँभडेल आदि अधिकारीहरूको काम कर्तव्य, अधिकारको उल्लेख गरिएको छ। जुन कुरा तात्कालिक प्रशासनव्यवस्था बुझ्न अत्यन्त उपयोगी रहेका छन्।

यसपछि दोस्रो ताम्रपत्रमा अरू नीति, निर्देशनहरूको चर्चा परेका छन्। तात्कालिक कुरा बुझ्न यो पनि उपयोगी रहेको छ। त्यसमा राजा, रानी आदिको लागि पनि केही निर्देशन दिइएका छन्। त्यसबाट श्री ५ रणबहादुर शाहका विचार आदि बुझ्न मद्दत पाइन्छ।

दोस्रो ताम्रपत्रको अन्त्यमा ताम्रपत्रमा सही गर्नेहरूका तीन पुस्ते खुलाइएको विवरण रहेको छ। तात्कालिक भारादारहरूको परिचय पाउन यो भाग पनि निकै उपयोगी रहेको छ।

अपराधीलाई दण्ड तोक्दा प्रायः शास्त्रवचनहरू हेरी, शास्त्रज्ञहरूको राय लिई परम्पराको समेत ख्याल गरी दण्ड विधान तोकिन्थ्यो।[11] यहाँ भने त्यसो नगरी श्री ५ रणबहादुर शाहको मुखबाट त्यस बेला जस्ता वचन निस्के; तिनलाई नै यी ताम्रपत्रमा अंकित गरेको देखिन्छ। यसो हुँदा यहाँ उल्लिखित दण्डप्रकरण भने अलि असन्तुलित देखापरेको छ। साथै कति ठाउँमा त दण्डविधान कडा पनि देखापरेको छ।

जे होस्; तात्कालिक अवस्थाको राम्रो द्योतक हुनाले यी दुइ ताम्रपत्र ऐतिहासिक दृष्टिले उपयोगी रहेका छन्। यद्यपि यहाँ उल्लिखित कुराको कार्यान्वयन त्यति मात्रामा भएको देखिँदैन। वि.सं. १८५६ मा कान्तवतीको मृत्युपछि परिस्थिति झन् असन्तुलित भएथ्यो। तैपनि सर्वाधिकारसम्पन्न एक सरल तथा मायालु हृदय भएका शासकले राजनीतिभन्दा भावुकतालाई अँगालो गरेको एक विचित्र प्रयोगको प्रामाणिक संझना दिलाउने यी दुइ ताम्रपत्र अनेक दृष्टिले मननीय छन्।

卐

११. धनवज्र, 'लिच्छविकालको न्यायव्यवस्थाको एक झलक, पूर्णिमा १६ पूर्णाङ्क; संशोधन मण्डल, पृ. ३४९–३५०

[ ७५ संख्या ]

# नुवाकोटको श्यामलाल सापकोटाको अभिलेख

नुवाकोट विदुरबाट त्रिशूलीबजारतिर जाँदा बाटोमा एक महादेवस्थान आउँछ। त्यहाँ यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यहाँ शकसंवत् १७२० (वि.सं. १८५५)दिइएको छ।

कुँद्नेको ज्यादै भ्रमले गर्दा अभिलेख ज्यादै अशुद्ध कुँदिएको छ। कति ठाउँमा त अर्थ ठम्याउन पनि गाह्रो छ। यहाँ पाठ जस्ताको तस्तै दिइएको छ।

'सन्धिपत्रसंग्रह'को ३०५ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख प्रकाशित भएको छ। 'नुवाकोटको ऐतिहासिक रूपरेखा' सामग्रीखण्डको ४२–४३ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीमन्मङ्गलमूर्त्तये महागणाधिपतये नमहः ।। श्रीमाध...
२. मे–धामा धरणिसुरवरः पूतकौण्डिन्यगोत्रे साप्कोटाख्यनामा निज–
३. कुलकुमुवो–स संपत्सुधांशुः।। श्रौतस्मार्त्तकपद्यातरणचरण्–
४. णां निश्चितायोपवेष्टा शिष्टाग्न्यागीतनामा दशरथपदत प्रादुरासी–
५. त्महात्मा ।।१।। तस्यासन्स(प्त) पुत्रा जलनिधय इवाक्षीणसत्वाः स्म तेषां
६. ज्येष्ठोभूद्धीरभद्रस्तदनु हरिहरश्रीशिवानन्दशर्मा ।। सत्पुत्रोसावभू-
७. ता किल तदनु घनश्यामलक्ष्मीधराख्यौ श्रीकान्तोन्मोथ गंगाधर इति ज–
८. गति ख्यात आविर्ब्बभूव ।।२।। प्राग्जन्मोपात्तपुण्यादलभत तनयं यं

९. शिवानन्दशर्मा धर्माधारं धुरीणंमयविधृतधियामाश्रय सज्जनाना–
१०. म् ।। नाम्नासौ श्यामलाल द्विज इति विदितो वेदवेदाङ्गवेदी मेदीन्या ना–
११. स्तिकोन्य जयति नृपमहामानलक्ष्मीविलासी ।।३।। जगत्कृतापाय भि–
१२. दंसमस्वर्धता पुषीपद्म वलाम्बुतुल्ये ।। निति श्रेयसं मेस्तु कथं सुखेत
१३. स चिन्तया नो बुबुधे तवैतत् ।।४।। ब्रह्मादिकीटान्तजगप्रणेतुः पातुः संह–
१४. र्तुः परमेश्वरस्य ।। कृपालवं साधयतः ससाधो न चान्यथेतया–श्रुति
१५. स्मृतिश्च ।।५।। ब्रह्माण्डकोया विलसन्ति यस्मिन्यत्कृपया सादितमे–
१६. व सर्वम् ।। तस्याप्यरूपस्य यदस्ति रूपं चिदात्मनः सस्तुतिसारगम्यम् ।।
१७. ६।। दीस्वतः कृतभक्तहित मगल्मवयात्त दनोदार–चरित्रयुक्तम् ।। पं–
१८. चानन पञ्चदशेक्षणं तदनेकबाहूभुजगोपवीतम् ।।७।। चन्द्रा–
१९. ङ्क चार्वम्बिकया समेतमनुत्तमं सत्परिवारयुक्तम् ।। सधर्मशा–
२०. लं सनिकेतनं सद्भक्त्या प्रतिष्ठाप्य कृता भवेयम् ।।८।। पतिव्रता त–
२१. स्य तु धर्मपत्नी चन्द्रप्रभा शीलरानुस्तनुजः ।। श्रीरुद्रत्तम तदि–
२२. त......माश सतां तत्सतिति प्रहृष्टौ ।।९।। श्रीशाके १७२० व्योमपक्षा–
२३. चलधरणिमिते वत्सरे शुक्लसंज्ञे मीनेर्के कृष्णपक्षे जलजनि–
२४. तिथावर्यमन्दावशूले । योगे शुक्रे ह्नि चन्द्राद्याखिलशुभयुते सं-
२५. न्मुहूर्ते प्रभाते सन्नत्यद्याप्यसौ श्रीपशुपतिरमुना श्यामलालेभ्य–
२६. राख्यः ।।१०।। त्रिशन्मुरिप्रमित शालिकरहराचहितोमुंदे पशुपते वि-
२७. निवेदितं यत् । क्षेत्रममान्वयशुवैतं परैश्च कार्या याचे कृताञ्ज–
२८. लिरमुष्य परजिघृक्षा ।।११।। शपकवेश्वरो नृणां शत्रुः स्या–
२९. त्स व सौख्यदम् ।। धर्मं तु पालयन् स्निग्धं परत्रेह च मोदते ।।१२
३०. ।। स्वदत्तां परदत्तां वा यो हरेच्च वसुंधराम् । षष्ठिवर्षा–
३१. णि विष्टायां जायते कृमि ।।१३।। त्रिशूलधारासरिदन्तिके य–
३२. त्फलं मया सक्तिम् सतकर्म ।। मपायता सदा शिवो मेत्प–
३३. ......कृपात पूर्णमस्तु ।।१४।। शुभं भूयादनिशम् ।। ।।

व्याख्या–

श्यामलाल उपाध्याय सापकोटाले नुवाकोट त्रिशूलीवारि "कुड्गे" भन्ने ठाउँनिर शिवलिङ्ग स्थापना गरी, धर्मशाला बनाई यो अभिलेख कुँदन लाएका हुन् । यो ठाउँ नुवाकोटबाट पश्चिम गोरखातिर जाँदा मूलबाटोमा भने जस्तै पर्दथ्यो । यस ठाउँमा बराबर राजकीय मुकाम पनि रहन्थ्यो ।[१] उता तादीको किनार नुवाकोट माडीमा शीतकालिक स्थायी दरबार नै बनेको थियो ।[२] यता त्रिशूलीको किनारमा चाहिँ त्यस्तो स्थायी दरबार त थिएन तापनि यस ठाउँमा पनि बराबर राजकीय मुकाम रहन्थ्यो । यस कारण यो स्थल त्यस बेला निकै चल्तीको थियो । यसै हुँदा श्यामलाल उपाध्यायले यहाँ शिवलिङ्ग स्थापना गरी धर्मशाला बनाएका हुन् ।

यी श्यामलाल उपाध्याय यसताकाका प्रख्यात खजाञ्ची ( कोशाध्यक्ष ) थिए ।[३] श्यामलाल उपाध्यायका बाबु पण्डित शिवानन्द उपाध्याय पनि श्री ५ पृथ्वीनारायण शाहको समयमा खजाञ्ची पदमा थिए । कवि ललितावल्लभले "भक्तविजय" काव्यमा "बुधः शिवानन्दसुनामधारी भूमृद्धनाध्यक्षकभारधारी" भनी उक्त कुराको वर्णन गरेका छन् ।[४] शिवानन्दलाई "बुध" भन्ने विशेषण ललितावल्लभले लाएका हुनाले उनी विद्वान् पनि थिए भन्ने संकेत पाइन्छ । जुन पनि त्यसताका "खजाञ्ची" पद प्रायः गरी विद्वान्, विश्वासपात्र व्यक्तिलाई दिने चलन थियो । यसबाट शिवानन्द सापकोटा श्री ५ पृथ्वीनारायण शाहका विश्वासपात्र व्यक्ति थिए भन्ने थाहा पाइन्छ । यसै हुँदा श्यामलाल उपाध्यायले पनि खजाञ्ची पद पाएका थिए । उनी खजाञ्ची पदमा पछिसम्म रहे पनि ।

यति कुराबाट तात्कालिक भारादारहरूमा श्यामलाल उपाध्याय पनि प्रतिष्ठित व्यक्ति थिए भन्ने सिद्ध हुन्छ । यस कारण अशुद्ध रूपमा कुँदिएको भए पनि श्यामलाल उपाध्यायको कृतिलाई संभाउने हुनाले यो अभिलेख यस संकलनमा समावेश गरिएको हो । यस अभिलेखमा दशरथ उपाध्यायदेखिको उनको वंशवर्णन पनि परेको छ ।



---

१. 'श्री ५ पृथ्वीनारायण शाहको नुवाकोट–माडी दरबार,' 'कन्ट्रिब्युशन्ज् टु नेप्लिज् स्टडिज्' वर्ष २, अङ्क २, पृ. १५१–१५२

२. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७५–७६

३. तल दिइएका अभिलेखहरूमा थेरै ठाउँमा 'कोशाध्यक्ष श्यामलाल उपाध्यायः' भन्ने उल्लेख आएको छ ।

४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३९३

[ ७६ संख्या ]

# पशुपतिको रणबहादुर शाहको अभिलेख

पशुपति-भण्डारमा सयौं ताम्रपत्रहरू रहेका छन् । तीमध्ये एक ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ ।

## मूलपाठ

श्रीपशुपतिसहाय–

१. स्वस्ति श्रीपशुपतये नमः ।। स्वस्ति श्रीशालिवाहनीयशके खनयनतुरगचंद्र-मिते १७२० शुक्लनामसम्वत्सरे श्रीसूर्य्ये उत्तरायणे माघे मासे शुक्लपक्षे चतुर्द्दश्यां पुण्यतिथौ भौमवास–

२. रे अश्लेषानक्षत्रे शोभनयोगे वणिजकरणे भुजगमुहूर्ते कुंभराशिस्थिते श्री-सूर्य्ये कर्क्कटराशिस्थिते चन्द्रमसि मेषराशिस्थिते देवगुरौ शेषेषु ग्रहेषु यथायथास्थानस्थिते–

३. षु सत्सु ।। ।। स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविध-विरूदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीश्रीश्री-महाराज रणब-

४. हादूरसाह वहादूर समसेरजङ् देवानाम् सदा समरविजयिनां कनिष्ठपत्न्या श्रीकान्तवतीदेव्या श्री ५ पशुपतिप्रीतये वैशाखपौर्णमासीमारभ्य प्रतिवर्षीय-द्वादशपौर्णमासीष्वधि–

५. कपौर्णमासीष्वपि यथालिखितोपचारैरन्यूनैर्महास्नानमहाबलिकर्मोपयोग्यु–

पकरणार्थं पूर्वस्यां दिशि इन्धनीनाम नदी ढाँडचानामक्षुद्रनदीसंगमः दक्षि
णस्यां दिशि देवपुराख्य-

६. ग्रामसीमशिलान्यासः पश्चिमायां दिशि सांघुनामग्रामसीमानशिलान्यासः,
उत्तरस्यां दिशि जद्र्यानाम क्षुद्रनदी इन्धनीनामनदीसंगम इत्येतच्चतुष्टयसी-
मान्तर्गतदेवपूजनप्रपा-

७. संरक्षणार्थं समुत्सृष्टब्राह्मणसन्न्यास्युपभुक्तवृत्तिक्षेत्रादिवहिष्ठतवष्टिमूर्यधि-
कद्वाविंशतिशतमूरिपरिमितक्षेत्रयुक्तः स्फटिकशिलाख्यो ग्रामस्तथा देवपत्तन
गोकर्णाख्यप्रा-

८. मभूभागान्तर्गतसार्द्धषट्सहस्रमूरिपरिमितक्षेत्रसमूहश्च श्री ५ पशुपति-
प्रीतये सकुशोदकं संकल्प्य निवेदितः एतत्संकल्पकालसाक्षिणो मनुष्याः श्री-
मद्युवराजगीर्वाणयुद्ध

९. विक्रमसाहः श्रीरणोद्योतसाहश्रीसमरसेरसाहौ श्रीबलभद्रसाहः श्रीविदुर
साहश्रीसेरबहादुरसाहौ मन्त्रिनायकश्रीवम्साहभ्रातृपुत्रज्यानसाहप्राणसाहौ,
सचिवाश्च श्री

१०. रणवम् पाँडे श्रीदामोदर पाँडे श्रीअभिमानसिंह श्रीनरसिंह श्रीरणजित् पाँडे
श्रीजहसिंह बस्न्यात, महाकोशाध्यक्षः श्रीभोटूपाँडे कोशाध्यक्ष श्रीश्यामला-
लोपाध्यायः स्वर्णरौप्यमुद्रा-

११. धिकारस्थः श्रीभीमः संकल्पवाक्यवक्ता पुरोहितः श्रीदैवज्ञकेशरी उदकन्यास-
कर्त्ता सचिवः श्रीत्रिभुवन इति ॥ अथ च समर्पितैतद्ग्रामक्षेत्रादिकं तत्साध्यम-
हास्नानमहाबलिपूजनं

१२. च ये खण्डयिष्यन्ति तेषु श्री ५ पशुपतिदेवस्य कुदृष्टिपातो भविष्यति ॥
ये चैतद्ग्रामक्षेत्रतत्साध्यमहास्नानमहाबलिपूजनसंरक्षणं विधास्यन्ति, तेषु
पूर्वोक्तश्री ५ पशुपतिदेवस्य सुदृष्टिपातो भ-

१३. विष्यतीति किंच पूर्वोक्तसामग्रीः शिवस्वोत्पन्नग्रामक्षेत्रादिकं तद्रक्षाधिकार-
स्थजनोदरभरणोपयोगिभोग्यं चैतत्सर्वं द्वितीयपत्रे विस्तरशो विलिख्या-
रुणमुद्रयालंकृत्याधिकारिहस्ते

१४. स्थापितमस्ति, तत्पत्रलिखितपरिमाणमन्यूनं कृत्वा पूर्वोक्तसामग्र्यादिक

मधिकारिणा स्वस्वकर्मणि लापनीयं कदाचिदाधिदैविकाधिभौतिकैरंतरायै-
रुपद्रुते सति अधिकारिजनवि-

१५. ज्ञापितार्थे मनो दत्वा राजतत्पुरुषैर्मंत्रिपुरोगैरुपद्रवशांतिर्विधेया अधिकारिणा लोभादिना सामग्रीवैकल्यकरणे तदनुरोधेन राज्ञा स दंडनीय इति, श्रीसम्वत् १८५६ साल मिति

१६. वैशाख शुदि १५ रोज १ शुभम्

## अनुवाद

कल्याण होस् । श्रीपशुपतिलाई नमस्कार । शकसंवत् १७२०, शुक्लसंवत्सरमा उत्तरायणमा सूर्य गएमा, माघ शुक्ल चतुर्दशी पुर्ण्यातिथि मङ्गलवार अश्लेषानक्षत्र शोभनयोग वणिक्करण भुजगमुहूर्तमा, कुम्भराशिमा सूर्य बसेमा, कर्कटराशिमा चन्द्रमा बसेमा, बृहस्पति र अरू ग्रह-हरू आफ्ना आफ्ना स्थानमा बसेका वेलामा,

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीश्रीश्रीमहाराज रणबहादुर शाह बहादुर संशेर जङ्गदेव,सदा समर विजयीकी कान्छी रानी श्रीकान्तवतीदेवीले श्री ५ पशुपतिलाई खुशी तुल्याउन वर्षेपिच्छे वैशाखपूर्णिमादेखि लिएर बाह्रै पूर्णिमाहरूमा र अधिकमासको पूर्णिमामा पनि लेखिए बमोजिमका सरसामानहरूमा कत्ति पनि कम नपारी महास्नान, महाबलिको कामको लागि उपयोग हुने सामग्रीको लागि पूर्व दिशामा इन्धनी भन्ने खोला र डाड्या भन्ने खोल्सो दोभान, दक्षिण दिशामा देवपुर भन्ने गाउँको लुहकील, पश्चिम दिशामा साँखु भन्ने गाउँको लुहकील उत्तर दिशामा जर्दुर्या भन्ने सानो खोल्सो र इन्धनी भन्ने खोलाको दोभान यति चार किल्लाभित्रको देवताको पूजा पोवाको देखरेखको लागि चढाइएको ब्राह्मण संन्यासी आदिले भोगचलन गरी आएको विर्ता जग्गाबाहेकको बाह्रसय साठी ( १२६० ) मुरी खेत भएको स्फटिकशिला भन्ने गाउँ तथा देउपाटन गोकर्ण ग्रामको इलाकाभित्रको साढे ६ हजार मुरी खेत पनि श्री ५ पशुपतिलाई खुशी तुल्याउन कुश र पानी हातमा लिई संकल्प गरी चढाइएको छ ।

यो संकल्प गर्दाका साक्षीहरू— श्रीयुवराज गीर्वाणयुद्धविक्रम शाह, श्रीरणोद्योत शाह, श्रीसमरशेर शाह, श्रीबलभद्र शाह, श्रीविदुर शाह, श्रीशेरबहादुर शाह, मन्त्रिनायक (चौतरिया) श्रीबमशाहका भतिजा ज्यान शाह, प्राण शाह, मन्त्री(काजी)हरू-श्रीरणबम पाँडे श्रीदामोदर पाँडे श्रीअभिमानसिंह, श्रीनरसिंह, श्रीरणजित् पाँडे, श्रीजहर्सिंह बस्न्यात, महाकोशाध्यक्ष (मुख्य

खजान्ची)श्रीभोटु पाँडे, कोशाध्यक्ष(खजान्ची) श्रीश्यामलाल उपाध्याय, स्वर्णरौप्यमुद्राधिकारस्थ (टक्सारका हाकीम) श्रीभीम, संकल्प पढ्ने पुरोहित दैवज्ञकेशरी पण्डित, पानी हाल्ने काजी श्रीत्रिभुवन ।

अनि चढाइएका यी गाउँ, खेत आदि र त्यताबाट सम्पन्न गरिने महास्नान महाबलिपूजा-लाई जसले टुटाउलान्; तिनमा श्री ५ पशुपति देवताको कुदृष्टि परोस् । जसले यी गाउँ खेत, त्यताबाट सम्पन्न गरिने महास्नान, महाबलिपूजा राम्ररी चलाउलान्; तिनमा श्री ५ पशु-पति देवताको सुदृष्टि परोस् । फेरि पूर्वोक्त सरसामान र शिवस्व गाउँ खेत आदि, त्यो रक्षा गर्ने अधिकारीले खान पाउने कुरा; यी जम्मै कुरा अर्को पत्रमा खुलाएर लेखी लालमोहर गरी अधिकारीको हातमा सुम्पिएको छ । सो लालमोहरमा लेखिएको कुरामा कत्ति नघटाई पूर्वोक्त सरसामान आदि अधिकारीले आफ्नो आफ्नो काममा लगाउनू ।

कुनै बखत आधिदैविक आधिभौतिक आदि कुनै विघ्न बाधा आइपरेमा अधिकारीले बिन्ति गर्न आएको कुरामा मन दिई राजाका मन्त्री आदिले विघ्नबाधा हटाइदिनू । अधि-कारीले लोभ गरी सरसामानमा कमी गरेमा वा टुटाएमा त्यहीअनुसार त्यसलाई दण्ड गर्नू ।

विक्रमसंवत् १८५६ बैशाख शुक्ल पूर्णिमा आदित्यवार । शुभ होस् ।



[ ७७ संख्या ]

# गोरखाको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

गोरखा-दरबार, कालिकास्थानको ढोकामा यो अभिलेख कुँदिएको ताम्रपत्र टाँसिराखिएको छ। यहाँ विक्रमसंवत् १८५६ दिइएको छ।

'गोरखाको ऐतिहासिक सामग्री'को २३-२६ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

१. स्वस्ति महामायायै नमः॥ ॥ स्वस्ति श्रीशालिवाहनीयशके चन्द्रनयनाश्वैक १७२१ मिते प्रमोदाख्यसंवत्सरे श्रीसूर्ये दक्षिणायने आश्विनमासे कृ-

२. ष्णपक्षे अष्टम्यां पुण्यतिथौ रविवासरे आर्द्रानक्षत्रे व्यतीपातयोगे बालवकरणे गिरिशमुहूर्त्ते कन्याराशिस्थिते श्रीसूर्ये मिथुनराशिस्थिते चंद्रे देवगु-

३ रौ चान्येषु ग्रहेषु यथास्थानस्थितेषु सत्सु स्वस्ति श्रीगिरिराजचक्रचूडामणिनरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजा-

४. धिराज श्रीश्रीश्रीमहाराजगीर्वाणयुद्धविक्रमसाहबहादुरसम्सेरजङ्गदेवानां सदा समरविजयिनाम्. श्रीमन्मात्रा नवरात्राधिष्ठातृश्री३महामायाप्रीतये प्रति-

५. वर्ष सर्वासु शुक्लकृष्णाष्टमीषु दानपत्रस्थयथालिपिसामग्रीभिरन्यूनाधिर्यथोक्तपूजां कारयितुं त्रिशुंगनगरभूभागान्तर्गतपुर्कोटाख्यग्रामनिकटवर्ति-

६. त्रयोदशशत १३०० मूरिपरिमितक्षेत्रं सकुशोदकं संकल्प्य समर्पितमस्ति श्रीमहामायापूजार्थसमुत्सृष्टक्षेत्रसीमा पूजनसामग्री देवक्षेत्ररक्षाधिकारस्थ-

७. जनोदरभरणोपयोगिभोग्यं, चैतत्सर्ववृत्तान्तविलसितमरुणमुद्रालङ्कृतं पूर्वो–
क्तदानपत्रमधिकारिहस्ते स्थापितमस्ति अधिकारिणा च दानपत्रलिखि–

८. ता यथालिपिसामग्री प्रत्यष्टमीषु श्री३महामायापूजागृहसन्निधौ प्रापयित–
व्या ।। कदाचिद् दैववशादन्तराये पतिते अधिकारिणैव राजद्वारमागत्य
सचिवप्रभृतिभारध–

९. रनिकटे विज्ञप्तिं कृत्वा यथोक्तसामग्री संपादनीया सचिवादिभिश्च तदीयोक्ति–
मवधार्य दानपत्रलिखितमनतिक्रम्य पूजा कारयितव्या । अथैतस्मिन्देवस्वे
त–

१०. दधिकार्यन्यो यः कश्चन पापात्मा लोभमाचरिष्यन् पूजाखंडनं करिष्यति स
पंचमहापातकी, तमेव श्री ३ महामाया कोपवृष्ट्या पश्यतु. स एव पुनर्व–
र्णाश्रमानुसारे–

११. ण नीत्यनुसारेणापराधानुसारेण च वधार्हश्चेद्धन्तव्यः । तत्कलत्रादिकं च
दास्यत्वे नियोज्यम्. अवध्यो ब्राह्मणादिर्मुण्डनापराधयुक्तश्चेत्तया विधेयः ।।
धना–

१२. पहारयोग्यश्चेत्तदीयधनं दायानुसारेण ग्राह्यम्. अपसारणयोग्यश्चेद् देशतो
बहिर्निःसारणीयः ।। यः कश्चन धर्मात्मा एतद्धर्मसंरक्षणं विधास्यन् पूजां

१३. निर्वाहयिष्यति स पंचमहायज्ञजन्यपुण्यभाग् भविष्यति तस्मिन्नेव श्री ३
महामायाकृपासुदृष्टिश्च नितरां पतिष्यतीत्यत्र साक्षिण आदित्यचन्द्रादयो
देवाः ।। मनु–

१४. ष्याश्चेते ।। संकल्पवाक्यवक्ता पुरोहितः श्रीदैवज्ञकेशरी पंडितः, मंत्रिनायकाः
पंच ।। श्रीरणोद्योतसाहश्रीसमसेरसाहश्रीबलभद्रसाहश्रीविदुरसाहश्री–

१५. सेरबहादुरसाहाः ।। सचिवाश्च पंच ।। पांडेश्रीरणजित् पांडेश्रीदामोदरः
त्रिभुवनः । श्रीनरसिंहः, उदकन्यासकर्ता श्रीकीर्तिमानसिंहः । महाकोशा–
ध्यक्षः

१६. पांडे श्रीभोटुः । कोशाध्यक्षश्रीश्यामलाल उपाध्यायः स्वर्णरौप्यमुद्राधि–
कारस्थः श्रीभीमः । सीमासमयसाक्षिणस्तु श्रीहर्षः पन्तः । अर्ज्याल श्रीहरिः
खना–

१७. ल: श्रीभानु उपाध्याय:। पांडे श्रीजगजित्। वोहरा श्रीहरिवंश: राना श्रीवंशवीर:। इति श्रीविक्रमार्कसंवत्सरे १८५६ आश्विनशुक्लाष्टम्यामादित्य–
१८. वासरे लेखोऽयं कान्तिपुरीय: शुभ:। स्वदत्तां परदत्तां वा यो हरेच्च वसुन्धराम्। षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमि: ॥१॥ शुभं ॥

## अनुवाद

कल्याण होस्। महामायालाई नमस्कार। शकसंवत् १७२१, प्रमोद संवत्सरमा दक्षिणायनमा सूर्य गएमा, आश्विन कृष्ण अष्टमी पुण्यतिथि आदित्यवार आर्द्रानक्षत्र व्यतीपातयोग बालवकरण गिरीश मुहूर्तमा, कन्याराशिमा सूर्य बसेमा, मिथुनराशिमा चन्द्रमा बसेमा, बृहस्पति र अरू ग्रहहरू आफ्ना आफ्ना स्थानमा बसेका बेलामा,

स्वस्ति, श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलिविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम शाह बहादुर समशेर जङ्गदेव सदा समरविजयीको मुमाले नवरात्रका अधिष्ठातृदेवता श्री ३ महामायालाई प्रसन्न पार्न प्रतिवर्ष हरेक शुक्लाष्टमी र कृष्णाष्टमीहरूमा दानपत्रमा लेखिएबमोजिम कत्ति कम नपारी पूजा गराउन कुश र पानी हातमा लिई संकल्प गरी तनहुँ शहर इलाकाभित्रको पुर्कोट भन्ने गाउँ नजीकै रहेको तेह्र शय १३०० मुरी खेत चढाउनुभएको छ।

श्री ३ महामायाको पूजाको लागि चढाइएको खेतको चारकिल्ला, पूजा गर्ने सामग्री, देवताको सम्पत्ति रक्षा गर्ने अधिकारीले पाउने कुरा, यी सम्मै कुरा खुलाएर यो दानपत्र लालमोहर गरी अधिकारीको हातमा सुम्पिएको छ। ती अधिकारीले पनि दानपत्रमा लेखिएबमोजिमका पूजा गर्ने सरसामान प्रत्येक अष्टमीमा श्री ३ महामायाको पूजाघरनजीकै पुऱ्याउनू।

कुनै बखत दैववशले कुनै विघ्न बाधा आइपरेमा अधिकारीले नै राजाको ढोकामा आएर मन्त्री (काजी) आदि भारादारहरूको नगीचमा बिन्ति चढाएर साविकबमोजिम सरसामग्री जुटाउनू। मन्त्रीहरूले पनि उनको कुरा सुनेर दानपत्रमा लेखिएबमोजिमको पूजा चलाइदिनू।

अनि यो देवस्वमा ती अधिकारीले वा अरू कुनै पापीले लोभ गरेर पूजा टुटायो भने त्यसलाई पञ्चमहापाप लागोस्। त्यसलाई श्री ३ महामायाको कुदृष्टि पनि परोस्।

जात-भातअनुसार त्यसको अपराध हेरी ऐनसवालबमोजिम ज्यान सजाय दिनुपर्ने रहेछ भने ज्यान सजाय दिनू। त्यसका जहान छोराछोरीहरूलाई पनि कमारा कमारी बनाइदिनू। ज्यान सजाय दिन नहुने ब्राह्मण आदि जातका भए मुडिदिनू। पैसा जरिवाना गर्नुपर्ने ठहरिए उसको अंशबाट कट्टा गरी जरिवाना गर्नू। देशनिकाला गर्नु पर्ने भए निकाली दिनू।

कुनै धर्मात्माले यो धर्मलाई रक्षा गर्न चाहेर पूजा चलायो भने त्यसलाई पञ्च महायज्ञको पुण्य लागोस्। ती धर्मात्माप्रति श्री ३ महामायाको दया र सुदृष्टि पनि राम्ररी परोस्।

यहाँ साक्षीहरू- सूर्य चन्द्र आदि देवताहरू। मानिसमा चाहिँ यिनीहरू हुन्- संकल्प पढ्ने पुरोहित दैवज्ञकेशरी पण्डित। मन्त्रिनायक (चौतरिया) पाँच जना- श्रीरणोद्योत शाह, श्रीसमरशेर शाह, श्रीबलभद्र शाह, श्रीविदुर शाह र श्रीशेरबहादुर शाह। मन्त्रीहरू पाँच-जना- श्रीरणजित् पाँडे, श्रीदामोदर पाँडे, श्रीत्रिभुवन, श्रीनरसिंह, पानी हाल्ने श्रीकीर्तिमानसिंह, महाकोशाध्यक्ष (मुख्य खजाञ्ची) श्रीभोटु पाँडे, कोशाध्यक्ष (खजाञ्ची) श्रीश्यामलाल उपाध्याय, स्वर्णरौप्यमुद्राधिकारस्थ(टक्सारका हाकीम) श्रीभीम। चारकिल्ला छट्याउँदा खेरिका साक्षी-चाहिँ यिनीहरू हुन्- श्रीहर्षपन्त, श्रीहरि अर्ज्याल; श्रीभानु उपाध्याय खनाल, श्रीजगजित् पाँडे, श्रीहरिवंश बोहरा, श्रीवंशवीर राना।

विक्रमसंवत्१८५६ आश्विन शुक्ल अष्टमी आदित्यवारको दिन कान्तिपुरमा यो ताम्रपत्र गरिबिइएको हो।

आफूले दिएको वा अरूले दिएको जग्गा जसले हरण गर्छ; त्यो मानिस साठी हजार वर्षसम्म नरकमा कीरा भई रहन्छ। शुभ होस्।



[ ७८ संख्या ]

# चौँगुनारायणस्थानको गीर्वाणयुद्धविक्रम शाहको ताम्रपत्र

'संस्कृत-सन्देश' वर्ष २, अङ्क ४–५–६ को ३०–३१ पृष्ठमा लक्ष्मण सत्याल र अक्रूर कुईकेलद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. स्वस्ति श्री ३ नाराणाय नमः ॥ ॥ स्वति श्रीशालिवाहनीयशके चन्द्र–
नयनतुरगैकमिते १७२१ प्रमोदाख्यसंवत्सरे श्रीसूर्ये दक्षिणायने आश्विनमासे
कृष्ण–

२. पक्षे अष्टम्यां पुण्यतिथौ रविवासरे आर्द्रानक्षत्रे व्यतीपातयोगे वालवकरणे
गिरिशमुहूर्ते कन्याराशिस्थिते सूर्ये मिथुनराशिस्थिते चन्द्रे देवगुरौ चान्ये–

३. षु ग्रहेषु यथास्थानस्थितेषु सत्सु स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरना–
रायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिरा–

४. ज श्रीश्रीश्रीमहाराजगीर्वाणयुद्धविक्रमसाहबहादुरसम्सेरजङ्गदेवानाम् सदा
समरविजयिनां श्रीमन्मात्रा चांगुप्रीतये प्रतिवर्षमार्गशीर्षशु–

५. क्लद्वादश्यां दानपत्रस्थयथालिपिसामग्रीभिरन्यूनाभिर्महापूजां कारयितुं
चांगुग्रामभूभागान्तर्गतत्रिंशोत्तरपञ्चशत ५३० मूरिपरिमितक्षेत्रं स–

६. कुशोदकं संकल्प्य समर्पितमस्ति । महापूजार्थसमुत्सृष्टैतत्क्षेत्रसीमा पूजन–
सामग्री देवताक्षेत्ररक्षाधिकारस्थजनभोग्यं चैतत्सर्वं द्वितीयदानप–

७. त्रे विलिख्यारुणमुद्रयाऽलंकृत्याधिकारिहस्ते स्थापितमस्ति । अधिकारिणा
च दानपत्रलिखितयथालिपिसामग्री प्रतिपूजनं श्री ३ नारायणदेवता–

८. सन्निधौ प्रापयितव्या, कदाचिद्दैववशादन्तराये पतिते सति अधिकारिणा राजद्वारमागत्य सचिवप्रभृतिभारधरनिकटे विज्ञप्तिं कृत्वा यथा–

९. लिपिसामग्री संपादनीया। सचिवादिभिश्च तदीयोक्तिमवधार्य दानपत्र-लिखितमनतिक्रम्य महापूजा कारयितव्या ॥ अथैतस्मिन्देवस्वे तद-

१०. धिकार्यन्यो यः कश्चन पापात्मा लोभमाचरिष्यन् महापूजाखण्डनं करिष्य-ति सः पञ्चमहापातकी, तमेव श्री ३ नारायणदेवता कोपदृष्ट्या पश्यतु। स एव

११. पुनर्वर्णाश्रमानुसारेणापराधानुसारेण च वधार्हश्चेद् हन्तव्यः तत्कलत्रादिकं च दास्यत्वे नियोज्यम्। अवध्यो ब्राह्मणादि-

१२ मुण्डनापराधयुक्तश्चेत्तथा विधेयः। धनापहारयोग्यश्चेत्तदीयधनं दायानुसारेण ग्राह्यम्। अपसारणयोग्यश्चेद् देशतो बहिर्निःसारणीयः। यः कश्चन ध-

१३. र्मात्मा एतद्धर्मसंरक्षणं विधास्यन् महापूजां निर्वाहयिष्यति स पञ्चमहा-यज्ञजन्यपुण्यभाक् भविष्यति। तस्मिन्नेव...... कृपासुदृष्टिश्च

१४. नितरां पतिष्यत्यत्र साक्षिण आदित्यचन्द्रादयोः, मनुष्याश्चैते। मंत्रिनायका श्रीरणोद्योतसाहश्रीसम्सेरसाहश्रीवलभ-

१५. द्रसाहश्रीविदुरसाहश्रीसेरवहादुरसाहाः सचिवास्तु। पांडेरणजितः पांडे-दामोदरः श्रीत्रिभुवनः श्रीनरसिंहः महाकोशाध्यक्षः

१६. पांडे श्रीभोटुः कोशाध्यक्षः श्यामलालोपाध्यायः स्वर्णरौप्यमुद्राधिकारस्थः श्रीभीमः। संकल्पवाक्यवक्ता पुरोहितः श्रीवैवज्ञकेसरी पण्डितः

१७. उदकन्यासकर्ता सचिवः श्रीकीर्तिमानसिंहः। सीमासमयसाक्षिणः। पन्तो-पनामकश्रीहर्षः। अर्यालोपनामकः श्रीहरिः। खनालोपनामको भा-

१८. नूपाध्यायः। पांडेजगजितः बोहरोपनामकश्रीहरिवंशः। रानोपनामकश्री-वंशवीर इति श्रीविक्रमार्कसंवत्सरे १८५६ आश्विनशुक्लाष्टम्यामादित्य-वासरे

१९. लिखितमिदं कान्तिपुरराजधान्यां शुभम् ॥

## अनुवाद

कल्याण होस् । श्री ३ नारायणलाई नमस्कार । शकसंवत् १७२१, प्रमोदसंवत्सरमा, दक्षिणायनमा सूर्य गएमा, आश्विन कृष्ण अष्टमी पुष्यतिथि, आदित्यवार आर्द्रानक्षत्र व्यतीपात योग बालवकरण गिरीश मुहूर्तमा, कन्याराशिमा सूर्य बसेमा, मिथुनराशिमा चन्द्रमा बसेमा, बृहस्पति र अरू ग्रहहरू आफ्ना आफ्ना स्थानमा बसेका बेलामा,

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम शाह बहादुर समशेर जङ्गदेव सदा समरविजयीकी श्रीमुमाले चाँगुनारायणलाई खुशी तुल्याउन वर्षेपिच्छे मार्ग शुक्ल द्वादशीको दिन दानपत्रमा लेखिएबमोजिमका सरसामग्री कत्ति नघटाई महापूजा गराउन कुश र पानी हातमा लिई संकल्प गरी चाँगुगाउँको इलाकाभित्रको पाँच शय तीस५३० मुरी खेत चढाउनुभएको छ ।

महापूजाको लागि चढाइएको खेतको चारकिल्ला, पूजा गर्ने सामग्री, देवताको सम्पत्ति रक्षा गर्ने अधिकारीले खान पाउने कुरा, यी जम्मै कुरा अर्को दानपत्रमा लेखेर लालमोहर गरी अधिकारीको हातमा सुम्पिएको छ । अधिकारीले पनि दानपत्रमा लेखिएबमोजिम सरसामग्री पूजाको वेला श्री ३ नारायण देवताको सामुन्ने पुऱ्याउनू ।

कुनै बखत दैववशले कुनै विघ्नबाधा आइपरेमा अधिकारीले राजाको ढोकामा आएर मन्त्री (काजी) आदि भारादारको सामुन्ने बिन्ति चढाएर साबिकबमोजिम सरसामग्री जुटाउनू । मन्त्रीहरूले पनि उनको कुरा ध्यान दिई सुनेर दानपत्रमा लेखिएबमोजिमको महापूजा गराउनू ।

अनि यो देवस्वमा ती अधिकारीले वा अरू कुनै पापीले लोभ गरेर महापूजा टुटायो भने त्यसलाई पञ्चमहापाप लागोस्; त्यसलाई श्री ३ नारायणदेवताको कोपदृष्टि परोस् । जातभातअनुसार त्यसको अपराध हेरी ऐनसवालबमोजिम ज्यान सजाय दिनुपर्ने रहेछ भने भन्ने ज्यान सजाय दिनू । त्यसका जहान छोरा छोरीहरूलाई पनि कमारा कमारी बनाइदिनू । ज्यान सजाय दिन नहुने ब्राह्मण आदि जातका भए मुडिदिनू । पैसा जरीवाना गर्नुपर्ने ठहरिए उसको अंशबाट कट्टा गरी जरीवाना गर्नू । देशनिकाला गर्नुपर्ने भए निकाली दिनू ।

कुनै धर्मात्माले यो धर्मलाई रक्षा गर्न चाहेर महापूजा चलायो भने त्यसलाई पञ्चमहायज्ञको पुण्य लागोस् । ती धर्मात्माप्रति नारायणको दया र सुदृष्टि पनि राम्ररी परोस् ।

यहाँ साक्षीहरू सूर्य चन्द्र आदि देवताहरू। मानिसहरूमा चाहिँ यिनीहरू हुन्- मन्त्रिनायक (चौतरिया) श्रीरणोद्योत शाह, श्रीसमरशेर शाह, श्रीबलभद्र शाह, श्रीविदुर शाह र श्रीशेर-बहादुर शाह, मन्त्री (काजी)हरू–रणजित् पाँडे, दामोदर पाँडे, श्रीत्रिभुवन, श्रीनरसिंह, महा-कोशाध्यक्ष (मुख्य खजान्ची) श्रीभोटु पाँडे, कोशाध्यक्ष (खजान्ची) श्यामलाल उपाध्याय, स्वर्ण रौप्यमुद्राधिकारस्थ (टक्सारका हाकीम) श्रीभीम, संकल्प पढ्ने पुरोहित श्रीवंशकेशरी पण्डित, पानी हाल्ने काजी श्रीकीर्तिमानसिंह, चारकिल्ला छुटचाउँदा खेरिका साक्षीचाहिँ यिनीहरू हुन्– श्रीहर्ष पन्त, श्रीहरि अर्ज्याल, भानु उपाध्याय खनाल, जगजित् पाँडे, श्रीहरिवंश खेहरा, श्रीवंशवीर राना।

विक्रमसंवत् १८५६ आश्विन शुक्ल अष्टमी आदित्यवारका दिन कान्तिपुरमा यो ताम्र-पत्र गरिबिइएको हो।

卐

[ ७९ संख्या ]

# तलेजुको गीर्वाणयुद्धविक्रम शाहको ताम्रपत्र

काठमाडौं तलेजु-मन्दिरमा रहेको यो अभिलेख 'हनूमान्ढोका राजदरबार'को २६६–६७ पृष्ठमा गौतमवज्र वज्राचार्यद्वारा प्रकाशित भएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीतलेजुदेव्यै नमः ॥ स्वस्ति श्रीशालिवाहनीयशके विधुनयनर्षिचन्द्र
१७२१ मिते प्रमोदाख्यसंवत्सरे श्रीसूर्ये दक्षिणायने आश्विनमासे कृ–

२. ष्णपक्षे अष्टम्यां पुण्यतिथौ रविवासरे आर्द्रानक्षत्रे व्यतीपातयोगे बालकरणे
गिरिशमुहूर्त्ते कन्याराशिस्थिते श्रीसूर्ये मिथुनराशिस्थिते चन्द्रे देवगुरौ चान्ये-

३. षु ग्रहेषु यथास्थानस्थितेषु सत्सु स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारा-
यणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज
श्री–

४. श्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रमसाह बहादुर सम्सेरजङ्गदेवानां सदा समर-
विजयिनाम्.........प्रीतये प्रतिवर्षभाद्र–

५. शुक्लाष्टम्यामाश्विनशुक्लपंचम्यां दानपत्रस्थयथालिपिसामग्रीभिरन्यूनाभिः
ठापूजां कारयितुं कान्तिपुरमहानगरभूभागान्तर्गताष्टषष्ठ्यधिकशतद्वय–

६. भूरि २६८ परिमितक्षेत्रं सकुशोदकं संकल्प्य समर्पितमस्ति । एतत्पूजार्थसमु-
त्सृष्टक्षेत्रसीमा पूजनसामग्री देवस्वरक्षाधिकारस्थजनभोग्यं चेतत्सर्वं–

७. त्तान्तविलसितमरुणमुद्राऽलंकृतपूर्वोक्तदानपत्रमधिकारिहस्ते स्थापितम–

स्ति । अधिकारिणा च दानपत्रलिखिता यथालिपिसामग्री प्रत्येकपूजा–

८. सु......सन्निधौ प्रापयितव्या । कदाचिद् दैववशादन्तराये पतिते अधिकारि–
णैव राजद्वारमागत्य सचिवप्रभृतिभारधरनिकटे विज्ञप्ति कृत्वा यथो–

९. क्तसामग्री सम्पादनीया । सचिवादिभिश्च तदीयोक्तिमवधार्य दानपत्रलिखि–
तमनतिक्रम्य पूजा कारयितव्या । अथैतस्मिन्देवस्वे तदधिकार्यन्यो यः कश्चन

१० पापात्मा लोभमाचरिष्यन् पूजाखण्डनं करिष्यति स पंचमहापातकी, तमेव...
...कोपदृष्ट्या पश्यतु स एव पुनर्वर्णाश्रमानुसारेण नीत्यनुसारेणाप–

११. राधानुसारेण वधार्हश्चेद् हन्तव्यः । तत्कलत्रादिकं च दास्यत्वे नियोज्यम्,
अवध्यो ब्राह्मणादिर्मुण्डनापराधयुक्तश्चेत्तथा विधेयः । धनापहारयोग्य–
श्चेत्त–

१२. दीयधनं दायानुसारेण ग्राह्यम्, अपसारणयोग्यश्चेद्देशतो बहिः निस्सा–
रणीयः । कश्चन धर्मात्मा एतद्धर्मसंरक्षणं विधास्यन् पूजां निर्वाहयिष्यति स

१३. पंचमहायज्ञजन्यपुण्यभाग् भविष्यति, तस्मिन्नेव........कृपालुदृष्टिश्च नि–
तरां पतिष्यतीत्यत्र साक्षिण आदित्यचन्द्रादयो देवाः ॥ मनुष्याश्चैते ॥
संकल्प–

१४. वाक्यवक्ता पुरोहितः श्रीदैवज्ञकेसरी पंडितः, मंत्रिनायका पंच ॥ श्रीरणोद्योत
साहश्रीसमरसेरसाहश्रीवलभद्रसाहश्रीविदुरसाहश्रीसेरवहादुरसा–

१५. हाः सचिवाश्च ॥ पांडे श्रीरणजितः पांडे श्रीदामोदरः श्रीत्रिभुवनः ॥ श्री–
नरसिंहः ॥ उवकन्यासकर्ता ॥ श्रीकीर्तिमानसिंहः ॥ महाकोशाध्यक्षः पांडे
श्रीभोट्टः ॥

१६. कोशाध्यक्षः श्रीश्यामलाल उपाध्यायः स्वर्णरौप्यमुद्राधिकारस्थः श्रीभीमः ॥
सीमासमयसाक्षिणस्तु ॥ श्रीहर्ष पन्तः । अर्ज्यालः श्रीहरिः । खनालः श्रीभानु
उपा–

१७. ध्यायः ॥ पांडे श्रीजगजित् ॥ बोहरा श्रीहरिवंशः ॥ राना श्रीवंशवीरः ॥
इति श्रीविक्रमार्कसम्वत्सरे १८५६ आश्विनशुक्लाष्टम्यामादित्यवासरे
लिखितमिदं का–

१८. न्तिपुरराजधान्यां शुभम् ॥ स्वदत्तां परदत्तां वा यो हरेच्च वसुन्धराम् ।

षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमिः ।। शुभं ।।

## अनुवाद

कल्याण होस् । श्रीतलेजुदेवीलाई नमस्कार । शकसंवत् १७२१ प्रमोदसंवत्सरमा, दक्षिणायनमा सूर्य गएमा, आश्विन कृष्ण अष्टमी आदित्यवार आर्द्रानक्षत्र व्यतीपातयोग बालवकरण गिरीश मुहूर्तमा, कन्याराशिमा सूर्य बसेमा मिथुनराशिमा चन्द्रमा बसेमा, बृहस्पति र अरू ग्रहहरू आफ्ना आफ्ना स्थानमा बसेका बेलामा,

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम शाह बहादुर समशेर जङ्ग देव सदा समरविजयीका (मुमाले) श्री ३ तलेजुलाई खुशी तुल्याउन, प्रतिवर्ष भाद्र शुक्ल अष्टमी र आश्विन शुक्ल पञ्चमीको दिन, दानपत्रमा लेखिएबमोजिमका सरसामानहरूमा कत्ति कम नगरी ठापूजा गराउन कान्तिपुर महानगरको इलाकाभित्रको दुइ शय अठसट्ठी २६८ मुरी खेत कुश र पानी हातमा लिई संकल्प गरी चढाउनुभएको छ ।

यति पूजाको लागि चढाइएको खेतको चारकिल्ला, पूजा गर्ने सामग्री, देवताको सम्पत्ति रक्षा गर्ने अधिकारीले पाउने कुरा, यी जम्मै कुरा खुलाएर लालमोहर गरी सो दानपत्र अधिकारीको हातमा सुम्पिएको छ । अधिकारीले पनि दानपत्रमा लेखिएबमोजिमका सरसामानहरू हरेक पूजाको बेलामा श्रीतलेजुको नगीच पुऱ्याउनू ।

कुनै बखत दैववशले कुनै विघ्नबाधा आइपरेमा अधिकारीले राजाको ढोकामा आएर मन्त्री आदि भारादारहरूको नगीचमा विन्ति चढाएर साबिकबमोजिम सरसामग्री जुटाउनू । मन्त्रीहरूले पनि उनको कुरा सुनेर दानपत्रमा लेखिएबमोजिम पूजा चलाइदिनू ।

अनि यो देवस्वमा ती अधिकारीले वा अरू कुनै पापीले लोभ गरेर पूजा टुटायो भने त्यसलाई पञ्चमहापाप लागोस् । त्यसलाई श्री ३ तलेजुको कुदृष्टि पनि परोस् । जात–भात-अनुसार त्यसको अपराध हेरी ऐनसवालबमोजिम ज्यान सजाय दिनुपर्ने रहेछ भने ज्यान सजाय दिनू । त्यसका जहान छोराछोरीहरूलाई पनि कमारा कमारी बनाइदिनू । ज्यान सजाय दिन नहुने ब्राह्मण आदि जातका भए मुडिदिनू । पैसा जरीवाना गर्नुपर्ने ठहरिए उसको अंशबाट कट्टा गरी जरीवाना गर्नू । देशनिकाला गर्नुपर्ने भए निकाली दिनू ।

कुनै धर्मात्माले यो धर्मलाई रक्षा गर्न बाहेर पूजा चलायो भने त्यसलाई पञ्चमहायज्ञको पुण्य लागोस्। तो धर्मात्माप्रति श्री ३ तलेजुको दया र सुदृष्टि पनि राम्ररी परोस्।

यहाँ साक्षीहरू- सूर्य चन्द्र आदि देवताहरू। मानिसमा चाहिँ यिनीहरू हुन्- संकल्प पढ्ने पुरोहित श्रीवंशकेशरी पण्डित, मन्त्रिनायक(चौतरिया)पाँच जना-श्रीरणोद्योत शाह श्रीसमरशेर शाह श्रीबलभद्र शाह श्रीविदुर शाह श्रीशेरबहादुर शाह,मन्त्रीहरू-श्री रणजित् पाँडे, श्रीदामोदरपाँडे,श्रीत्रिभुवन, श्रीनरसिंह, पानी हाल्ने श्रीकीर्तिमानसिं, महाकोशाध्यक्ष(मुख्य खजान्ची)श्री भोटु पाँडे, कोशाध्यक्ष ( खजान्ची ) श्री श्यामलाल उपाध्याय, स्वर्णरौप्यमुद्राधिकारस्थ ( टक्सारका हाकीम ) श्रीभीम, चार किल्ला छुट्याउँदा खेरिका साक्षीचाहिँ यिनीहरू हुन्- श्रीहर्ष पन्त, श्रीहरि अर्ज्याल, श्रीभानु उपाध्याय खनाल, श्रीजगजित् पाँडे, श्रीहरिवंश बोहरा, श्रीवंशवीर राना।

वि.सं. १८५६ आश्विन शुक्ल अष्टमी आदित्यवारको दिन कान्तिपुरमा यो ताम्रपत्र गरिदिइएको हो।

आफूले दिएको वा अरूले दिएको जग्गा जसले हरण गर्छ; त्यो मानिस साठी हजार वर्षसम्म नरकमा कीरा भई रहन्छ। शुभ होस्।



[ ८० संख्या ]

# तलेजुको गीर्वाणयुद्धविक्रम शाहको ताम्रपत्र

काठमाडौं, तलेजु-मन्दिरभित्र टाँसिराखिएको यो अभिलेख 'हनूमान्ढोका राजदरबार'को २६५-६६ पृष्ठमा गौतमवज्र वज्राचार्यद्वारा छापिएको छ ।

## मूलपाठ

१. स्वस्ति श्री ३ तलेजुदेवतायै नमः ॥ स्वस्ति श्रीशालिवाहनीयशके चन्द्रनयनाश्वैक १७२१ मिते प्रमोदनामसंवत्सरे श्रीसूर्ये दक्षिणायने आश्विनमासे कृष्णप-

२. क्षे अष्टम्यां तिथौ. रविवासरे आर्द्रानक्षत्रे व्यतीपातयोगे बालवकरणे गिरिशमुहूर्ते कन्याराशिस्थिते श्रीसूर्ये मिथुनराशिस्थिते चन्द्रे देवगुरौ चान्येषु ग्रहेषु य-

३. थास्थानस्थितेषु सत्सु स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादिविविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज-

४. गीर्वाणयुद्धविक्रमसाह बहादुर सम्सेर्जङ्गदेवानां सदा समरविजयिनाम्. श्री...श्री २ प्रीतये प्रतिवर्षभाद्रकृष्णाष्टम्यां मा-

५. र्गकृष्णाष्टम्यां फाल्गुणकृष्णचतुर्दश्यां च दानपत्रस्थयथालिपिसामग्रीभिः ठापूजां कारयितुं कान्तिपुरमहानगरभूभागान्तर्गतषट्त्रिंशोत्तरपञ्चश-

६. त ५३६ भूरिपरिमितक्षेत्रं सकुशोदकं संकल्प्य समर्पितमस्ति ॥ ठापूजार्थसमु-

स्पृष्टंतत्क्षेत्रसीमा पूजासामग्री देवस्वरक्षाधिकारिजनभोग्यश्चंतत्सर्ववृत्ता-न्तवि-

७. लसिताख्णमुद्राऽलंकृतपूर्वोक्तदानपत्रमधिकारिहस्ते स्थापितमस्ति । अधिका-रिणा च दानपत्रलिखिता यथासामग्री प्रतिपूजम्.........सन्निधौ प्रापयि-

८. व्या ॥ कदाचिद्दैववशादन्तराये पतिते अधिकारिणा राजद्वारमागत्य सचिव-प्रभृतिभारधरनिकटे विज्ञप्ति कृत्वा यथोक्तसामग्री सम्पादनीया सचिवादि-

९. भिश्च तदीयोक्तिमवधार्य दानपत्रलिखितमनतिक्रम्य ठापूजा कारयितव्या ॥ अथैतस्मिन्देवस्वे तदधिकार्यन्यो यः कश्चन पापात्मा लोभमाचरिष्यन् ठापू-

१०. जाखण्डनं करिष्यति स पञ्चमहापातकी तमेव.........कोपदृष्टचा पश्यतु । स एव वर्णाश्रमानुसारेण नीत्यनुसारेणापराधानुसारेण च वधार्हश्चेद् हन्त-

११. व्यः । तत्कलत्रादिकं दास्यत्वे नियोज्यम् ॥ अवध्यो ब्राह्मणादिर्मुण्डनापरा-धयुक्तश्चेत्तथा विधेयः । धनापहारयोग्यश्चेत्तदीयधनं दायानुसारेण ग्राह्यम् ।

१२. अपसारणयोग्यश्चेद् देशतो बहिर्निसारणीयः । यः कश्चन धर्मात्मा एतद्ध-र्मसंरक्षणं विधास्यन् ठापूजां निर्वाहयिष्यति स पञ्चमहायज्ञजन्यपुण्यभाग् भ-

१३. विष्यति तस्मिन्नेव... ...कृपादृष्टिश्च नितरां पतिष्यतीत्यत्र साक्षिण आदित्यचन्द्रादयो देवाः ॥ मानवाश्चैते ॥ मन्त्रिनायकाः ॥ श्रीरणोद्योतसाह समर-

१४. सेरसाहश्रीबलभद्रसाहश्रीविदुरसाहश्रीसेरवहादुरसाहाः। सचिवास्तु पांडे श्री रणजित् पांडे श्रीदामोदर, श्रीत्रिभुवन, श्रीनरसिंहः महाकोशाध्य-

१५. क्षः पांडे श्रीभोटु कोशाध्यक्षः श्रीश्यामलाल उपाध्यायः स्वर्णरौप्यमुद्राधि-कारस्थः श्रीभीमः संकल्पवाक्यवक्ता पुरोहितः श्रीदैवज्ञकेशरी पण्डितः। उद-कन्यासक-

१६. र्ता सचिवः श्रीकीर्तिमानसिंहः सीमासमयसाक्षिणः पन्तोपनामकः श्रीहर्षः। अर्ज्यालश्रीहरिः । खनालोपनामकः श्रीभानु उपाध्यायः । पांडे श्रीजगजित् बो-

१७. हरोपनामकः श्रीहरिवंशः । रानोपनामकः श्रीवंशवीर इति ॥ श्रीविक्रमार्क-सम्वत्सरे १८५६ आश्विनशुक्लाष्टम्यामादित्यवासरे लेखोयं कान्तिपुरीयः। शुभ ॥

१८. स्वदत्तां परदत्तां वा यो हरेच्च वसुन्धराम् । षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमिः।।

## अनुवाद

कल्याण होस् । श्री ३ तलेजुदेवतालाई नमस्कार । शकसंवत् १७२१, प्रमोदसंवत्सरमा, दक्षिणायनमा सूर्य गएमा, आश्विन कृष्ण अष्टमी आदित्यवार आर्द्रानक्षत्र व्यतीपातयोग बालवकरण गिरीश मुहूर्तमा, कन्याराशिमा सूर्य बसेमा, मिथुनराशिमा चन्द्रमा बसेमा, बृहस्पति र अरू ग्रहहरू आफ्ना आफ्ना स्थानमा बसेका वेलामा,

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजगीर्वाणयुद्धविक्रम शाह बहादुर समशेर जङ्ग देव सदासमर विजयीकी (मुमाले) श्रीश्रीतलेजुलाई खुशी तुल्याउन प्रतिवर्ष भाद्र कृष्ट अष्टमी मार्ग कृष्ण अष्टमी र फाल्गुन कृष्ण चतुर्दशीको दिन दानपत्रमा लेखिएबमोजिमका सरसामानले ठापूजा गर्न कान्तिपुर महानगर इलाकाभित्रको पाँच सय छत्तीस ५३६ मुरी खेत कुश र पानी हातमा लिई संकल्प गरी चढाउनुभएको छ ।

ठापूजाको लागि चढाइएको खेतको चारकिल्ला, पूजा गर्ने सामग्री, देवताको सम्पत्ति रक्षा गर्ने अधिकारीले भोग गर्न पाउने कुरा, यी जम्मै कुरा लेखिएको यो दानपत्र लालमोहर गरी अधिकारीको हातमा सुम्पिएको छ।ती अधिकारीले पनि दानपत्रमा लेखिएका सरसामानहरू हरेक पूजाको वेला श्रीतलेजुको सामुन्ने पुऱ्याउनू ।

कुनै बखत दैववशले कुनै विघ्नबाधा आइपरेमा अधिकारीले राजाको ढोकामा आएर मन्त्री आदि भारादारहरूको नगीचमा बिन्ति चढाएर साबिकबमोजिम सरसामग्री जुटाउनू । मन्त्रीहरूले पनि उनको कुरा सुनेर दानपत्रमा लेखिएबमोजिम ठापूजा चलाइदिनू ।

अनि यो देवस्वमा ती अधिकारीले वा अरू कुनै पापीले लोभ गरेर ठापूजा टुटायो भने त्यसलाई पञ्चमहापाप लागोस् । त्यसलाई श्री ३ तलेजुको कुदृष्टि पनि परोस् । जात-भात अनुसार त्यसको अपराध हेरी ऐनसवालबमोजिम ज्यान सजाय दिनुपर्ने रहेछ भने ज्यान सजाय दिनू । त्यसका जहान छोराछोरीहरूलाई पनि कमारा कमारी बनाइदिनू । ज्यान सजाय दिन नहुने ब्राह्मण आदि जातका भए मुडिदिनू । पैसा जरीवाना गर्नुपर्ने ठहरिए उसको अंशबाट कट्टा गरी जरीवाना गर्नू । देशनिकाला गर्नुपर्ने भए निकाली दिनू ।

कुनै धर्मात्माले यो धर्मलाई रक्षा गर्न चाहेर ठापूजा चलायो भने त्यसलाई पञ्चमहायज्ञको पुण्य लागोस् । ती धर्मात्माप्रति श्री ३ तलेजुको दया र सुदृष्टि पनि राम्ररी परोस् ।

यहाँ साक्षीहरू- सूर्य चन्द्र आदि देवताहरू । मानिसमा चाहिँ यिनीहरू हुन्- मन्त्रिनायक(चौतरिया) श्रीरणोद्योत शाह, समरशेर शाह, श्रीबलभद्र शाह, श्रीविदुर शाह, श्रीशेरबहादुर शाह, मन्त्रीहरू श्रीरणजित् पाँडे, श्रीदामोदर पाँडे, श्रीत्रिभुवन, श्रीनरसिंह, महाकोशाध्यक्ष (मुख्य खजाञ्ची) श्रीभोटु पाँडे, कोशाध्यक्ष (खजाञ्ची) श्रीश्यामलाल उपाध्याय, स्वर्णरौप्यमुद्राधिकारस्थ (टकसारका हाकीम) श्रीभीम, संकल्प पढ्ने पुरोहित श्रीदैवज्ञकेशरी पण्डित, पानो हाल्ने काजी श्रीकीर्तिमानसिंह, चारकिल्ला छ उपाउँदा खेरिका साक्षीचाहिँ यिनीहरू हुन्– श्रीहर्ष पन्त, श्रीहरि अर्ज्याल, श्रीभानु उपाध्याय खनाल, श्रीजगजित् पाँडे, श्रीहरिवंश बोहरा, श्रीवंशवीर राना ।

वि.सं. १८५६ आश्विन शुक्ल अष्टमी आदित्यवारको दिन कान्तिपुरमा यो ताम्रपत्र गरिबिइएको हो ।

आफूले दिएको वा अरूले दिएको जग्गा जसले हरण गर्छ; त्यो मानिस साठी हजार वर्षसम्म नरकमा कीरा भई रहन्छ । शुभ होस् ।

卐

[ ८१ संख्या ]

# शान्तिपुरको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

स्वयम्भूस्थान, शान्तिपुरभित्र राखिएको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ ।

## मूलपाठ

१. स्वस्ति ।। श्रीशालिवाहनीयशके विधुनयनतुरगचन्द्र १७२१ मिते प्रमोदा-
ख्यसंवत्सरे श्रीसूर्ये दक्षिणायने आश्विनमासे कृष्णपक्षे अष्टम्यां तिथौ रवि-
वासरे आर्द्रानक्षत्रे व्य–

२. तीपातयोगे बालवकरणे गिरिशमुहूर्त्ते कन्याराशिस्थिते सूर्ये मिथुनराशि-
स्थिते चन्द्रे देवगुरौ चान्येषु ग्रहेषु यथास्थानस्थितेषु सत्सु स्वस्ति श्रीगिरि-
राजच–

३. क्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्री-
मन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम साह बहादू–

४. र सम्सेर्ज्जङ्गदेवानां सदा समरविजयिनाम्. श्रीमन्मात्रा शान्तिपुराधिष्ठातृ
.........प्रीतये प्रतिवर्षंकार्तिकपौर्णमास्यां माघपौर्णमास्यां च दानपत्रस्थ-
यथालिपिसा–

५. मग्रीभिरन्यूनाभिर्महापूजां कारयितुं कान्तिपुरभूभागान्तर्गतसेभुनिकटवर्ति-
चतुर्विंशत्यधिकशतद्वयमूरि २२४ परिमितक्षेत्रं सकुशोदकं संकल्प्य समर्पित-
मस्ति

६. पूजार्थसमुत्सृष्टतत्क्षेत्रसीमा पूजनसामग्री देवक्षेत्ररक्षाधिकारस्थजनभोग्यं

चैतत्सर्ववृत्तान्तविलसितं दानपत्रं अरुणमुद्रालङ्कृतमधिकारिहस्ते स्थापितमस्ति, अ–

७. धिकारिणा च दानपत्रलिखिता यथालिपिसामग्री प्रतिपूजासु ...... सन्निधौ प्रापयितव्या कदाचिद्दैववशादन्तराये पतिते सति अधिकारिणा राजद्वारमाग–

८. त्य सचिवप्रभृतिभारधरनिकटे विज्ञप्ति कृत्वा यथोक्तसामग्री सम्पादनीया सचिवादिभिश्च तदीयोक्तिमवधार्य दानपत्रलिखितमनतिक्रम्य महापूजा कारयितव्या ॥

९. अथैतस्मिन् देवस्वे तदधिकार्यन्यो यः कश्चन पापात्मा लोभमाचरिष्यन् पूजाखंडनं करिष्यति स पंचमहापातकी, तमेव ...... कोपदृष्ट्या पश्यतु, स एव पु–

१०. नर्वर्णाश्रमानुसारेण नीत्यनुसारेणापराधानुसारेण च वधार्हश्चेद्धन्तव्यः तत्कलत्रादिकं च दास्यत्वे नियोज्यम्. अवध्यो ब्राह्मणादिर्मुंडनापराधयुक्तश्चेत्तथा

११. विधेयः धनापहारयोग्यश्चेत्तदीयधनं दायानुसारेण ग्राह्यम्. अपसारणयोग्यश्चेद्देशतो बर्हिनिःसारणीयः ॥ यः कश्चन धर्मात्मा एतद्धर्मसंरक्षणं विधास्य–

१२. न् महापूजां निर्वाहयिष्यति, स पंचमहायज्ञजन्यपुण्यभाग् भविष्यति. तस्मिन्नेव ...... कृपासुदृष्टिश्च पतिष्यतीत्यत्र साक्षिण आदित्यचन्द्रादयो देवाः ॥ म–

१३. नुष्याश्चैते संकल्पवाक्यवक्ता पुरोहितः श्रीदैवज्ञकेशरीपंडितः मंत्रिनायकाः पंच॥श्रीरणोद्योतसाह्श्रीसमरसेरसाह्श्रीवलभद्रसाह्श्रीविदुरसाह्श्रीसेरव–

१४. हादुरसाहाः ॥ सचिवाश्च पंच॥ पांडे रणजित्ः। पांडे दामोदरः। श्रीत्रिभुवनः। श्रीनरसिंहः उदकन्यासकर्ता श्रीकीर्तिमानसिंहः॥ महाकोशाध्यक्षः श्रीभोटु

१५. पांडे । कोशाध्यक्षः श्रीश्यामलालोपाध्यायः स्वर्णरौप्यमुद्राधिकारस्थः श्रीभीमः ॥ सीमासमयसाक्षिणस्तु श्रीहर्षपन्तः। भानूपाध्यायः खनालः । ज–

१६. गजित् पांडे, हरिवंश वोहराः वंशवीर राना अर्ज्यालः श्रीहरिः॥ इति

श्रीविक्रमार्कसंवत्सरे १८५६ आश्विनशुक्लाष्टम्यामादित्यवासरे लिखितमिदं कान्तिपुररा–

१७. जधान्यां शुभम् ॥ स्वदत्तां परदत्तां वा यो हरेच्च वसुन्धराम् । षष्टिवर्ष-सहस्राणि विष्टायां जायते क्रिमिः ॥ शुभम्

## अनुवाद

कल्याण होस् । शकसंवत् १७२१, प्रमोद संवत्सरमा, दक्षिणायनमा सूर्य गएमा, आश्विन कृष्ण अष्टमी आदित्यवार आर्द्रानक्षत्र व्यतीपातयोग बालवकरण गिरीश मुहूर्तमा, कन्याराशिमा सूर्य बसेमा, मिथुनराशिमा चन्द्रमा बसेमा, बृहस्पति र अरू ग्रहहरू आपना आपना स्थानमा बसेका बेलामा ।

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम शाह बहादुर शमशेर जङ्गदेव सदा समरविजयीकी श्रीमुमाले शान्तिपुरको अधिष्ठातृदेवतालाई खुशी तुल्याउन प्रतिवर्ष कार्तिक पूर्णिमा र माघ पूर्णिमाको दिन दानपत्रमा लेखिएबमोजिमका सरसामानमा कत्ति कम नगरी महापूजा गराउन कान्तिपुर इलाकाभित्र पर्ने दुइ शय चौबीस २२४ मुरी खेत कुश र पानी हातमा लिई संकल्प गरी सुम्पिएको छ ।

पूजाको लागि चढाइएको खेतको चारकिल्ला पूजा गर्ने सामग्री, देवताको सम्पत्ति रक्षा गर्ने अधिकारीले पाउने कुरा, यी जम्मै कुरा लेखिएका दानपत्र लालमोहर गरी अधिकारीको हातमा सुम्पिएको छ । अधिकारीले पनि दानपत्रमा लेखिएबमोजिमका सरसामानहरू हरेक पूजाको बेला देवताको सामुन्ने पुऱ्याउनू ।

कुनै बखत दैववशले कुनै विघ्नबाधा आइपरेमा अधिकारीले राजाको ढोकामा आएर मन्त्री आदि भारादारहरूको नगीचमा बिन्ति चढाएर साबिकबमोजिम सरसामग्री जुटाउनू । मन्त्रीहरूले पनि उनको कुरा सुनेर दानपत्रमा लेखिएबमोजिम महापूजा गराउनू ।

अनि यो देवस्वमा ती अधिकारीले वा अरू कुनै पापीले लोभ गरेर पूजा टुटायो भने त्यसलाई पञ्चमहापाप लागोस् । त्यसलाई......देवताको कुदृष्टि पनि परोस् । जात-भातअनुसार त्यसको अपराध हेरी ऐनसवालबमोजिम ज्यान सजाय दिनुपर्ने रहेछ भने ज्यान सजाय

दिनू । त्यसका जहान छोराछोरीहरूलाई पनि कमारा कमारी बनाइदिनू । ज्यान सजाय दिन नहुने ब्राह्मण आदि जातका भए मुडिदिनू । पैसा जरीवाना गर्नु पर्ने ठहरिए उसको अंशबाट कट्टा गरी जरीवाना गर्नू । देशनिकाला गर्नु पर्ने भए निकाली दिनू ।

कुनै धर्मात्माले यो धर्मलाई रक्षा गर्न बाहेर महापूजा चलायो भने त्यसलाई पञ्चमहायज्ञको पुण्य लागोस् । ती धर्मात्मा प्रति......देवताको दया र सुवृष्टि पनि राम्ररी परोस् ।

यहाँ साक्षीहरू– सूर्यचन्द्र आदि देवताहरू। मानिसमा चाहिँ यिनीहरू हुन्– संकल्प पढ्ने पुरोहित श्रीदैवज्ञकेशरी पण्डितः; मन्त्रिनायक ( चौतरिया ) पाँच जना–श्रीरणोद्योत शाह, श्रीसमरशेर शाह, श्रीबलभद्र शाह, श्रीविदुर शाह, श्रीशेरबहादुर शाह । मन्त्रीहरू पनि पाँच जना–रणजित् पाँडे, श्री दामोदर पाँडे, श्रीत्रिभुवन, श्रीनरसिंह, पानी हाल्ने श्रीकीर्तिमानसिंह, महाकोशाध्यक्ष (मुख्य खजान्ची) श्रीभोटु पाँडे, कोशाध्यक्ष ( खजान्ची ) श्रीश्यामलाल उपाध्याय, स्वर्णरौप्यमुद्राधिकारस्य ( टक्सारका हाकीम ) श्रीभीम, चारकिल्ला छुट्याउँदा खेरिका साक्षीचाहिँ यिनीहरू हुन्– श्रीहर्ष पन्त, भानु उपाध्याय खनाल, जगजित् पाँडे, हरिवंश बोहरा, बंशबीर राना, श्रीहरि अर्ज्याल ।

वि.सं. १८५६ आश्विन शुक्ल अष्टमी आदित्यवारको दिन, कान्तिपुर राजधानीमा यो ताम्रपत्र गरिदिइएको हो ।

आफूले दिएको वा अरूले दिएका जग्गा जसले हरण गर्छ; त्यो मानिस साठी हजार वर्षसम्म नरकमा कीरा भई रहन्छ । शुभ होस् ।



[ ८२ संख्या ]

# भक्तपुरको गीर्वाणयुद्धविक्रम शाहको ताम्रपत्र

भक्तपुरको तलेजुचोकमा अनेक ताम्रपत्रहरू रहेका छन् । तिनमध्ये एकमा यो अभिलेख कुँदिएको छ । 'इतिहास-संशोधन' ५२ संख्यामा गौतमवज्र वज्राचार्यद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. श्री ३ भक्तपत्तनस्थतलेजुदेव्यै नमो नमः ॥ ॥ स्वस्ति श्रीशालिवाहनीय-
शके विधुनयनर्षिचन्द्र १७२१ मिते प्रमोदाख्यसंवत्सरे श्रीसूर्ये दक्षिणायने
आश्विनमासे कृष्णपक्षे अ-

२. ष्टम्यां पुण्यतिथौ रविवासरे आर्द्रानक्षत्रे व्यतीपातयोगे वालवकरणे गिरिश-
मुहूर्त्ते कन्याराशिस्थिते श्रीसूर्ये मिथुनराशिस्थिते चन्द्रे देवगुरौ चान्येषु
ग्रहेषु यथास्थानस्थिते-

३. षु सत्सु स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदा-
वलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाण-
युद्धविक्रमसाहव-

४. हादूर सम्सेर्जङ्गदेवानां सदा समरविजयिनाम्. श्रीमत्पित्रा परमनिर्गुणा-
नन्दस्वामिना श्री ३ तलेजुप्रीतये प्रतिवर्षं आषाढकृष्णदशम्यां पौषशुक्ल-
पूर्णिमायां फाल्गुनशुक्लद्वितीयायां च दानप-

५. त्रस्थयथालिपिसामग्रीभिरन्यूनाभिः ठापूजां कारयितुं भक्तपत्तनभूभागान्तर्गतद्व्युत्तरशतचतुष्टय ४०२ मुरिपरिमितक्षेत्रं सकुशोदकं संकल्प्य समर्पितमस्ति ॥ एतत्पूजा–

६. र्थंसमुत्सृष्टक्षेत्रसीमा पूजनसामग्री देवस्वरक्षाधिकारस्थजनभोग्यं चैतत्सर्ववृत्तान्तविलसितमरुणमुद्राऽलंकृतं पूर्वोक्तदानपत्रमधिकारिहस्ते स्थापितमस्ति, अधिकारि–

७. णा च दानपत्रलिखितपरिमाणपूजनसामग्री पूजकोपदिष्टपूजापूर्वकाले श्री ३ तलेजुसन्निधौ प्रापयितव्या। कदाचिद् दैववशात्कस्मिंश्चिदन्तराये पतिते अधिकारिणा रा–

८. जद्वारमागत्य सचिवप्रभृतिभारधरनिकटे विज्ञप्तिं कृत्वा यथोक्तसामग्री सम्पादनीया॥ सचिवादिभिश्च तदीयोक्तिमवधार्य दानपत्रलिखितमनतिक्रम्य पूजा कारयित–

९. व्या॥ अथैतस्मिन्देवस्वे तदधिकार्यन्यो यः कश्चन पापात्मा लोभमाचरिष्यन् वा पूजाखंडनं करिष्यति स पंचमहापातकी, तमेव श्री ३ तलेजु कोपदृष्ट्या पश्यतु स एव पुन–

१०. र्वर्णाश्रमानुसारेण नीत्यनुसारेणापराधानुसारेण च वधार्हश्चेद्धन्तव्यः। तत्कलत्रादिकं च दास्यत्वे नियोज्यम्, अवध्यो ब्राह्मणादिर्मुण्डनापराधयुक्तश्चेत्तथा विधेयः॥

११. धनापहारयोग्यश्चेत्तदीयधनं ग्राह्यम्, अपसारणयोग्यश्चेद्देशतो बहिर्निःसारणीयः। यः कश्चन धर्मात्मा एतद्धर्मसंरक्षणं विधास्यन् पूजां निर्वाहयिष्यति

१२. स पंचमहायज्ञजन्यपुण्यभाग् भविष्यति, तस्मिन्नेव श्री ३ तलेजुकृपानुदृष्टिश्च नितरां पतिष्यतीत्यत्र साक्षिण आदित्यचन्द्रादयो देवाः॥ मनुष्याश्चैते॥ संकल्पवाक्यवक्ता पुरोहि–

१३. तः श्रीदैवज्ञकेसरिपंडितः, मंत्रिनायकाः पंच॥ श्रीरणोद्योतसाहसमरसेरसाहश्रीवलभद्रसाहश्रीविदुरसाहश्रीसेरवहादुरसाहाः॥ सचिवाश्च पंच॥ पांडे श्रीरणजि–

१४. त् । पांडे श्रीदामदरः, श्रीत्रिभुवनः । श्रीनरसिंह उवकन्यासकर्ता श्रीकीर्ति-
मानसिंहः ।। महाकोषाध्यक्षः पांडे श्रीभोटुः । कोषाध्यक्ष श्यामलाल
उपाध्यायः ।। स्वर्णरौप्यमुद्राधि-

१५. कारस्थः श्रीभीमः ।। सीमासमयसाक्षिणस्तु । श्रीहर्षः पन्तः । श्रीभानु
उपाध्यायः खनालः । पांडे श्रीजगजित् । बोहरा श्रीहरिवंशः । राना श्री-
वंशवीर । इति श्रीविक्रमार्कसंवत्स-

१६. रे १८५६ आश्विनशुक्लाष्टम्यामादित्यवासरे लेखोऽयं कान्तिपुरीयः शुभः ।
स्वदत्तां परदत्तां वा यो हरेच्च वसुन्धराम् । षष्टिवर्षसहस्राणि विष्टायां
जायते कृमिः ।।१।। शुभं ।।

## अनुवाद

श्रीश्रीश्रीभक्तपुरकी तलेजुदेवीलाई नमस्कार । शकसंवत् १७२१, प्रमोदसंवत्सरमा, दक्षिणायनमा सूर्य गएमा, आश्विन कृष्ण अष्टमी आदित्यवार आर्द्रानक्षत्र व्यतीपातयोग बालवकरण गिरीश मुहूर्तमा, कन्याराशिमा सूर्य बसेमा, मिथुनराशिमा चन्द्रमा बसेमा, बृहस्पति र अरू ग्रहहरू आफ्ना आफ्ना स्थानमा बसेका बेलामा,

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम शाह बहादुर सम्सेर जङ्गदेव सदा समर विजयीका बुवा परमनिर्गुणानन्द स्वामीले श्री ३ तलेजुदेवीलाई खुशी तुल्याउन वर्षेपिच्छे आषाढ कृष्ण दशमी, पौष शुक्ल पूर्णिमा र फाल्गुन शुक्ल द्वितीयाका दिन दानपत्रमा लेखिएबमोजिमका सामग्रीहरूले ठापूजा गराउन कुश र पानी हातमा लिई संकल्प गरी भक्तपुर इलाकाभित्रको ४०२ मुरी खेत चढाउनुभएको छ ।

यो पूजाको लागि दिइएको खेतको चारकिल्ला, पूजा गर्ने सामग्री, देवताको संपत्ति रक्षा गर्ने अधिकारीले पाउने कुरा, यी जम्मै कुरा खुलाएर यो दानपत्र लालमोहर गरी अधिकारीको हातमा सुम्पिएको छ । ती अधिकारीले पनि दानपत्रमा लेखिएबमोजिमका पूजा गर्ने सर-सामान पूजाहारीले बताएको पूजा गर्ने बेलाभन्दा पहिले श्री ३ तलेजुकहाँ पुऱ्याउनू ।

कुनै बखत दैववशले कुनै विघ्न बाधा आइपरेमा अधिकारीले राजाको ढोकामा आएर

अन्नी (कांची) आदि भाराबारहरूको बीचमा विभिन्न बढाएर तावितबमोजिम सरसामग्री जुटाउनु । मन्त्रीहरूले पनि तिनको कुरा सुनेर दानपत्रमा लेखिएबमोजिमको पूजा चलाइदिनू ।

अनि यो देवस्वमा कुनै अधिकारीले वा अरू कुनै पापीले लोभ गरेर पूजा टुटायो भने त्यसलाई पञ्चमहापाप लागोस् । त्यसलाई श्री ३ तलेजुदेवीको कुदृष्टि पनि परोस् । जात भातअनुसार त्यसको अपराध हेरी ऐनसवालबमोजिम ज्यान सजाय दिनुपर्ने रहेछ भने ज्यान सजाय दिनू । त्यसका अहान छोराछोरीहरूलाई पनि कमारा कमारी बनाइदिनू । ज्यान सजाय दिन नहुने ब्राह्मण आदि जातिका भए मुडिदिनू । पैसा जरीवाना गर्नुपर्ने ठहरिए उसको अंशबाट कट्टा गरी जरीवाना गर्नू । देशनिकाला गर्नुपर्ने भए निकाली दिनू ।

कुनै धर्मात्माले यो धर्मलाई रक्षा गर्न चाहेर पूजा चलायो भने त्यसलाई पञ्चमहायज्ञको पुण्य लागोस् । ती धर्मात्मामा श्री ३ तलेजुको दया र सुदृष्टि पनि राम्रोसँग परोस् ।

यहाँ साक्षीहरू— सूर्य, चन्द्र आदि देवताहरू । मानिसहरूमा चाहिँ यिनीहरू हुन्— संकल्प पढ्ने पुरोहित दैवज्ञकेशरी पण्डित । मन्त्रिनायक (चौतरिया) पाँच जना— श्रीरणोद्योत शाह, श्रीसमरशेर शाह, श्रीबलभद्र शाह, श्रीविदुर शाह, शेरबहादुर शाह । मन्त्रीहरू पाँच जना- श्रीरणजित् पाँडे, श्रीदामोदर पाँडे, श्रीत्रिभुवन, श्रीनरसिंह, पानी हाल्ने श्रीकीर्तिमानसिंह, महाकोशाध्यक्ष (मुख्य खजान्ची) श्रीभोटु पाँडे, कोशाध्यक्ष (खजान्ची) श्यामलाल उपाध्याय, स्वर्णरौप्यमुद्राधिकारस्थ ( टक्सारका हाकीम ) श्रीभीम । चार किल्ला छुट्याउँदा खेरिका साक्षीचाहिँ यिनीहरू हुन्— श्रीहर्ष पन्त, श्रीभानु उपाध्याय खनाल, श्रीजगजित् पाँडे, श्रीहरिवंश बोहरा, श्रीवंशवीर राना ।

विक्रमसंवत् १८५६ आश्विन शुक्ल अष्टमी आदित्यवारका दिन कान्तिपुरमा यो ताम्रपत्र गरिदिइएको हो ।

आफूले दिएको वा अरूले दिएको जग्गा जसले हरण गर्छ; त्यो मानिस साठी हजार वर्षसम्म नरकमा कीरा भई रहन्छ ॥ शुभ ॥

卐

[ ८३ संख्या ]

# दक्षिणकालीस्थानको गीर्वाणयुद्धविक्रम शाहको ताम्रपत्र

यो ताम्रपत्र हाल फर्पिङनिवासी श्रीगणेशलाल मानन्धरसंग रहेको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीदक्षिणकालिकायै नमः ॥ ॥ स्वस्ति श्रीशालिवाहनीयशके विधुनयनऋषिचन्द्रमिते १७२१ प्रमोदनामसंवत्सरे श्रीसूर्ये दक्षिणायने आश्विनमासे कृष्णप–

२. क्षे अष्टम्यां पुण्यतिथौ रविवासरे आर्द्रानक्षत्रे व्यतीपातयोगे बालवकरणे गिरिशमुहूर्ते कन्याराशिस्थिते सूर्ये मिथुनराशिस्थिते चन्द्रे देवगुरौ च अन्येषु ग्रहेषु यथास्था–

३. नस्थितेषु सत्सु स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि-विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमन्महा राजगी–

४. र्वाणयुद्धविक्रमसाहबहादुरसम्सेर्जंङ्गदेवानां सदा समरविजयिनाम्······ श्रीमन्मात्रा श्रीदक्षिणकालिकाप्रीतये प्रतिवर्षीयवैशाखकृष्णत्रयोदश्यां भाद्र-कृष्णाष्टम्यां च दानप–

५. अस्ययथालिपिसामग्रीभिरन्यूनाभिर्महापूजां प्रतिदिनं नित्यपूजां च कारयितुं फर्पिङग्रामभूभागान्तर्गतचतुरुत्तरपंचशत ५०४ मुरिपरिमितक्षेत्रं सकुशो–

६. दकं संकल्प्य समर्पितमास्ति ।। महापूजानित्यपूजार्थं समुत्सृष्टैतत्क्षेत्रसीमा
पूजनसामग्री देवक्षेत्ररक्षाधिकारस्थजनभोग्यं चैतत्सर्ववृत्तान्तविलसि–
७. तमरुणमुद्रालङ्कृतदानपत्रमधिकारिहस्ते स्थापितमस्ति, अधिकारिणा च
दानपत्रलिखिता यथालिपिसामग्री नित्यनैमित्तिकपूजासु श्रीदक्षिणकालिका–
८. सन्निधौ प्रापयितव्या. कदाचिद् दैववशादन्तराये पतिते सति अधिकारिणा
राजद्वारमागत्य सचिवप्रभृतिभारधरनिकटे विज्ञप्तिं कृत्वा यथोक्त–
९. सामग्री संपादनीया. सचिवाभिश्च तदीयोक्तिमवधार्य दानपत्रलिखितमनति-
क्रम्य नित्यपूजानैमित्तिकपूजा च कारयितव्या । अथैतस्मिन्देवस्वे तदधि–
१०. कार्यन्यो यः कश्चन पापात्मा लोभमाचरिष्यन् नित्यनैमित्तिकपूजाखंडनं
करिष्यति स पंचमहापातकी भविष्यति तमेव श्रीदक्षिणकालिका कोपदृष्ट्या
पश्यतु स
११. एव पुनर्वर्णाश्रमानुसारेण नीत्यनुसारेणापराधानुसारेण च वधार्हश्चेद्हन्त-
व्यः । तत्कलत्रादिकं च दास्यत्वे नियोज्यम् अवध्यो ब्राह्मणादिर्मुण्डनापरा–
१२. धयुक्तश्चेत्तथा विधेयः । धनापहारयोग्यश्चेत्तदीयधनं दायानुसारेण ग्राह्यम् ।।
अपसारणयोग्यश्चेद् देशतो बहिः निस्सारणीयः । यः कश्चन ध–
१३. र्मात्मा एतद्धर्मसंरक्षणं विधास्यन्नुभयपूजां निर्वाहयिष्यति स पंचमहा-
यज्ञजन्यपुण्यभाग् भविष्यति, तस्मिन्नेव श्रीदक्षिणकालिकाकृपासुदृष्टिश्च
नि–
१४ तरां पतिष्यतीत्यत्र साक्षिण आदित्यचन्द्रादयो देवाः । मनुष्याश्च ते । मंत्रि-
नायकाः श्रीरणोद्योतसाहश्रीसमरशेरसाहश्रीबलभद्रसाहश्रीविदुर–
१५. साहश्रीसेरबहादुरसाहाः ।। सचिवास्तु ।। पांडे श्रीरणजित् पांडे श्रीदामोदरः
श्रीत्रिभुवनः श्रीनरसिंहः, महाकोशाध्यक्षः पांडे श्रीभोटुः कोशाध्यक्षः
१६. श्यामलालोपाध्यायः । स्वर्णरौप्यमुद्राधिकारस्थः श्रीभीमः । संकल्पवाक्य-
वक्ता पुरोहितः श्रीदैवज्ञकेशरी पंडितः । उदकन्यासकर्ता सचिवः श्रीको–
१७. तिमानसिंहः । सीमासमयसाक्षिणः । पन्तोपनामकः श्रीहर्षः । अर्यालोपनामकः
श्रीहरिः खनालोपनामको भानूपाध्यायः । जगजित्पाडे । वोहरोपनाम–
१८. कः श्रीहरिवंशः । रानीपनामकश्रीवंशवीरः ।। इति श्रीविक्रमार्कसंवत्सरे

१८५६ आश्विनशुक्लाष्टम्यामादित्यवासरे लेखोयं कान्तिपुरीयः शुभः ॥
१९. स्वदत्तां परदत्तां वा यो हरेत वसुन्धराम् ॥ षष्टिवर्षसहस्त्राणि विष्टायां जायते क्रिमिः ॥ ॥शुभ

## अनुवाद

कल्याण होस् । श्रीदक्षिणकालिकालाई नमस्कार । शकसंवत् १७२१, प्रमोद संवत्सरमा, दक्षिणायनमा सूर्य गएमा, आश्विन कृष्ण अष्टमी आदित्यवार आर्द्रानक्षत्र व्यतीपातयोग बालवकरण गिरीश मुहूर्तमा, कन्याराशिमा सूर्य बसेमा मिथुनराशिमा चन्द्रमा बसेमा बृहस्पति र अरू ग्रहहरू आफ्नो आफ्नो स्थानमा बसेको बेलामा,

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम शाह बहादुर शमशेर जङ्गदेव सदा समरविजयीको श्रीमुमाले श्रीदक्षिणकालिकालाई खुशी तुल्याउन वर्षैपिच्छे वैशाख कृष्ण त्रयोदशी र भाद्र कृष्ण अष्टमीको दिन दानपत्रमा लेखिएका सरसामानमा कत्ति कमी नगरी महापूजा गराउन र प्रतिदिन नित्यपूजा गराउन फर्पिङगाउँको इलाकाभित्र रहेको पाँच शय चार ५०४ मुरी खेत कुश र पानी हातमा लिई संकल्प गरी चढाउनुभएको छ ।

महापूजा र नित्यपूजा गर्नको लागि चढाइएको खेतको चारकिल्ला, पूजा गर्ने सामग्री देवताको संपत्ति रक्षा गर्ने अधिकारीले पाउने कुरा, यी जम्मै कुरा खुलाएर, लालमोहर गरी अधिकारीको हातमा सुम्पिएको छ । अधिकारीले पनि दानपत्रमा लेखिएबमोजिमका पूजा गर्ने सरसामान नित्यपूजा र नैमित्तिकपूजा गर्ने बेलामा श्रीदक्षिणकालिकाको नगीच पुऱ्याउनू ।

कुनै बखत दैववशले कुनै विघ्न बाधा आइपरेमा अधिकारीले राजाको ढोकामा आएर मन्त्री आदि भारादारहरूको नगीचमा विन्ति चढाएर साबिकबमोजिम सरसामग्री जुटाउनू । मन्त्रीहरूले पनि तिनको कुरा सुनेर दानपत्रमा लेखिएबमोजिम नित्यपूजा र नैमित्तिक पूजा चलाइदिनू ।

अनि यो देवस्वमा ती अधिकारीले वा अरू कुनै पापीले लोभ गरेर नित्य र नैमित्तिक

पूजा टुटायो भने त्यसलाई पञ्चमहापाप लागोस् । त्यसलाई श्रीदक्षिणकालिकाको कुदृष्टि पनि परोस् । जात-भातअनुसार त्यसको अपराध हेरी ऐनसवालबमोजिम ज्यान सजाय दिनुपर्ने रहेछ भने ज्यान सजाय दिनू । त्यसका जहान छोरा छोरीहरूलाई पनि कमारा कमारी बनाइदिनू । ज्यान सजाय दिन नहुने ब्राह्मण आदि जातका भए मुडिदिनू । पैसा जरीवाना गर्नुपर्ने ठहरिए उसको अंशबाट कट्टा गरी जरीवाना गर्नू । देशनिकाला गर्नुपर्ने भए निकाली दिनू ।

कुनै धर्मात्माले यो धर्मलाई रक्षा गर्न चाहेर दुवै पूजा चलायो भने त्यसलाई पञ्चमहायज्ञको पुण्य लागोस् ती धर्मात्मामा श्री ३ तलेजुको दया र सुदृष्टि पनि राम्ररी परोस् ।

यहाँ साक्षीहरू- सूर्य, चन्द्र आदि देवताहरू । मानिसमा चाहिँ चिनीहरू हुन्- मन्त्रिनायक (चौतरिया) श्रीरणोद्योत शाह, श्रीसमरशेर शाह, श्रीबलभद्र शाह, श्रीविदुर शाह, शेरबहादुर शाह, मन्त्रीहरू– श्रीरणजित् पाँडे, श्रीदामोदर पाँडे, श्रीत्रिभुवन, श्रीनरसिंह, महाकोशाध्यक्ष श्रीभोटु पाँडे, कोशाध्यक्ष श्यामलाल उपाध्याय, स्वर्णरौप्यमुद्राधिकारस्थ (टक्सारका हाकीम) श्रीभीम, संकल्प पढ्ने पुरोहित श्रीदैवज्ञकेशरी पण्डितः, पानी हाल्ने मन्त्री श्रीकीर्तिमानसिंह, चार किल्ला छुट्याउँदा सेरिका साक्षीहरू चाहिँ यी हुन्– श्रीहर्ष पन्त, श्रीहरि अर्याल, भानु उपाध्याय खनाल, जगजित् पाँडे, श्रीहरिवंश बोहरा, श्रीवंशवीर राना ।

विक्रमसंवत् १८५६ आश्विन शुक्ल अष्टमी आदित्यवारको दिन कान्तिपुरमा यो ताम्रपत्र गरिदिइएको हो । आफूले दिएको वा अरुले दिएको जग्गा जसले हरण गर्छ; त्यो मानिस साठी हजार वर्षसम्म नरकमा कीरा भई रहन्छ । शुभ होस् ।

व्याख्या–

वि.सं १८५५ फाल्गुनमा श्री ५ रणबहादुर शाहले आफ्ना डेढ वर्षका छोरा श्री ५ गीर्वाण युद्धविक्रम शाहलाई कुन परिस्थितिमा गद्दीमा राखे भन्ने कुरा माथि परिसकेको छ । त्यसपछि रणबहादुर शाह "स्वामी" भएथे । गीर्वाणयुद्धविक्रम शाहकी आमा कान्तवती त्यसै बेला बिरामी भइसकेकी थिइन् । गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राखिएको सूचना दिई दूत दीनानाथ उपाध्यायलाई लेखिएको पत्रमा भारतबाट हाकीम, डाक्टर झिकाउने कुराको पनि चर्चा परेको छ । कान्तवतीको औषधोपचारको लागि चिकित्सक झिकाउने कुरा पछिका अरु पत्रमा पनि परेको छ । वि.सं. १८५६ श्रावणमा दीनानाथलाई लेखिएको पत्रमा "उप्रान्त हकीमलाई आषाढ भरीमा झिकाउँला भनि लेष्याछ्यौ झिकायको तारीक अलिक अगवै याहाँ आई पुग्न्या

गरी पठाउनु र औलामा डांक राखी झिकाउन्या अर्थ गरीयला. व्यथाको इसारा पायाको भया उसै माफिकका इलाज खरीद गरी लैजांदा हुं भनी हकीम भन्छ भन्याका अर्थलाई क्षयरोग र निरन्तर लागि रहन्या खांसी छुट्न्या बल बढ्न्या शरीर मोटाउन्या इलाज साथमा ल्याउनू. चांडो गरी पठाइ देउ" भनिएको छ।[1] यसबाट कान्तवतीको रोग निको नभई झन् झन् बढ्दै गएको कुराको संकेत पाइन्छ।

त्यस ताका रोग लाग्दा औषधोपचारको साथ साथै देवदेवीहरूको पूजा आजा गर्ने पनि चलन थियो। यस कारण श्री ५ रणबहादुर शाहले नेपालका प्रसिद्ध सारा देवताकहाँ पूजा-आजा गराएका थिए। ब्राह्मण, वज्राचार्य आदि विभिन्न धार्मिक सम्प्रदायका पुरोहितवर्गद्वारा पुरश्चरण आदि गराइएका थिए।[2] त्यसै सिलसिलामा १८५६ को दसैंको अवसरमा गोरखाका कालिका, काठमाडौंका पशुपति, चांगुनारायण, तलेजु, शान्तिपुर तथा दक्षिणकालिका आदि शैव, वैष्णव, बौद्ध, शाक्त आदि विभिन्न सम्प्रदायका देवताहरूको नैमित्तिक पूजा धूमधामसँग गर्न प्रशस्त मात्रामा जग्गा गुठी राखी यी ताम्रपत्रहरू कुँदाइएका हुन्। यीबाहेक यस्ता ताम्रपत्रहरू अन्त पनि प्रसिद्ध देवस्थलमा टाँसिएका होलान्।

यी ताम्रपत्रहरूले एकातिर नेपालमा अघिदेखि चल्दै आएका अनेक धार्मिक सम्प्रदाय-हरूमा शासकहरूको तर्फबाट उदार भावना लिई समन्वयको वातावरण खडा गरेको राम्रो उदाहरण प्रस्तुत गर्छन् भने अर्कोतिर तात्कालिक सामाजिक धारणा, प्रशासनव्यवस्था आदिमा पनि केही प्रकाश पार्छन्। यस कारण तात्कालिक कुरा बुझ्न यी आठवटा ताम्रपत्र पनि उपयोगी रहेका छन्।



१. कलकत्तामा दूत भई बसेका दीनानाथ उपाध्यायलाई लेखिएको उक्त पत्रको उतार ऐ. शि. बाबुराम आचार्यज्यूको सौजन्यबाट प्राप्त भएको हो।

२, 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १५६–१५७

[ ८४ संख्या ]

# साँखुको राजराजेश्वरीदेवीको अभिलेख

साँखु वज्रयोगिनीमन्दिरको मूल ढोकामा यो अभिलेख कुँदिएको छ। यहाँ विक्रम संवत् १८५६ दिइएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः श्रीतारिण्यै नमः॥ विज्ञानामृततोयमध्यविकसत्स्वान-
न्दकंजस्फुरद्योगीन्द्रामलमानसान्तरसरोहंसी शिवा साश्वती ॥ संसारा-
२. र्णवतारिणी कलिमलप्रध्वंसिनी तारिणी स्वैरं श्रीमणिचूडके भगवती वज्रे-
श्वरी राजते ॥१॥ वज्रेशीपदपंकजे परिणमच्चित्ता मनोज्ञा सती ज्ञा-
३. नध्यानपरायणा सुविनया साम्राज्यलक्ष्मीः परा ॥ योगीन्द्रेण महीभृता रण-
बहादूरेण भर्त्रा समं लोकानुग्रहकारिणी विजयते श्रीरा-
४. जराजेश्वरी ॥२॥ संयाते रसबाणवारणमहीसंख्यामिते वत्सरे मार्गे वै
दशमीतिथौ भृगुदिने पक्षे बलक्षे शुभे ॥ सौवर्णं निजपार्श्व-
५. योः परिलसद्वातायनालंकृतभास्वत्कान्तिकलाकलापविलसत्सत्तोरणाढ्यं मुदा
॥३॥ राजराजेश्वरीदेव्या चार्पितं द्वारमुत्तमम् ।
६. श्रीवज्रयोगिनीप्रीत्यै प्रीयतां तारिणी परा ॥४॥ ॐ अद्य ब्रह्मणो द्वितीय-
परार्धे श्रीश्वेतवराहकल्पे वैवस्वतमन्वन्तरे कलियुगे प्र-
७. थमपादे जम्बूद्वीपे भारतवर्षे भरतखण्डे हिमवद्दक्षिणपादे नेपालमण्डले श्री-
पशुपतिगुह्येश्वरीसन्निधाने वासुकिक्षेत्रे वाग्म-

(अर्कोपट्टि)

८. त्याः पूर्वकूले मणिमत्याः पश्चिमकूले शंकरापुर्यां श्रीमणिचूडपर्वते पुण्यभूमौ प्रमोदनामसम्वत्सरे श्रीसूर्य्ये दक्षिणायने हेमन्तरितौ मार्गशीर्षे मा–

९. से शुक्लपक्षे दशम्यां तिथौ उत्तरभाद्रनक्षत्रे व्यतिपातयोगे गरकरणे पितृ–मुहूर्तके वृश्चिकराशिगते सवितरि......राशिगते चन्द्रमसि एवं गुणविशेष–

१०. विशिष्टे भृगुवासरे काश्यपगोत्रा राजराजेश्वरीदेवी मम कोपि कायिकवा–चिकमानसिकसांसर्गिक ......समस्तपापक्षेपपूर्वकं श्री३मद्वज्रयोगि–

११. नीसंप्रीत्यर्थं गवाक्षद्वयतोरणसहितसुवर्णद्वारसमर्पणमहं करिष्ये. अर्थेऽस्मि–न्साक्षिणश्च ते देवा वै पंचभौतिकाः। लोभेनात्र महापापभागि–

१२. नस्ते नराधमाः ॥५॥ एतत्कृतौ धूर्वहश्च भीमाचार्य्यस्सपुत्रकः॥ तस्यापि तारिणी देवी प्रसन्नास्तु सदा मुदा॥ ॥अत्र देसभाषा॥ स्वस्ति श्रीशा–

१३. के १७२१ सम्वत् १८५६ नेपालसम्वत् ९२० मार्गशीर शुक्ल दसमि शुक्रवार यस दिन यो ढोका झ्याल तोरण चह्राया, यस ढोका बनायाका

१४. ...... भीम आचार्य्य श्रीकपर्दार सत्रुभंजन पाँडे चिताईदार हरीधर धनवंत साधुका द्वान्या श्रीसुरविर कार्कि शुभम्

## अनुवाद

श्रीगणेशलाई नमस्कार। श्रीतारिणीलाई नमस्कार। विज्ञानामृतरूपी पानीको बीचमा फुलेको आनन्दरूपी कमलमा फर्फराइरहेको ठूला योगीहरूको सफा मनभित्रको तलाउमा रहने पोथी हाँस जस्ती भएकी, कल्याण गर्ने, नित्यस्वरूपकी, संसाररूपी समुद्रबाट तार्ने भएकी, कलिकालको पाप पखाल्ने भएकी, भगवती वज्रेश्वरी तारा श्रीमणिचूड पर्वतमा सुहाइरहनुभएको छ।

वज्रेश्वरीको पाउरूपी कमलमा मन लाएकी, ज्ञान र ध्यानमा लागेकी, सुन्दरी, पतिव्रता, विनय (कर्तव्यको ज्ञान) भएकी, अर्को साम्राज्यलक्ष्मी जस्ती, लोकको दया गर्ने भएकी श्रीराजराजेश्वरीदेवी विजयी भई रहनुभएको छ।

वि.सं. १८५६ मार्ग शुक्ल दशमी शुक्रवारको दिन श्रीवज्रयोगिनीलाई खुशी तुल्याउन

श्रीराजराजेश्वरीदेवीले दुइतिर झ्यालले सिंगारिएको चहकिलो कान्तिले झलमल्ल गर्ने तोरण सहितको सुनको उत्तम ढोका खुशीसाथ चढाउनुभयो। यसबाट तारिणी देवी प्रसन्न हुनुहोस्।

आज ब्रह्माको द्वितीय प्रहरार्ध, श्रीश्वेतवराहकल्प, वैवस्वत मन्वन्तर, कलियुगको पहिलो पाउमा, जम्बूद्वीप भारतवर्ष भरतखण्डमा, हिमालयको दक्षिण फेदीमा, नेपालमण्डलमा, श्रीपशुपति गुह्येश्वरीको नगीच, वासुकिक्षेत्रमा, वाग्मतीको पूर्व किनारमा, मणिमतीको पश्चिम किनारामा, शङ्करापुरी, श्रीमणिचूडपर्वत, यस पुण्यभूमिमा,

प्रमोदसंवत्सरमा दक्षिणायनमा सूर्य बसेमा हेमन्त ऋतु, मार्ग महीना, शुक्ल पक्ष, दशमी तिथि, शुक्रवार, उत्तरभाद्र नक्षत्र, व्यतीपातयोग, गरकरण, पितृमुहूर्त, वृश्चिक राशिमा सूर्य गएमा,......राशिमा चन्द्रमा गएमा, यस्तो विशिष्ट दिनमा,

काश्यपगोत्रकी म राजराजेश्वरीदेवीले आफ्ना काय वाक् चित्त र सांसर्गिक......आदि सारा पाप पखाल्नाको लागि, श्री ३ वज्रयोगिनीलाई खुशी तुल्याउन दुइटा झ्याल र तोरण-सहितको सुनको ढोका चढाएँ।

यस कुरामा साक्षी सूर्य पृथ्वी आदि पाञ्चभौतिक देवता हुन्। यसमा कसैले लोभ गर्‍यो भने त्यस नराधमलाई महापाप लागोस्। यो काम गर्दा अभिभारा बोक्ने छोरासहित भीम आचार्य हुन्। तारिणी देवी तिनीउपर पनि सधैं प्रसन्न रहून्।

व्याख्या–

राजराजेश्वरीदेवीले वि.सं. १८५६ मंसीरमा सांखु वज्रयोगिनीको मन्दिरमा सुनका झ्याल, ढोका आदि चढाई यो अभिलेख कुँदन लाएकी हुन्। यस बेला राजराजेश्वरी इर्ताकर्ता नायब (राजप्रतिनिधि) रूपमा थिइन्। यो कुरा पशुपतिको प्रसिद्ध ताम्रपत्रबाट थाहा पाइन्छ। वि.सं. १८५५ फाल्गुनमा श्री ५ रणबहादुर शाहले श्री ५ गीर्वाणयुद्ध विक्रम शाहलाई गद्दीमा राखेका थिए। त्यस बेला राजा डेढ वर्षका बालक हुँदा देशमा गडबडी हुन नपाओस् भनी रणबहादुर शाहले राज्यसञ्चालनको लागि आवश्यक बन्धेज; सवालहरू बाँधेका थिए; उक्त बन्धेज, सवाल विशाल ताम्रपत्रमा कुँदाई पशुपतिमा टाँस्न लाएका थिए। सो ताम्रपत्रमा "मेरा इच्छाले श्रीकान्छि रानितिरका पुत्र श्रीगीर्वाणयुद्ध-विक्रम शाहलाई मेरा भरमुलुकको रजाइ गादि बक्स्यां यो जान्या बुझन्या नहुन्ज्यालसम्म कर्ता जेष्ठ रानिले राजा श्रीगीर्वाणयुद्धविक्रम शाहलाई काखमा राषि नायबि गर्नाको अर्थति-

यार बक्स्यां" भन्ने घोषणा गरिएको छ।[१] यसरी जेठी महारानी राजराजेश्वरीलाई हर्ता-कर्ता नायबीको अख्तियार दिई श्री ५ रणबहादुर शाहले सन्तुलन मिलाएका थिए।

कान्छी महारानी कान्तवतीको रोग शान्त पार्न स्वामी महाराज रणबहादुर शाहले भएभरको शक्ति लाएका थिए।[२] त्यसबेला जस्तो धर्मकर्म नेपालको इतिहासमा शायद न पहिले भएको होला; न पछि नै त्यस्तो उदाहरण पाइन्छ। यसरी औषधोपचारदेखि लिएर हरकिसिमको प्रयास गरिए पनि आखिर वि.सं. १८५६ कार्त्तिक शुक्ल चतुर्थीको दिन कान्त-वतीको मृत्यु भयो।[३] त्यसको लगत्तै एक महीना जतिपछि राजराजेश्वरीदेवीले वज्रयोगिनी-मन्दिरमा उपर्युक्त धर्म-कार्य गरेकी हुन्।

साँखुकी वज्रयोगिनी मूलतः वज्रयानअन्तर्गतकी देवी हुन्। परन्तु हाम्रो यहाँ प्राचीन कालदेखि नै धार्मिक समन्वय, धार्मिक उदारताका सुन्दर उदाहरण पाइन्छन्। सोही परम्पराको अनुसरण राजराजेश्वरीदेवीले पनि गरेकी हुन्। यस अभिलेखमा राजराजेश्वरीमा "वज्रेशीपदपंकजे परिणामच्चित्ता" भन्ने विशेषण प्रयोग गरिएको छ। साथै "ज्ञानध्यानपरा-यणा" भन्ने विशेषण पनि उनीमा लागेको छ। यसबाट राजराजेश्वरीदेवीको धार्मिक प्रवृत्तिको झलक पाइन्छ।

राजराजेश्वरीदेवी गुल्मीका राजा सिद्धशाहकी नातिनी हुन्।[४] सानै उमेरमा श्री ५ रणबहादुर शाहकी पट्टमहिषी हुने सौभाग्य उनीले पाएकी थिइन्। वि.सं. १८५५ मा हर्ताकर्ता नायबी अख्तियार दिई रणबहादुर शाहले राजराजेश्वरीप्रति आफ्नो विश्वास प्रकट गरेका थिए। तर पछि तात्कालिक राजनीतिवश पतिव्रता राजराजेश्वरीले निकै दुःख पाइन्। यस विषयको चर्चा तल प्रसङ्गवश गरिएको छ।

जे होस्; राजराजेश्वरीदेवीलाई पछिसम्म संभाइराख्ने उनका कृतिमध्ये साँखु वज्रयोगिनीको यो कृति पनि एक हुन आएको छ।



---

१. वि.सं. १८५५को सो ताम्रपत्र माथि गइसकेको छ।

२. यस विषयका निकै ताम्रपत्रहरू माथि गइसकेका छन्। तात्कालिक अरू सामग्रीबाट पनि उक्त कुरा थाहा पाइन्छ।

३. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १५४–१५५.

४. 'नेपालको संक्षिप्त इतिहास' पृ. १२६

[ ८५ संख्या ]

# भैरवी-मन्दिरको अभिलेख

नुवाकोटको प्रसिद्ध भैरवी-मन्दिरमा धेरै ताम्रपत्रहरू टाँसिएका छन् । तीमध्ये एउटा ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ नेपालसंवत् ९२० (वि.सं. १८५६) दिइएको छ ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा'को सामग्री खण्डको ४३ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. इति सम्वत् ९२० साल मिति मार्गसिल वदि १४ रोज ४ का दि–
२. नमा नुवाकोट श्रीभैरवीका थानमा तलाको छानामा चारैपट्टि–
३. का छानामा झुंदायाका धरवटका बतास्या घंथ गोता १०४
४. श्रीलेपटेन लेषधोज षतृक्षत्रीले चह्लायाको हो । य–
५. स घंथमा कसैले लोप पाप गर्‍या भन्या पंचमाहापातक
६. होला शुभम्

व्याख्या–

नुवाकोटभेकका देवस्थलहरूमा भैरवी-मन्दिरको विशिष्ट स्थान रहेको छ । भैरवीको वर्तमान दुइतले मन्दिर कान्तिपुरका राजा जगज्जयमल्लको पालामा वि.सं. १७८३ तिर

बनाइएको हो। यो कुरा मन्दिरको तेलिया ईंट, काठको तोरणमा कुँदिएको अभिलेखबाट थाहा पाइन्छ।[१] यसमा केही उल्लेखनीय परिवर्तन श्री ५ रणबहादुर शाहको पालामा भएथ्यो। वि.सं. १८४६ को नेपाल-चीनयुद्धपछि श्री ५ रणबहादुर शाह र राजकुमार बहादुर शाहले यस मन्दिरको माथिल्लो ईंटको छानाको ठाउँमा सुनले मोलम्बा लाएको धातुको छाना हाल्न लाएका थिए। साथै मूल ढोका पनि सुनको मोलम्बा लाई नयाँ बनाउन लाएथे।[२] विभिन्न देवदेवीका मूर्ति अङ्कित सो ढोका दर्शनीय रहेको छ।

लेफ्टेन लेखध्वज खत्रीक्षत्रीले उक्त भैरवी-मन्दिरको शोभा बढाउन वि.सं. १८५६ मा अर्को चीज चढाएका रहेछन्; सो हो "बतासे घण्ट"। बतास चल्दा घण्टी बजी आकर्षक मधुर आवाज निस्कने हुनाले "बतासे घण्ट" कहलिएको हो। ती बतासे घण्टहरूले अहिलेसम्म पनि उक्त मन्दिरको शोभा बढाई नै रहेका छन्। यसरी लेखध्वज खत्रीक्षत्रीको यो कृति पनि केही उल्लेखनीय नै रहेको छ।



---

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. १७ (सामग्री खण्ड)

२. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ४
यस विषयको श्री ५ रणबहादुर शाहको ताम्रपत्र माथि गइसकेको छ।

[ ८६ संख्या ]

# लमजुङको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

लमजुङ रागीनास सिखुका बुद्धिमान् श्रेष्ठको संग्रहमा यो ताम्रपत्राभिलेख रहेको छ। यहाँ वि.सं. १८५७ दिइएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजा–

२. धिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रम साह बहादूर सम्सेर्जंङ्देवानाम्सदा समरविजयिनाम् ...

३ आगे दैवज्ञकेशरि पण्डितके संवत् १८४० साल जेष्ठ शुक्ल पौर्णमासिका दिन रागिनासका अम्बलमध्ये श्रीबुवाज्यूबा–

४. ट कुश पानि डल्लो संकल्प गरिबक्सनुभयाका जग्गाको सांध पूर्व कैनिका मोहरियाका विचको अहड लुहको–

५. ल दक्षिण कैनिका षेतको कांल्हो लुहुकोल पश्चिम पांग्या षोला लुहुकोल उत्तर रामचन्द्र जैसिका

६. विर्ताको डिहिको खालि लुहुकोल एति चार किलाभित्र षेत मुरि एक सय सोह्र ११६ औ डिहि साल–

७. फेदि तस्को सांध पूर्व षोल्सो लुहुकोल दक्षिण चिलाउन्या रुष भयाको आलि लुहुकोल पश्चिम षोल्सो–

८. लुहुकील उत्तर रामचंद्र जैं(सी) का विर्ताको आलि लुहुंकील एति चार किलाभित्रको डिंहि औ गांव सिषर तस्–

९. को साध पूर्व चुमाडाका सांधको षोल्सो लुहुकील दक्षिण पाल्या षोल्सो लुहुकील पश्चिम चुन्याङार संन्यासि–

१०. का र याल्याठार विर्ताका सांधको लुहुंकील; उत्तर डुम्रया षोलो कुवा पानि को षोल्सो (लु)हुंकील् एति चार कीलाभि–

११. त्रको गांव कुरिया घर घन्याडि डिंहि वारि वन् वह्लुलासमेत सर्वांक माफ गरि कुश विर्ता वितल्पको मोहर तां–

१२. वापत्र गरिवक्स्यां. हाम्रा संतानपर्ज्यंतको शुभ चिंतना गरि आपना संतान-प्रज्यंत कुश विर्ता जानि भोग्य ग–

१३. र, यो विर्ता वक्संदा संकल्प वाक्य पढन्या पुरोहित वैयाकर्णकेशरी पण्डित पानि हालन्या मुलुक देवान भीम्

१४. संधियार दाह्निनारान् अर्ज्याल जयकृष्न वोहरा मनिकंठ राना जयकृस्न थापा नन्दाराम गुनि, चार किल्लाभन्दा अ–

१५. र्घ्यालो ब्राह्मणले नचापनु विना तक्सीर श्रीराजाले हरन् नगर्नु. एस् वन्धेजमा जो रहैन ए श्लोकमा भन्याको पा–

१६. तकी होला ॥ स्वदत्तां परदत्तां वा यो हरेत्त्व वसुन्धराम् ॥ षष्ट्विर्वर्षसह-स्त्राणि विष्टायां जायते क्रिमिः इति सम्व–

१७. त १८५७ साल मिति वैशाष वदि ६ रोज ३ मुकाम कान्तिपुर राजधानि शुभम् ............

व्याख्या–

गोरखा राज्यको उदयको साथसाथै गोरखाका पण्डितवर्गले पनि अघि बढ्ने अवसर पाएका थिए। प्रसिद्ध "घरघर"मा पण्डितवर्गको बाहुल्य थियो।[1] विशेष अवसरमा दान दक्षिणा विर्ता आदि प्रदान गरेर शाह राजाहरूले विद्वान्, पण्डितहरूको कदर निकै मात्रामा गरेथे। गोरखा राज्यको उदयको साथसाथै अघि बढ्ने मौका पाएका पण्डितवर्गमा नारायणदास अर्ज्यालका सन्तानहरू पनि पर्दछन्।[2] दैवज्ञकेशरी पण्डित पनि सोही पण्डितवर्गका हुन्।

१. "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" पृ. ५६५

२. यस विषयको चर्चा माथि गरिसकेको छ।

माथि गएका वि.सं. १८५६ का ताम्रपत्रहरूमा "संकल्पवाक्यवक्ता पुरोहितश्रीदैवज्ञकेशरी पंडित" भनिएको छ। यसबाट उनी यस ताका राजपुरोहित पदमा थिए भन्ने थाहा पाइन्छ।

दैवज्ञकेशरी पण्डितलाई लमजुङ रागीनासको बिर्ता वि.सं. १८४० ज्येष्ठमा श्री ५ रणबहादुर शाहले संकल्प गरी दिएका थिए। त्यस कुराको पुष्टिको लागि वि.सं. १८५७मा यो ताम्रपत्र गरी दिइएको हो। कुश पानी हातमा लिई संकल्प गरी दिइने बिर्ता हुनाले यस्तो बिर्ता "कुशबिर्ता" कहलिएको छ। यस्तो बिर्तामा प्रायः सबै किसिमका रकम माफी गरिएका हुन्छन्। यस ताम्रपत्रमा पनि "सर्वांक माफ गरि कुशबिर्ता बितलपको मोहर तांबापत्र गरिबक्स्यां. हाम्रा संतानपर्ज्यंत शुभचिंतना गरि आफ्ना संतानप्रर्ज्यंत कुशबिर्ता जानि भोग्य गर" भनी उक्त कुरा खुलाएर लेखिएको छ।

यो ताम्रपत्र गरिएताका काठमाडौं राजधानीमा एक किसिमले गृहकलह भइरहेको बेला थियो। कान्छी महारानी कान्तवतीको मृत्युपछि जुन अवस्था यहाँ देखापर्‍यो; त्यसले गर्दा भारादारहरूले श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई नुवाकोट लगी राजधानी नै त्यहीँ सारेथे। यस घटनाबाट स्वामी महाराज रणबहादुर शाह अप्रसन्न हुनु स्वाभाविक थियो। यत्तिकैमा हजूरलाई नजरबन्द गर्ने सल्लाह भारादारहरूले गरिरहेका छन् भन्ने कुरा बलभद्र शाहले नुवाकोटबाट आई उनलाई सुनाइदिंदा उनी रिसले चूर भए तथा नुवाकोटमा हमला गर्छु भनी तम्सन लागे। केही ठूलठूला भारादारहरूले उनको साथ दिए। नुवाकोटमा आक्रमण गर्न उनले पाटनमा ठाना हाले। म फेरि राजा भएँ भन्ने घोषणा स्वामी महाराजले गरे। अनि ठाउँ ठाउँमा रहेका फौजलाई पाटनमा सामेल हुने आदेश उनले दिए। उता नुवाकोट-बाट पनि भारादारहरूले श्री ५ गीर्वाणयुद्धविक्रम शाहको नाउँबाट फौजहरूलाई नुवाकोटमा सामेल हुन आउने आदेश दिन थाले। यसरी एक किसिमको गृहकलहको अवस्था देखापर्न थालेको थियो। तर नुवाकोटबाट ठूलो फौज प्रस्थान गरेको समाचार आएपछि आफ्नो बल कम भएको अनुभव गरी स्वामी महाराज काशीतिर लागे पछि यो काण्ड केही सेलाएथ्यो।[३]

यस्तो अवस्था हुंदा यस ताम्रपत्रमा साक्षी बस्ने भारादारमा ठूलठूला भारादार छैनन्; मुलुकी देवान भीम खवास मात्र छन्। यी भीम खवास स्वामी महाराजका विरोधी पक्षका ठहरिंदा पछि स्वामी महाराज रणबहादुर शाह काशीबाट फर्कपछि दामोदर पाँडेहरूसंगै काटिएका थिए।[४]



३. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ८०–८१

४. 'नेपालको संक्षिप्त इतिहास' पृ. १४०

[ ८७ संख्या ]

# धादिङको दैवज्ञकेशरीको अभिलेख

धादिङ, ज्वालामुखी माईस्थानमा रहेको घण्टामा यो अभिलेख कुँदिएको छ। यहाँ विक्रमसंवत् १८५७ दिइएको छ।

'प्राचीन नेपाल' अङ्क ३०–३९ को ३३ पृष्ठमा देवीप्रसाद लम्साल, बलराम चित्रकार र राधेश्याम भट्टराईद्वारा यो छापिएको छ।

## मूलपाठ

श्रीमुनिबाणाष्टविधुभिर्म्मिते विक्रमवत्सरे ।
ज्वालामुखीप्रीतिहेतोः पुण्ये दशहरातिथौ ॥१॥
स्तम्भद्वयाद्वारशोभां शृङ्खलां कुटलम्बिनीम् ।
समर्पयेदिमां घण्टां द्विजो दवज्ञकेसरी ॥२॥
शुभमस्तु ॥ धार्नि ३२ सेर १ ॥ तोला ॥४॥

## अनुवाद

वि.सं. १८५७ ज्येष्ठ शुक्ल दशमी (दशहरातिथि)को पुण्य दिनमा, ज्वालामुखी माईलाई खुशी तुल्याउन दैवज्ञकेशरी पण्डितले द्वाररूपका दुइटा स्तम्भ र सिक्रीसहित यो घण्टा चढाए। ३२ धार्नी १ सेर ४ तोला

व्याख्या–

दैवज्ञकेशरी पण्डित नारायणदास अर्ज्यालका वंशज हुन्; उनी यस वेला राजपुरोहित थिए भन्ने चर्चा यसभन्दा माथिको अभिलेखको व्याख्यामा गरिसकेको छ। तिनै दैवज्ञकेशरी पण्डितले धादिङकी ज्वालामुखी माईलाई प्रसन्न पार्न घण्टा चढाई यो अभिलेख कुँदाएका हुन्। त्यस वेला हुने पुग्नेहरू आफ्नो केही धार्मिक वा सामाजिक कृति राख्ने गर्दथे। त्यही परम्परामा दैवज्ञकेशरी पण्डितले यो घण्टा चढाएका हुन्। हाम्रा यहाँ शैव बौद्ध वैष्णव आदि सम्प्रदायका शाक्त देवताहरू अनेक छन्। तिनमा एक यी ज्वालामुखी माई पनि पर्दछिन्। यहाँका पुजारी बाँडा हुने हुनाले[१] यी मूलतः बौद्ध परम्पराकी देवी हुन् कि भन्ने देखिन्छ। यहाँ धान्यपूर्णिमाको दिन विशेष पूजा हुन्छ।[२]



१. देवीप्रसाद लम्साल र अरू 'रसुवा र धादिङ जिल्लामा गरिएको अनुसन्धानभ्रमण' प्राचीन नेपाल, अङ्क ३०–३९, श्री ५ को सरकार शिक्षामन्त्रालय, पुरातत्त्वविभाग, पृ. ३२

२. उही, पृ. ३३

[ ८८ संख्या ]

# पशुपति-भण्डारको गीर्वाणयुद्धविक्रम शाहको पालाको अभिलेख

## मूलपाठ

१. स्वस्ति श्रीसंवत् १८५७ साल भाद्रव शुदि ३ रोज ७ श्रीश्रीश्रीपशुपति प्रिति
२. गरि श्रीस्वामिज्यू कासि पाउ लागदा जया गुरूंका छोरा रणकेसर गुरूं पा–
३. उ रषारि जादा परलोक भयो. रणकेसर गुरूंका नाउमा चह्रायाका चिज
४. तामापत्र – १ फिकदानि – १ तरवार – १ कासाको कचौरा – १ चन्वं-
षोरि – १
५. षदकडा – १ पिलल्या वटुका – १ ढाल – १ छापरि – १ अयना – १
६. थलिया – १ पानि – १ छुरि – १ पावस् – १ पत्नका – १
७. गगरि – १ माना – १ झारि – १ कोपरा – १ पौसितोक – १
८. पनिगा – १ वर्षा १ – लोटा – १ ठाडो कोपरा – १ पंषा – १
९. डाडु – १ कमंडि – १ भुजाले – १ घंट – १ यति थुवक चह्रा –
१०. या. यति चिजमाह्रा यक चिज जो उथाइलेला पंचमाहापातक शुभम् ॥

व्याख्या–

कान्छी महारानी कान्तवतीको मृत्युपछि भएको घटनाको संक्षिप्त चर्चा माथि गरिसकेको छ । त्यस बेला एक किसिमले गृहकलह हुने अवस्था पैदा भइसकेको थियो । नुवाकोटमा हमला

गर्छु भनी स्वामी महाराज रणबहादुर शाह कस्सिसकेका थिए। तर नुवाकोटबाट ठूलो फौज प्रस्थान गरेको समाचार आएपछि आफ्नो बल कम भएको अनुभव गरी स्वामी महाराज काशीतिर लागेका थिए।[१] त्यस बेला उग्र गर्मीको बेला थियो। वि.सं. १८५७ ज्येष्ठ ८ गते स्वामी महाराज रणबहादुर शाह काशीतिर हिंडेका थिए। हिंडेका चारौं दिनमा नेपालको सीमाना नाघी ज्येष्ठ १६ गते उनी काशी पुगेका थिए।[२] यसरी निकै धपेडो गरी उनी काशी पुगेको स्पष्ट छ। यसै हुँदा स्वामीज्यूको पाउ रखवारीका लागि गएका रणकेशर गुरुङको धपेडीले गर्दा मृत्यु भएको रहेछ। त्यस बेला मरेका मान्छेका भाँडाकुडा आदि सामग्री पशुपतिनाथ आदि प्रसिद्ध देवस्थलमा चढाउने चलन थियो। त्यही चलनअनुसार रणकेशर गुरुङका सामग्री पशुपतिनाथलाई चढाई यो ताम्रपत्र कुँदाइएको हो। तात्कालिक अलिकता कुरा बुझ्न मद्दत पाइने हुनाले यो अभिलेख यस संकलनमा समावेश गरिएको हो।



---

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ८१

२. लक्ष्मीपति पाँडेले १८५७ सालको पात्रोमा श्री ५ रणबहादुर शाहको काशीयात्राबारे तत्काल यसरी टिपेका छन्–

"ज्येष्ठ कृष्ण दशमी आदित्यवार पूर्वभाद्रनक्षत्र (८ गते)
रा. घ ५।१७ हिंड्याको,
ज्येष्ठ कृष्ण त्रयोदशी बुधवार अश्विनीनक्षत्र (११ गते)
रात्रिशेष घटी ०।३० सिवाना नाघ्याको
ज्येष्ठ शुक्ल तृतीया सोमवार आर्द्रानक्षत्र (१६ गते)
काशी आई पुग्याको प्रातर्घरी थाप्नी वेलामा"

'त्रिरत्नसौन्दर्यगाथा' पृ. १६३

[ ८९ संख्या ]

# पशुपति-भन्डारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-
विराजमान मानोन्नत श्रीमन्महाराजा-

२. धिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रमसाह बहादुर समसेरजङ्देवानां
सदा समरविजयीनाम्-

३. आगे स्यामलाल पाध्यायप्रतिष्ठितिआ बाबाले श्रीबुढा जीज्यूबाज्याका हजूरमा
विन्ति गरि श्रीपशुपतिका थानमा नित्य बजाउनाक-

४. न देऊपाटनको किबहाल षेत मुरि साठि ६० सिह्लामुगल षेत बिस २०
जमा षेत मुरि असि ८० गुठि बाँधि

५. नगरा एक १ तुरहि दुई २ चह्लायाको रहेछ. अम्बालि फेरफार हुदा कचप-
च्याईदिदा साझ बिहान नगरा तु-

६. रहि बाजदो रहेनछ. सांझ बिहान रुजु रहि नगरा तुराहि बजाऊन्या दमा-
ईलाई त्यो गुठि पंजा गरी श्रीपशुपतिका थान-

७. मा अषंडीत बजाउन पठाऊनु. नगरा तुरहि बिग्रदा तिम्रा संन्तानले बनाइ-
दिनु. त्यो नगरा तुरहिका गुठि-

८. मा देऊपाटनका अम्वालि पुजाहारिको लाग नास्ति गरि श्रीबाबाज्यूले
तिमिलाई मोहोर गरिबक्स्याको रहेछ.

९. सोहिबमोजीम मोहोर तावापत्र गरिवक्स्यौं. यो गुठिको संचिता गरि साझ विहान वाजा बजाउनामा लावला

१०. तसलाइ अक्षै पुन्य होला. येस गुठिमा जो लोभ राषला. सो पंच महापातकि होला. इति सम्वत् १८५७ साल मि–

११. ति आश्विन शुदि ११ रोज २ शुभम्–

व्याख्या–

श्यामलाल उपाध्याय सापकोटा थरका पण्डित हुन् । उनी कोशाध्यक्ष (खजान्ची) पदमा थिए। माथि भएका ताम्रपत्रहरूमा यस कुराको उल्लेख भएको छ। श्यामलाल उपाध्यायका बाबु शिवानन्द उपाध्याय हुन् ।[१] उनी पनि श्री ५ पृथ्वीनारायण शाहको समयमा कौशाध्यक्ष थिए। कवि ललितावल्लभले यस कुराको वर्णन गरेका छन् ।[२] श्यामलालका बाबु शिवानन्द उपाध्यायले श्री ५ पृथ्वीनारायण शाहमा विन्ति चढाई पशुपतिनाथको नित्यपूजाको वेला बाजा बजाउन केही गुठी राखेका रहेछन्; नगरा र तुरही पनि चढाएका रहेछन् । तर पछि अधिकारीको फेरफार हुँदा नित्यपूजामा बाजा बजाउने काम बन्द भएछ । अनि श्री ५ रण-बहादुर शाहले सो थाहा पाई नित्यपूजामा राम्ररी बाजा बजाउने प्रबन्ध गरिदिए; साथै त्यस कुराको लालमोहर पनि गरिदिए। त्यसै लालमोहरलाई स्थायी पार्न वि.सं. १८५७ आश्विनमा यो ताम्रपत्र गरिदिइएको हो।



१. माथि गएको श्यामलाल उपाध्यायको नुवाकोटको अभिलेखबाट उक्त कुरा थाहा पाइन्छ । तीनपुस्ते खोली लेखिएको माथि गएको पशुपति-भण्डारको अभिलेखबाट पनि कुरा थाहा पाइन्छ ।

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३९३

[ ९० संख्या ]

# नुवाकोटको त्रिभुवन प्रधानको अभिलेख

नुवाकोट, भैरवीस्थानमा केही घण्टाहरू झुण्ड्याइएका छन् । तीमध्ये एउटामा यो अभिलेख कुँदिएको छ । यस अभिलेखमा शकसंवत् विक्रमसंवत् र नेपालसंवत् गरी तीनै संवत्को उल्लेख छ । शकसंवत् १७२२ र ने. सं. ९२१ दिइएको हुँदा विक्रमसंवत् १८५७ हुनुपर्ने देखिन्छ । तर कुँदनेको भ्रमवश यहाँ विक्रमसंवत् १८५६ कुँदिएको छ ।

'प्राचीन नेपाल' संख्या १० को ४१ पृष्ठमा शङ्करमान राजवंशीद्वारा यो छापिएको छ । 'नुवाकोटको ऐतिहासिक रूपरेखा'को सामग्रीखण्डको ४४ पृष्ठमा पनि यो छापिएको छ ।

## मूलपाठ

स्वस्ति श्री ३ भैरव्यै नमो नमः ।। श्रीशालिवाहनीयशके युग्मनयनाश्वैक १७२२ मिते प्रजापतिसंवत्सरे श्रीसूर्ये दक्षिणायने हेमन्ततौं मार्गशीर्षमासे शुक्लपक्षे पूर्णिमायां पुण्यतिथौ सोमवासरे रोहिणीनक्षत्रे सिद्धियोगे ववकरणे वसुमुहूर्त्ते वृश्चिकराशिस्थिते सवितरि वृषराशिस्थिते चन्द्रे कर्कटराशिस्थिते देवगुरावन्येषु ग्रहेषु यथास्थानस्थितेषु श्री ३ भैरवीदेवताप्रीतये काश्यपगोत्रश्रीत्रिभूवनसिंहसचिवपत्न्या श्रीदेवकन्यानामवत्या समर्पितैषा सोपकरणघण्टा ।। इति श्रीविक्रमार्कसम्वत्सरे १८५६ श्रीनेपालसम्मते ९२१ शुभमस्तु ।। तवल धार्नि १ श्रीमहामायासहाय ।। थ्व घण्ट ज्यायाकह्म व्यापारी यलदेश नकबाहालया श्रीतम्रोधिकजु पुत्र श्रीधनवृद्धिजु शुभं ।।

## अनुवाद

कल्याण होस् । श्री ३ भैरवीलाई नमस्कार । शकसंवत् १७२२ प्रजापति संवत्सरमा सूर्य दक्षिणायनमा गएको वेलामा, हेमन्त ऋतुमा, मार्ग शुक्ल पूर्णिमामा, सोमवार रोहिणी नक्षत्र सिद्धियोग ववकरण वसुमुहूर्तमा, वृश्चिक राशिमा सूर्य, कर्कट राशिमा चन्द्रमा रहेमा, बृहस्पति र अरू ग्रहहरू आफआफ्ना स्थानमा रहेमा ।

श्रीभैरवीलाई प्रसन्न पार्नको लागि काश्यपगोत्रका काजी श्रीत्रिभुवनसिंहको पत्नी देवकन्याले सामग्रीसहितको यो घण्टा चढाएकी हुन् ।

वि.सं. १८५७ ने.सं. ९२१ । शुभ होस् । तौल एक धार्नी । श्रीमहामायाले (देवीले) सहायता गरून् । यो घण्टा बनाउने व्यापारी ललितपुर नकबहीका श्रीतत्रोधिकका छोरा श्रीधनवृद्धि हुन् । शुभ होस् ।

**व्याख्या–**

वि.सं. १८५७ मा काजी त्रिभुवन प्रधानको पत्नी देवकन्याले नुवाकोट भैरवीलाई प्रसन्न पार्न घण्टा चढाई यो अभिलेख कुँदन लाइएको हो । काजी त्रिभुवन प्रधान पाटनका प्रसिद्ध ६ प्रधानमध्येका एक धनवन्त प्रधानका नाति हुन् ।[१] धनवन्त प्रधान श्री ५ पृथ्वीनारायण शाहसँग मिल्न गएका थिए । त्यस वेला धनवन्त प्रधानका छोरा वीरनरसिंह केही काल नुवाकोटमा रहेको देखिन्छ । त्यसैवेला त्रिभुवनको जन्म भएको बुझिन्छ । त्रिभुवनकी आमा अर्कै जातकी हुँदा पहिले त्रिभुवन "खवास" कहलाएका थिए । श्री ५ रणबहादुर शाहको समयमा त्रिभुवन प्रधानको उन्नति भयो । शुरूमा काजी बनेपछि पनि उनले आफूलाई खवास लेखेको पाइन्छ ।[२] पछि पछि भने कि नाम मात्र लेख्ने गर्दथे; कि त्रिभुवन प्रधान नै लेखेको पाइन्छ । वि.सं. १८५५ को प्रसिद्ध ताम्रपत्रमा सही छाप राख्ने भारादारहरूमा त्रिभुवन पनि थिए । त्यहाँ "धनवंतका नाति विर्नरसिंहका छोरा काजी त्रिभुवन" भनी तीन पुस्ता खुलाई लेखिएको छ । स्वामी महाराज रणबहादुर शाह काशी गएपछि आफ्नो अवस्था पछि कस्तो हुने हो भन्ने चिन्ता त्रिभुवन प्रधानलाई हुनु स्वाभाविक छ । त्यसै प्रसङ्गमा यो घण्टा चढाइएको देखिन्छ ।

त्रिभुवन प्रधानको कृति कम पाइन्छ । घण्टा चढाई राखेको यो सानो अभिलेखले भए पनि उनलाई केही अंशमा संझाइराख्नेछ । 

---

१. माथि गएको वि.सं. १८५५को पशुपतिको प्रसिद्ध ताम्रपत्रबाट उक्त कुरा थाहा पाइन्छ ।

२. 'इतिहास–प्रकाश' अङ्क १ पृ. १४

[ ६१ संख्या ]

# हनूमान्ढोकाको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

काठमाडौं, हनूमान्ढोका राजदरबारको आगमछें मन्दिरमा रहेको घण्टामा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८५७ दिइएको छ।

'हनूमान्ढोका राजदरबार'को २६७ पृष्ठमा गौतमवज्र वज्राचार्यद्वारा यो प्रकाशित भएको छ।

स्वस्ति श्री ३ परमेश्वरी देवल अगम शुप्रिति गरी श्रीमहाराजा गीर्वाण-युद्धविक्रम साहदेव श्रीमहारानि सुवर्णप्रभादेवी ई दुई आमा छोराले चह्रायाको घंट हो. कसैले लोभ गर्‍या पंचमहापातक. सम्वत् १८५७ साल माघ पूर्णिमा तिष्यनक्षत्र प्रीतियोग बृहस्पतिवार यस दिन धानि......बनाइ दाखिल कोकिल शुभम्—

व्याख्या–

वि.सं. १८५५ फाल्गुनमा श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राख्दा उनी डेढ वर्षका बालक हुँदा जेठा महारानी राजराजेश्वरीदेवीलाई नायबी सुम्पिएको थियो। यो कुरा पशुपतिको ताम्रपत्रबाट थाहा पाइन्छ। त्यसमा "कर्त्ता ज्येष्ठ रानिले......नायबि गर्नाको अखतियार बक्स्यौं." भनी स्पष्ट लेखिएको छ।[1] साथै माहिला महारानी सुवर्णप्रभालाई पनि सहायकका रूपमा त्यसमा सम्मिलित गरिएको थियो। पशुपतिको उक्त ताम्रपत्रको दोस्रो

१. वि.सं. १८५५को रणबहादुर शाहको सो ताम्रपत्र माथि गइसकेको छ।

खण्डमा "श्रीजेठा रानि, श्रीमाहिला रानिले तावापत्रमा लेष्याको जस जसले बिराउँछ, तावापत्रमा ज्या सास्ना गर्नु भनि लेष्याको छ. कति नढिलाइ चाडो सास्ना गर्नु. श्रीराजाको सोझो गर्नु." भनी लेखिएको हुनाले उक्त कुरा थाहा पाइन्छ। वि.सं. १८५७ मा "नुवाकोटकाण्ड" हुँदा ताम्रपत्रका अन्धेअलाई नाघी राजराजेश्वरीदेवीले स्वामी महाराजको पूर्ण साथ दिएकी थिइन्। नायबका हैसियतले राजराजेश्वरीले सेनालाई स्वामी महाराजको साथ दिने आदेश पनि पठाएकी थिइन्।[2] स्वामी महाराज काशीतिर लागेपछि स्वामीको पछि लागी राजराजेश्वरी देवी पनि काशीतिर लागिन्।[3] यसपछि पशुपतिको ताम्रपत्रको अर्थेजअनुसार "नायबीको अख्तियार" माहिला महारानी सुवर्णप्रभादेवीले स्वतः पाइन्।

आफू नायब ( राजप्रतिनिधि ) भई रहेको वेलामा सुवर्णप्रभादेवीले राजासँग मिलो आगमछेंकी देवीलाई प्रसन्न पार्न घण्टा चढाई यो अभिलेख कुँद्न लाएकी हुन्। यस ताका सुवर्णप्रभाले यस्तै धर्म कर्म अनेक गरेकी थिइन्।



२. "स्वस्ति श्रीपट्टराज्ञि जेठामहारानीकस्य रुक्का–

आगे गुरुवक्स कंपनिका जमादार, हवालदार, अम्बलदार, कोत्या, मेजर अजिटन सिपाहि गैह्रके आसिष, उप्रान्त श्री ५ गीर्वाणजुधविक्रम साहलाइ राजा मान्यौंको छ, श्रीस्वामिज्यूको र हाम्रो भलो चिताउन्याछौ त हाम्रा रुक्का देषत सामील हुन आउ, श्री ५ गीर्वाणजुधविक्रम साहलाइ पछि षेडि कुल्याहा भारालाइ तिम्रा कम्पनीका सुबेदारलाइ राजा मानिलू भन्छौ त हाँक पारि पठाउ. इति सम्वत् १८५७ साल वैसाष वदि १३ रोज २, मोकाम पाटन, शुभम्,

चित्तरञ्जन नेपाली 'श्री ५ रणबहादुर शाह' पृ. ५४–५५

३. 'नेपालको संक्षिप्त इतिहास' पृ. १३५

[ ६२ संख्या ]

# गीर्वाणयुद्धविक्रम शाहले गढवालका राजा प्रद्युम्न शाहलाई लेखिदिएको धर्मपत्र

यसको मूल ताम्रपत्र हेर्न पाइएको छैन । तर यस ताम्रपत्रको उतार कौसी तोशाखानामा रहेको छ । 'पूर्णिमा' १७ पूर्णाङ्कको ४६ पृष्ठमा दिनेशराज पन्तद्वारा यो छापिएको छ ।

## मूलपाठ

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि-विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्ध-विक्रमसाहबहादुर समसेरजंङ्गदेवानाम् सदा समरविजयिनाम्.

आगे गढका राजा श्रीप्रद्युम्न साहदेवके अघी उनंचास सालमा हाम्रो लस्कर जाई गढको तषत श्रीअलकनन्दावारको देस लंगुरगढसमेत अंबल गर्दा राजा श्रीप्रद्युम्न साहदेव आई हाम्रा भारादारसंग श्रीअलकनन्दाको तिर देवा-लयमा बसी गऱ्याको धर्म्म थाम्नाकन केसरको पंजा बोन्ति गर्न राजा श्रीप्रद्यु-म्न साहदेवको अंस भै श्रीबुबाज्युका हजुरमा धरणीधर षंडौरी आऊन्दा विन्ती सुनी गढका राजा श्रीप्रद्युम्न साहदेवका सन्तानले मनसा वाचा कर्मणा हाम्रा सन्तान ढुंगामा सोझो चितावन्ज्यालसंमलाई राजा श्रीप्रद्युम्न साहदेवकन अभय गरी श्रीबुबाज्युका बाहुलीको केसरको पंजा बक्सनुभयाको (थियो.). सतावँन्न सालमा पनि धरणीधर षंडौरी आई हाम्रा हजुर विन्ती गर्दा मामुली

रित्ताबन्देज थाँमि हामीले पनि अघी बक्स्याका अभय केसर पन्जाको ताम्रपत्र गरीबक्स्यौं.

सम्वत् १८५८ साल वैसाष सुदि ३ रोज ५ शुभम्

व्याख्या–

विजयले विजय तान्छ भने जस्तै भेरी साँध लागेपछि राजकुमार बहादुर शाहले उठाएको पश्चिम विजय अभियानको गति निकै बढ्यो। वि.सं. १८४६मा जुम्ला विजयपछि लगत्तै अर्को साल डोटी र कुमाउँ विजय गरिए।[१] यसपछि पनि नेपाली सेना पश्चिमतिर बढ्दै गयो। वि.सं. १८४९मा नेपाली सेनाले गढवाल विजय गऱ्यो। गढवालका राजा प्रद्युम्न शाहले नेपालसँग आश्रित सन्धि गऱ्यो।[२] त्यस बेलाको चलनअनुसार सन्धिपत्र त्यहीँको एक देवालयमा गई गरिएको रहेछ। प्रायः राजाहरू राजनैतिक सन्धि गर्दा पनि त्यसको स्थिरताको लागि देवस्थलमा गई गर्ने गर्दथे। त्यसलाई "धर्मपत्र" भनिन्थ्यो। यस पत्रमा पनि "गढको तषत श्रीअलकनन्दावारको देस लंगुरगढसमेत अंबल गर्दा राजा श्रीप्रद्युम्न साहदेव आई हाम्रा भारदारसँग श्रीअलकनन्दाको तिर देवालयमा बसी गऱ्याको धर्म" भनिएको छ। वि.सं. १८४९ कार्तिकमा भएको यस सन्धिअनुसार गढवालले नेपाललाई सालिन्दा ९०००। रु. बुझाउने गर्न थाल्यो।[३] तर यस रकममा कमी गर्न पाए हुन्थ्यो भन्ने प्रयास गढवालले गर्न थाल्यो। यसका लागि राजदूतका रूपमा धरणीधर खँडुडी काठमाडौं आए। धरणीधरले यहाँ आई गढवाली राजा प्रद्युम्न शाहलाई नेपालसरकारतर्फबाट "अभयपञ्जा" दिलाउन र वर्षेनि बुझाउने गरेको ९ हजार सके अबदेखि बुझाउन नपर्ने गराउन भरमग्दूर कोशिश गर्न थाले। उनी त्यसमा धेरै मात्रामा सफल पनि भए। किलपुरी तथा शक्तिपुरमा नेपालले हमला गर्दा नवाब तथा अंग्रेज तातेको देखेर गढवाल पनि उनीहरूतिरै लहसिन्छ कि भन्ने डर नेपाललाई थियो। तर उतापट्टि नलहसिई गढवालले वफादारी देखाएको हुँदा श्री ५ रणबहादुर शाहले प्रद्युम्न शाहलाई "अभयपञ्जा" गरिदिए तथा गढवालले अब तीन हजार मात्र बुझाए पुग्ने गरिदिएका

---

१. दिनेशराज पन्त, 'श्री ५ रणबहादुर शाहले श्रीपति पन्थलाई लेखेको पत्र' पूर्णिमा, ४ पूर्णाङ्क, संशोधन–मण्डल, पृ. ६४–६५
'नेपालको संक्षिप्त इतिहास' पृ. १०६

२. महेशराज पन्त, 'वीरभक्ति थापा' पूर्णिमा १३ पूर्णाङ्क, संशोधन-मण्डल, पृ. ३४

३. महेशराज पन्त, 'वीरभक्ति थापा' पूर्णिमा १३ पूर्णाङ्क, पृ. ३५

थिए। साथै प्रसन्न भई श्री ५ रणबहादुर शाहले गढवाली राजालाई श्रीपेज, दोसल्ला आदि र राजदूत धरणीधर खँडुडीलाई हात्ती आदि पुरस्कार पनि दिएथे।[४]

यता स्वामी महाराज रणबहादुर शाह काशीतिर लागेपछि धरणीधर खँडुडी राजदूतका रूपमा फेरि काठमाडौं आए। श्री ५ रणबहादुर शाहले राज्यत्याग गरेको तथा उनी काशीतिर गइरहेका हुँदा नयाँ राजा श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट पनि अभयपञ्जा थाम्नु आवश्यक भएको संभियो। यसैका लागि धरणीधर फेरि काठमाडौं आएका थिए। उनको अनुरोधमा श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट यो ताम्रपत्र गरिदिइएको हो।

तात्कालिक कुरा बुझ्न यो ताम्रपत्र निकै उपयोगी छ भन्ने स्पष्ट छ। यसै हुँदा मूल ताम्रपत्र हेर्न नपाइए पनि यसलाई यस संकलनमा समावेश गरिएको हो।

卐

४. महेशराज पन्त, 'वीरभक्ति थापा'पूर्णिमा १३ पूर्णाङ्क, पृ. ३५

[ ६१ संख्या ]

# नुवाकोटको दामोदर पाँडेको अभिलेख

नुवाकोटको भैरवीस्थानमा रहेको एउटा घण्टामा यो अभिलेख कुँदिएको छ। यहाँ विक्रमसंवत् १८५८ दिइएको छ।

'प्राचीन नेपाल' संख्या १० को ४२ पृष्ठमा शङ्करमान राजवंशीद्वारा यो प्रकाशित भएको छ। 'नुवाकोटको ऐतिहासिक रूपरेखा'को सामग्रीखण्डको ४५ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

वर्षेऽष्टेन्द्रियनागभूपरिमिते १८५८ श्रीविक्रमीये रवौ
कर्कस्थे शुचिमासि भौमदिवसे शुक्ले चतुर्थ्यां तिथौ
पत्न्या साकमयोध्यया ससुतया श्रीभैरवीप्रीतये
घंटैषा सचिवेन रम्यनिनदा दामोदरेणार्पिता ॥ १ ॥
ज्येष्ठः श्रीकरवीरसंज्ञक उमापादारविन्दार्चको
(वि)ख्यातो रणजङ्ग इत्यभिधया तस्यानुजो वीर्य्यवान्
युद्धे शूरस्ततो रणदलः श्रीकीर्तिवर्म्संज्ञक–
तस्माच्छ्रीललितादिवर्म्म इति तत्पुत्रादिपुत्राः सदा ॥ २ ॥

## अनुवाद

विक्रमसंवत् १८५८ आषाढ शुक्ल चतुर्थीमा, कर्कटराशिमा सूर्य बसेको बेलामा, पत्नी अयोध्या र छोराहरूसहित काजी दामोदर पाँडेले श्रीभैरवीलाई प्रसन्न पार्न राम्रो आवाज

भएको यो घण्टा चढाए ।

पार्वतीको पाउको पूजा गर्ने जेठा करवीर पाँडे उनका भाइ नाउँ चलेका बलिया रणजङ्ग पाँडे, अनि लडाईंमा शूरा रणदल पाँडे, श्रीकीर्तिवम, अनि ललितवम छन् ।

**व्याख्या—**

स्वामी महाराज रणबहादुर शाह काशी गएपछि यहाँको राजनीतिले अर्को मोड लियो । अंग्रेजहरू नेपालको राजकाजमा हात हाल्ने अवसर खोज्दै थिए । यसबाट उनीहरूलाई अवसर मिल्यो । उनीहरूले काशीमा स्वामी महाराज रणबहादुर शाहलाई आर्थिक सहायता दिई हात लिने प्रयास गर्न थाले ।[१] यता नेपाल सरकारले पनि अंग्रेजहरूसँग सम्पर्क राख्न थाल्यो । यसैको परिणामस्वरूप वि.सं. १८५८मा ईस्ट इन्डिया कम्पनीसँग नेपालसरकारको सन्धि भयो ।[२] यस नयाँ राजनीतिको सूत्रपात गर्नेहरूमा प्रमुख दामोदर पाँडे पनि थिए । स्वभावतः उनी दृढप्रकृतिका व्यक्ति थिए । उनी श्री ५ रणबहादुर शाहलाई काशीमै रोकिराख्ने पक्षमा थिए । यसो हुँदा यो वेला दामोदर पाँडेहरूका लागि परीक्षाको घडी थियो । यसै सिल-सिलामा भैरवी प्रसन्न होऊन्; विघ्न बाधा हटून् भनी दामोदर पाँडेले यो घण्टा चढाएको देखिन्छ ।

यस अभिलेखमा दामोदर पाँडेकी जहान अयोध्या, उनका छोराहरूको पनि नामोल्लेख भएको छ । दामोदर पाँडेका छोरा रणजङ्ग पछि निकै प्रसिद्ध भएथे । अभिलेख सानो भए पनि तात्कालिक एक शक्तिशाली व्यक्तिको संझना दिलाउने हुनाले यसको केही उपयोगिता छ भन्ने स्पष्ट छ ।

卐

१. चित्तरञ्जन नेपाली 'श्री ५ रणबहादुर शाह' पृ. १३८
२. 'नेपालको संक्षिप्त इतिहास' पृ. १५५
'श्री ५ रणबहादुर शाह' पृ. ६१

[ ६४ संख्या ]

# लम्जुङको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

लम्जुङका भैरवप्रसाद मिश्रको संग्रहमा यो अभिलेख कुँदिएको ताम्रपत्र रहेको छ। यहाँ वि.सं. १८५८ दिइएको छ।

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीवि-
राजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्री-

२. महाराजे गीर्वाणयुद्धविक्रम साह् वहादूर्सम्सेर्जङ्गदेवानाम् सदा समरविजयि-
नाम्- - - आगे नन्दु मिश्र वैद्यके सम्वत् १८५६

३. साल चैत्र सुदि १५ को ग्रहणमा जेठा श्रीमुमाज्यूबाट कुस पानि डल्लो
संकल्प भयाका षेत सांध तार्कुको कंवला बोट्या षेतको सांध

४. पूर्व पोषऱ्यालका विर्ताको लोह्कील. दक्षिण ठाडा पर्षालको लोह्कील
पश्चिम् लोह्कील उत्तर अधिकारीका साँधको लोह्की-

५. ल सिम्ल्या षेतको साँध पूर्व लोह्कील दक्षिण लोह्कील पश्चिम लोह्कील
उत्तर लोह्कील बाऱ्ह् बिस्या षेतमध्ये पूर्व वरिबोट्या-

६. का सांधको लोह्कील दक्षिण रिठाबोट्याको साँध लोह्कील पश्चिम पाँडेका
सांधको लोह्कील उत्तर थुम्काको षिर्का रु-

७. षको लोह्कील जम्मा षेत तिन् ३ औ मुसिकोटका बिर्ताको साट्याको षेत

मुरि ४० चालिस श्री ६ बुवाज्यूबाट संकल्प भयाको षेत मु–
८. रि बिस २० तस्को कल्या षेतको साँध पूर्वमा झगिडाका षांदको लोह्कील दक्षिण षरिवोद्या षेतको ढुंगाको थुम्कीको सांधको
९. लोह्कील पश्चिम् ग्रांप्याका सांधका लोह्कील उत्तर टिबुन्या थुम्काको सांध लोह्कील यति चार किलाभित्र षेत मुरि तीन
१०. सये साठि ३६० ग्रौ डीहीको सांध पूर्व साहा ढुंगाको सांधको लोह्कील दक्षिण वराकोटि पोषन्यालका सांधको लोह्कील पश्चिम रै–
११. करका सांधको लोह्कील उत्तर ग्रधिकारिका साँधको लोह्कील ग्रौ गाउ घड्यारी ब्राह्मणछेउ किन्याको दस पाथी मकैको बी
१२. ज जान्या जग्गा र यति चार किलाभित्रको गाउ घड्यारी ब्यासी डिहि बारि षेत लगापातसमेत कुस विर्ता वितलपको मोहोर तां–
१३. बापत्र गरिबक्स्यौं हाम्रा संन्तानपर्यंतको सुभ चिन्तन गरि ग्राफना सन्तान-पर्यंत कुस विर्ता वितलप जानी भोग्य गर. यो संक–
१४. ल्प गर्दा वाक्य पह्लर्या पुरोहित दैवज्ञकेसरी पण्डित. पानी हालन्या काजी कित्तिमानसिं संघियार भानु पाध्या षनाल श्रीहर्ष
१५. पंथ जगजीत पांडे हरिवंश वोहोरा पिह्लवर राना डुगोल काल्या जगत हेमन्त, चारकिलाभन्दा ग्रर्घ्यालो ब्राह्मणले नचाप–
१६. नु विनातक्सीर श्रीराजाले हरण नगर्नु. यो बन्वेजमा जो रहैन, सो यस् इलोकमा भन्याको पातकी होला. स्वदत्तां परदत्तां वा
१७. यो हरेच्च वसुन्धराम् ॥ षष्टिवर्षसहस्राणि विष्ठायां जायते कृमिः ॥१॥ इति सम्वत् १८५८ साल जेष्ठ सुदि ८ रोज् ६ मुकाम का–
१८. न्तिपूर राजधानी शुभम्

व्याख्या–

वि.सं. १८५६ चैत्रपूर्णिमाको दिन चन्द्रग्रहणको ग्रवसरमा राजराजेश्वरीदेवीले नन्दु मिश्र वैद्यलाई कुश पानी हातमा लिई संकल्प गरी विर्ता दिएकी थिइन् । त्यस कुशविर्ताको चारकिल्ला खोली यो ताम्रपत्र गरिदिइएको हो । त्यस वेला राजराजेश्वरीदेवी नायब (राज-

प्रतिनिधि) थिइन्; यो ताम्रपत्र गरिदिइएताका चाहिँ उनी काशीमा थिइन् । तैपनि ब्राह्मण लाई संकल्प गरी दिइसकेको हुनाले श्री ५ गीर्वाणयुद्धविक्रम शाहले ताम्रपत्र गरी दिएका हुन् । शाह राजा र राजपरिवारले ब्राह्मणवर्गलाई कुशविर्ता गरिदिइएका ताम्रपत्रहरू प्रशस्त पाइन्छन् । यसबाट तात्कालिक समाजमा ब्राह्मणवर्गले पाएको स्थानबारे निकै कुरा थाहा पाइन्छ । यस कारण यस्ता ताम्रपत्रहरू पनि केही उपयोगी नै छन् ।

卐

[ ९५ संख्या ]

# नन्दिकेश्वर बहालको सुवर्णप्रभाको अभिलेख

नक्साल नन्दिकेश्वर बहालको पश्चिमपट्टि एउटा घण्टा रहेको छ। त्यसमा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८५८ दिइएको छ।

'अभिलेख संग्रह' बाह्रौं भागको ७ पृष्ठमा संशोधनमण्डलद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

१. श्रीनन्दिकेश्वराय नमः ॥ गजबाणाष्टविधुभिर्म्मिते १८५८ विक्रमवत्सरे ॥ आषाढशुक्लपञ्चम्यां गीष्पतेर्वासरे शुभे ॥१॥ सुवर्णप्रभया राज्ञ्या नन्दि-केश्वरतुष्टये ॥ घण्टा समर्पिता भक्त्या यथोक्तफललब्धये ॥२॥ संवत् १८५८ शाल आषाढ शुदि पञ्चमी बृहस्पतिवारका दिन श्री ३ नन्दिकेश्वर सदाशिव प्रीति गरी श्रीसुवर्णप्रभा माहारानीले देवल बनाई घंट चऱ्हायाको हो. कसैले लोभ गऱ्या पंचमाहापातक लागस्. मार्फत को-

२. केल सुबेदाल-तवल धानि --थ्व घंथ ज्याकह्म यलन क्वबहालया श्रीतओधिकजु श्रीधनविधिजु शुभमस्तु (स)र्वदा ॥

## अनुवाद

श्रीनन्दिकेश्वरलाई नमस्कार। विक्रमसंवत् १८५८ आषाढ शुक्ल पञ्चमी बृहस्पतिवारको शुभ दिनमा, महारानी सुवर्णप्रभाले नन्दिकेश्वरलाई खुशी तुल्याउन शास्त्रमा बताएअनुसार

फल होस् भनी भक्तिपूर्वक यी घण्टा चढाउनुभयी ।

व्याख्या–

घण्टा चढाउनाको फल ठूलो हुन्छ भन्ने धारणा यस ताका थियो ।[1] यसो हुँदा आफ्ना इष्टदेव, देवीलाई घण्टा चढाउने परम्परा हामीकहाँ मल्लकालदेखि बढी चलिआएको पाइन्छ । सोही परम्पराअनुसार माहिला महारानी सुवर्णप्रभाले नन्दिकेश्वर महादेवलाई प्रसन्न पार्न घण्टा चढाई यो अभिलेख कुँदन लाएकी हुन् । यस ताका नेपालको राजकाजमा अनिश्चितताको वातावरण थियो ।[2] माहिला महारानी सुवर्णप्रभाले यस ताका धर्मकर्म निकै गरेको पाइन्छ । राजकाजमा आफ्नो स्थिति मजबूत होस्; प्रभाव नगिरोस् भन्ने कामनाले यी धर्मकर्म गरिएका हुन् भन्ने कुरा प्रसङ्गबाट झल्किन्छ । यसरी तात्कालिक अवस्थाको झलिकता झलक यस्ता धार्मिक कृतिबाट पनि पाउन सकिन्छ ।



१. यस विषयको चर्चा माथि गइसकेको छ ।

२. यस विषयको चर्चा माथि गरिसकेको छ ।

[ ९६ संख्या ]

# गोरखाको सुवर्णप्रभाको अभिलेख

गोरखा, गोरखनाथ-गुफामा रहेको घण्टामा यो अभिलेख कुँदिएको छ । यहाँ विक्रम संवत् १८५८ दिइएको छ ।

'गोरखाको ऐतिहासिक सामग्री' २६ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीसम्वत् १८५८ साल मिति मार्गशिर्ष शुक्ल १० रोज ३ श्री-
गोर्षाका गोर्षानाथ प्रीति गरी श्री ५ महारानी सोमप्रभादेवीका पुत्र २
श्रीरणधोज साहा श्रीसमरसेर साहासहित भै यो घण्टा चढाऽन्युं., जो लोभ
गर्ला पंचमहापातक, मारफट लेलेका दसरथ षत्री दिठा जमादार माहावीर
बस्न्याट, यो घण्टा बनाउन्या कालिगर पाटनको श्रीतदछे १ पुत्र धन-
२. वृधि शुम्भ ॥ ॥ श्री ५ सर्कार गुठि षर्च प्रवामार्फट ९७ साल माघ गते
रोजमा जिर्णोद्धार भै बनेको, बनाउने ललितपुर ज्याथ महाबौद्ध बस्ने
हर्षराज साक्यवंश । शुभम् ॥

व्याख्या–

स्वामी महाराज रणबहादुर शाह काशी गएपछि जेठी महारानी राजराजेश्वरीदेवी पनि काशी गइन् । अनि "नायबी अख्तियार" सुवर्णप्रभाले पाइन् । तर सो अख्तियार स्थिर भई

रहने लक्षण भने देखिएको थिएन । त्यस ताका राजनीतिले छिटो छिटो रूप बदल्दै थियो । ईस्ट इन्डिया कम्पनीसँग नेपालको सन्धि भएपछि राजराजेश्वरी नेपाल फर्कने सम्भावना बढेको थियो ।[१] सो सुवर्णप्रभालाई लाभदायक थिएन । यस्तो अस्थिर अवस्थामा देवता गुहार्ने मानव प्रकृति रहेको छ । यसै हुँदा यस ताका सुवर्णप्रभाले धर्मकर्म निकै गरेकी छन् भन्ने चर्चा माथि पनि गरिसकेको छ । त्यस कुराको पुष्टि गोरखनाथलाई घण्टा चढाई कुँदाइएको यस अभिलेखले पनि गर्छ ।

पहिलेको घण्टा फुटी १८६७ मा जीर्णोद्धार गराई यो अभिलेख कुँदाइएको हुनाले यस अभिलेखलाई तल दिइए पनि हुने थियो । तर यहाँ राख्दा नै तात्कालिक अवस्था बुझ्न केही प्रसङ्ग मिल्ने देखिएको हुनाले यहीँ दिइएको हो ।

卐

१. यसको लगत्तै पछि राजराजेश्वरीदेवी काठमाडौं फर्केकी थिइन् ।

[ ६७ संख्या ]

# लम्जुङको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

लम्जुङका प्रेमनाथ पन्तको संग्रहमा यो ताम्रपत्राभिलेख रहेको छ। यहाँ वि.सं. १८५८ बिइएको छ।

## मूलपाठ

श्री

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि–
विराजमान मानोन्नत–

२. श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गिर्वाणयुद्धविक्रम साह वहादूर
सम्सेर जङ्गदेवा–

३. नाम्सदा समरविजयिनाम् – – – – आगे हरिभक्त पंडितके सम्वत् १८५६
साल कार्तिक सुदि १

४. तद्दिने श्रीमुमाज्यूबाट आर्ज्याघाटमा कुस पानी डल्लो संकल्प गरिवक्सनु–
भयाका जग्गा लमजुंका अम्वल–

५. मा मनु थ्यांसीमद्धे तस्को सांध पूर्व रंकरको लुहकिल सांध दक्षिण मुल–
माघीको वाध्या ढुंगो पश्चि–

६. म रंकरको सांधका कुलाको लुहुकिल उत्तर पंथका विर्ताको सांधका लुहुकिल
एती चार किला –

७. भीत्रको मुरी १०० के खेत एक १ श्री घड्यारीको सांध पुर्व डोडान्या

षोल्सोदेषी लिंदी षोल्सो दक्षिण रैक–

८. रका साँधको काफलको लुहुकिल पश्चिम चिपल्याटी षोलो उत्तर आधा षेतमा सिरानको लुहुकि–

९. ल. येती चार किलाभोत्रको घड्यारीसमेतको मोहोर तांवापत्र गरिबक्स्यौं. हाम्रा सन्तानप–

१०. र्ज्यन्तको सुभ चीन्तना गरि आफ्ना सन्तानपर्ज्यन्त कुस विर्त्ता जानि भोग्य गर. यो विर्त्ता वक्सदा

११. संकल्प वाक्य पह्रन्या प्रोहित न्याएकेसरी अर्ज्याल पानी हालन्या काजी किर्तिमानसिं सं–

१२. धिआर करुनाकर षनाल जगजित पाडे पिहुवर राना वालकिस्न बोहरा देउसिं अधि–

१३. कारी डुंगल ३ चार किलाभन्दा अर्घ्यालो ब्राह्मणले नचापनू. विना तक्सीर श्रीराजाले नहर्णगर्नु

१४. यो बंधेजमा जो रहैन. सो येस स्लोकमा भन्याको पातकी होला स्वदत्तांम् परदत्ताम्वा यो हरेत्च

१५. वसुंधराम् षष्टीवर्षसहश्राणी विष्टायां जायते क्रुमी ईति सम्वत् १८५८ साल मीति मा–

१६. घ क्रुस्न अष्टम्यां कुजे मुकाम कांन्तीपुर राजधानी सुभम्– –

व्याख्या–

"कुशबिर्ता" दिई गरिदिइएका केही ताम्रपत्रहरू माथि गइसके; निकै ताम्रपत्रहरू तल आउँदैछन् । यी ताम्रपत्रहरूबाट तात्कालिक धार्मिक, आर्थिक र सामाजिक कुरा बुझ्न केही मद्दत पाइन्छ । साथै तात्कालिक राजनैतिक कुरा बुझ्न पनि प्रकारान्तरले केही मद्दत यस्ता ताम्रपत्रहरूबाट पनि पाइन्छ । यसै हुँदा कुशबिर्ता दिई लेखिदिइएका केही ताम्रपत्रहरूलाई पनि यस संकलनमा समावेश गरिएको हो ।

यस ताकाको राजकाजमा कान्छा महारानी कान्तवतीको प्रत्यक्षतः कुनै हात रहेको देखि-

दैन तापनि यस बेलाको राजनीतिलाई कान्तवतीले प्रकारान्तरले ठूलो प्रभाव पारेको पाइन्छ। कान्तवतीउपर श्री ५ रणबहादुर शाहको असीम अनुराग, माया प्रीति रहेथ्यो। तर कान्त-वती भने बिरामी भइन्। त्यसपछि श्री ५ रणबहादुर शाहले कान्तवतीको इच्छा पूरा पार्न तथा कान्तवतीलाई निको पार्न के कस्तो प्रयास गरे भन्ने चर्चा माथि गरिसकेको छ। जति प्रयास गरिए पनि आखिर वि.सं. १८५६ कार्तिक शुक्ल चतुर्थीको दिन कान्तिवतीको मृत्यु भयो। मृत्यु हुनुभन्दा तीन दिन अगाडि आर्याघाटमा कान्तवतीले हरिभक्त पण्डितलाई कुशविर्ता दिई यो ताम्रपत्र गरिदिइएको हो। यस कारण यस ताम्रपत्रको पनि केही ऐतिहासिक महत्त्व रहेको छ।



[ १८ संख्या ]

# लम्जुङको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

लम्जुङका भैरवप्रसाद मिश्रको संग्रहमा रहेको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८५८ दिइएको छ।

## मूलपाठ

### श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-
विराजमान मानोन्नत श्रीमन्महाराजा-

२. धिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रम साह बहादुर सम्सेर्जङ्ग देवा-
नाम्सदा समरविजयिनाम्---

३. आगे सिवसर्म पंडितके सम्वत् १८५३ साल आषाढसुक्लसप्तम्यां ७ तिथौ
तद्दिने श्रीबुवाज्यूबाट कुस पानी डल्लो सं-

४. कल्प गरिवक्सनुभयाका जगा रागीनांसका अम्वलमा भाल्याँ नौविस्या-
मद्धेको षेतको सांध पूर्व तुलसी षोल्सो दक्षि-

५. ण चम्पावती नदी पश्चिम रैंकर लुहुकिल बांध्या ढुंगा उत्तर रैंकर लुहु-
किल डर्ह चीलाउंन्याको रूष बांध्या ढु-

६. गा चीलाउन्याको रुष लुहुकिल यती चारकिलाभीत्रको धड्यारि र षेत एक
१ मुरि पचास ५० मोहर तांवाप-

७. अ गरिबक्स्यौं हाम्रा सन्तानप्रज्यन्तका शुभ चिंतना गरि आपना संतान प्रज्यन्त कुस विर्ता जानि भोग्य गर, यो विर्ता–

८. वक्संदा संकल्प वाक्य पढन्या प्रोहित देवीदास अर्ज्याल पानी हालन्या काजी किर्तिमानसिं सधियार बोहरा पं–

९. थ हरी जोइसी अर्ज्याल भानु पाध्या पनाल जगजित पांडे हरिवंस वोहरा वंसविर राना दुग्ल काल्या ज–

१०. गत् महन्त चार किल्लाभन्दा अर्घ्यालो ब्राह्मणले नचापनु विना तक्सीर श्रीराजाले हर्ण नगर्नु. येस वंषे–

११. जन्मा जौ रहेन सो परलोकमा भन्याको पातकी होला स्वदत्तां परदत्तांम्वा यो हरेच्च वसुंधराम्, षष्ठीवर्षसह–

१२. श्राणि विष्टायां जायते कृमी: ईति सम्वत् १८५८ साल मीति माघ कृस्न दसम्यां १० तिथौ गुरुवासरे मुकाम

१३. कान्तीपुरनगरी राजधानी सुभम् ........................

व्याख्या–

वि.सं. १८५८ मा "कुशविर्ता" थामी गरिदिइएका केही ताम्रपत्र माथि गइसकेका छन् । त्यसै क्रममा यो ताम्रपत्र पनि एक हो । १८५३मा श्री ५ रणबहादुर शाहले शिवशर्मा पण्डितलाई संकल्प गरी कुशविर्ता दिइएको थियो । तर त्यसको ताम्रपत्र भएको थिएन । वि.सं. १८५८ मा मात्र ताम्रपत्र गरिदिइएको कुरा यसमा परेको छ । पहिले संकल्प गरिइका तर ताम्रपत्र गरिदिन बाँकी रहेकालाई वि.सं. १८५८ मा आएर यसरी ताम्रपत्र गरिदिनामा केही कारण रहेको बुझिन्छ । सो कारण स्पष्ट बुझ्ने सामग्री पाईवैन तापनि अनुमान भने गर्न नसकिने छैन । यी ताम्रपत्रहरूमा पानी हाल्ने काजी कीर्तिमानसिंह बस्नेत रहेका छन् । यस ताका काजी कीर्तिमानसिंह बस्नेतको प्रभाव बढेको बेला थियो । उनको प्रभाव बढेको देखी उनको डाहा गर्ने भारादारहरू पनि त्यस वेला नभएका होइनन् । यसको लगत्तै पछि कीर्तिमानसिंह काटिन्छन् पनि ।[1] यस्तो अवस्था हुँदा कीर्तिमानसिंहले दानधर्मतिर ध्यान दिएका हुन् कि भन्ने अनुमान हुन्छ ।

卐

१. 'नेपालको संक्षिप्त इतिहास' पृ. १३६

[ ६६ संख्या ]

# पशुपतिको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

पशुपतिनाथको भण्डारमा सयौं ताम्रपत्रहरू रहेका छन् । तिनमध्ये एउटा ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ विक्रमसंवत् १८५६ दिइएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीमन्नेपालाधीश्वराय पशुपतये नमः ॥ ॥ श्रीनागबाणेभमही १८५८ संम्मिते विक्रमाब्दे गुणयमबलाहकसम्मिते शकाब्देगिरानामसम्वत्सरे

२. सौम्यायनप्राप्ते दिनमणौ शिशिरर्त्तौ मकरसंक्रान्तौ चान्द्रमानात्पौषशुक्लनवम्यां भौमवासरे अश्विन्यर्क्षे साध्यनामयोगे बालवकरणे मित्राख्ये मु-

३. हूर्ते मकरगे श्रीसूर्ये सिंहस्थेऽमरराजगुरौ मेषप्राप्ते सुधानिधौ शेषेषु यथायथास्थानस्थितेषु सत्सु स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरना-

४. रायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रम साह बहादुर सम्सेरजङ्ग-

५. देवानां सदा समरविजयिनाम्. श्रीपितामहीश्रीजननीश्रीमध्यमजननीभिः सकलभुवनाधिपतिश्रीपशुपतिप्रीतिकामाभिरत्र पत्रे लिखितसमग्रसामग्रीभिः प्रतिदिनमारार्त्तिकोप-

६. कल्पनाय बोडेनकदेशग्रामानतिदूरवर्त्तिक्षेत्रत्रयं स्थलचतुष्टयस्थं रुचिरशालिशालि समकल्पि तत्तत्क्षेत्रनामानि सीमानश्च यथा, द्वावि-

७. शतिरोपनीपरिमितस्य धुम्बुनामकक्षेत्रस्य पुरस्तात् श्रीनीलवराहीक्षेत्रं ठीमीग्रामाधिवासिनेवारजातीयशूद्रविशेषीयक्षेत्रमनु दृषत्कीलश्च द–

८. क्षिणतः श्रीनन्दीकेश्वरार्पितक्षेत्रपाषाणकीलः पश्चिमतो घरट्टकुल्यामनु ग्रीव-कील उत्तरतो राजोदारकेदारोपकल्पितानल्पदृषत्कीलः हिट्टीकोट–

९. – – – – भिधेयप्रदेशांतर्गतस्य टीवलसंज्ञक्षेत्रस्य सप्तविंशतिरोपनीपरि-मितस्य दक्षिणतः षहन्यापदवाच्यकुल्यामनु पाषाणकीलः पश्चा–

१०. दुत्तरतश्च श्रीकालिकाकोक्षेत्रंपरि पाषाणकीलः पुरस्तात्पंथानमनु पाषाण-कीलः, तच्च सार्द्धरोपनीद्वयपरिमितं श्रीकालिकाकोक्षेत्रं एकरोपनीपरि-माणकं

११. चांगूनारायणक्षेत्रं एकरोपनीपरिमितं महालक्ष्मीक्षेत्रं सार्द्धैकरोपनीकं ठीमी-ग्रामस्थयोर्नेवारोपनामकशूद्रविशेषयोः क्षेत्रं चापहाय बोध्यं. स ग्रामोग्र–

१२. भैरवभैरवकंपनीसम्बन्धि– ॥ टोपभोगोन्मोचितस्य सार्द्धरोपनीत्रयपरिमा-णस्य पुरस्तात्पथोः संगमो राजक्षेत्रदृषत्कीलश्च दक्षिणतः पश्चाच्च

१३. श्रीनारायणक्षेत्रपाषाणकीलः उत्तरस्यां बोडेग्रामस्य – – – क्षेत्रपाषाण-कीलः, तथा नकदेशप्रदेशवर्तिनो विदिताद्भुतविश्वासघासकंपनीभोगो–

१४. न्मोचितस्य सार्द्धद्वाविंशतिरोपनोपरिमाणस्य– ॥ वुनामकक्षेत्रस्य पुरस्ताद् राजभूमिपाषाणकीलः, दक्षिणतः ठीमीग्रामस्थनेवारशूद्रक्षेत्र–

१५. पाषाणकीलः पश्चात्पंथा राजभूग्रावकीलश्च उत्तरतो राजोदारकेदारोपकल्पि-तानल्पपाषाणकीलश्च इति दर्शितानेकसीमविभागितस्त–

१६. त्क्षेत्रोत्पन्नद्रविणोदाहरिष्यमाणां समग्रां सामग्रीं संपाद्य तत्क्षेत्ररक्षकजनेन पूजाधिकारिजनायत्ता कर्त्तव्या. तत्तदधिकारिसमक्षमक्षतनये–

१७. न तेन च प्रत्यहमहतविधिविधेया विविधविधार्चनार्चकेन. कदाचिदत्र क्षेत्रे दैवादापतितामापदं च क्षेत्ररक्षाधिकारिजनेन राजभवनमुपेत्या–

१८. मात्यादिद्वारा प्राप्तप्रभुश्रवणपथां विधाय समग्रसामग्रीसंपादनाय यतितव्यं. तैश्च राजदत्ताधिकारिभिस्तदभिहितमखिलमाकलय्य लिखिता–

१९. न्नूनसामग्री संपाद्य सपर्या पर्याकलनीया. एतत्क्षेत्ररक्षाधिकारी तदितरो वा कश्चित्पापी यः प्रतिवासरापचितिषु विघ्नमाचरिष्यति, पंचमहापात–

२०. कथाम् लसत्कुटिलकबालाजटिलांनिटिलबयनज्वलज्ज्वलज्ज्वालजालकराल ...
स्फुरदसमाशुगकटाक्षेक्षणक्षीणः क्षणेनाक्षरं क्षयमेष्यति, यः पु–
२१. नरेतत्क्षेत्ररक्षां विधाय पूजोपकरणसिद्धये यत्नमाचरिष्यति स धर्मकर्मो-
परतसमस्ताधिव्याधिरधिकविवृद्धिः श्रीपशुपतिकृपाकटाक्षेक्ष–
२२. लक्ष्मीसौभाग्यराशिश्चिरमेधिष्यते. एतत्......साक्षिण आदित्यचन्द्रादयो
दिवौकसः मनुष्याश्च कतिपये, तेषु चपलताचंचुचंचरीकच–
२३. यचारुचमलुतिचोरकोकनीयशालिचतुरंगचमूपतयश्चतुराश्चत्वारः श्रीरणो-
द्योतसाहः श्रीसमरसेरसाहः श्रीबंबसाहः श्रीसेरबहादु–
२४. रसाहः सचिवाश्च दामोदरपांडे त्रिभुवन नरसिंह संकल्पवाक्यवक्ता पुरोहित
देवीदास अर्ज्याल जलप्रक्षेप्ता सचिवकिर्तिमानसिं–
२५. ह अथ सिमासाक्षिणः श्रीहर्ष पंथ दैवज्ञकेसरि अर्ज्याल भानु पाध्या पनाल
जगजित् पांडे बिर बोहरा, बंसवीर राना. चारकिलाभित्र
२६. गुठिहारले अर्च्यालो नचाप्नु गुठि र पुजा कसैले नहरणगर्नु. एस अंधेज-
माहा जो रहैन तस्कन एस श्लोकमाहा भन्याका पंचमाहापा–
२७. तकि होला, स्वदत्तां परदत्तां वा यो हरेच्च वसुंधरां, षष्टिवर्षसहस्राणि
विष्टायां जायते कृमी । सम्वत १८५८
२८. जेष्ठ वदि १० शुभम् ॥

( बायाँपट्टि छेउमा )
श्रीगुठियार संघरानन्द वैद्यको संन्तान शुभम्

## अनुवाद

कल्याण होस् । नेपालका अधिपति श्रीपशुपतिनाथलाई नमस्कार । विक्रमसंवत् १८५८, शकसंवत् १७२३, अङ्गिरासंवत्सर, दक्षिणायनमा सूर्य गएमा, शिशिर ऋतु मकरसंक्रान्ति, चान्द्रमानले पौष शुक्ल नवमी मङ्गलवार अश्विनीनक्षत्र, साध्ययोग, बालवकरण मित्रमुहूर्त, मकरराशिमा सूर्य रहेमा, मेषराशिमा चन्द्रमा रहेमा, सिंहराशिमा बृहस्पति रहेमा, अरू ग्रह-हरू आफ्ना आफ्ना स्थानमा रहेमा,

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रम शाह बहादुर शमशेर जङ्ग देव सदा समरविजयीका श्रीपितामही ( बज्यै ), मुमा र माहिला मुमाहरूले सारा संसारका अधिपति श्रीपशुपतिलाई खुशी तुल्याउने इच्छाले यस पत्रमा लेखिएअनुसारका सारा सामग्रीले प्रतिदिन "आरती" लाउनाको लागि बोडे र नकदेश गाउँको नजीक रहेका चार ठाउँमा मार्सीधान आउने तीन खेत संकल्प गर्नु भएको थियो। ती खेतका नाम र चारकिल्ला यस प्रकारका छन्–

२२ रोपनी भएको धुम्चु भन्ने खेतको पूर्वपट्टि श्रीनीलवाराहीखेत, ठिमी गाउँ बस्ने शूद्र-जातिविशेषको नेवारको खेतको लुंहकील दक्षिणपट्टि श्रीनन्दिकेश्वरलाई चढाएको खेतको लुंहकील, पश्चिमपट्टि घट्टे कुलो नगीच लुंहकील, उत्तरपट्टि रैकर जग्गाको ठूलो लुंहकील, हिट्टीकोट.........भनिने प्रदेशअन्तर्गतको २७ रोपनी भएको टीवल भन्ने खेतको दक्षिणपट्टि खहरे कुलोको लुंहकील, पश्चिमपट्टि र उत्तरपट्टि श्रीकालिकाको खेतको लुंहकील, पूर्वतिर बाटोको लुंहकील, त्यो अढाई रोपनी भएको श्रीकालिकाको खेत, एक रोपनी चाँगुनारायणको खेत, एक रोपनी महालक्ष्मीको खेत, डेढ रोपनी ठिमीका शूद्रविशेष दुइ नेवारको खेतबाहेक भनी जान्नू।

त्यो गाउँको उग्रभैरव भैरव कम्पनीसम्बन्धी......भोगचलनबाट छुट्याइएको, साढे तीन रोपनी खेतको पूर्वपट्टि दोबाटो र रैकर जग्गाको लुंहकील, दक्षिणपट्टि र पश्चिमपट्टि श्री-नारायणको खेतको लुंहकील, उत्तरपट्टि बोडेगाउँको .........लुंहकील, नकदेश इलाकामा रहेको अद्भुतविश्वास खासकम्पनीको भोगचलनबाट छुट्याइएको साढे बाईस रोपनी भएको ......बु भन्ने खेतको पूर्वपट्टि रैकर जग्गाको लुंहकील, दक्षिणपट्टि ठिमी गाउँमा बस्ने शूद्र नेवारको खेतको लुंहकील, पश्चिमपट्टि बाटो र रैकर जग्गाको लुंहकील, उत्तरपट्टि राजभूमिको ठूलो लुंहकील।

यति चार किल्लाभित्रका ती ती जग्गाबाट उठ्ने आम्दानीबाट ल्याउनुपर्ने सबै सरसामान तयार पारी ती खेतको रक्षामा खटिएको मानिसले पुजारीलाई सुम्पिदिनुपर्छ। पुजारीले पनि प्रतिदिन अटूटरूपमा विधिपूर्वक गर्नु पर्ने पूजाविधि राम्ररी गर्नु पर्छ।

कुनै बखत यी खेतविषयमा दैववशले कुनै आपत्ति आइपरेमा खेतको रक्षाको भारा लिएका अधिकारीले राजदरबारमा आएर मन्त्री आदिमार्फत राजामा बिन्ति चढाएर सारा सामग्री जुटाउन कोशिश गर्नुपर्छ। ती मन्त्री आदि अधिकारीहरूले पनि तिनको कुरा ध्यान-पूर्वक सुनी लेखिएबमोजिमका सरसामग्री जुटाएर पूजा चलाइदिनू।

ती खेतको रक्षामा खटिएको अधिकारीले वा अरू कुनै पापीले प्रतिदिन गर्नुपर्ने पूजामा विघ्नबाधा गरे भने त्यसलाई पञ्चमहापाप लागोस्; त्यसलाई श्रीपशुपतिनाथको कुदृष्टि परोस् र तत्काल सो नष्ट होस् । जसले ती खेतको रक्षा गरी पूजा सरसामान जुटाउन कोशिश गर्छ; ती धर्मात्माका सारा दुःख व्याधि हटून्; ऐश्वर्य बढोस्; तिनलाई श्रीपशुपतिनाथको सुदृष्टि परोस् र तिनी धेरै कालसम्म सुखसँग बसून् ।

यसका साक्षीहरू सूर्य चन्द्र आदि देवताहरू । मानिसमा चाहिँ केही यी हुन्–...चतुरङ्ग फौजका मालिक चार जना चौतरिया– श्रीरणोद्योत शाह, श्रीसमरशेर शाह, श्रीबम शाह, श्रीशेरबहादुर शाह, मन्त्रीहरू– दामोदर पाँडे, त्रिभुवन, नरसिंह, संकल्प पढ्ने पुरोहित देवीदास अर्ज्याल । अब चार किल्ला छुट्याउँदा लेखिका साक्षीचाहिँ यिनीहरू हुन्– श्रीहर्षपन्थ, श्रीदेवन्नकेशरी अर्ज्याल, श्रीभानु उपाध्याय खनाल, जगजित् पाँडे, बिरु बोहरा, वंशवीर राना ।

व्याख्या–

प्राचीनकालदेखि एक टङ्कारसँग ठूलो श्रद्धा र भक्तिसाथ नेपालीहरूले पुज्दै आएका देवताहरूमा पशुपतिनाथको विशिष्ट स्थान रहेको छ । पशुपतिनाथको वासस्थान हुनाले लिच्छविकालमा नेपालउपत्यका नै "पाशुपतक्षेत्र" कहलाएथ्यो ।[१] अंशुवर्मा जस्ता लिच्छविकालका शासकहरूले पशुपतिनाथप्रति राष्ट्रिय सम्मान दर्शाउन "पशुपतिमुद्रा" ढाल्न लगाई पशुपतिनाथप्रति अपूर्व सम्मान व्यक्त गरेथे ।[२] मल्लकालमा पनि यो परम्परा कायम रह्यो । मल्ल राजाहरूका लालमोहरको शिरानमा "पशुपतिर्जयति" भन्ने वाक्य अङ्कित हुन्थ्यो; प्रशस्तिमा पनि पशुपतिनाथप्रति आदर व्यक्त गरिएको हुन्थ्यो ।[३] शाहकालमा पनि शाह राजाहरू र राजपरिवारले पशुपतिनाथको राष्ट्रिय सम्मान गर्ने प्राचीन परम्पराको संरक्षण र संवर्द्धन गर्ने काम गर्दै रहे । यस कुराको पुष्टि अनेक प्रमाणबाट हुन्छ । श्री ५ गीर्वाणयुद्धविक्रम शाहको यस ताम्रपत्रबाट पनि उक्त कुराको पुष्टि भएको छ ।

---

१. 'लिच्छविकालका अभिलेख' पृ. ५६१–५६२

२. 'लिच्छविकालका अभिलेख' पृ. २२४

३. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ६७–६९ (सामग्री खण्ड)
'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. १४५

राजेन्द्रलक्ष्मीदेवी, कान्तवती र सुवर्णप्रभाले पशुपतिनाथको "आरती" को लागि जुन जग्गाहरू संकल्प गरी चढाएका थिए; ती जग्गाको चार किल्ला खोली आरतीको पूजाको लागि आवश्यक बन्धेज बाँधी यो ताम्रपत्र गरिदिइएको हो । लिच्छविकालमा प्रसिद्ध देवस्थलमा "आरती" धूमधामसँग गर्ने चलन थियो । आरतीको बेला बाजाहरू बजाइन्थे; देवदासीहरूले नृत्यसमेत गर्ने गर्दथे ।[४] पशुपतिनाथ-मन्दिरमा उहिले यस्तो चलन थियो; थिएन स्पष्ट हुन सकेको छैन । श्री ५ पृथ्वीनारायण शाहको समयसम्म पनि पशुपतिनाथलाई "देवदासी" चढाएको उल्लेख पाइने हुनाले सो प्रथा यहाँ पनि प्रचलित थियो कि भन्ने आभास पाइन्छ ।[५] तर निश्चित रूपमा भने केही भन्न सकिँदैन ।

जे होस्; पशुपतिनाथ-मन्दिरमा "आरती" रात्री नै गरिन्थ्यो; शाह राजमाताहरूले आरतीका लागि निकै गुठी पनि राखिदिएका थिए भन्नेचाहिँ यस ताम्रपत्रबाट स्पष्ट थाहा पाइन्छ ।

卐

---

४. 'लिच्छविकालका अभिलेख' पृ. ४८८

५. पशुपति-भण्डारमा रहेको ताम्रपत्रबाट उक्त कुरा थाहा पाइन्छ । सो ताम्रपत्र माथि गइसकेको छ ।

[ १०० संख्या ]

# गोरखाको गीर्वाणयुद्धविक्रम शाहको पालाको अभिलेख

गोरखा, गोरखनाथ गुफाको ढोकैनिर ठूलो घण्टापछाडि एक लिच्छविकालको शिलापत्र रहेको छ। त्यसैको तल्लो भागमा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८५६ दिइएको छ।

'इतिहास-प्रकाश' अङ्कको ३६ पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीसाके १७२३ सम्व-
२. त १८५८ सालमा श्री ५ गोरक
३. षनाथजिउका चरणतलको प-
४. र्षाल श्री ५ माहाराजा गीर्वानजुद्ध
५. विक्रमसाहाकस्य कृति श्री ३ गो-
६. र्षाका थरघर चिटको डिठा श्री३
७. श्रीधरपथ श्री३सुबिदार हरि
८. साहि. श्रीषर्दार लछिमिविलास
९. चिट लाउन्या मुठ्या राना जसमन् रा-
१०. ना नारं राना ग्या राना बबिर्त्या पंथ
११. जयंत राना थर्घर् थापा भद्र षवाल

१२. श्रीलिग्लिग्का द्वान्या रनूसिं थवा–
१३. स् चिठ लाउन्या षड् सिं अधिकारि रु(प)–
१४. सिं थापा उमृव(र) राना विक्राम् थापा
१५. लछिराना अकवर थापा स्यका
१६. नाउ इति सम्वत् १८५९सा–
१७. लमिति आषाढ सुदि १५ रो–
१८. ज ३ काम सिध सुभम् ॥

व्याख्या–

गोरखाको राजनैतिक दृष्टिले महत्त्व हुनुभन्दा पहिले धार्मिक दृष्टिले महत्त्व रहिसकेको थियो। लिच्छविकालमै यहाँ "वज्रभैरव" आदि देवता स्थापित भइसकेका थिए। यहाँ गोरख-नाथले प्रतिष्ठा पाएपछि यस प्रदेशको धार्मिक महत्त्व झन बढेथ्यो। द्रव्य शाहद्वारा नयाँ राज्यको राजधानी यहीं बनाएपछि यस स्थलको राजनैतिक महत्त्व पनि बढ्यो।[1] गोरखनाथ गुफासँगै राजदरबार बन्यो। यस कुराको चर्चा माथि गरिसकेको छ।

श्री ५ गीर्वाणयुद्धविक्रम शाहको पालामा वि. सं. १८५८मा गोरखाका थरघर डिट्ठा सुबेदार सरदार आदि मिली गोरखनाथको गुफानिर पर्खाल बनाई यो अभिलेख वि.सं. १८५९मा कुँदाइएको हो। डाँडोको टुप्पोमा गोरखनाथ गुफा आदि रहेका हुँदा यी भक्तिने सम्भावना रहेको छ। यसो हुँदा यसलाई सुरक्षित पारिराख्न पर्खालको आवश्यकताको अनुभव त्यसै बेला गरेको संकेत यस अभिलेखले दिन्छ। यसै हुँदा गोरखाका थरघर आदि मिली पर्खाल बनाए-छन् भन्ने यताबाट थाहा पाइन्छ। गोरखाको कुरा बुझ्न यो अभिलेख पनि अलिकता उपयोगी देखिएकोले यसलाई यहाँ समावेश गरिएको हो।



१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. १३

[ १०१ संख्या ]

# गोरखाको गीर्वाणयुद्धविक्रम शाहको पालाको अभिलेख

गोरखा-दरबारमा रहेको चाँदीको छडीमा यो अभिलेख कुँदिएको छ। यसमा विक्रम संवत् १८५६ दिइएको छ।

'गोरखाको ऐतिहासिक सामग्री'को २२ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्य-द्वारा यो छापिएको छ।

## मूलपाठ

१. सम्वत् १८५६ साल श्रावण वदि १ रोज यो गोर्षादरबार...छडी हो. तोला २८ चाँदी... मार्फत कपर्दार भोटु पांडे

**व्याख्या–**

"छडी" राजदण्डको प्रतीकस्वरूप हो। राजप्रतिनिधिका हैसियतले कसैद्वारा कुनै काज गराउनुपर्‍यो भने त्यस व्यक्तिलाई राजदण्डको प्रतीकस्वरूप "छडी" सुम्पिइन्छ। अनि त्यो व्यक्ति "छडिदार" कहलाउँछ। "छरिदार" अस्थायी रूपमा प्रशासनको एक अङ्ग जस्तै बन्दछ। मल्ल-कालमा "छरिदार" भनेर प्रायः दौडाहा-टोलीका अधिकृतलाई भनिएको पाइन्छ।[१] तात्कालिक

१. 'दोलखाको ऐतिहासिक विवेचना' पृ. ४८

कति पत्रमा त "बगुर छरिदार" पनि भनिएको पाइन्छ।[२] आफ्नो राज्यक्षेत्रभित्र विशेष गरी टाढा प्रवेशमा कतै विशेष अन्याय वा गैरकानूनी काम आदि भएको समाचार राजदरबारमा आउनासाथ त्यसको तत्काल छानबीन गर्नु पर्ने आवश्यकता देखियो भने "छरिदार" खटिन्थे। "छरिदार" एक किसिमले राजप्रतिनिधि हुने हुनाले निकै शक्तिशाली हुन्थे। उनले घटनास्थलमै पुगी उजुरीको छानबीन गरी निर्णय दिने गर्दथे।[३]

श्री ५ पृथ्वीनारायण शाहले गोरखाबाट राजधानी काठमाडौं सारेपछि गोरखामा रणरुद्र शाहलाई आफ्ना प्रतिनिधिका रूपमा नियुक्त गरेथे। पछिसम्म पनि गोरखामा रणरुद्र शाहकै वंशजहरूले राजप्रतिनिधिको काम गर्दै आएको पाइन्छ। राजकीय छडी तिनैको जिम्मामा रहन्थ्यो।

यसै गरी श्री ५ पृथ्वीनारायण शाहले नुवाकोटबाट राजधानी काठमाडौं सारेपछि नुवाकोटमा पनि नैंजराम मेधासीलाई राजप्रतिनिधि नियुक्त गरेथे।[४] उनका सन्तान अहिलेसम्म पनि विशिष्ट द्वारेका रूपमा नुवाकोटमा छँदैछन्। तिनसँग रहेको छडीमा पनि "श्री ५ बडामहाराज पृथ्वीनारायण शाहबाट राखि बक्सनुभयाको नुवाकोटको छरि" भन्ने अङ्कित गरिएको छ।[५]

कहिलेकहीं "कटुवाल"ले पनि यस राजकीय छडीको प्रयोग गर्ने हुनाले यसलाई गोरखातिर "कटुवाल छडी" भन्ने चलन पनि छ।



२. 'दोलखाको ऐतिहासिक विवेचना' पृ. १५०

३. 'दोलखाको ऐतिहासिक विवेचना' पृ. ४९, १४४

४. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७७

५. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ७७, सामग्री खण्ड पृ. ५७

[ १०२ संख्या ]

# हनूमान्ढोकाको सुवर्णप्रभाको अभिलेख

हनूमान्ढोका राजदरबार, दसैंघरमा रहेको घण्टामा यो अभिलेख कुँदिएको छ। यसमा वि.सं. १८५९ दिइएको छ।

"हनूमान्ढोका राजदरबार"को २६७ पृष्ठमा गौतमवज्र वज्राचार्यद्वारा यो छापिएको छ।

## मूलपाठ

स्वस्ति श्रीसम्वत् १८५९ मिति श्रावण वदि ३ रोज १ श्रीदशैं-
घरका देवता प्रीति गरि घण्ट १ श्रीमहारानि सोमप्रभादेवीले चढायाको
हो। कसले लोभ गर्‍या पंचमहापातक, मार्फत श्रीकोकिल षवास, शुभम्॥

**व्याख्या—**

यस ताका माहिला महारानी सुवर्णप्रभादेवीले निकै धर्मकर्म गरेकी छन्; त्यसमा केही अंशमा तात्कालिक राजनैतिक अवस्था पनि कारण रहेको देखिन्छ भन्ने चर्चा माथि गरिसकेको छ। हनूमान्ढोका राजदरबारको दसैंघरमा घण्टा चढाई गरेको यस धर्मकर्मले पनि उपर्युक्त कुराको पुष्टि गर्छ। यस ताका जेठी महारानी राजराजेश्वरीदेवी काठमाडौंमा उत्रिसकेकी थिइन्।[1] साथै "नायवी अख्तियार" पनि राजराजेश्वरीदेवीको हातमा पुगिसकेको थियो। यसो

१. तोत्रराज पाण्डे र धनराज पन्त 'नेपालको संक्षिप्त इतिहास' पृ. १३७

हुँदा सुवर्णप्रभादेवीको पहिलेको जस्तो अवस्था अहिले थिएन । तैपनि राजराजेश्वरीदेवीले उदार व्यवहार नै गरेकी हुनाले सुवर्णप्रभाको पनि केही स्थान रहेको थियो । यस्तै अवस्थाको वेला यो घण्टा चढाइएको हो ।

आफ्ना इष्टदेवतालाई घण्टा चढाउनुको माहात्म्य ठूलो गाइएको पाइन्छ । यसै हुँदा भक्त, भक्तिनीहरू देवस्थलमा घण्टा चढाउने गर्दथे ।



[ १०३ संख्या ]

# पशुपति-भण्डारको अभिलेख

पशुपतिनाथका भण्डारमा सयौं ताम्रपत्रहरू रहेका छन् । तिनमध्ये एक ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८५९ दिइएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीपशुपतये नमः ॥ ॥ स्वस्ति श्रीविक्रमार्कराज्यसमयातीत संवत् १८५९ तथा शालिवाहनीय शाकाब्देषु १७२४ श्रीमुखनामसम्वत्सरे दक्षिणायणे वर्षर्त्तौ श्रावणे माशे शुक्ले पक्षे पौर्णमास्यां तिथौ शुक्रवासरे श्रवणनक्षत्रे सौभाग्ययोगे ववकरणे वि–

२. श्चमुहुर्ते कर्कटरासिगते सुर्ये सिंहराशिगते देवगुरौ मकररासिगते चन्द्रमसि शेषेषु ग्रहेषु यथास्थानस्थितेषु सत्सु. स्वस्ति श्रीगिरिराजचक्रचूडामणिनरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजगीर्वाणयुद्धवि–

३. क्रमसाह बहादुर सम्सेर्जङ्गदेवानां सदा समरविजैनाम् – – श्रीमाहिलामुमाज्यूले श्रीपशुपति प्रीति गरि प्रतिवर्ष आश्विन सुदि १४का दिन लेष्याबमोजिमको सराजाम कत्ती नघटाई महापुजा चह्राऊना निमित्य संकल्प गरि गुठ राष्याका सहर भादगाउँका अम्बलमद्धे सावोल षेत रो–

४. पनी ६॥ तस्को साँध पुर्व कुलो, दक्षिण ऊफद्यां, पश्चिम बाटो, उत्तर लस्करी षेत, ब्वलाक्क षेत रोपनी ५, तस्को साँध पुर्व सर्कारिया षेत र

बाडांका षेत, दछिण हाकु नेवारका षेत, पश्चिम गलडयाँ, उत्तर मस्तराम कुमाल र सुवारका षेत श्रौ षापी षेत रोपनी ३॥। तस्को

५. साँध पुर्व गलडयाँ, दक्षिण मनिनारायनका षेत पश्चिम बाटो र उत्तर संष-नारायनको षेत श्रौ ईषु षेत रोपनी २॥। तस्को साध पूर्व श्रीतलेज्यूका गुठि, दछिण पश्चिम उत्तर बाटो, श्रौ दफे ईषुषेत रोपनी ७ तस्को सांध पुर्व सर्कारिया षेत, दछिण सर्कारिया र पुन–

६. सिं जोसीका षेत, पश्चिम कुलो, उत्तर बाटो श्रौ बुइचा पुषु षेत रोपनी २॥. तस्को सांध पुर्व गलड्यां दक्षिण सर्कारिया षत पश्चिम बाटो उत्तर गलड्यां क्वाक् १ उत्तरमा श्रौ टौधंको षेत रोपनी ५ तस्को सांध पुर्व अतनारायनका षेत दक्षिण भिम छीपाको षेत पश्चिमबाटो

७. उत्तर अतरां भंडेलको षेत क्वाक १ समेत श्रौ धंषा षेत रोपनि २ तस्को सांध पुर्व बाटो दछिण मर्टासिं नेवारको षेत पश्चिम बालकिश्न नेवारका षेत उत्तर लक्ष्मिनारायन नेवारको षेत, श्रौ बौको षेत रोपनी २॥। तस्को साध पुर्व संर्षासिं नेवारको षेत, दक्षिण षोलो, प–

८. श्चिम सर्कारिया षेत उत्तर जयतसी नेवारका षेत श्रौ ववचो षेत रोपनी ४। तस्को साध पुर्व श्रीतलेज्यूको गुठका षेत दक्षिण सर्कारिया षेत पश्चिम षोलो, उत्तर उपडयां, श्रौ बती षेत रोपनी २ तस्को साध पुर्व बालकिश्न नेवारका षेत दक्षिण गलडयां पश्चिम बाटो

९. उत्तर बाटो क्वाक १ पश्चिममा, श्रौ थाईमाडोल षेत रोपनी ६ तस्को सांध पुर्व श्रीवाणेश्वरका गुठको षेत दक्षिण श्रीतलेज्यूका गुठको षेत पश्चिम उत्तर श्रीवाणेश्वको गुठका षेत श्रौ वाचामढी षेत रोपनी ४. तस्को साध पुर्व कलदेउ नेवारको षेत दछिण याला–

१०. देवताका गुठि षेत पश्चिम दायाराज नेवारको षेत उत्तर सर्कारिया षेत. श्रौ बिगुचा षेत रोपनी २ तस्को पुर्व दछिण सांध भारतसिं नेवारको षेत, पश्चिम छीपोको षेत उत्तर बाटो, श्रौ पाचुषेत रोपनी ३, तस्को साध पुर्व सर्कारिया षेत, दछिण भैर

११. बाँस बहील्याको षेत पश्चिम बाटो उत्तर सर्कारिया षेत औ षापीषेत रोपनी ३॥ तस्को साध पुर्व गलड्या दछिण वाँगु गुठ षेत पश्चिम गलड्याँ, उत्तर संषनारायन नेवारको षेत. औ इटावु षेत रोपनी १२॥ तस्को साँध पुर्व बाटो दछिण बिर-

१२. नारायन नेवारको षेत, पश्चिम जग्येनारायन नेवारको र क्रुश्नानन्द ब्राह्मण-को षेत उत्तर बाटो, औ काह्लांष्वाट षेत रोपनी २। तस्को सांध पुर्व वाग्णे-श्वरको गुठि र चुवुधी तमौटको षेत दछिण सर्कारिया षेत पश्चिम बाटो उत्तर सर्कारि-

१३. या षेत र महेश्वर नेवारको षेत, औ लिवालिवी षेत रोपनी ३= तस्को साध पुर्व दछिण पश्चिम उत्तर सरकारिया षेत औ दपे लीवालिवी षेत रोपनी ३॥= तस्को साध पुर्व दछिण पश्चिम सर्कारिया षेत, उत्तर सर्कारिया षेत र गजीन्द्र षाषीका षेत

१४. औ दफे लिवालिवि षेत रोपनी ३॥=तस्को साध पुर्व गोसाइ नसीवगोरीको षेत, दछिण सर्कारिया षेत, पश्चिम गोसाईको षेत उत्तर बाटो औ ह्लाडोल षेत रोपनी १॥० तस्को सांध पुर्व लक्ष्मीधर नेवारको षेत दक्षिण गलड्या पश्चिम सर्कारिया षेत उत्त-

१५. र गलड्या औ बिगुचा षेत रोपनी २ तस्को साध पुर्व संषदेव नेवारको षेत दछिण संषदेव नेवारको षेत पश्चिम् बालकृष्ण साल्मीको षेत, उत्तर बाटो, औ ईटावु षेत रोपनी ३ तस्को साध पुर्व बाटो दछिण सर्कारिया षेत पश्चिम संषनारायनको षेत उत्तर स-

१६. र्कारिया षेत, येती साधभित्रको २४ था तका ज्मा रोपनी ८६॥= ताके षेत ३ मुरी ५८॥ को उतपन्न्यले तपसील माफिकको संराजाम कत्ती नघटाइ गुठिआरले सराजाम दिनु. पुज्हारीले पुजा गर्नु. कदाचित तेस् गूठमा दैवा-गत परिआया गुठियार-

१७. ले दरबार आइ भारादारमार्फत बिन्ती गरि लेष्याबमोजिमका सराजाम पुऱ्याउनु. भारादारले पनी गुठियारले बिन्ती गऱ्याको सुनि यस् फर्दमा लेष्याबमोजिमको सराजाम कत्ती नघटाई महापुजा चलाई दिनु. येस् गुठमा

गुठियार अरू जो को–

१८. इ पापात्मा लोभानि पापानि गरि महापूजा षंडित गर्नामा पस्ला, इ पंच-महापातष लागला, श्रीपशुपतिको कोपदृष्टि होला, जो कोइ धर्मात्मा येस् गुठिको रक्ष्या गरि महापूजा चलाउनमा पस्ला तस्लाइ पंचमहाजग्यका पुन्य र श्रीपशुपतिको कृपा–

१९. सुद्रिष्टि होला. यो गुठ संकल्प हुँदाका साछी आदित्यचंद्रादिदेवता, मनुष्या-पनी श्रीचौतरिया रणउद्योत् साह श्रीचौतरिया समरसेर साह श्रीचौतरिया वम्साह श्रीचौतरिया सेरवहादुर साह काजी सर्वजीत पाडे काजी अम्वर-सिंह थापा काजी नरसिंह स–

२०. र्दार सुबुद्धि षड्का कपर्दार भोटु पांडे षजांची जगन, संकलपवाक्य पढ्न्या प्रोहित देवीदास, पानी हालन्या काजी वषतवारसिह, येस् गुठका साध लाउन्या हरि जैसी अर्ज्याल भानु पाध्या षनाल कासीराम पाडे श्रीनिधिपंथ विरु बोहोरा, वंसविर राना,

२१. डोंगल कृष्ण, धनवन्त, काल्या, जगत्सिं.....................
इति सम्वत् १८५६ सालमिति भाद्र सुदि १३ रोज सुभम्,

व्याख्या–

माहिला महारानी सुवर्णप्रभादेवीले वि.सं. १८५६मा पशुपतिनाथकहाँ आश्विन शुक्ल चतुर्दशीको दिन विशेष पूजा गराउन गुठी राखी यो ताम्रपत्र कुँदाउन लाइएको हो। यसभन्दा पहिले श्री ५ रणबहादुर शाहले पशुपतिनाथको महास्नान आदिको लागि प्रशस्त गुठी राखेथे। यसै गरी श्री ५ प्रतापसिंह शाह र श्री ५ पृथ्वीनारायण शाहले पनि पशुपतिनाथको पूजा-आजाको लागि बन्दोबस्त मिलाएको हामी पाउँछौं। यी उदाहरणबाट शाह राजपरिवारको पशुपतिनाथप्रति रहेको श्रद्धा र भक्तिको झलक पाइन्छ।

शाह राजपरिवारले नेपालका विभिन्न देवदेवीहरूलाई गुठी चढाई राखिएका निकै अभिलेख माथि गइसकेका छन्; केही अभिलेख तल आउँदै छन्। यस्ता अभिलेखमा ती गुठीको लोप नहोस्; पूजा-आजा ठीकसँग चलोस् भनी निकै ध्यान दिइएको पाइन्छ। एक त गुठी जग्गामा पछि खिचोला नउठोस् भनी चारकिल्ला राम्ररी खुलाइएका हुन्छन्। अर्को गुठियार आदि र

दानपत्रको सुरक्षा गर्ने अधिकारी नियुक्त गरिएका हुन्छन् । ती अधिकारीले पूजाको वेला चाहिने जति सामग्री जुटाइदिनुपर्ने हुन्छ । केही गरी कुनै विघ्नबाधा आइपर्‍यो भने उक्त अधिकारीले तत्काल राजदरबारमा आई मन्त्री आदिमार्फत राजामा विन्ति चढाउनुपर्छ । मन्त्रीहरूले पनि तत्काल कारबाइ गर्नु पर्छ । यसरी देवतालाई चढाइएका गुठीमा तल-माथि नहोस् भनी पूर्ण सावधानी लिइएको पाइन्छ । यस अभिलेखमा पनि उक्त कुराको उल्लेख परेको छ ।

यस ताम्रपत्रमा साक्षी बस्नेहरूप्रति दृष्टि दियौं भने तात्कालिक भारदारहरूको अलिकता झलक पाइन्छ । एकातिर सर्वजीत पाँडे आदि केही काजी यस बेला अगाडि आएका देखापर्छन् भने अर्कोतिर दामोदर पाँडे, त्रिभुवन प्रधान आदि पुराना केही भारदारको नामोल्लेख यहाँ भएको छैन ।

जे होस्; यो अभिलेख पनि तात्कालिक अलिकता कुरा बुझ्न केही उपयोगी नै रहेको छ भन्न सकिन्छ ।

[ १०४ संख्या ]

# गीर्वाणयुद्धविक्रम शाहको ताम्रपत्र

यसको मूल ताम्रपत्र हेर्न पाइएको छैन । तर यस ताम्रपत्रको उतार कौसी तोशाखानामा रहेको छ । 'पूर्णिमा' २० पूर्णाङ्कको ३३३–३३६ पृष्ठमा देवीप्रसाद भण्डारीद्वारा यो छापिएको छ ।

## मूलपाठ

स्वस्ति श्रीमन्नीलकंठाय नमः ॥ ॥ श्रीविक्रमार्कसंवत्सरे ग्रहेन्द्रिय-वसुभूमि १८५९ मिते श्रीमुखनामसंवत्सरे श्रीसूर्ये उत्तरायणे ग्रीष्मर्त्तौ ज्येष्ठ-मासे शुक्लपक्षे दशम्यां तिथौ भृगुवासरे चित्रानक्षत्रे व्यतीपातयोगे मिथुनराशि-गते सवितरि कन्याराशिगते चन्द्रमसि सिंहराशिगते सुरगुरौ दशहरामहापर्वणि॥

स्वस्ति श्रीगिरिराजचक्रचूडामणिनरनारायणेत्यादि विविधविरुदावलीवि-राजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम-साह बहादुर सम्सेरजङ्गदेवानां सदा समरविजयिनामिदं ताम्रपत्रम् ॥ ॥

श्रीमन्नीलकंठदर्शनाकांक्षिजनेभ्योऽन्नसत्रप्रवर्त्तनाय गुलालरामावसथिकया-चनाप्रमुदितेन नैपालीयभूपतिवर्गेण संलग्नसंग्रामविजिगीषुणाऽस्मत्प्रपितामहेन श्रीमत्पृथ्वीनारायणदेवेन नेपालराज्यप्राप्तिकामनया धैबुङ्नामको ग्रामः सकेदारः संकल्प्याऽऽवसथिकोपनामकगुलालरामाय संप्रदत्तः गुलालरामोऽप्यन्न-सत्रप्रवर्तनाय योग्यं देवपूजकाय दत्तं च क्षेत्रमपहायाऽन्यत्सर्वं श्रीजयमंगलब्रर्मंसे

संकल्प्य दत्वाऽऽन्नसत्राधिकारं चाऽस्मै प्रददौ, तदनु कृतापराधस्य जयमंगलपुत्र-व्रजनाथशर्मणः सर्वस्वहरणावसरेऽन्नसत्रवित्यस्तमपि क्षेत्रं तत्संसर्गमात्रेण सर्वं पूर्वजैरपहृतं स्थितम् सांप्रतं. तदयुक्तमिति विविच्य सकलैतत्साम्राज्यलक्ष्मी स्थिरीकरणकामनया श्रीमध्यमंमात्रा सुवर्णप्रभया सकेदारं धैंबुङनामकग्रामं भूयः संकल्प्य प्रतिसंवत्सरं ज्येष्ठशुक्लदशम्यां श्रावणपौर्णमास्यां चाऽऽगतसकल-जनेभ्यः सत्रान्नमिच्छद्भ्योऽन्नदानाय तद्ग्रामसीमान्तःपतितदेवभूदेवकेदारादिकं परित्यज्य तत्सर्वं श्रीनीलकंठेश्वरप्रीतये समर्पितमस्ति. तंडुलसूपलवणघृतेन्धनादि-भोजनसंभारविभागो ग्रामक्षेत्रसीमाविभागश्च भाषयाऽऽभिव्यक्तीक्रियते, तमाक-लय्य लोभं च परित्यज्य यथोक्तप्रकारेण याचकेभ्यो वितरणीयम्. भूयो भूयो भाविभिर्नृपतिभिश्चायं धर्मः पालनीयः ॥

स्वदत्तां परदत्तां वा यो हरेच्च वसुन्धराम् ॥
षष्ठिवर्षसहस्राणि विष्टायां जायते कृमिरित्यलं ॥

लेष्याबमोजिमको सराजाम कत्ती नघटाई सदावर्त्त चलाऊनानिमित्य संकल्प गरि गुठ राष्याको धैंबुङ थुम १ को खेत १७ मुरी ६० तस्को सांध पूर्व किमारजुन्‌भंज्याङ र चित्तीभंज्याङ ग्रांवचौरको पानी लुहुकिल सरस्यूँ रैंकरको सांध र देवकोटा ब्राह्मणका विर्ता लप्स्या थोलाको छहरो हात्ती ढुंगो महरहीत महवीर सुर्येगढीमनीको छहरो चोक्देवसँगको सांध दक्षिण गढीभंज्याङ चेहान्या-डांडाको पानीढलो सातविस्याको कुलो बांध र प्याकुन्याल ब्राह्मणका विर्ता लुहुकिल सांध पश्चिम त्रिसुलगङ्गा छहन्यादोभान सांध उत्तर लाङघाको डांडो पानीढलो र देवराली भंज्याङ ग्राहल्या भंज्याङ रैंकर लुहुकिल् राम्च्याको सांध येति चार किलाभित्रको गूठ विर्ताबाहिक् जगाका उत्पन्यले तपसिल-माफिकको सराजाम कत्ती नघटाई गुठियारले सदावर्त्त चलाऊनु.

कदाचित् तेस गुठिमा दैवागत पर्न गया गुठियारले दर्बार ग्राई भारादार-मार्फत् विंति गरि लेष्याबमोजिमको सराजाम पुन्याउनु. भारादारले पनी गुठियारले विंति गऱ्याको सुनि येस् पत्रमा लेष्याबमोजिमको सराजाम कत्ती नघटाई सदावर्त्त चलाईविनु.

येस गुठमा गुठियार अरू जो कोही पापात्मा लोभानि पापानि गरि सदावर्त षंडित गर्नामा पस्ला. तस्लाई पंचमहापातष लाग्ला श्रीनीलकंठको कुद्रिष्टि पर्ला. जो कोहि धर्मात्मा यो गुठिको रक्ष्या गरि सदावर्त चलाऊनामा पस्ला तसलाई पंचमहाजग्यको पुण्य र श्रीनीलकंठको कृपा सुद्रिष्टि होला. गुठियार लोकनाथ पंडित हरिसर्मा पंडितले येस् पत्रमा लेष्याबमोजिमको सदावर्त चलाई सेष बांकी रह्याको षानु भनि बक्स्यौं.

यो गुठ संकल्प हुँदाका साक्षी आदित्यचन्द्रादि देवता मनुष्य पनी चौतरिया श्रीरणउद्योत साह श्रीसमरसेर साह श्रीवम्म साह श्रीसेरबहादुर साह काजी श्रीरणवम्म पाँडे श्रीबषत्वार्रासह श्रीअम्बरसिंह थापा श्रीनरसिंह कपर्दार श्री-भोटु पाँडे सर्दार श्रीसुबुद्धि षड्का श्रीअंगद षजांचि श्रीजगन संकल्पवाक्य पढ्न्या प्रोहित श्रीदेवीदास अर्ज्याल पानी हालन्या काजी श्रीवषतवार्रासह सँधियार श्रीहर्ष पंथ हरी अर्ज्याल भानु पाध्या षनाल काजी पांडे बिरु बोहरा वंसवीर राना.

आमदनीको तपसील

| असामी | षेत | उपजनी धान मुरी | ताके चामलमुरी | दर पाथी | ताके रुपैया |
|---|---|---|---|---|---|
| ज्मा षेत | १७।६० | ६७५।.। | २७०।०। | .।६।. | ६०० |
| घिऊषानी रुपैया ४४।।। मध्ये | | | | | |
| मिनहाषेत ६।१० के | | | | | |
| रुपैया १५। बाकी रुपैया | | | | | २६।। |
| ढाक्र्यासमेत प्रजाघर १८७ का | | | | | ६७= |
| षुवासमेतको आमदनी रुपैया | | | | | |
| | | | | | ६९६।।= |

तेमध्ये षर्च सदावर्तमा चाहिन्या सराजाम

जान्या आऊन्या जात्रु जना ७१०१ जना १ के चावल माना २ का हिसावले चामल मुरी ८८।१५।२ दर पाथी ।६।.के रुपैया १६१ ।।= ।

जना १ के दाल माना आधा ।। का हिसाबले दाल मुरी २२।३।६।। दर पाथी ।७।. के रुपैया ६३।=।।

जना १ के नुन मुठि १ का हिसाबले नुन मुरी ४।८।६।१ दर पाथी ।२। के रुपैया ४४।=१

जना १ के घिऊ तोला ४ का हिसाबले घिउ धार्नि १४७ ऽ२।।।— दर धार्नीका ।।। के रुपैया ११०।।।= ।

बेसारके रुपैया चार ४

सुर्ति तमाकु अतरसमेतके रुपैया पन्ध्र १५

फलहारके

घिऊ धार्नी पचीस २५ दर धार्नीका ।।। के रुपैया १८।।।

सकर धार्नी पचीस २५ दर रुपैयाका धार्नी ३ के रुपैया ८ ।—।

आटा मुरी पाँच ५।. दर पाथी ।१०। के रुपैया १०

दही केराके नगदी रुपैया पाँच ५

कुण्डमा पठाउनाके

चिउड़ा मुरी सात ७।. ।. दर पाथी ।११।. के रुपैया १२।।=

सत्तु मुरी पाँच ५।.।. दर पाथी ।८।. के रुपैया १२।।

कुण्डमा महादिपका सराजाम घिऊसमेत महादिप गोटा पाच ५ के रुपैया साढे बाह्र १२।।

कुण्डमा दाउवा भारी सय १०० पुन्याऊन्याके खाना खर्च रुपैया पचीस २५

इति सम्वत् १८५६ साल मित्ति आसिन सुदि १५ रोज शुभम्

## संस्कृतभागको अनुवाद

नीलकण्ठ (गोसाईंकुण्डका महादेव) लाई नमस्कार। विक्रमसंवत् १८५६ श्रीमुखनामक संवत्सरमा सूर्य उत्तरायणमा भएमा ग्रीष्मऋतु ज्येष्ठ शुक्ल दशमी शुक्रवार चित्रा नक्षत्र व्यतीपात योगमा, सूर्य मिथुनराशिमा, चन्द्रमा कन्याराशिमा, बृहस्पति सिंहराशिमा भएमा, दशहराको ठूलो पर्वमा,

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम शाह बहादुर शमशेर जङ्गदेव

सदा समरविजयीको यो ताम्रपत्र हो

गुलालराम आवसथिकले गोसाइँकुण्ड महादेवको दर्शन गर्न जाने यात्रुहरूलाई सदावर्तगुठी राख्ने विचार गरी प्रार्थना गर्दा नेपालखाल्डाका राजाहरूसँग चलिरहेको लडाइँ जित्न बाहुने हाम्रा बराज्यू श्रीपृथ्वीनारायण शाहले नेपालखाल्डोका राज्य जित्ने कामनाले धँबुङगाउँको गाउँ र त्यहाँको खेत आवसथिक उपनाम भएका गुलालरामलाई संकल्प गरेर दिनुभयो। गुलालरामले पनि पुजारीलाई दिएको खेत र सदावर्त गुठी चलाउन योग्य खेतबाहेक अरु जम्मै खेत जयमङ्गल शर्मालाई दिए। सदावर्त गुठी चलाउने अधिकार पनि उनैलाई दिए। त्यसपछि जयमङ्गलका छोरा व्रजनाथ शर्माले अपराध गरेका हुनाले उनको सर्वस्व हर्दा सदावर्त गुठीको खेत पनि सर्वस्वसँगै हाम्रा पुर्खाहरूले हर्नु भयो। अहिले यो ठीक भएन भनी विचार गरी यो जम्मै राज्य स्थिर गर्ने इच्छाले साहिला मुमा सुवर्णप्रभाले धँबुङगाउँ र त्यहाँको खेत फेरि संकल्प गर्नु भयो। हरेक वर्ष ज्येष्ठ शुक्ल दशमी र श्रावण शुक्ल पूर्णिमामा आएका सदावर्त खान खोज्ने सबै मानिसहरूलाई सदावर्त दिनाको लागि त्यो गाउँको सीमाभित्र परेका देवता र बाहुनका खेतलाई छोडेर बाँकी श्रीनीलकण्ठ महादेवको प्रीतिको लागि चढाइएको छ। चामल, दाल, नून, घिउ, दाउरा आदि भोजनको फाँटवारी र गाउँ र खेतको सीमा पनि भाषाले प्रकट गरिन्छ। त्यो विचार गरेर लोभ छोडेर माथि भनेबमोजिम सदावर्त माग्न आउनेलाई दिनुपर्छ। पछि हुने राजाहरू पनि फेरि फेरि यो धर्म पालना गर्नु पर्छ।

आफूले वा अरूले दिएको जग्गालाई जसले हर्ला, ६० हजार वर्षसम्म त्यो नरकमा पर्ला।

व्याख्या–

नेपालका प्रसिद्ध तीर्थस्थलमध्ये एक गोसाइँकुण्ड पनि हो। सप्तगण्डकीमध्ये एक त्रिशूली गण्डकीको उद्गमस्थल "गोसाइँकुण्ड" हो। गोसाइँकुण्डको पुरानो नेवारी नाम "शिवह्लु ति" थियो। महादेव यस कुण्डमा आई रहेका र उनकै त्रिशूलको घोचाईले "त्रिशूलगङ्गा"को उत्पत्ति भएको हो भन्ने लोकधारणा हाम्रो यहाँ रहेको छ। हिमवत्खण्ड आदिमा त्रिशूलीको माहात्म्य यसै रूपमा गाइएको छ। यस्तै माहात्म्यको प्रचारले शैवसम्प्रदायका गोसाइँहरूको लागि उक्त कुण्ड पवित्र आकर्षक स्थल बन्न पुग्यो। जसले गर्दा सो कुण्ड नै पछि "गोसाइँकुण्ड" कहलाउन थालेको देखिन्छ। यसरी गोसाइँकुण्डको प्रसिद्धि नेपालबाहिर समेत फैलिन थाल्यो। प्रतिवर्ष दशहरा र श्रावणपूर्णिमाको दिन यहाँ मेला लाग्छ।

उपत्यकाका मल्लराजाहरू बराबर गोसाइँकुण्ड महादेवको दर्शन गर्न जान्थे। वि.सं.

१५०४ मा यक्षमल्ल गोसाईंकुण्डमा गएको वर्णन तात्कालिक हस्तलिखित ग्रन्थमा परेको छ।[१] कान्तिपुरका राजा पार्थिवेन्द्र मल्ल, भूपालेन्द्र मल्ल र राजमाता ऋद्धिलक्ष्मीले गोसाईं-कुण्डको यात्रा गरेको वर्णन तात्कालिक ठ्यासफुमा पाइन्छ।[२] उपत्यकाबाहेक पाल्पाका राजकुमार आदिले गोसाईंकुण्डको यात्रा गरेको वर्णन पनि पाइन्छ।[३] भक्त जनताहरू त मेलामा प्रशस्त मात्रामै सम्मिलित हुन्थे; हुँदैछन्। संन्यासी आदि पनि निकै आउँथे।

श्री ५ पृथ्वीनारायण शाहले नुवाकोट विजय गर्न उद्योग गरिरहेको बेला एकजना सिद्ध-अवस्ति (जसको नाम गुलाबराम थियो,) गोसाईंकुण्डमा स्नान गरी फर्कन लागेका थिए। बाटामा उनले श्री ५ पृथ्वीनारायण शाहको सैनिक गतिविधि देखे। गोसाईंकुण्ड जाने यात्रीहरूलाई कष्ट रहेछ; उक्त यात्रीहरूको सुविधाको लागि सदावर्त पाटी पौवाको बन्दोबस्त गरिदिने वचन दिने भए म "खड्गसिद्धि" गरिदिन्छु भनी ती सिद्धले श्री ५ पृथ्वीनारायण शाहका भारादारसँग कुरा गरेछन्। तर ती सिद्धसँग श्री ५ पृथ्वीनारायण शाहको भने भेट हुन पाएन; सिद्ध काशीतिर लागे। ती सिद्धको प्रसिद्धि केही फैलिएको र आफूले चिताएको नुवाकोटविजयको काम असफल भइरहेको हुँदा श्री ५ पृथ्वीनारायण शाहले काशीयात्रा गर्ने अठोट गरे। काशीयात्राको मुख्य उद्देश्यचाहिँ युद्धका लागि हातहतियार प्राप्त गर्नु रहेको थियो। विशेष गरेर नुवाकोटको गढ फुटाउन बारुद आदि विस्फोटक पदार्थको श्री ५ पृथ्वी-नारायण शाहलाई खाँचो थियो। यस्तै उद्देश्य राखी उनले काशीतिर प्रस्थान गरे। काशीयात्राको प्रसङ्गमा अवस्तिसँग श्री ५ पृथ्वीनारायण शाहको भेट भयो र ती सिद्धले अनुष्ठान गरी उनलाई खड्ग प्रदान गरे। यसबाट श्री ५ पृथ्वीनारायण शाहको हौसला केही बढ्यो। नुवाकोटविजयमा सफलता पाएपछि सो खड्गसिद्धिमा उनको झन् विश्वास जमेथ्यो। सिद्ध अवस्तिले श्री ५ पृथ्वीनारायण शाहलाई दिएको सो खड्ग अहिलेसम्म हनूमानढोका, कोटभण्डारमा सुरक्षित रूपमा राखिएको छ।[४]

श्री ५ पृथ्वीनारायण शाहले ती सिद्धलाई धंबुङको बिर्ता दिएथे। ती सिद्धले पनि गोसाईंकुण्ड महादेवको दर्शन गर्न जाने यात्रुहरूलाई सदावर्त गुठी राखी बाँकी रहेको जग्गा जयमङ्गल पौडेललाई दिए। सदावर्त गुठी चलाउने अधिकार पनि उनैलाई दिए। पछि

---

१. रामजी तेवारी 'भूपालेन्द्र मल्ल' पूर्णिमा ३ पूर्णाङ्क, पृ. ४२

२. 'पूर्णिमा' ३ पूर्णाङ्क, पृ. ४२–४३

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१७

४. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ५९–६०

व्रजनाथ पौडेलको सर्वस्व हुँदा ती गुठी जग्गा पनि हरिएछन् । यो कुरा थाहा पाई माहिला महारानीले फेरि संकल्प गरी व्रजनाथका भाइ लोकनाथहरूलाई सो गुठीको अभिभारा बुझ्मि-दिइन् । सदावर्तको नयाँ बन्धेज पनि बाँधिन् । त्यसै प्रसङ्गमा यो ताम्रपत्र गरिदिइएको हो ।

यसरी यो ताम्रपत्र अनेक दृष्टिले उपयोगी रहेको छ । गोसाईंकुण्ड मेलामा जानेलाई दुःख नहोस् भन्ने भावनाले राखिएको सदावर्त गुठीको पूर्ण बेहोरा यसमा परेको हुनाले तात्कालिक आर्थिक, सामाजिक कुरामा यसबाट निकै प्रकाश पर्छ । यसै हुँदा मूल ताम्रपत्र हेर्न नपाइए पनि यसलाई यस संकलनमा समावेश गरिएको हो ।

卐

[ १०५ संख्या ]

# नरदेवीको भोटु पाँडेको अभिलेख

काठमाडौं, नरदेवीको प्रसिद्ध मन्दिरको बायाँपट्टि रहेको शिलापत्रमा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८५९ दिइएको छ ।

## मूलपाठ

१. श्रीमत्महेशतनयं जगत्पूज्यपदाम्बुजम् ॥ विघ्नांधकारमिहिरं वन्दे सिद्धि-विनायकम् ॥ श्रीशाके वेदरजनीकान्तागधरणीमिते: ॥ पौषेपक्षे सि–

२. ते गौरितिथौ भानुजवासरे ॥ श्रीदेव्यै राजतानेकपूजाभाण्डानि भक्तित: ॥ क्षेत्राणि च नृपामात्यतुलारामस्य सूनुना: ॥ श्रीभोटुना सुकृतिना सर्वलोको-पकारिणा

३. ॥ समर्पितानि यत्नेन पालनीयानि सज्जनै: ॥ अत: परन्देशभाषा: ॥ स्वस्ति श्रीसम्वत् १८४६ साल पौष वदि ३ शनिश्चरवारे तस दिन श्रीश्रीश्रीडट्टे-श्वरी पृति गरि

४. बेवुंमा चिनियाको फौद आउदा घा गर्न मिलाईकन घर पुगदा चादिका थलिया १ चादिको चन्दनषोरि १ चादिको नैवेद्यपात्र १ सुरापात्र १ येति पुजाको भाडा थान ५ के तोला १६०

५. मासा ६ किर्तिपुरका गलसि षेत रोपनि सात ७ यि षेतको बालिले नित्य पुजा गर्नु. टोलको पाल लाक गुवाहाले वर्ष वर्ष दिन पालोसित पूजा गर्नु. औ वाग्मति डोल षेत रोप–

६. नि १८ सास्नाल रोपनि एक १ सालालपुचा रोपनि पौने दुई १॥। ति षेतको बालिले पिसाचतुर्दसिका रातभरि दीपमाला बालनु. उसै रातमा रागो येक १ काम्या भेडो येक १ दवलि–

७. मा बलिवान गन्यापछि आधा रागो देवताको पलकलाई दिनु आधा रागो र भेडा १ ले गुठीयारहरूले भोज षानु. तेति गन्यापछि रह्याकोले वागरि भेडा १ र पुजाको सराजाम् तु–

८. त्याई वर्षवंधन वुसाधान गर्नु गरि तुलाराम पाडेको छोरो ङटुटोलमा बस्न्या भोटू पाडे कपर्दारले चह्राजु. येस गुठिको गुठिहार ङटटोलका बालकृष्ण उदास भांसि उदास भाजुमन उदा–

९. स तेस दानपत्रमा लेष्याबमोजीम् गुठिहारहरूले गुठि चलाउनु जसले लोभानि पापानि गर्ला ऊसलाई श्रीङटश्वरीको कुदृष्टि. जसले बनाउन गुठि चलाऊमा पसला, ऊसलाई श्रीङटु श्वरी–

१०. को सुद्रिष्टि होला, यो स्वदत्तपरदत्तां वा ये हरन्ति वसुंधरां ।। षष्टिवर्षसह-श्राणि विष्टायां जायते क्रिमि ।। शुभम् ।। ।। श्रीजगदंम्बायै नमः ।। ।। श्रीपंचपंचाष्टविधुभिर्म्मिते विक्र–

११. मवत्सरे ।। नभस्यमावास्यातिथौ भार्गववासरे ।।१ कान्तिपुर्य्यां राजधान्यां पुण्यमर्त्यजनैर्युते ।। ङटाभिधस्थले रम्ये– – चायतनं शुभम् ।।२।। श्रीश्रीश्री-जगदंबायाः प्रितये स्वे–

१२. ष्टसिद्धये ।। भोटूपाडे विधानेन जगद्विख्यातकिर्तिना ।।३।। प्रासादोद्घाटनं देव्याः सौवर्णलिपितं हि यत्. ।। तस्य प्रतीष्ठावसरे रोपण्यः पंचसप्ततिः ।।४।। सर्मपिता क्षेत्रसंख्या

१३. स्वेष्टसंसिद्धिहेतवे ।। अनेमत्र क्रियोगेन भूयाल्लोकद्वयसुपि ।।५।। अथ पर-न्देशभाषा ।। ।। स्वस्ति श्रीसम्वत् १८५५ साल मिति प्रथम श्रावण वदि ३० रोज ६ तस दिन श्रीश्रीश्रीङटे–

१४. श्वरिको देवलमाहा अघि दुई तला छाना भैरह्याको तीन तला छाना गरि उपल्लो तलामा छानामा सुवर्णको छाना गरि येस छतलाई गुठि गरि किर्तिपुर नगाभमाहा डोबु षे–

१५. त रोपनि पैंतालीस ४५ पांगाको अमालमा लसाबु रोपनि सोह्र १६ चोभार-को अमला नार्वासिडो षेत रोपनि पाच दफे बसीदो षेत रोपनि नौ ज्मा रोपनि पचहतर ७५ हलचोक–

१६. का अम्वलमा घऱ्यादि रोपनि पन्द्रह १५ येति षत घऱ्याडिको वालिले वर्षवन्धन सुनको छानामा बुसाधन गर्नु जग्यहोम गर्नु महादीप बालनु रांगो एक १ भेडा एक १ वलिदा–

१७. न गर्नु ग्रौ ईन्द्रजात्रामा ग्राठ दिन ८ देवलमा दीपमाला बालनु द्दिनको तेल पाथि पाच ५ द्वादसीको दिनमा र पुर्णिमाको दिनमा मासादि नैवेद्य दान गर्नु दसैंको घ–

१८. टृस्थापनादेषि नौ रातमा दिनको दिनको तेल पाथि ५ देवलमाहा दीपमाला गर्नु साम्यको दिन भेडा १ वलिदान गर्नु ग्रौ पिसाचतुर्द्सिको दिन देव-लमहा ग्रारतिको

१९. पुजामा भेडा येक १ वलिदान गर्नु ग्रारति जाहा देवता लैजांछन् ग्राषाडा-देषी नचाउन्या डवलिमा नाच नचाउज्यालसम्म वालनु ग्रौ नित्य रोज संज्यामा ग्राहुति जगाऊ–

२०. नु दिनको दुई दामको तेलले श्रीश्रीश्री कृष्णको कृतनमा चार दामको तेलले ग्रारति बालनु किर्तन गर्न्याहरूलाई श्रीपचमिको दिन भोज षुवाउनके रुपैया सात ७ दि–

२१. नु येति विधि गर्नलाई श्रीगोर्षाको थुथारि पांडे पद तुलाराम पांडेको छोरा ङट्टटोल बस्ने श्रीकपर्दार भोटु पाडेले प्रीति गरि गुठि गरि चह्राग्रु येस गुठिको

२२. गुठिहार ङट्टटोलको लह्लसि ऊदास ङट्टटोलको भासि ऊदास ङट्टटोलको रामजु ऊदास ङट्टटोलको टुछेको ठाकु ऊदास ङट्टटोलको श्रीकृस्न ऊदास येति

२३. जना गुठिहारले वर्ष वर्षमा चिता गरि गुठि चलाउनु ॥ श्रीङट्टदेवीको धामि कालि कुमारि भैरव वाराहि जना ४ पुजाहार नायेक १ ववाहाटोजावछे

२४. का – – नेवा १ मदुटोल पिगननिको जसवंत तमौट्ट १ ग्रमृतमुत्ति तमौट १ माहा देव लीनेको वेवासि कर्मि १ कमिलाछिट्टोलको धनवंत न–

२५. कर्मि १ एति जनालाई बुसाधानमा भोज षुवाऊनु ॥ सोदतं वा परदतं वा जो हरंति वसुंधरा षष्टिवर्षसहश्राणि विष्ठायां जायते कृमि ॥

२६. शुभम् ॥ ॥ स्वस्ति श्रीसम्वत् १८५५ साल मिति फागुन वदि १४ रोज
५ श्रीङटेश्वरि देविको जात्रामाहा आषाडादेषि डबुलिसम्म डबु–
२७. लिदेषि आषाडासम्म वसालाय गरि लैजानु देवता जाहा जाहा लैजांछ्
ताहा ताहा सबै ठाऊ तिनै सहरमा लैजादा ल्याऊन्या वसलाव ग–
२८. र्नु पर्छ भनि श्रीकपर्दार भोटू पाडेले वठूल षेत रोपनि वाह्र १२ गुठि गरि
चह्राया येस षेतको वालिले पिसाचतुर्दसिका दिनमा वर्षप्रति
२९. देवलमा काग्या भेडा १ बलिदान गरि मासादि नैवेद्य राषि पुजा गर्नु पर्छ
वसलाय गर्न्या कपरा वर्षप्रति थ्यान १ गज हात १॥ लमाई हात वी–
३०. स २० को राषनुपर्छ तस्को गुठिहार षिन वभ्र जना ३ पोगा वभ्र जना ६
सिस्याल वजाऊन्या जना २ बह्रचा बजाऊन्या जना १ गुठिहार ज्मा ज–
३१. ना १२ येति गुठिहारले गुठि चलाऊनपर्छ अषाडाको बाहिर चंदुवा तागन–
पर्छ विजमान तागनको सरजाम कासाको ह्लंक १ सि–
३२. धमु १ पितल्या झारि १ येति वस्तुको सम्भार गर्नु र वसालाय गर्नु पर्छ यो
गुठि जसले बिगार्नु पसला तसलाई श्री ३ ङटेश्वरिदेवी
३३. का कुद्रिष्टि जसले यो गुठिको सभार गर्नु मा पसला तसलाई श्री ३ ङटेश्वरी–
को सुद्रिष्टि होला यस गुठिहारले गुठि नचलाया लह्न–
३४. सिं भासिं ठाकु तुछेको श्रीकृष्णलांजु येति पाच जनाको सभाले विचार
गर्नु पर्छ ॥ ह्वाफोल स्वंफोल १४ सिनु तियागु मा–
३५. ला दुई धानको लावा वसालाय गर्न्याको कपडा जस्को पालो छ सो लेषा
गरि लिनु जस्को पाला सकिछ सो लेषा गरि दिनु मास–
३६. नु छैन शुभम् ॥ ॥ श्रीमन्महेशतनयं जगत्पूज्यपदांबुजं विघ्नांधकारतिमिरं
वंदे सिद्धिविनायकं, चंद्रागवोपुग–
३७. मिते शकोर्जे पक्षे शुक्ले पूर्णचंद्रे कुजे च सुलुपुलुथोजातुर्यं भक्तधा देव्यं समर्पित
मंगलाष्टौपताका च द्वायपंचो–
३८. परंगितं ॥ क्षेत्राणि च नृपामात्यतुलारामस्य सुनुना ॥ श्रीभोटुना सुकृतिना
सर्वलोकोपकारिणा समर्पितानि यत्ने–
३९. न पालनीयानि सज्जनैः ॥ अतः परं देशभाषा स्वस्ति श्रीसाके १७२४

सम्वत् १८५९ कार्तिकमासे शुक्लपक्षे पूर्णमास्यां ति–
४०. थौ मंगलवारसरे ॥ ॥ स्वस्ति श्रीसम्वत् १८५९ साल कार्तिक सुदि १५ मंगलवारका दिन श्रीश्रीश्रीङ्टेश्वरिलाई सुलु
४१. पुलु धोजा ४ र अष्टमंगल पताका २ को गुठि निमित्य ङट्टटोल बस्न्या कपर्दार भोटू पाडेले प्रिति गरि चह्राया तस
४२. निमित्य षेत किचडोल रोपनि २ तपाको रोपनि २॥। दफे तपाको रोपनी १। ज्मा षेत रोप ६ येस षेतका ऊपजनीले सा–
४३. ल साल रुपैया र षजाना राषि तेस षजानाले वाह्र वर्षका देवताको वर्ष-वन्धनका दिन सुलुपुलु धोजा ४ र अष्टमं–
४४. गल पताका २ फेर्नु सुलुपुलु धोजाके पंचरंगी कपरा चौ २ अष्टमंगल पताका के सेतो सादा कोचीन मुसा
४५. –षानि पट्का येति फेरि ज्या बाकि रह्याकोले चैत्र वदि १४ का दिनमा देवतालाई काग्या मेडा १ बलि चह्राई गुठिया–
४६. रहरुले भोज षानु देवता जाहा जाहा पाऊलागछ ताहा ताहा सुलुपुलु धोजा र अष्टमंगल पताका गुठिया–
४६. रले लँजानु येस गुठीमा गुठीयार र अरु जो कोई पापात्मा लोभानि पापानि गरि यो गुठ षंडीत गर्नमा पसला त–
४७. सलाई श्रीङटेश्वरीको कोप कुदिष्टि होला लेष्याबमोजीमका जो गर्नमा पसला तसलाई श्रीश्रीश्रीङटेश्वरी–
४८. को सुदिष्ट होला यो गुठको गुठियार महालक्ष्मी १ विष्णु वि १ इन्द्रायनी १ रुद्रायनी १ ब्रह्मायनी १ गणेश १ सिधि–
४९. नी १ व्याघिनी १ जस जसले धामि हुंछ; तसले यो गुठको गुठियार हुनुः ॥ स्वदत्तां परदत्ताम्वा जो हरेत वसुंध–
५०. राम् षष्टिवर्षसहस्राणि विष्ठायां जायते क्रिमि ॥ १ ॥

व्याख्या–

भोटु पाँडेका केही अभिलेख माथि गइसकेका छन्; केही अभिलेख तल आउँदै छन् । ती अभिलेखबाट भोटु पाँडेको गतिविधिमा निकै प्रकाश पर्छ । भोटु पाँडेले तात्कालिक राजका-

जमा त्यति ठूलो ओहदा ओगट्न सकेका थिएनन्। अर्को शब्दमा भन्ने हो भने उनी तात्कालिक राजकाजको दाउपेचको होडबाजीमा संलग्न भएनन्। महाकोशाध्यक्ष, कपर्दार पदमै उनी सन्तुष्ट भई रहे तथा आफ्नो उत्तरदायित्व भने उनले ईमानदारीपूर्वक पूरा गरे। उनका विभिन्न कृतिबाट यही निष्कर्ष निस्कन्छ।

नरदेवीस्थानको यस अभिलेखमा भोटु पाँडेमा "लोकोपकारी" भन्ने विशेषण जोडिएको छ। हुन पनि उनी लोकोपकारी व्यक्ति नै थिए। लोकको उपकारको लागि उनले पुल बनाउने, धारा बनाउने, सांस्कृतिक परम्पराको संरक्षणको लागि "गोष्ठी"को प्रबन्ध गर्ने आदि कार्य गरेथे। यस कुराका अनेक उदाहरण पाइन्छन्। नरदेवीको यस अभिलेखले पनि उक्त कुराको पुष्टि गर्छ।

वि.सं. १८४९मा चीनिया फौज धैबुङसम्म आइपुग्दा उनीहरूले सन्धिको प्रस्ताव राखेथे। सन्धिको कुरा मिलाउन यताबाट जाने प्रतिनिधि-मण्डलमा यी भोटु पाँडे पनि थिए। त्यस वेला केही दिन भोटु पाँडे चीनिया फौजको छेकथुनमा परेथे।[1] त्यस वेला भोटु पाँडेले नरदेवीस्थानका देवदेवीहरूको पूजा गर्ने संकल्प गरेका रहेछन्। त्यसै संकल्पअनुसार नरदेवीको मन्दिरको जीर्णोद्धार गरी जात्रा आदिको लागि गुठीहरूको प्रबन्ध गरी यो अभिलेख कुँदाउन लाएका हुन्। यस अभिलेखबाट उक्त देवदेवीबारे अध्ययन गर्न केही मद्दत पाइन्छ। यस कारण यो अभिलेख केही उपयोगी रहेको छ। कुँद्नेको असावधानीले गर्दा यस अभिलेखमा ठाउँ-ठाउँमा लिकै अशुद्धि परेका छन्।



१. 'ऐतिहासिक पत्र संग्रह' (पहिलो भाग), पृ. ५८–५९

[ १०६ संख्या ]

# गोरखाको गीर्वाणयुद्धविक्रम शाहको पालाको अभिलेख

गोरखा-दरबारमा रहेको थालमा यो अभिलेख कुँदिएको छ। यसमा विक्रमसंवत् १८५६ दिइएको छ।

'गोरखाको ऐतिहासिक सामग्री'को २३ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्य-द्वारा यो छापिएको छ।

## मूलपाठ

१. सम्वत् १८५६ साल पौष सुदि ६ रोज यो थलीया गोर्षाको दसैं घरका रांगो काट्न्या ठाउँमा नैवेद्य राषनलाई हो. मार्फत कपर्दार भोटू पांडे

व्याख्या–

गोरखा-दरबारमा रहेका भाँडाकुँडाहरूमा साना साना अभिलेख पनि कुँदिएका हुनाले गोरखा राजदरबारमा प्रचलित तात्कालिक धार्मिक कुरा, रीतिस्थितिको केही झलक त्यताबाट पाउन सकिन्छ। त्यस्ता केही अभिलेख माथि गइसकेका छन्; त्यही क्रमको यो अभिलेख पनि एक हो। यसमा दसैंको अवसरमा रांगो काट्ने ठाउँमा नैवेद्य राख्नाको लागि यो थाल बनाइएको हो भन्ने कुरा अङ्कित छ। यसले गोरखा राजदरबारमा मनाइने दसैंविधानको एक अङ्गको झलक दिएको छ। राजदरबार धार्मिक र सांस्कृतिक क्रियाकलापको पनि केन्द्र हुने हुनाले गोरखा राजदरबारमा पनि यस्ता अनेक विधिविधान सम्पन्न गरिन्छन्। तिनमा दसैंको प्रमुख स्थान रहेको छ।



[ १०७ संख्या ]

# मनकामनाको शूरवीर रानाको अभिलेख

प्रसिद्ध मनकामना माईको मन्दिरको ढोकाको बायाँ खापामा यो अभिलेख कुँदिएको छ। यहाँ शकसंवत् १७२४ ( वि.सं. १८५६ ) दिइएको छ।

'इतिहास-प्रकाश' अङ्क १ को ४८ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख छापिएको छ। 'गोरखाको ऐतिहासिक सामग्री'को २६-२७ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. गोर्खाख्ये नगरे नृपस्य सविधे जैराजरानाभवत्तत्पुत्रो नृवरो नृपेन्द्रसचिवः श्रीबन्धुराना ह्यभूत्। तत्पुत्रः

२. समरे प्रखंडितपरः संग्रामशूर(ः) सदा दाता भ्रातृकलत्रपुत्रसहितः श्रीशूरवीरोऽजनि ॥१॥ भ्रातृभिष्कृ-

३. ष्णवीराद्यैः सहितः सांप्रतं युवा। सुवर्णनिर्मितं द्वारं स्थापितं देवताग्रतः ॥२॥ वेदनेत्रमुनिभूयुतशाके चै-

४. त्रकृष्णशुभषष्ठियुतेब्दे। चन्द्रवारसहिते शुभकाले स्थापितं कनकद्वारमद्भुतम् ॥३॥ माता श्रीजैकुवरि-

५. सहितोभूत्। भार्य्या श्रीगुलाफ देवि पुत्र सरवरसिं पुत्र रनमेरसिं। शुभमस्तु सर्वदा. यो बनाउन्या व्यापारि पाट-

६. न कोइति रह्नेको निवा श्रीभाजुदेव श्रीमहाबुद्धको भाजुधन ॥ पूजाबारि रन्या थापा

## अनुवाद

गोरखा शहरमा राजाको नजीकै रहने जयराज राना भए । तिनका छोरा, राजाका मन्त्री असल मानिस श्रीबन्धु राना भए । तिनका छोरा लडाईंमा शत्रुलाई खतम पारेका, लडाईंमा शूरा, सधैं दान दिने भाइ जहान छोरासहितका श्रीशूरवीर राना भए ।

युवक ती शूरवीरले कृष्णवीर आदि भाइहरूसँग अहिले देवताको मूल ढोका सुनको बनाए ।

शकसंवत् १७२४ ( वि.सं. १८५९ ) चैत्र कृष्ण षष्ठी सोमबारको शुभ दिनमा अद्भुत सुनको ढोका स्थापना गरे ।

आमा श्रीजयकुवरी हुन्; पत्नी श्रीगुलाफदेवी, छोराहरू सरबरसिं र रणमेरसिं हुन् । सधैं शुभ होस् ।



[ १०८ संख्या ]

# मनकामनाको शूरवीर रानाको अभिलेख

प्रसिद्ध मनकामना माईको मन्दिरको ढोकाको दायाँ खापामा यो अभिलेख कुँदिएको छ। यहाँ शकसंवत् १७२४, विक्रमसंवत् १८५९ दिइएको छ।

'इतिहास-प्रकाश' अङ्क १ को ४८ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख छापिएको छ। 'गोरखाको ऐतिहासिक सामग्री'को २७–२८ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ।। श्रीमनःकामना जयति ।। स्वस्ति श्रीशाके १७२४

२. सम्वत् १८५९ चैत्रकृष्ण ६ एतद्वक्ष्यमानगुणविशिष्टे काले श्री ५ मन-
कामनादे–

३. वीप्रीतये सद्बुद्धिप्राप्तिकामनया श्रीकरवीरकृष्णवीरफौदसिंहखड्गसिंह
वल–

४. वीरा यस्य भ्रातरो भवन्ति स शूरवीररानानामधेय इदं कनकनिर्मितं द्वारं
संस्थापित–

५. वान् अनेन द्वारसंस्थापनेन मनोभिलषितकामनासिद्धिर्भवतु ।।

## अनुवाद

श्रीगणेशलाई नमस्कार। श्रीमनःकामना माई ठूला हुनुहुन्छ।

कल्याण होस्। शकसंवत् १७२४ विक्रमसंवत् १८५९, चैत्र कृष्ण षष्ठीको विशिष्ट

दिनमा, श्री ५ मनकामनादेवीकाई खुशी तुल्याउन, असल बुद्धि पाउने इच्छाले शूरवीर रानाले करवीर कृष्णवीर फौदसिंह र खड्गसिंह यी चार भाइहरूसहित भई यो सुनको ढोका स्थापना गरे । यो ढोका स्थापनाले मनको इच्छा पूरा होस् ।

व्याख्या–

वि.सं. १८५६मा शूरवीर रानाले मनकामना माईको मन्दिरमा सुनको ढोका बनाई ढोकाका दुइ खापामा यी दुइ अभिलेख कुँदाइएका हुन् । गोरखा दरबारमा प्रवेश पाई ठूलो पदमा पुग्ने राना मगरहरूमध्ये यी शूरवीर रानाका बाबु, बाजे पनि पर्दछन् । शूरवीर रानाका बाबु बन्धु राना हुन् । यिनी श्री ५ रणबहादुर शाहको पालामा काजी बनेका थिए । बन्धु राना श्री ५ रणबहादुर शाहका विश्वासपात्र व्यक्तिमध्ये थिए ।[१] बन्धु रानाका बाबु जैराज रानाले पनि गोरखा-दरबारको भारादारीमा स्थान पाएका थिए । यो कुरा तात्कालिक कागतबाट थाहा पाइन्छ ।[२] यसरी जयराज रानादेखि नै यिनीहरू भारादार बन्न पुगिसकेका हुनाले शूरवीर रानाको यस अभिलेखमा जयराज रानादेखि वर्णन गरिएको छ । वि.सं. १८५५को पशुपतिको धर्मपत्रमा सही हाल्नेमा यी शूरवीर राना पनि थिए । त्यहाँ "जैराज रानाको नाती बन्धु रानाको छोरा सुरवीर रानाले धर्मपत्र लेषि चह्राञा" भनी लेखिएको छ ।[३] यसबाट शूरवीर राना पनि ठूलै पदमा थिए भन्ने थाहा पाइन्छ ।

प्रसिद्ध मनकामना माईको मन्दिरमा सुनको ढोका चढाई राखिएको यस कृतिले यी राना खलकको संझना चिरस्थायी बनाएको छ ।



---

१. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १६१

२. 'गोरखाको ऐतिहासिक सामग्री' पृ. ३६

३. पशुपतिको उक्त ताम्रपत्र माथि दिइएको छ ।

[ १०६ संख्या ]

# कीर्तिपुरको गीर्वाणयुद्धविक्रम शाहको पालाको अभिलेख

कीर्तिपुरमा बाघभैरवको प्रसिद्ध मन्दिर रहेको छ। त्यस मन्दिरको दायाँपट्टि रहेको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ विक्रमसंवत् १८६० दिइएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीमन्महागणाधिपतये नमः ॥ ॥ पादाम्बुजध्यानपदेन यस्य विघ्नौघकारी विलयं प्रयाति ॥ सिन्दूरकान्तं गजराज-

२. वक्त्रं तन्नौमि लंबोदरमाम्बिकेयम् ॥ १ ॥ यदीयचरणाम्बुजस्मरणकर्मधर्म-द्रवाप्रवाहघनमज्जनं हरति संहती रंह-

३. साम् ॥ तनोति च परं सुखं विषयवासनानाशनं विधाय करुणालयं तमभि-वादये माधवम् ॥ २ ॥ यत्पादपंकजरजोमर-

४. वृन्दवन्द्यं यद्योगतः परशिवः परमेश्वरोभूत् । या सृष्टिपालनलयं तनुते त्रिमूर्त्या सा शांभवी विजयते जगदेकमाता

५. ॥ ६ ॥ रोचिष्णुकांचनविनिर्मितरम्यहर्म्या मुक्ताप्रवालमणिशालिविशाल-मार्गा गीर्वाणराजनगरीव विराजमा-

ना नेपालपालनरपालपुरी प्रसिद्धा ॥ ४ ॥ तत्र च जगर्यामि, सौन्दर्ये पुष्प-धन्वा यशसि रघुपतिर्धार्मिकत्वे ययातिर्दा-

७. ने कर्णो धनेशो धनभरणविधावुष्णरश्मिः प्रतापे कालः शत्रुप्रणाशे वचसि सुरगुरुः शासने धर्मराजः कुर्वन्नो-

८. वं जनानामजनि रणबहादूरसाहक्षितीन्द्रः ॥ ५ ॥ ततश्च गीर्वाणयुद्धविक्रम-

साहो राजा सुतोऽस्य जातः सः ।। बा–

९. लाथाप्यतितुष्टो यस्मै जनको गुणैरदाद्राज्यम् ।। ६ ।। तस्य च राज्ये. भार-
द्वाजमुनेः कुले गुणगणैः पूर्णो नराजा–

१०. भिधो जातः शस्त्रधरस्तदीयतनयोमूद्वीरभद्राभिधः ।। तत्सूनुर्बलबुद्धिमान्
समभवन्नाम्ना तुलारामकः पुत्र–

११. स्तस्य धराधरप्रियतमो जाईफराख्याधरः ।। ७ ।। बीभ इति प्रथितेन धर्म-
पित्रा गोविन्दधराहृदयलक्ष्मीसंज्ञाशालि–

१२. नीभ्यामवलाभ्यां भयभंजननामकेन बालेन च समुपेतः स जाईफरः ।। श्रीशाके
शरलोचनस्वरनिशानाथैर्मिते

१३. १७२५ भावाख्ये रविवासरे विधितिथौ ज्यैष्ठस्य पक्षेर्जुने ।। श्रीवाग्भैरव-
देवतालयमिमं श्रीशंभुवेश्मा–

१४. न्वितं कृत्वा जीर्णसमुद्धृतं पशुपतेः प्रीत्यै समुत्सृष्टवान् ।। ८ ।। गगनतुंग-
जद्विजराजपरिमितविक्रमादित्यसं–

१५. वत्सरान्तर्गतज्यैष्ठीयसितपक्षद्वितीयतिथौ समुत्सृष्टोयं शिवालयसहितो
वाग्भैरवदेवालयः श्रीसाम्बशि–

१६. वसन्तोषकारी जायतामिति शिवम् ।। ।। श्रीवाग्भैरवदेवालयजीर्णोद्धार-
कर्तुर्जाईफरस्य जन–

१७. नी हस्तिकेति ख्याता काचिदस्ति सा च. श्रीशाके भूतवसाचलरजनिकरैः
सम्मिते १७२५ मासि शुक्ले पक्षे शु–

१८. क्रे च वारेर्यमणि मधुजिदागारयुक्तां विरच्य ।। धर्मागारद्वयीं सोत्सृजति
विधितिथौ हस्तिका राजधात्री संसा–

१९. रापारदुःखोद्दलनविधिपटोः साम्बशंभोः प्रसत्त्यै ।। एतत्कार्य्यं डिट्ठाश्रीभीम-
सेनस्थानस्य तलवटो–

२०: लिकास्थानस्थितवीरनरसिंहवैद्यः ।। ।। शुभम् ।।

## अनुवाद

कल्याण होस् । श्रीमहागणाधिपतिलाई नमस्कार । जसका पाउरूपी कमलको ध्यानले

विघ्नरूपी अन्धकार नष्ट हुन्छ; सिन्दूरले रातो भएका, हात्तीको जस्तो मुख भएका अम्बिकाका छोरा ती लम्बोदर गणेशलाई ढोग्दछु ।

जसका पाउरूपी कमलको संकनारूपी धर्मद्रवा नदीको प्रवाहमा भित्रसम्म डुबुल्की मानलि पुग्रै पाप नष्ट गर्छ; परम सुख फैलाउँछ; विषयवासनाको नाश गर्छ; ती दयालु माधवलाई ढोग्दछु ।

जसका पाउरूपी कमलको धूलोलाई देवताहरूले ढोग्दछन्; महादेव जोसंगको संयोगले परमेश्वर भए; जसले तीन रूप लिई सृष्टि स्थिति संहार गर्छन्; संसारकी आमा भएकी ती शिवशक्ति ठूली छिन् ।

झलमल्ल गर्ने सुनले बनेका राम्रा मन्दिरहरू भएको, मोती मुगा जस्ता असल ढुङ्गा छापेका बाटा भएको, स्वर्गजस्तै सुहाएको, नेपालको राजधानी प्रसिद्ध छ ।

त्यस शहरमा कामदेव जस्तै राम्रा, रामचन्द्र जस्तै यशस्वी ययाति जस्तै धर्मात्मा, कर्ण जस्तै दानी, धन दिनामा कुबेर जस्ता, सूर्य जस्तै प्रतापी, शत्रुलाई नष्ट पार्नामा काल जस्ता, वृहस्पति जस्तै विद्वान्, यमराज जस्तै न्यायपूर्वक शासन गर्ने राजा रणबहादुर शाह जनतालाई आनन्द दिंदै रहनुभएको छ । उहाँका छोरा गीर्वाणयुद्धविक्रम शाह हुनुहुन्छ । बालक भए पनि जुन गीर्वाणयुद्धविक्रम शाहलाई बाबु रणबहादुर शाहले खुशीसाथ राज्य सुम्पनुभयो ।

उहाँ गीर्वाणयुद्धविक्रम शाहको राज्यमा भारद्वाज ऋषिको कुलमा गुणी लडाका नराज भए; तिनका छोरा वीरभद्र भए । तिनका छोरा बलिया बुद्धिमान् तुलाराम भए । तिनका छोरा राजाका मन परेका जाईफर भए ।

... धर्मपिता, गोविन्दधरा र हृदयलक्ष्मी भन्ने दुइ पत्नी र भयभञ्जननामक बालक छोरासहित भएका ती जाईफरले शकसंवत् १७२५ भावसंवत्सर ज्येष्ठ शुक्ल द्वितीया आदित्यवारको दिन श्रीबाघभैरवको मन्दिरको जीर्णोद्धार गरी महादेवको मन्दिर बनाई पशुपतिलाई खुशी तुल्याउन समर्पण गर्नु भयो ।

विक्रमसंवत् १८६० ज्येष्ठ शुक्ल द्वितीयाको दिन उत्सर्ग गरिएको बाघभैरवको मन्दिर र शिवमन्दिरले पार्वतीसहितका महादेवलाई प्रसन्न पारोस् । कल्याण होस् ।

श्रीबाघभैरव-मन्दिरको जीर्णोद्धार गर्ने जाईफरकी आमा हस्तिका हुनुहुन्छ; उहाँ राजाकी

धाई आमा हुनुहुन्छ । उहाँले शकसंवत् १७२५ (वि.सं. १८६०) ज्येष्ठ शुक्ल द्वितीया आदित्यवारको दिन नारायण मन्दिरसहित दुइटा धर्मशाला बनाउन लाउनुभयो; यसले संसारका ठूलठूला दुःख हटाउन सिपालु पार्वतीसहितका महादेवलाई प्रसन्न पारोस् ।

यो काम भीमसेनस्थान तल्लो टोल बस्ने वीरनरसिंह हँबले सिट्ठा भई गरेका हुन् । शुभ होस् ।

व्याख्या:–

कीर्तिपुरका अधिपति देवता बाघभैरव हुन् । भैरव मूलतः महादेवको संहारक रूप हो तापनि हाम्रो यहाँ भैरवको उपासना अनेक रूपमा गरिन्छ । जसको भय हटाउनुपरेको छ; त्यसैलाई भैरवका रूपमा पुज्ने प्रथा पनि हामीकहाँ पाइन्छ । व्याघ्रभैरव पनि त्यसै कुराका द्योतक हुन् भन्ने देखिन्छ । कीर्तिपुर थानकोटसेकतिर अरू पर टिस्टुङ्ग चितलाङ तौखेल सेकमा समेत प्राचीनकालमा गाई भैंसी भेडा आदि पशुपालन गरी जीविका चर्ने गोमल, महिषपाल आदिका बस्ती रहेका थिए । पशुपालनमा हुने भयमध्ये बाघ आदिको भय पनि एक हो ।[१] सो भय हटाउन व्याघ्रभैरवको स्थापना कीर्तिपुरमा भएको देखिएको छ ।

जे होस्; कीर्तिपुरका बाघभैरव पनि नेपाल-उपत्यकाका प्रसिद्ध देवतामध्ये पर्दछन् । यसैले यी बाघभैरवलाई श्रद्धालु राजा, प्रजाले अनेक कुरा चढाएको पाइन्छ । त्यसै क्रममा वि.सं. १८६० मा श्री ५ गीर्वाणयुद्धविक्रम शाहको धाई आमा हस्तिकाद्वारा यहाँ दुइटा धर्मशाला बनाइएका रहेछन् । साथै उनका छोरा जाइफलले बाघभैरव-मन्दिरको जीर्णोद्धार गरेका रहेछन्; सँगै एक शिवालय पनि बनाएका रहेछन् । यो कुरा यस अभिलेखबाट थाहा पाइन्छ ।

श्री ५ गीर्वाणयुद्धविक्रम शाहकी धाई आमाको परिचय अन्त पाइएको थिएन । यस अभिलेखबाट उक्त कुरामा प्रकाश परेको छ । उनका छोरा जाइफलले आफूलाई "दरबार प्रिय" भन्ने विशेषण लाएको हुनाले उनले पनि राजदरबारमा प्रवेश पाएका रहेछन्; साथै उनी धनी पनि थिए भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ । यसरी यो अभिलेख पनि तात्कालिक केही कुरा बुझ्न उपयोगी रहेको छ ।



१. 'लिच्छविकालका अभिलेख' पृ. ३५०

[ ११० संख्या ]

# पुरानो गुह्येश्वरीको नरसिंह गुरुङको अभिलेख

बालाजुको उत्तरतिर पुरानो गुह्येश्वरीनामक देवस्थल रहेको छ। सो देवस्थलको सामुन्ने पूर्वपट्टिको पर्खालमा यो अभिलेख कुँदिएको शिलापत्र टाँसी राखिएको छ। यहाँ वि.सं. १८६० दिइएको छ।

अभिलेखसंग्रह, बाह्रौं भागको ८ पृष्ठमा संशोधनमण्डलद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

१. स्वस्ति ॥ आकाशेशसुताननेभवसुधासंशोभिते हायने ज्यैष्ठे मा-

२. सि सितेन्दुकस्य सुतिथौ भौमे तथा वासरे ॥ प्राकारं परितः प्र-

३. कल्प्य विमलं गुह्येश्वरीप्रीतये हर्म्यं चारु वृषप्रवं समकरोवृभ-

४. क्त्या नृसिंहाभिधः ॥ १ ॥ अथ देशभाषा ॥ श्रेयोस्तु ॥ सम्वत् १८

५. ६० साल ज्यैष्ठ शुदि १० रोज ३ एस् दिनमा श्री ३ गुह्येश्वरी प्रीति-

६. निमित्त श्रीकाजी नरसिंहले भक्तिपूर्व्वक यो पर्खाल धर्म-

७. शाला बनाओौ, शुभं भूयात्।

(यस शिलापत्रको तल्लो भागमा कुँदिएका ७ मूर्तिका अगाडि-)

श्रीनरसिंह श्रीपद्मावेवी श्रीसत्यदेवी श्रीसत्यसिंह श्रीभूपालसिंह श्रीरत्न-भूपसिंह श्रीमेनादेवी।

## अनुवाद

कल्याण होस् । विक्रमसंवत् १८६० ज्येष्ठ शुक्ल दशमी मङ्गलवारको दिन गुह्येश्वरी-लाई खुशी तुल्याउन नरसिंहले चारैतिर पर्खाल र राम्रो धर्मशाला भक्तिपूर्वक बनाए ।

व्याख्या–

काजी नरसिंह गुरुङले वि.सं. १८६० मा आलाजुको उत्तरतिर रहेको पुरानो गुह्येश्वरी नामले प्रसिद्ध देवीस्थानलाई पर्खालले घेरी धर्मशाला बनाई यो अभिलेख कुँदन लाएका हुन् । गोरखा-दरबारमा प्रवेश पाई उच्च पदमा पुग्ने गुरुङहरूमध्ये यी नरसिंह गुरुङ पनि हुन् । वि.सं. १८५५को पशुपतिको धर्मपत्रमा यी नरसिंह गुरुङले पनि सही हालेका थिए । त्यहाँ "विग्तु गुरूंगका नाति सुवान गुरूंगका छोरा काजी नरसिं" भनी लेखिएको छ ।[१] नर-सिंह गुरुङका बाबु बाजे भने त्यति प्रसिद्ध हुन सकेको देखिँदैन । श्री ५ रणबहादुर शाहले राज्य बागडोर सह्यालेपछि नरसिंह गुरुङ शक्तिशाली काजीका रूपमा अगाडि बढेको पाइन्छ । तात्कालिक पत्रबाट उक्त कुरा थाहा पाइन्छ ।[२] स्वामी महाराज रणबहादुर शाह काशी गएपछि पनि काजी नरसिंह गुरुङको अवस्था पूर्ववत् नै रह्यो । उनी मन्त्रिपरिषद्‌मा काजीकै रूपमा रहे । तर यस ताका राजकाजले छिटो छिटो कोल्टो फेर्दै थियो । स्वामी महाराज नेपाल फर्कने तरखरमा थिए । यसो हुँदा त्यस बेला आफूले कस्तो अवस्थाको सामना गर्नुपर्ने हो भन्ने केही चिन्ता नरसिंह गुरुङलाई परेको आभास पाइन्छ । त्यसै प्रसङ्गमा पुरानो गुह्येश्वरीमा धर्मशाला आदि बनाउने धर्मकर्म काजी नरसिंह गुरुङले गरेको देखिन्छ ।

वि.सं. १८६० फाल्गुनमा स्वामी महाराज रणबहादुर शाह नेपाल फर्के ।[३] त्यस बेला दामोदर पाँडे आदिले मृत्युदण्ड पाए ।[४] तर नरसिंह गुरुङ काजी पदमा नै थामिए । तर वि.सं. १८६३ सालको काण्डमा यी नरसिंह गुरुङले मृत्युदण्ड पाए ।[२]

यी नरसिंह गुरुङलाई संझाउने कृति कम छन् । पुरानो गुह्येश्वरी स्थानको यस धर्मकृतिले चाहिं उनलाई पछिसम्म संझाइरहनेछ । यस अभिलेखको तल्लो भागमा सातवटा सानासाना सालिक छन् । तिनमा एउटा चाहिं यी नरसिंह गुरुङको हो । अरू सालिक उनका जहान छोराहरूका हुन् ।



१. पशुपतिको उक्त ताम्रपत्र माथि गइसकेको छ ।
२. योगी नरहरिनाथ 'इतिहास–प्रकाश' अङ्क १, पृ. १४
३. 'नेपालको संक्षिप्त इतिहास' पृ. १३९
४. 'नेपालको संक्षिप्त इतिहास' पृ. १४७

[ १११ संख्या ]

# सल्यानकोटको अभिलेख

सल्यानकोटको प्रसिद्ध माईस्थानमा रहेको नगरामा यो अभिलेख कुँदिएको छ। यसमा विक्रमसंवत् १८६० दिइएको छ।

'इतिहास-प्रकाश' अङ्क १ को ३६ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

१. श्रीसाके १६५० संम्वत् १७८५ मासे चैत्र सुदि श्रीश्रीश्रीश्रीश्रीपृथ्वीनारायेन मांहाराजाका हजुर श्रीद्वाऱ्या विस्राम रानाले बिन्ति गरि बक्साइ श्री-भवानिप्रति चढायाको नगरा १ तुरहो १ थलिया

२. १, कोही उथांपथां काट्लास् जो गर्ला, श्रीभवानिको पंचमहांपातक, नगरा पुजा येक जिवात १ सुभम्, श्रीसाके १७२५ सम्वत् १८६० मासे भाद्र वदि विस्राम रानाकि बोहारि रामावतिले टाका तांबो थपि बनाया. शुभः।

व्याख्या—

धादिङ जिल्लाअन्तर्गतको सल्यानकोटमा त्रिपुरासुन्दरीदेवीको प्रसिद्ध मन्दिर रहेको छ। राम शाहकै पालामा सल्यानकोटभेकमा गोरखाको प्रभुत्व जमेथ्यो।[१] सल्यानकोटकी यी माई

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ५८३

साक्षात् छन् भन्ने प्रसिद्धि फैलिएको छ। स्वयं श्री ५ पृथ्वीनारायण शाहले पनि सल्यानकोटकी माईको उपासना गरेका थिए। यस कुराको चर्चा माथि गरिसकेको छ।

यस अभिलेखमा हारे विश्राम रानाले वि.सं. १७८५ मा श्री ५ पृथ्वीनारायण शाहमा विन्ति चढाई सल्यानकोटकी माईलाई नगरा, तुरही र थाल चढाएको उल्लेख परेको छ। सो नगराको पुनरुद्धार विश्राम रानाकी बुहारी रामावतीले वि.सं. १८६० मा गरी यो अभिलेख कुँदाइएको हो। यहाँ एउटा कुरा विचारणीय छ। श्री ५ पृथ्वीनारायण शाहको जन्म वि.सं. १७७९ पौष २७ गते भएको हो।[२] वि.सं. १७८५ मा उनी ६ वर्षका मात्र थिए। ६ वर्षको कलिलै उमेरमा श्री ५ पृथ्वीनारायण शाह सल्यानकोटकी माईका भक्त बनेको झलक यताबाट पाइन्छ।



२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३८८–३८९

[ ११२ संख्या ]

# पशुपतिको श्यामलाल उपाध्यायको अभिलेख

पशुपतिनाथको भण्डारमा धेरै ताम्रपत्रहरू रहेका छन् । तिनमध्ये एकमा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८६० दिइएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीशाके १७२५ सम्वत् १८६० सौरमानेनाषाडमासे कृष्णे
२. पक्षे अश्विनीनक्षत्रे धृतिजोगे बुधवासरान्वितायां नवम्यां पुण्य-
३. तिथौ काश्यपगोत्रेण सपरिवारेण श्यामलालशर्म्मणा श्रुतिस्मृति-
४. पुराणोक्तफलावाप्तये श्रीपशुपतिप्रीतये पाकपात्रादीनि षड्त्रिंशत्-
५. पात्राणि समर्पितानि भवन्तु शुभम् ।।

## अनुवाद

कल्याण होस् । शकसंवत् १७२५, विक्रमसंवत् १८६० आषाढ कृष्ण नवमी बुधवार अश्विनीनक्षत्र धृतियोग, यस पुण्य दिनमा काश्यपगोत्रका श्यामलाल शर्माले परिवारसहित भई वेद धर्मशास्त्र पुराणमा बताएको फल पाउनाको लागि श्रीपशुपतिलाई खुशी तुल्याउन छत्तीसवटा पकाउने भाँडा आदि भाँडाकुँडाहरू चढाए । शुभ होस् ।

व्याख्या–

श्यामलाल उपाध्याय कोशाध्यक्ष (खजान्ची) हुन् । उनका पिता शिवानन्द उपाध्याय पनि

श्री ५ पृथ्वीनारायण शाहको समयमा कोशाध्यक्ष थिए भन्ने चर्चा माथि गरिसकेको छ। श्यामलाल उपाध्याय विद्वान्का साथै धार्मिक प्रकृतिका पनि थिए। उनले निकै धर्मकर्म गरेका थिए। तिनमध्ये केहीको चर्चा माथि परिसकेको छ; पशुपतिनाथलाई भाँडाकुँडा चढाई कुँदाइएको यस अभिलेखले पनि उक्त कुराको पुष्टि गर्छ।

भक्तहरू आफ्ना भाँडाकुँडा आदि सामग्रीहरू पशुपतिनाथ आदि आफ्ना इष्टदेवतालाई चढाउने गर्दथे। कतिले त आफ्नो सर्वस्व नै चढाउँथे।[१] यो परम्परा हाम्रो यहाँ प्राचीनकाल-देखि नै प्रचलित देखिन्छ। विशेष गरी मध्यकालदेखि यो प्रथा बढेको देखिन्छ। त्यही प्रथाअनुसार धर्मात्मा श्यामलाल उपाध्यायले पनि पशुपतिनाथलाई छत्तीसवटा भाँडाकुँडा चढाई यो अभिलेख कुँदाएका हुन्।



१. 'पूर्णिमा' ४ पूर्णाङ्क, पृ. २७

[ ११३ संख्या ]

# पशुपति-भण्डारको अभिलेख

## मूलपाठ

१. स्वस्ति श्रीशाके १७२६ सम्वत् १८६१ आश्विन वदि द्वितिया सुक्-
२. वार यस दिनमा मोतिटारवासि जवरसिं षत्री स्वभार्य्या सु-
३. भकमाका पुत्र जहरसिंह षत्रीकि धर्मपत्नी ईश्वरीले ढाल १ त-
४. रवार १ छुरि १ गाग्री १ षकौंडा १ सुरहि १ कोदालो १ ओधान १
५. डाडु १ पन्यौ १ तसला पितल्या १ थार १ कटौरा १ वोरसो १ हसिया १
६. चुलेसि १ स्यागि १ पाथी १ माण् १ पेटारो तालचा २ सितार १
७. कोपरा १ दिया २ टुकि १ ताप्क्या १ वर्छा १ कुटो १ कांग्यो १
८. थाक्रो १ अँटो १ चर्षा १ धनु १ यति वस्तु श्री ३ पशुपति पृति ग-
९. री अर्पण गरी सहगमन गरीन् ।। कार्तीक सुदी १५ सुभं

**व्याख्या–**

पशुपति-भण्डारमा रहेका कति अभिलेखमा पशुपतिनाथलाई जगत्‌कै अधिपतिका रूपमा पनि चित्रित गरिएको पाइन्छ। नेपालीहरूले त पशुपतिनाथप्रति अनेक किसिमले श्रद्धा र भक्ति अर्पण गर्ने गरेको हामी पाउँछौं। तिनमा आफ्ना भाँडाकुँडा आदि सरसामान पशुपतिनाथलाई चढाउने प्रथा पनि एक हो भन्न सकिन्छ। पशुपतिनाथलाई यसरी भाँडाकुँडा आदि सरसामान चढाई कुँदाइएका केही अभिलेख माथि गइसकेका छन्; केही तल आउँदैछन्। तिनमा यो अभिलेख पनि एक हो। यस्ता अरू अभिलेखभन्दा यो अभिलेख अलि भिन्न छ। यसमा वि.सं. १८६१ मा जहरसिंह षत्रीकी धर्मपत्नी ईश्वरीले आफ्ना ढाल तरवार धनु आदि हतियारहरूदेखि लिएर अरू भाँडाकुँडाहरू र ताल्चा चर्खासम्मका सरसामान पशुपतिनाथलाई चढाई आफूचाहिँ उनी सती गएको कुरा परेको छ। यसबाट शाहकालमा सतीप्रथाबारे विचार गर्न पनि केही मद्दत पाइन्छ। यस कारण यो अभिलेख पनि केही उपयोगी नै रहेको छ।

卐

[ ११४ संख्या ]

# आलमपुरको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

पूर्व २ नम्बर आलमपुर भीमसेनस्थानसंग सम्बद्ध यो ताम्रपत्राभिलेख "इतिहास-प्रभात" को ३–४ पृष्ठमा मोहनप्रसाद खनालद्वारा छापिएको छ । हामीले मूल ताम्रपत्र हेर्न नपाएका हुनाले यहाँ पङ्क्ति मिलाई दिन सकिएन । यहाँ वि.सं. १८६१ दिइएको छ ।

## मूलपाठ

स्वस्ति श्रीगिरिराजचक्रचुडामणि नरनारायणेत्यादि विविधविरुदावलि-विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गिर्वाणयुद्धविक्रम साह बहादुर समसेर्जङ्गदेवानाम् सदा समरविजयिनाम्.

आगे लछिमन घर्तिके, आलमपुरको श्रीभिमसेनलाई नित्य नैमित्ये पुजा गरि गुठ चलाइ श्रीजिज्यूबाजेले चह्रायाको श्रीबुवाज्यूबाटो पनि थामिदिनु-भयाको रहेछ. आज हामिले पनि गुठिको तैनाथ तलाई थामिबक्स्यौं. जगाको सांध पूर्व रातो भिर मिलति षोला पानि ढोलो दछिन गुर्जे थुमको पसेम छहरे षोलाको दोभान उत्र फुरसे डाडो यति चार्किल्लाभित्रको ठाउँ खेत [illegible] खेत मुरि [illegible] फुलबारि [illegible] र देवताको संध्यासा मर्मत गर्नु लाई कुश [illegible] [illegible] थपैया ६१। ले नित्ये नैमित्ये पूजा गर्नु. गुठिहार भने नेवारले हाम्रो जया मनाई तपसिलबमोजिम पूजा गर्नु. जो लोभाली पाप्ानी गुठमा गर्ला. पंच महापातक लाग्ला.

तपसिल

| | | | |
|---|---|---|---|
| नित्ये पुजाके रुपैंया | | भिमाएकादसिके रुपैंया | |
| साडे चार– | ४॥ | तिन– | ३ |
| चैत्ये दसमिको रुपैंया | | बजादसैका पुजाके रुपैंया | |
| साडे तिन– | ३॥ | सात– | ७ |
| कार्तिक पुर्णमासिके | | संक्रान्तका पुजाके रुपैंया | |
| रुपैंया– | ७। | तेतिस– | ३३ |
| | | श्रावणपुर्णमासिके रुपैंया | |
| | | तिन– | ३ |

इति सम्वत् १८६१ साल मिति कार्त्तिक सुदि १२ रोज ४ शुभम्.

व्याख्या–

शाह राजाहरू नेपाली धार्मिक र सांस्कृतिक परम्पराको संरक्षण र संवर्धन गर्नमा उदार थिए भन्ने कुराको चर्चा माथि ठाउँ ठाउँमा गरिएकै छ। पूर्व २ नं. आ छेउको आलमपुरका भीमसेनस्थानसंग सम्वद्ध यस अभिलेखबाट पनि उक्त कुराको केही पुष्टि हुन्छ। श्री ५ पृथ्वीनारायण शाहले आलमपुरका भीमसेनको नित्य नैमित्तिक पूजाको लागि गुठीको बन्दोवस्त गरिदिएका रहेछन्; त्यसलाई श्री ५ रणबहादुर शाहबाट पनि थामिदिइएको रहेछ; अनि सो गुठी चलाउन आवश्यक प्रबन्ध गरी श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट यो ताम्रपत्र गरिदिइएको हो। राजधानी आदि प्रसिद्ध ठाउँका प्रमुख देवस्थलप्रति मात्र होइन; अधिराज्यभित्रका अरू ठाउँका देवस्थलप्रति पनि शाह राजाहरूको ध्यान पुगेको थियो भन्ने कुराको संकेत आलमपुरको यस अभिलेखले गरेको छ। यसै हुँदा यस अभिलेखलाई यस संकलनमा समावेश गरिएको हो।



[ ११५ संख्या ]

# गीर्वाणयुद्धविक्रम शाहले विलासकुमारी देवीलाई लेखिदिएको धर्मपत्र

'इतिहासप्रकाशमा सन्धिपत्रसंग्रह'का ४०८–४१० पृष्ठमा योगी नरहरिनाथद्वारा यो ताम्रपत्राभिलेख प्रकाशित भएको छ। मूल हेर्न नपाइएकोले यहाँ पङ्क्ति मिलाई दिन सकिएन। यसमा वि.सं. १८६१ दिइएको छ।

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलिविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रम साह वहादुर सम्सेरजङ्गदेवानां सदा समरविजयिनाम्.

अथ शिवनयननयनवसुवसुन्धरा १८२३ परिमितवैक्रमशके अस्मत्प्रपितामहेन नरेन्द्रेण श्रीपृथ्वीनारायणसाहवर्मणा धर्मपत्न्या नरेन्द्रलक्ष्मीदेव्या सहितेन सल्ह्यानाभिधानजनपदाधिपतेः श्रीकृष्णसाहवर्मणस्तनयं रणभीमसाहवर्माणमाहूय लक्ष्मीनारायणमिव विधिवदर्चयित्वा भवतीं विलासकुमारीदेवीं तुलसीमिव समर्पयता दाङ्गदेशाधिपतिव्यवस्थापिततदायत्तकोरवाङ्गछिल्लीसंज्ञकसामन्तदेशसहितफलावाङाभिधपर्वतदाङ्गदेवखुरीबहिर्मध्यदेशभागचतुष्टयपर्याप्तराज्यं स्वज्येष्ठपुत्रश्रीप्रतापसिंहवर्मकरकमलनुन्नजलाप्लावितं सकुशतिलं सुदायत्वेन संकल्प्य भवत्यै संप्रदत्तमभूत्। अथ च मत्पित्रा श्रीरणबहादुरसाहवर्मणा पितामहकृतप्रतिज्ञां सफलयताऽनेकराजमण्डलं विजित्य स्वपितृच्छत्रे पूर्वोक्ते सामंतदेशसहिते भूभागचतुष्टये दित्सति छिल्लीविषयाधिपतिना द्वित्रैः प्रपञ्चविद्भिः सन्धाय संकल्पितसुदायदेशबहिर्भूतमस्मद्राज्यमिति रहसि विज्ञाप्य तत्पूर्वाधि-

पत्यस्थापकास्मत्पितृनामालंकृतरक्तमुद्रांकितपत्रिका लब्धा इत्याकर्ण्य एकस्या गोर्द्विर्दानमिव दत्तदेशान्तर्भूतभूभागस्य पुनरन्यस्मै दानमन्याय्यं तदन्तर्गतत्वसंशये विचारणीया न्यायविदः सदस्या इति विलासकुमारीदेव्या विज्ञापिते तद्विषय-वृद्धानाहूय सकलसचिवसभ्यवृद्धनिचयरचितायां महत्सभायां वादिप्रतिवादि-साक्षिजनवाक्ययथार्थपर्यालोचने छिल्लीदेशं संकल्पितसुदायदेशान्तर्भूतं निर्णीय छलप्राप्तपूर्वोक्तपत्रिकां परावर्त्य सल्ह्यानाभिधस्वदेशसहितः ससामन्तभागच-तुष्टयपर्याप्तो दाङदेशो विलासकुमारीदेव्यै भवत्यै दत्तः।

अथ च प्रपितामहकृतपितृपूरितधर्मस्थितेरविच्छेदमिच्छता मया पूर्वस्यां माडीति नदीसीमा, दक्षिणस्यां यवनराज्यसीमा पश्चिमस्यामुत्तरस्यां च सल्ह्याना-ख्यस्वदेशस्य सीमेति चतुःसीमावच्छिन्नो भागचतुष्टयपर्याप्तो देशः पूर्वदिग्व-र्तिदाङ्गदेशः दक्षिणदिग्वर्तियवनराज्यं पश्चिमदिग्वर्ति भैरवी नदी उत्तरदिग्वर्ति चिफल्याभिङ्खानीसंज्ञकपर्वताधित्यका, इति सीमाचतुष्टयपरिच्छिन्नः सल्ह्याना-भिधः स्वदेशश्च चलाचलकल्याणधननिधिसमन्वितः पूर्वदत्त एव ताम्रपत्राधिकरण-लिपिविन्यासपूर्वकं समर्पितः ॥ निजपुत्रपौत्रप्रमुखापत्यपरंपरया तदुभयदेश-समुद्भूतं यावद्वस्तुजातं भाषाप्रसिद्धकरग्रहदंडादिसमन्वितमुपभुज्यताम् । भवत्याः सन्ततिरस्मत्प्रपितामहसन्तत्या पूर्वपुरुषकृतस्थापितधर्मं स्मृत्वा स्वकी-यत्वबुद्ध्या शिक्षणीया, तुलसीव सेचनीया च ॥ अस्मत्कुले भाविभिरप्यशेषैर्धर्मो नृपाद्यैः परिपालनीयः। समर्हणीया भवदीयसन्ततिस्तथा समग्रक्षितिभृत्सभासु ॥ पुरा व्यधापि प्रपितामहेन पितामहेन प्रतिपालितश्च ॥ पित्रा प्रसारं गमितश्च धर्मः संरक्षितोस्माभिरपीति बोध्यम् ॥

कन्यादानोत्तरं परिबर्हवृत्तिप्रदानसमयसाक्षिणोऽनुपदं भाषया परिगण्यन्ते ॥ ॥ अतः परं देशभाषा ॥ ॥ आगे श्रीफुपुबज्या विलासकुमारीदेवीके सम्वत् १८२३ सालमा श्रीज्युज्युबाज्या पृथ्वीनारायण साह र श्रीजिज्युबज्या नरेन्द्रल-क्ष्मीदेवीले सल्ह्यानाका महाराजा श्रीकृष्ण साहका पुत्र माहाराजा रणभीम साह-लाई श्रीलक्ष्मीनारायणस्वरूप मानि पुजि श्रीतुलसिको विरुवा गरि हजुरलाइ कन्यादान गर्दा कोर्वाङ्ग छिल्ली थपालासमेत फलावाङ्ग पहाड दाङ्ग देउखुरी बहिडो मधेस चारपट्टी दाइजो कुशविर्ता बितलप सर्वाङ्क माफ गरि बक्सनु-

भयाको हो। श्रीगुरुज्यु रणबहादुर साहले बाइसी चौबिसी राजा ध्वस्त गरि श्रीज्युज्युबाज्या पृथ्वीनारायण साहले गन्याको धर्म थामि बंगालासमेत पहाड वाङ्ग देउपुरी कालिंदो मधेस चारपट्टि फलोथा झुकी बहाली चलाइबक्सनुहुदा छिल्ली वाङ्गको भिन्नै राज्य हो भनि छिल्ल्यालाले दुइ चारका हिमाइतले मोहर पायेछ. पछि श्रीगुरुज्यु विलासकुमारीदेवीले एक गाइ दुइ गोस त हुन्या होइन भिति पार्दा बाउन साथ बसाइ ठुलो कचहरी गराई न्याय निरूपण गर्दा छिल्ली वाङ्गको थपालो ठहरियो र छिल्लीलाई दियाको मोहर फिर्ता गराइ छिल्लीसमेत बाहली चलाइ बक्सनुभयाको हो. आजे सोहि धर्म थामि पुर्व माडि साँध, दक्षिण बलरामपुरसितको पुरानु साँध पश्चिम सल्यानासितको पुरानु साँध उत्तरे सल्यानसितको साँध, एति साँधभित्रको जगा र आफनु पुरानु सल्यानको मुँसुक पश्चिम भेरवि साँध, दक्षिण मोगलाना साँध, पुर्व फलावाङसितको पुरानु साँध उत्तर चिपल्या भिङ्पानीको लेक पाँनि ढलो साँध, एति साँधभित्रको जगाको सर्वकर अकर गरि सर्वांक मारी मेटी विर्ता बितलपको तांबापत्र गरि बक्स्यौं. आपना सन्तान सन्तानसंम कुशविर्ता वितलप जानि चलअचल कल्याण-धन वानिसमेतको आंइ उपति लि सुषभोग्य गर्नु हवस्.

हजुरका संतान संतानलाई श्रीज्युज्युबाज्या पृथ्वीनारायण साहका संतान-पर्यंतले हिजो श्रीज्युज्युबाज्या पृथ्वीनारायण साहले गन्याको, श्रीबुबाज्यु रणबहा-दुर साहले थाम्याको दृढधर्म संझि एकघर जाँनी अह्राउँनु सिकाउँनु. श्रीतुलसि-को बिरवा जाँनी सेघना गर्नु. अरु राजामन्त्रा सन्मान अर्घ्यालो राषनु. सल्हचानीले गन्याका मिहिनतको रीझ नपचाउनु.

कन्यादान गरी विर्ता दाइंजो बक्संदा पानी हालन्या श्रीज्युज्युवावा सिंह-प्रताप साह, संकल्प वाक्य पन्हर्या श्रीगुरुबाज्या जयमंगल पंडितज्यू र आचार्य प्रोहित महेश्वर पंडित साक्षी प्रोहित सक्तिवल्लभ पंडित प्रोहित जगन्नाथ भट्टराइ बाभनानि लक्ष्मीरमण उपाध्या चौतरिया कीर्तिमहोद्दाम साह, चौतरिया दलमर्दन साह काजी सुरप्रताप साह सर्दार बलजित साह, चौतरिया रनसिं साह, काजि वंशराज पाँडे काजि श्रीहर्ष पन्थ काजि दुर्बल पन्थ सर्दार तुलाराम पाँडे, खर्दार केहरसिं बस्न्यात कपर्दार सुरसिं राना षर्जाञ्चि वीरभद्र उपाध्या कुलानन्द

जैसो षर्दार विश्वेश्वर जोसि जगजित पाँडे नाहारसिं बस्न्यात अभिमानसिं बस्न्यात रणजोत पाँडे धौकलसिं बस्न्यात कालु कपर्दार नरसिं, रन्या लामा षिहुबर लामा पातिमन् गुरुङ् बिसाम षवास जयकृष्ण बोहरा बंसु गुरुङ् जस्-राम् गजबल दुवान्या भक्तराम दुवान्या अस्मत् राना धिर्जमनि लामा फरास, धिर्ज्यां छिभडेल नुवाकोटको धामि हाकुदेव कुलानंद चौधरी देविशंकर चौधरि,...

ताम्रापत्र गरि दिनाका साछि, मार्फत् रंगनाथ पंडितराज, रुजु बिद्याकर भट्टज्यु रुजु धर्माधिकारि बाणीबिलास पंडित मार्फत् चौतरा रणउद्योत साह मार्फत् चौतरा सेरबहादुर साह मार्फत् चौतरा प्राण साह, मार्फत् चौतरा बम् साह मार्फत् काजि रणजीत पाँडे मार्फत् काजि भीमसेन थापा मार्फत् काजि बषत-वारसिं बस्न्यात, मार्फत् काजि त्रिभुवन् मार्फत् काजि नरसिं, मार्फत् काजि बिरभंजन पाँडे रुजु प्रोहित यदुनाथ अर्ज्याल, रुजु षरिदार बलभद्र पंडित् मार्फत् कपर्दार भोटु पाँडे रुजु काजि रणदिपसिं बस्न्यात रुजु काजि नाहारसिं बस्न्यात रुजु काजि सर्वजित् पाँडे मार्फत् काजि रणध्वज थापा रुजु षजांचि स्यामलाल मार्फत् सर्दार अजम्बर पंथ मार्फत् सर्दार इन्द्रसिं थापा, रुजु काजि जस्पाव थापा रुजु सर्दार बालनसिं कवर, मार्फत् सुवा रुद्रबिर साह मार्फत् सर्दार पुरण [साह रुजु षजांचि उदैगिरि गोसांइ, मार्फत् कपर्दार राधौसि षँडका रुजु बडा कृष्णबिर राना, संधियार रंगमनि पाँडे, श्रीनाथ पंथ चक्रु अर्ज्याल षनाल भानु पाध्या बंसबिर राना हरिवंस बोहरा।

श्रीसाके १७२६ श्रीसम्वत् १८६१ सालमिति माघ सुदि ५ रोज २, मोकाम्म कान्तिपुर शुभम् ॥ ॥

स्वदत्तां परदत्तां वा यो हरेच्च वसुन्धराम् ॥
षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमिः ॥ १ ॥

व्याख्या—

राजनीतिको सूत्रअनुसार आफ्नो राज्यसंग सीमाना जोडिएका राज्य शत्रुपक्षमा पर्दछन् । तीभन्दा परका राज्य मित्रपक्षमा पर्दछन् । यस सूत्रअनुसार बाईसी राज्यहरू गोरखाका

मित्रपक्षमा पर्दथे । श्री ५ पृथ्वीनारायण शाह प्रतिभाशाली राजनीतिज्ञ थिए; राजनीतिको यो सूत्र श्री ५ पृथ्वीनारायण शाहले राम्ररी बुझेका थिए । यसैले बाईसी राज्यलाई आफ्नो पक्षमा मिलाउने उद्योग उनले उठानैदेखि गरेका थिए । काशीमा जाजरकोटका राजासँग भेट हुँदा त्यहीं उनीसँग सन्धि गर्न पुगेको घटनाबाट उक्त कुराको पुष्टि हुन्छ ।[१]

यस्तै नीतिअनुसार श्री ५ पृथ्वीनारायण शाहले सल्यानसँग पनि सम्बन्ध कायम गरेका थिए । सल्यानतिरका प्रख्यात योगी भगवन्तनाथमार्फत सल्यानका राजा कृष्ण शाहसँग श्री ५ पृथ्वीनारायण शाहको सम्पर्क रह्यो ।[२] समालवंशी कृष्ण शाह र उनका छोरा युवराज रणभीम शाह दुवै असल खालका ठहरिएका हुनाले पृथ्वीनारायण शाहले वि.सं. १८२३ मा आफ्नी छोरी विलासकुमारीदेवीको विवाह रणभीम शाहसँग गरिदिए । यस विवाहसम्बन्धले गर्दा गोरखा र सल्यानमा घनिष्ठता झन् बढ्यो । यस विवाहको अवसरमा श्री ५ पृथ्वीनारायण शाहले छिल्ली दाङ्ग देउखुरी आदि प्रदेश दाइजोका रूपमा संकल्प गरी सल्यानलाई सुम्पिदिए । हुनत त्यसवेला श्री ५ पृथ्वीनारायण शाहले ती प्रदेश जितिसकेका थिएनन् । तैपनि ती प्रदेश पछि अवश्य पनि जित्नेछौं भन्ने आत्मविश्वास उनमा थियो ।[३] गोरखाले पूर्वतिर बढ्न निकै सफलता पाएको हुनाले सल्यानले पनि उक्त कुरामा विश्वास गरेको थियो भन्ने कुरा यस ताम्रपत्रबाट थाहा पाइन्छ ।

श्री ५ रणबहादुर शाहको पालामा राजकुमार बहादुर शाहको उद्योग र नीतिले गर्दा वि.सं. १८४३ मा भेरी साँध लाग्यो ।[४] अनि उपर्युक्त छिल्ली, दाङ्ग आदि ठाउँमा गोरखाको प्रभुत्व जम्यो । अनि श्री ५ पृथ्वीनारायण शाहको पूर्वसंकल्पअनुसार सल्यानले उक्त प्रदेश श्री ५ रणबहादुर शाहबाट पायो । तर छिल्ली दाङ्ग अन्तर्गतको प्रदेश होइन; यो प्रदेश बेग्लै हो भन्ने कुरा श्री ५ रणबहादुर शाहमा बिन्ति पारी त्यसको लालमोहर छिल्लीले पायो । यस कुरामा सल्यानले उजूरी गर्दा त्यसको छानबीन गरियो । अनि छिल्ली दाङ्ग अन्तर्गत नै हो

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११४४–११४७

२. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११७०–११७१

३. श्री ५ पृथ्वीनारायण शाहका अरू पत्रहरूबाट पनि उनमा त्यस किसिमको आत्मविश्वास थियो भन्ने कुराको पुष्टि हुन्छ ।
'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १०५७–१०६०, ११२९–११३१

४. रामजी तेवारी 'वि.सं. १८४३ मा भएका केही मुख्य घटना' पूर्णिमा २ पूर्णाङ्क पृ. ६१–६७

भन्ने ठहर हुँदा छिल्ली पनि सल्यानलाई नै विई यो ताम्रपत्र गरिदिइएको हो ।

यो ताम्रपत्र अनेक दृष्टिले महत्त्वपूर्ण छ । यसै हुँदा मूल हेर्न नपाए पनि यसलाई यस संकलनमा समावेश गरिएको हो । यस ताम्रपत्रमा श्री ५ पृथ्वीनारायण शाह ताकाका र श्री ५ गीर्वाणयुद्धविक्रम शाह ताकाका प्रसिद्ध भारादारहरू साक्षी बसेका छन् । तिनीहरूका नामका साथै दर्जा पनि खुलाई दिइएको हुँदा ती भारादारहरूबारे बुझ्न यसबाट केही मद्दत पाइन्छ ।

卐

[ ११६ संख्या ]

# सिँधुलीगढीको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

सिँधुलीगढी किल्लाको मुख्य ढोकासँगै भित्तामा टाँसेर राखेको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८६१ दिइएको छ।

'अभिलेख-संकलन'को ८२ पृष्ठमा मोहनप्रसाद खनालद्वारा यो छापिएको छ। 'प्राचीन नेपाल' अङ्क २६ को ३१ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदाव-
२. लीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहारा-
३. जे गीर्वाणयुद्धविक्रम साह बहादुर सम्सेर्जंगदेवानां सदा समरविजयिनां
४. तथा स्वस्ति श्रीसमस्तयोगकलाकोविद योगिन्द्रगणचिन्तनीयसच्चिदानन्द-
५. स्वरूपपरिपूर्णपरब्रह्मानुचिन्तनतदेकताधिगमैकलालस...सक-
६. लविषयाभिलाषविनिर्मुक्तमानसेत्यादि विविधलोकोत्तरगुणग्रामाभिराम
७. श्रीश्रीश्रीमन्महानिर्वाणानन्दस्वामिनां सदा सत्कर्मशालिनां
८. श्रीशाके १७२६ श्रीसम्वत् १८६१ साल माघ शुक्ल पञ्चमी
९. उत्तरभाद्रनक्षत्रे सिद्धियोगे पौवाको माझ किल्ला ......
१०. ...श्रीसर्दार रणगंज वानियां श्रीसर्दार् रेवन्त कु ...
११. ......उमराव डम्वर थापा ...........
१२. ... ... चतुर्भुज महंत। शुभ

व्याख्या—

वि.सं. १८६१ मा सिंधुलीगढीमा किल्ला बनाई यो अभिलेख कुँदेर लाइएको हो। यस अभिलेखले तात्कालिक अवस्थामा अलिकता प्रकाश पार्छ। यस अभिलेखमा दुइटा प्रशस्ति परेका छन्। एक गद्दीनशीन राजा श्री ५ गीर्वाणयुद्धविक्रम शाहको; अर्को स्वामी महाराज श्री ५ रणबहादुर शाहको। वि.सं. १८५५ फाल्गुनमा श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राखेपछि श्री ५ रणबहादुर शाह "निर्गुणानन्द" नामले स्वामी महाराज बने। वि.सं. १८५७ मा स्वामी महाराज काशी पुगेपछि पहिलेको नाम फेरी "महानिर्वाणानन्द" भन्ने नाम-ग्रहण गरे।[१] त्यस बेला स्वामी महाराजको प्रशस्तिमा पनि परिवर्तन गरियो। सोही प्रशस्ति यस अभिलेखमा परेको छ।

वि.सं. १८५५ फाल्गुनमा श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राख्दा गरिएको पशुपतिको प्रसिद्ध ताम्रपत्रमा श्री ५ रणबहादुर शाहले "मैले राज्यको भोग जति गर्न्या हो सो गर्न्यां, अब उप्रान्त संसार त्याग गरी परलोक सुधार्नानिमित्त देवतापर भक्ति लाइ तपस्या गर्दछु" भन्ने घोषणा गरेका थिए।[२] सो घोषणाअनुसार राजत्याग गरी उनी स्वामी बनेका थिए तापनि उनले राजकाज त्याग भने गरेनन्। वि.सं. १८५७ मा भारादार-हरूले नुवाकोटमा राजधानी सारेपछि स्वामी महाराजले म फेरि राजा भएँ भन्ने घोषणा गरेका थिए।[३] त्यसपछि परिस्थितिवश उनी काशी पुगे। काशीबाट फर्केर आएपछि फेरि उनी स्वामी महाराजका हैसियतले राजकाजमा संलग्न भए भन्ने कुराको झलक यस अभि-लेखले दिन्छ। सिंधुलीगढीमा किल्ला बनाउन लाई कुद्न लाएको यस अभिलेखमा गद्दीनशीन राजाको साथै स्वामी महाराजको पनि प्रशस्तिसमेत नामोल्लेख गरिएको छ। यसबाट स्वामी महाराज यस बेला राजकाजसँग सम्बद्ध थिए भन्ने कुराको पुष्टि हुन्छ। तर यस बेलासम्म उनी स्वामी महाराजकै रूपमा थिए। यसको एक वर्षपछि अर्को प्रयोग भयो। स्वामी महा-राजका रूपमा राजकाजमा हात हाल्नु उचित नभएको अनुभव उनले गरेको बुझिन्छ। अनि "मुख्तियार" पदको सिर्जना गरियो। त्यस बेला गद्दीनशीन राजाबाट उनलाई यस्तो लाल-मोहर गरी दिइयो[४]—

---

१. गौतमवज्र वज्राचार्य 'इतिहास संशोधन' ५२ संख्या

२. यो अभिलेख माथि गइसकेको छ।

३. 'ऐतिहासिकपत्रसंग्रह' (पहिलो भाग) पृ. ६६
'विस्लसौन्दर्यगाथा' पृ. २८६

४. चित्तरञ्जन नेपाली 'ज. भीमसेन थापा र तत्कालीन नेपाल' पृ. ११

"स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम साह बहादुर सम्सेर्ज्जंङ्ग-देवानां सदा समरविजयिनाम्—

आगे श्रीबुबाज्यूलाइ म जान्या हुन्ज्यालसम्म भरमुलुकको घा घरसार न्या कटक पजनी गैरह काज कामको मुख्तेयारी बक्स्यां, भारा कंपनी ढलेत चार वर्न छत्तीसै आतले श्रीबुबा-ज्यूका हुकुममा रुजु रही मर्जि मान्नु. जो श्रीबुबाज्यूको हुकुम मानैन तसलाइ श्रीबुबाज्यूबाट शासना गर्नु. इति संवत् १८६२ शाल फाल्गुण सुदि ८ रोज ४ शुभम्"

यसरी शक्तिशाली मुख्तियारका रूपमा स्वामी महाराज सोझै राजकाजमा उत्रे। तर यसको परिणाम भने राम्रो निस्केन। यसको दुइ महीना जतिपछि उनको वध गरियो।[५]



५. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १९२–१९३

[ ११७ संख्या ]

# कुमाउँको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

यो ताम्रपत्रभिलेख कुमाउँ अल्मोडा कामागडी नागनाथका पीर कृष्णनाथको संग्रहमा रहेको छ। 'सन्धिपत्रसंग्रह'को ७१० पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ। मूल हेर्न नपाइएको हुनाले यहाँ पङ्क्ति मिलाई दिन सकिएन। यहाँ वि.सं. १८६१ दिइएको छ।

## मूलपाठ

श्रीदुर्गासहाय

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्ध-विक्रम साह वहादुर्सम्सेरजङ्गदेवानां सदा समरविजयिनाम्.

आगे उदयनाथ पीरके अल्मोडा लालमण्डी तिम्रो जगामा साल ५३ मा कोल्ला वनाउदा जगाको साटो पर्गाना वारमंडल कामाको सेरामा दियाको चौतरिया वम्म साहले चार किला हाली छुट्याइदियाको जगा तस्को साँध पूर्व चन्द्रुवा कराईतका घर माथी बाँजको रुष दक्षिण कमली चौधरीका घटमाथी मेह-लको रुष पश्चिम गगासनदी उत्तर तेवाडीका घर सल्लाको रुष येति चारकिलाभि-त्रको जगा तिम्रो लालमंडिको किल्लाभित्र पस्याको जगाको साटो दियाको साल ५८मा हामीले लालमोहरको गरी बक्स्याको तेसै साधभित्र भँडारिका जगाको साटो बक्स्याको जगाको समेत्को मोहर ताँवापत्र गरी बक्स्यौं, आफ्नो षाति-र्जमासित साटो जानी भोग्य गर.

चारकिल्लाभंदा अघ्र्यालो नचापनु. विना तक्सीर राजाले नहनुं, माटो बेच्वा सर्कार साधनु सर्कारमा नलिया अन्यत्र बेचनु. येस बंधेजमा जो रहैन सो यस् श्लोकमा भन्याको पातकी होला.

स्वदत्तां परदत्तां वा यो हरेच्च वसुन्धरां ।
षष्टिवर्षसहस्राणि विष्टायां जायते कृमिः ॥
इति संवत् १८६१ साल मिति चैत्र वदि ३० रोज ७ शुभम्.

व्याख्या–

वि.सं. १८४७ चैत्रमा नेपालले कुमाउँ विजय गरी विस्तृत नेपालअन्तर्गत परेको थियो।[१] यस बेलादेखि सुगौलीसन्धि नभएसम्म अर्थात् पच्चीस वर्ष जति कुमाउँ विस्तृत नेपाल अन्तर्गत रह्यो। विजित प्रदेशमा सबभन्दा पहिले सुरक्षाको बन्दोबस्त गर्ने कुरामा ध्यान दिनु आवश्यक हुनु स्वाभाविक छ; अनि मात्र "लब्धप्रशमन" सम्बन्धी अरू कुरामा दृष्टि दिनुपर्ने हुन्छ। यसै हुँदा नेपाल सरकारले वि.सं. १८५३ मा अल्मोडा लालमण्डीमा किल्ला बनाउन लाएको रहेछ। त्यस बेला प्रायः किल्लाभित्र खेती योग्य जमीन पनि रहन्थे।[२] किल्ला घेराबन्दीमा परेको बेला भित्रैको खेतीले पनि निर्वाह गरिन्थ्यो। अल्मोडा लालमण्डीमा बनाइएको किल्लाभित्र पनि उदयनाथ पीर आदिका जग्गा पनि परेका थिए। उदयनाथ पीरको उक्त जग्गाको सट्टो अर्को जग्गा दिई यो ताम्रपत्र गरिदिइएको हो।

यस ताम्रपत्रबाट विशाल नेपालको गौरवमय समयको एक झलक पाइने हुनाले यसलाई यहाँ समावेश गरिएको हो। तात्कालिक असलियत कुरा बुझ्न यो अभिलेख उपयोगी नै रहेको छ।

卐

---

१. 'पूर्णिमा' ५ पूर्णाङ्क, पृ. ६०

२. लिच्छविकालमा पनि किल्लाभित्र खेतीयोग्य जमीन पनि हुन्थ्यो; अभिलेखमा यसको उल्लेख पाइन्छ।
'लिच्छविकालका अभिलेख' पृ. २३३, २३८

[ ११८ संख्या ]

# नुवाकोटको गीर्वाणयुद्धविक्रम शाहको पालाको अभिलेख

नुवाकोटका धामी श्रीहरिमानसिंहका संग्रहमा रहेको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ नेपालसंवत् ९२४ (वि.सं. १८६१) दिइएको छ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा'को सामग्रीखण्डको ४५-४६ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो छापिएको छ।

## मूलपाठ

१. श्रेयः श्रीनश्रोकोत ऋषिवन श्रीगंधकीभैरवियाके दीगुपूजा दिनस, हाकुदेश्रो

२. म्यलु, थश्रोनि भलु निह्मसया धर्म्मचित्त उर्पति जुयाव चुश्रोदिश्वति बुर-श्रो ५ वुन्ता

३. स्वस्ति श्रीमन्महाराजाधिराज श्रीवानजुधविक्रम शाहदेव वीजयराज्य थ्व वेलस

४. चोव हाकुदेव माम धवनि कका तोयुदेश्रो श्वह्म देवंगत जुयाश्रोस्यंली ।। काय कृ-

५. ष्ण म्यलु, सुर्जरक्षिम भलुल वाजु धर्मश्रश्रो सोह्म समोहनं ह्लापा संकल्प याना त-

६. श्रो गुलि लश्रो ५ बुस तका २ वाम तस्यं पिण्ड थय दयकं दोह्लपा ।। थ्व बुया श्रोलशानन वै-

७. शाष शुक्र पंचमि खुनु ह्म १ दुगु दयकं पूजा याय दुगु मूल पाथि ३० श्रो

चाक्रमत प्वात

८. ३५ चिकं मूलमूलि रश्रोर्घशाल वयपेयात मुलि १ श्रो भोजंयात श्रो पाथी १० पिशुकि

९. थार्वकि निसरायात पाथी १० श्रो ॥ पंचपचारपुजा जोलन ङाये फलफूल शाकया

१०. कवुवल घासा सकतां ङाययात मूल तका १ ध्वया फुजश्रो मरि १ गुरु-भाजुयात दक्षिना दं-

११. १६ भोजं बोनेमाल गुरुभाजु माताजु ॥ म्यलु भलुकह्म भलु दानपति हाकुदेश्रोया सन्तान ह्मं

१२. ४ तुइदेश्रोया सन्तान ह्म ४ ध्वति प्रमान याय धुंस्यलि गुथिजनस्यन भोज नया ॥ ध्वति वि-

१३. धि वर्षप्रति यायमालकाश्रो गुथि दयकं वलभद्र गजिन्द्र निह्म गुथिजनं तस्य ॥ कृ-

१४. ष्ण म्यलु धर्मद्येश्रो निह्म फुकिजन ताम्रपत्र दयकं लश्रोह्लाना ॥ सम्वत् ९२४ ध्व द-

१५. त सुनान स्यनके मदु. स्यनकलसा पंचमहापातक लाक जुलो । जोगी बोने-माल शुभ,

( दायाँ छेउमा ) ध्वकुसिं भेलुया पार ध्व तावापत्र रह्ला

## अनुवाद

आज नुवाकोट श्रधिवनका श्रोगण्डकीभैरवीलाई दीपुपूजा (दिवाली) को दिन, धामी हाकुदेव र धवनी धमिनी दुवैको चित्तमा धर्म गर्ने विचार पैदा भएको हुनाले चुश्रोवीस्वतीको ५ रोपनी खेत चढाइयो ।

स्वस्ति महाराजाधिराज गीर्वाणयुद्धविक्रम शाहदेवको विजयराज्यमा । यस बेला हाकुदेव, आमा धवनी काका तोयुदेव तीन जना विवङ्गत भएका हुँदा छोरा कृष्णदेव धामी, सूर्यलक्ष्मी धमिनी, बाजु धर्मदेव तीनै जनाले सल्लाह गरी अघि संकल्प गरिसकेको ५ रोपनी खेतमा

दुई रुपिया थपी श्राद्ध गर्नु पर्ने गरी चढाइयो ।

यस जग्गाको आयस्ताले वैशाख शुक्ल पञ्चमीको दिन एक बोकोसमेत राखी पूजा गर्नू। बोको ३० पाथी धानबाट आउने राख्नू। चाक्रमत ३५ बाल्न तेलको लागि......एक मुरी धान भोजको लागि ३० पाथी । "निसरा" (नैवेद्यविशेष) चढाउन चामल आदिको लागि १० पाथी । पञ्चोपचार पूजाको सामग्री किश्र र फलफूल तरकारी बुवल (केराउ आदि) घासा आदि सबै किस्नाको लागि १ रुपियाँ यसको......मिठाई १, गुभाजूलाई दक्षिणा १६ दं । गुभाजू र उनकी पत्नी, धामी र धमिनी, दानपति हाकुदेवका सन्तानबाट चार जना, तुयुदेवका सन्तानबाट चार जनालाई भोज खुवाउनुपर्छ । यति गरेपछि गुठियारहरूले भोज खानू । यो विधान प्रतिवर्ष गर्नाको लागि गुठी बनाई बलभद्र र गजेन्द्र दुइ जनालाई गुठियार नियुक्त गरी कृष्णदेव र धर्मदेव दुइ जना दाजुभाइले ताम्रपत्र लेखाई सुम्पिएको हो ।

ने.सं. ९२४ (वि.सं. १८६१) । यो दान कसैले लोप गर्नु हुँदैन । लोप गरे पञ्चमहापाप लागोस् । जोगीलाई पनि बोलाउनुपर्छ । शुभ होस् ।

यो ताम्रपत्र धामी हुनेलाई सुम्पनुपर्छ ।

व्याख्या–

श्री ५ गीर्वाणयुद्धविक्रम शाहको राज्यकालमा वि.सं. १८६१ मा नुवाकोटका धामी र धमिनीले गुठी राखी कुँदाइएको यो अभिलेख तात्कालिक धार्मिक, सामाजिक आदि केही कुरा बुझ्न केही उपयोगी रहेको छ । यस अभिलेखको उठानमा "नुवाकोट ऋषिवन"को उल्लेख परेको छ । यस उल्लेखले मध्यकालमा यस प्रदेशको सांप्रामिक दृष्टिले महत्व बढी "नवकोट्ट" नामकरण हुनुभन्दा पहिलेको अवस्थालाई औंल्याएको छ । नेपालका कति ऐतिहासिक स्थलको राजनैतिक दृष्टिले महत्त्व हुनुभन्दा पहिले धार्मिक दृष्टिले महत्त्व रहेको पाइन्छ ।[1] तिनमध्ये नुवाकोट पनि एक हो । नुवाकोट राजनैतिक दृष्टिले महत्त्वपूर्ण हुनुभन्दा पहिले धार्मिक दृष्टिले महत्त्वपूर्ण स्थल बनेथ्यो । नुवाकोटभेकमा प्रसिद्ध किल्लाहरू बनी "नवकोट्ट" भनी यो प्रदेश कहलाउनुभन्दा पहिले वर्तमान नुवाकोट डाँडो "ऋषिवन" "ऋषिपत्तन" भनी कहलाएको थियो । यस स्थलमा कुनै प्रसिद्ध ऋषिले तपस्या गरेको हुनाले पछि यहाँ विशेष बस्ती बसेपछि तिनै ऋषिको संस्मरणमा बस्तीको नाम "ऋषिपत्तन" रहेको हो भन्ने अनुश्रुति

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. १३

चलेर आएको छ। अभिलेख, टिपोट आदिमा पनि "ऋषिपत्तन"को उल्लेख आएको छ। नुवाकोट डाँडोको तलेजु-मन्दिर भएको एक स्थलले अहिलेसम्म पनि "ऋषिवन" नामको प्रतिनिधित्व गरिरहेकै छ।[२]

लिच्छविकालको उत्तरार्धमा र मध्यकालमा भैरव भैरवीको सम्प्रदायले नेपाली समाजमा निकै प्रभाव पारेको हुँदा हाम्रो यहाँ भैरव भैरवीको स्थापना निकै मात्रामा भएथ्यो।[३] नेपालका प्रसिद्ध भैरव भैरवीहरूमा नुवाकोटका भैरव भैरवीको पनि विशिष्ट स्थान रहेको छ। त्रिशूली गण्डकीनिर रहेका भैरव भैरवी हुँदा यहाँका भैरव, भैरवी "गण्डकी भैरव, भैरवी" भनी प्रसिद्ध भएका थिए।[४] यसै हुँदा यस अभिलेखमा पनि नुवाकोटकी भैरवीलाई "श्रीगण्डकीभैरवी" भनिएको छ।

ढुङ्गा, धातु, काष्ठ आदिका मूर्तिहरूमा त देवताको "न्यास" गरी देवता चढाउन सकिन्छ भने प्रत्यक्ष देखिने गरी मानिसमा नै देवता किन चढाउन सकिँदैन भन्ने विचारले सिद्धहरूले एक नयाँ प्रयोग गरेथे। यही प्रयोगको एक नमूना नुवाकोटका धामी र धमिनी पनि हुन्। नुवाकोटको प्रसिद्ध "देवीजात्रा" प्रसङ्गमा धामी र धमिनीमा भैरव भैरवीको न्यास हाल्ने पद्धति प्रयुक्त गरेको अझै हेर्न पाइन्छ।[५]

मध्यकालमा नुवाकोटका धामीको धार्मिक कार्यसँग मात्र सम्बन्ध रहेको देखिन्छ। तर शाहकालमा आएर प्रशासनमा पनि धामीको केही हात रहन थालेथ्यो। सरकारी भारदारमा लाग्ने "सर्वोपमायोग्येत्यादि सकलगुणगरिष्ठ राजभारासामर्थ" आदि विशेषण धामीमा पनि लाग्दथ्यो।[६] शाहकालका लालमोहर, ताम्रपत्र आदिमा अरू भारदारहरू जस्तै नुवाकोटका धामी पनि साक्षी बसेको पाइन्छ। उदाहरणार्थ माथि गएको श्री ५ पृथ्वीनारायण शाहकी छोरी विलासकुमारीदेवीलाई गरिदिइएको ताम्रपत्रलाई देखाउन सकिन्छ। त्यसमा वि.सं. १८२३ मा साक्षी बस्ने भारदारहरूको पङ्क्तिमा "नुवाकोटको धामि हाकुदेव"को पनि उल्लेख आएको छ। यिनै धामी हाकुदेवले संकल्प गरेको जग्गा उनका छोरा धामी कृष्णदेवले गुठी राखेको कुरा यस ताम्रपत्रमा परेको छ। राजकुमार बहादुर शाहको कार्यकालमा यी कृष्णदेव पनि निकै चल्तापूर्जा भई निस्केको कुरा तात्कालिक पत्रबाट थाहा पाइन्छ।[७]

---

२. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. १३–१४
३. लिच्छविकालको उत्तरार्धको अभिलेखमा भैरवको उल्लेख आइसकेको पाइन्छ।
४. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ३
५. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. १११–११२
६. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ८७
७. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ८१–८१ (सामग्रीखण्ड)

[ ११६ संख्या ]

# पकनाजोलको भोटु पाँडेको अभिलेख

काठमाडौं, पकनाजोल, सोह्रखुट्टे पाटीको नजीकै पश्चिमपट्टि रहेको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८६२ दिइएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलिविराजमान मानोन्नत श्रीमन्महाराजाधि-

२. राज श्रीश्रीश्रीमहाराजे गिर्वाणयुद्धविक्रमसाह बहादुर सम्सेरजङ्गदेवानाम् सदा समरविजयिनाम् आ-

३. गे कपर्दार भोटू पाडेके तैले आफ्नु बाबु बराज्यूका नाउमा पकनाजोलमा धर्म्मसाला बनायाको सदावर्त राषना-

४. निमित्य जिल्लै महुत्तरि प्रगंन्ना कोराडिमध्ये माधौसाहिले कालाबंजर बसायाका एकसट्ठि सालमा कप-

५ र्दारि बानगिमा पऱ्याको मौजे बहेवागंह्र असलि दाषलि ससिमको मेडचन्दी मोफसलका अमली शुब्बा नैन-

६. सि डिठा शुबा गर्जासि फौजदार धर्म्मसि भडारि श्रीकृस्न चौभान फौजदार रमानन्द पा-

७. ध्या मौनसिफ माहुर चौधरि गंगाराम चौधरी पेस्कार लालसिदास मोहनदास ना-

८. यं व पैस्कार धर्मपतिदास नारायणदत्तदासका चौधरि लालदास रुजु
चौधरि चूडाम–

९. णिदास कानुगोए तोतिरामदास जैवार महंत वनमालिदास रघुनाथ राये
जेठ रैयति प्रगन्ना

१०. महुतरि चौधरि नुघसेनदास हिर्दैसिंदास पगन्ना षेसराहा कानुगोये लेष-
नारा–

११. यणदत्त प्रगन्ना महुतरि लाला वैजुलाल सिमानदार वाकिफकार पिथि
राउतहरूले ग–

१२. न्यावमोजीम तस्को साध उत्तरका सिमाना वुटजमुनि सतवेधाका पछुंवा-
रिका ह्नी–

१३. पर सिमरका गाछ छोटा तिस्का पश्चिम येकर सिपर पिदारका गाछ तिस्का

१४ उत्तर चारडेग पर किलाकोइला १ तिस्सौ पश्चिम धनहर त्वौरिका पश्चिम
दक्षि–

१५. ण पारि दछिनेतासि छौटा तिस्का पछवारिकाधिपर किलाकोइला १ तिस्सौ
प–

१६. श्चिम डकागाछनेर किलाकोइला १ तिस्सौ पश्चिम कुकुरधरि पोषरिका
दछिण

१७. धुर पुर्वे पश्चिमे धुरका पछवारि मुहडा पर किलाकोईला १ किलाकोईला-
सौ उत्तर उ–

१८. त्तरे दछिने धुर धुरका उत्तरवारि मुहडा पर किलाकोईला १ किलाको-
इलासौ पश्चिम मुहधुर धुर

१९. ... ... ... ... भिदासौ पश्चिम सिमडका गाछ तिस्सौ पश्चिम दोद्रिका
पछवा–

२०. ... पर किलाको इला १ तिस्सौ पश्चिम सोभ्र वोश्रा द्रोदिकाधितक उत्तर
माधो

२१. साहिको जिरातिडोडिको उत्तर वोरि आरिनक तिस्सौ दछिण नयाभिडक-
पुवारिकाव किलाकोइला|१

२२. किलाकोईलासौं पश्चिम षलहृछिडिहका पुव डौंडाका पुवारिकंधिपर कोई-
लाकिला १ किला–

२३. कोईलासौ उत्तर घाघरि दाषिल डौंडा तिस्का पुरवारि किलाकोईला १
तिस्सौं पश्चिम घाघरि

२४. दाषिल विगहि नदि पछवारिसिमान विगहि नदि दछिण टका सिमान
विगहि सिमानका

२५. दो मुहानसौं उत्तर तिस्सौं पुर्व जमुनी नदिसौ समिल सतवेधा वुढजमुनिका
दो मोहान न–

२६. कु तिस्सौ उत्तर पहिला किलाकोईला सतवेधा वुढजमनिका पछवारि काधि-
पर छोटा सिम–

२७. रको गाछ तिस्का पश्चिम पिडारको गाछकावुत्तर चारडेग पर कोईला
किला तक हदमह हद येति

२८. सिमानाभित्रको जगाको तम्थापत्र मोहोर गरिवक्स्यौं यो जगाको उतपत्तले
सदावर्त्त चलावुनु यो स–

२९. दावर्त्त जो षंडित गर्नामा पस्ल हिंदु भया गाई मान्याको पाप मुसलमान भया
हराम षाया मान्याको पाप

३०. लागला, जस्ले यो जगा सदावर्त्त थामनामा पस्ला तसलाई श्रीपंचायन
देवताका शुद्रिष्टि होला. स्वदत्तां परदत्तां वा

३१. यो हरेच्च वसुंधराम् षष्ठिवर्षसहश्राणि विष्ठायां जायते क्रिमिः ईति
सम्वत् १८६२ साल मिति

३२. चैत्र शुदि १ रोज ६ शुभम् –– मोहोरमा मार्फत रह्याको मार्फत प्राण
साह मार्फत रणउद्योत

३३. साह मार्फत सेर वाहादुर साह मार्फत रणजित पाडे मार्फत भिमसेन थापा
मार्फत दलभंजन् पाडे मा–

३४. र्फत रणध्वज थापा मार्फत वाहादुर भंडारि मार्फत वालनरसिं कवर मार्फत
नरसिं मार्फत उदैगीरि

३५. शुभम् यस जगाको उत्पंनले पकनाजोलमा धर्म्मसालाको सदावर्त्त र

सुलस्पाह्निमा

३६. स्थापना गऱ्याको श्रीस्वामिनारायणका थानमा सदावर्त्त चलाई अँजन् देवताको नीत्ये नैमित्तिक पुजा–

३७. का सराजाम कत्ति नघटाई पूजा गर्नु. पुजाहारिको षानगी पनि सालिन्ता कत्ति नघटाई दिनु, यति षर्च

३८. गरि सेक बाकि रह्याको गजदल् पाडेले षानु भनि बंदेज बाधि राष्यौं ।!

व्याख्या–

कपर्दार भोटु पाँडेका केही अभिलेख माथि गइसकेका छन्; केही तल आउँदै छन् । ती अभिलेखबाट भोटु पाँडे राजकाजभन्दा लोकको हित हुने सामाजिक काजले गर्दा बढी उल्लेखनीय छन् भन्ने निष्कर्ष सजिलैसँग निकाल्न सकिन्छ । उनका सामानकालिक भारादारहरूमा सबभन्दा बढी कृति भोटु पाँडेकै पाइन्छन् । भोटु पाँडेका अनेक ती कृतिमध्ये एक कृतिको संकना पकनाजोलको यस अभिलेखले दिलाइरहेको छ ।

नुवाकोट, गोरखा आदि पश्चिमभेकमा जाने मूलबाटोमा पकनाजोल पर्दथ्यो । शाहकालसम्म पनि पकनाजोलमा एक किल्ला पनि रहेको थियो ।[१] वि.सं. १८५७ सालमा "नुवाकोट-काण्ड"मा स्वामी महाराज श्री ५ रणबहादुर शाहले नुवाकोटमा आक्रमण गर्ने सुरसार कस्दा यहाँ पकनाजोलमा पनि ठाना हालेको उल्लेख वंशावलीमा आएको छ । पश्चिम भेकबाट कार्यविशेषले राजधानी काठमाडौंमा आउनेहरूमध्ये केही यहीं बास बस्ने पनि गर्दथे । यसैले यहाँ "सोह्रखुट्टे पाटी" नामक एक प्रसिद्ध पाटी रहेको थियो । पश्चिमभेकबाट राजधानीमा आउनेहरूले यहाँ बास बस्ने गरेका हुनाले यस ठाउँमा "धर्मशाला" र "सदावर्त"को आवश्यकता छ भन्ने कुराको महसूस लोकोपकारी भोटु पाँडेले गरे । अनि यस ठाउँमा एक धर्मशाला उनले बनाउन लाए; साथै श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट बक्साई "सदावर्त"को प्रबन्ध गरी यो अभिलेख कुँदाइएको हो ।

सदावर्तको लागि जग्गा गुठी राखी कुँदाइएको यस अभिलेखमा उल्लेखनीय एक कुरा रहेको छ । यहाँ सदावर्तका लागि गुठी राखिएका जग्गा काठमाडौंको आसपासको नभई

१. 'ऐतिहासिक पत्रसंग्रह' पहिलो भाग पृ. ६६

तराईका (महोत्तरीका) छन् । काठमाडौंको सदावर्त चलाउन तराईका जग्गा गुठी राखिएको यस्तो उदाहरण कम पाइन्छ । यसबाट विशाल नेपालको सोचाइ 'र व्यवहारमा आएको अन्तरको केही आभास पाइन्छ । विशाल नेपालको सोचाइमा आएको अन्तरको झलक यस अभिलेखमा उल्लिखित अरू बेहोराबाट पनि केही पाउन सकिन्छ । उदाहरणार्थ उक्त सदावर्तनचलाई खण्डित पारे पाप लाग्ने कुराको प्रसङ्गमा उल्लिखित "यो सदावर्त जो खंडित गर्नामा पस्ला हिन्दु भया गाई मान्याको पाप मुसलमान भया हराम खाया मान्याको पाप लागला" भन्ने यस उक्तिलाई देखाउन सकिन्छ ।

यसरी तात्कालिक अलिकता कुरा बुझ्न यो अभिलेख पनि उपयोगी नै छ भनी भन्न सकिन्छ ।



[ १२० संख्या ]

# गीर्वाणयुद्ध विक्रम शाहको अभिलेख

यो ताम्रपत्राभिलेख हाल नेपाल र एशियाली अनुसन्धान केन्द्रको संग्रहमा रहेको छ। यसमा वि.सं. १८६२ दिइएको छ। 'कन्ट्रिब्यूशन्ज् टु नेप्लिज् स्टडिज्' वर्ष २ अंक २ को १५५–१५६ पृष्ठमा टेकबहादुर श्रेष्ठद्वारा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायेणेत्यादि विविधविरुदावली-
विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीम–

२. हाराजे गीर्वाणयुद्धविक्रमसाह् वहादुर सम्सेरजङ्गदेवानां सदा समरविज-
यिनाम् – – आगे गणपतिभट्टके देउपाटनको अ–

३. म्वल वाग्मतीदोलको तिम्रो वितलप विर्त्ता भोयङ्गुपानी षेत पाषो टार
बगर षेहऱ्या घड्याडी घँया षेरिया तस्को साध पुर्व काँह्लो वाल्या जो–

४. तीको घड्यारी दक्षिण गुठि शिवराज गीरिको र धीर्जपुरीको विर्ता पश्चिम
वाग्मती गुठि चाल्स्या मिश्र ब्राह्मणको विर्ता उत्तर टिंडोलको कुलो

५. पषेरो बाटो वाल्या जोतीको घड्यारी ऐती चार किलाभित्रको षेत रोपनी
५० के षेत दुई २ पाषो रोपनी ३६ के षेत १।५६ नेपाल हाम्रो अम्व–

६. ल नहुंदै राजा जयप्रकासले गोर्षाका निमित्त स्वस्त्ययन गऱ्यौ भनी तिम्रा
बाबा कृस्नभटलाई हरी हरिनाथ गीरिका घरमा बस्न्या परदेसी

७. गोसाई कुबेर गीरि भिम गीरि कासी गीरि भुक्तेश्वर गीरि ईनहरूलाई तावा-
पत्रसमेत विर्ता दियाछन्. नेपाल हाम्रो अम्बल भयापछि गो–

८. र्षाका साहिनाले भट्ट हरिन्या होईन भनि श्रीजिज्यूवाज्याले त्यो माटो फेरी सन्न्यासीहरूलाई हरी तिमिलाइ भोग्य गराई दिनुभयेछ सोईबमोजिम

९. श्रीज्यूज्यूबुवाले पनि मोहर गरो थामी बक्सनुभयेछ. पछि वसनामको माटो फ्नुकदा वालगीरि र राजगिरिले उही जयप्रकाशको तावापत्र देखाई त्यो

१०. माटो हाम्रो हो भनि षादा तिमी फिन्यादी हुंदा गोसाईलाई र तिमीलाई विचारी लक्ष्मिनारायेण पंडितका सभामा जोरी बक्सनुभयेछ. नि-

११. साफ बुझदा संन्यासीका तावापत्रमा हरीन्याको नाउं र षत नदेषता तिमिलाई बक्स्याको मोहर हेर्दा तिम्रो रेष साचो सन्यासीको रेष झुठा ठ-

१२. हराई श्री ६ बुवाज्यूले लालमोहर गरी तिमिलाई बिहोराई बक्स्याको विर्ता भोग्य गर्दै रह्याछौ. तस्तैं बीचमा श्रीगुरुबाज्या बजनाथ पंडितरा-राजको संपत्ति सर्कार लाग्दा सन्यासी-

१३. ले यो ता श्रीगुरुबाज्या ब्रजनाथ पंडितराजको कारवारी मुषतियार हो. हाम्रो विर्ता वल मिची षाइ राषेथ्यो, यो हाम्रा तावापत्र हो भनो फेरी उही जयप्रकाशको तावा-

१४. पत्र देषाई आजतक त्यो माटो षादा रह्याछन्. आज डिठा सांढ्या वैद्यले र विचारी किर्तसिं षतृ गजाधर भटराईले टक्सारका सभामा वसो

१५. वालगीरिलाई र तिमीलाई जोरी नीसाफ बुझदा सन्यासीका तावापत्रमा ऐस षतमा कृस्न भटलाई हरी वालगीरिको आजा गुरु हरिनाथ

१६. गीरिलाइ दियौ भनि षत वावत हरिन्याको नाउं र षाइ राषन्याको नाउ नदेषता निसाफमा सन्न्यासी नठहर्दा तावापत्र थिची डंड गर्न

१७. षोजदा तांवापत्र ली वालगीरि लुकता माटो कृस्न भट्टैको सच्चा ठहराई सन्यासीको तांवापत्र रद्धो विसहो गरि श्रीजिज्यूबाज्या श्रीज्यूज्यूबुवा श्री ६ बुवाज्यूले विर्ता वितलप

१८. वहाली गराई वक्स्याबमोजिम पानी षेत २ पाषो खेत ११५६ ज्मा षेत ३१५६ विर्ता वितलपको मोहर तावापत्र गरी वक्स्यौं. आफ्ना षातिज्मा-

१९. संग विर्ता वितलप जानि पुस्तदरपुस्तस्म भोज्य गर. चारकिलाभंदा अर्घ्यालो

बिर्तवारले नचापनु, विना तकसीर राजालें नहर्नु. माटो
२०. बेचदा सर्कार साधनु. सर्कारमा नलिया अन्यत्र बेचनु. येस बंधेजमा जो
रहैन. सो येस श्लोकमा भन्याको पातको होला स्वदत्तां परदत्तां वा यो
२१. हरेच्च वसुंधराम् ॥ षष्टिवर्षसहस्राणि विष्टायां जायते कृमिः ईति
सम्वत् १८६२ साल मिति वैशाष वदि ११ रोज ५ शुभम्

व्याख्या–

वि.सं. १८६२ मा श्री ५ गीर्वाणयुद्धविक्रम शाहले गणपति भट्टलाई गरिदिइएको यो ताम्रपत्रले राजनैतिक संक्रमणकालमा भूमिसम्बन्धी कलह कसरी उत्पन्न हुन्थ्यो भन्ने रोचक दृष्टान्त प्रस्तुत गरेको छ। साथै त्यस वेलाको न्यायव्यवस्थाको अलिकता झलक पनि हामी यताबाट पाउँछौं। यस ताम्रपत्रमा परेको विषय राम्ररी बुझ्न तात्कालिक राजनैतिक अवस्था-बारे केही दृष्टि दिनुपरेको छ।

कान्तिपुरअन्तर्गत रहेको नुवाकोट कब्जा गरी श्री ५ पृथ्वीनारायण शाहले आफ्नो अभियानको केन्द्र नुवाकोटलाई नै बनाएपछि लगत्तै नेपाल उपत्यकामा पस्ने प्रयास गरेथे। तर यसमा सफल नभएपछि श्री ५ पृथ्वीनारायण शाहले अर्कै बाटो लिए। एक उपत्यकामा आर्थिक नाकाबन्दी गर्ने; दोस्रो उपत्यकाका प्रभावशाली धनीमानी व्यक्तिहरूलाई प्रलोभन आदि देखाई आफ्नो पक्षमा मिलाउने। दोस्रो काममा श्री ५ पृथ्वीनारायण शाहलाई निकै सफलता मिल्यो। उपत्यकाका ठूलठूला भारादार, व्यापारी, धार्मिक क्षेत्रका प्रभावशाली केही व्यक्तिलाई पनि आफ्नो पक्षमा मिलाउन श्री ५ पृथ्वीनारायण शाह सफल भएथे। श्री ५ पृथ्वीनारायण शाहका पत्रहरूबाट यो कुरा स्पष्ट थाहा पाइन्छ। प्रमाणार्थ केही पत्रको संक्षिप्त उद्धरणसाथ यहाँ यस विषयमा अलिकता विचार गर्नु प्रासङ्गिक देखिन्छ। श्री ५ पृथ्वीनारायण शाहले कीर्तिराजानन्द उपाध्यायलाई लेखेको पत्रबाट काठमाडौं विजयका लागि उनले त्यहाँका धनी तथा प्रभावशाली व्यक्तिलाई हात लिन गरेको प्रयासको स्पष्ट झलक पाइन्छ। सो पत्रको एक अंश यस प्रकारको छ:–

"उप्रान्त तिमि भन्या बडा मनुष्य हौ. तिम्रो र हाम्रो घलासि गर्नाको इच्छा छंदै थियो. हाम्रा काजिका स्नेहले बहुतै बन्यो. अब तिम्रा बडा बाबा र काकासित पेट मिलाई काठमा-डौंका तषतको काज पुऱ्याव. तिम्रो सांखु चांगु पाटन काठमाडौं पर्वतको बांधा वृत्ता धर्मेत

यजमानताको पूजासमेत माफ गरिबक्स्यौं ।[१]

यसै गरी काठमाडौंका प्रधानहरूलाई हात लिन श्री ५ पृथ्वीनारायण शाहले गरेको प्रयासको झलक अभुदसिंह प्रधानलाई लेखेको पत्रबाट पनि पाइन्छ ।[२] मल्ल राजाको पुरोहित वर्ग र भारादारवर्गबाहेक त्यस राज्यमा बस्ने अरू प्रमुख व्यक्तिलाई पनि हात लिन श्री ५ पृथ्वीनारायण शाहले गरेको प्रयासको संकेत काठमाडौं तकियाका प्रमुख साबुल्लाजी, मोजंजी-लाई लेखेको पत्रको यस अंशबाट पाइन्छ—

"आगे साबुल्लाजी मोजंजिकै पिछा लियौं. तुम्रा नेपालको घर षेत अति छन्. सभ हामिले माफ गरिबक्स्यौं. नेपाल यहाँ हाम्रो अंचल् प्रवेस हुंदाका दिन सभ महाजनहरूकन सलामि ज्या लागला. सो चह्राउनुपर्ला. तुम्रा घर्षेतकन माफ गरिबक्स्यौं. कौनै बातको संदेह नमान."[३]

कान्तिपुरबाहेक भक्तपुर आदिका प्रमुख व्यक्तिलाई पनि हात लिने काम श्री ५ पृथ्वीनारायण शाहले गरेथे । परशुराम थापालाई हात लिन श्री ५ पृथ्वीनारायण शाहले लेखेको पत्रले उनको राजनैतिक हृदयको राम्रो उदाहरण प्रस्तुत गरेको पाइन्छ ।[४] भक्तपुरका धनी व्यक्ति भगवतीवनहरूलाई लेखेको पत्रबाट पनि उनको नीतिको झलक पाइन्छ ।[५]

यस ताम्रपत्रबाट पशुपतिका कृष्ण भट्टलाई पनि भित्रभित्रबाट श्री ५ पृथ्वीनारायण शाहले मिलाएछन् भन्ने थाहा पाइन्छ । तर कृष्ण भट्ट श्री ५ पृथ्वीनारायण शाहसँग मिली उनको हित हुने काम (स्वस्त्ययन) गर्न लागेको कुरा कान्तिपुरका राजा जयप्रकाश मल्लले थाहा पाएछन् । यसो हुँदा भट्टसँग जयप्रकाश मल्लको रिस उठ्नु स्वाभाविक थियो । यस कारण उनले कृष्ण भट्टको विर्ता खोसी कुबेर गिरि आदि चार जना गिरिको नाउँमा सो विर्ता ताम्रपत्र गरी दिएछन् । त्यस ताका गिरिहरू एक राज्यबाट अर्को राज्यमा गई व्यापार आदि गर्दथे । कुबेर गिरि आदिलाई यस ताम्रपत्रमा "परदेसी" भनिएको छ । यसबाट उनीहरू जयप्रकाश मल्लकहाँ हालै मात्र बस्न आएथे भन्ने स्पष्ट छ । उनीहरूले कुनै काममा जय-प्रकाश मल्ललाई मद्दत पनि गरेको देखिन्छ । यसै हुँदा कृष्ण भट्टको विर्ता हरी यी चार जना गिरिहरूलाई संयुक्त रूपमा दिइएको देखिन्छ ।

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १०१६
२. 'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. २३–२५
३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. १०५७–१०६०
४. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११२१–११२६
५. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११२६–११३१

केही काल उक्त कुवेर गिरिहरूले सो बिर्ताको भोगचलन गरे । तर यत्तिकैमा जयप्रकाश मल्लको पतन भयो र श्री ५ पृथ्वीनारायण शाह कान्तिपुरभित्र पस्न समर्थ भए । "बिना तकसीर राजाले बिर्ता नहनु" भन्ने चलन त्यस बेला प्रचलित थियो । जयप्रकाश मल्लको दृष्टिमा श्री ५ पृथ्वीनारायण शाहसँग मिल्न जानु तकसीर ठहरिएको थियो र उनले बिर्ता हरेथे । तर अब श्री ५ पृथ्वीनारायण शाह नै सत्तामा आएका हुनाले कृष्ण भट्टको तकसीर बफादारीमा बदलिनु स्वाभाविक थियो । यसैले श्री ५ पृथ्वीनारायण शाहले गिरिहरूबाट बिर्ता खोसी कृष्ण भट्टका छोरा गणपति भट्टलाई लालमोहर गरी दिइयो । तर यस प्रसङ्गमा गिरिहरूलाई जयप्रकाश मल्लले गरिदिएको ताम्रपत्र खिँच्ने काम भने गरिएनछ । पछि श्री ५ प्रतापसिंह शाहको पालामा जग्गाको नापी हुँदा अघिका गिरिका वंशज बालगिरि राजगिरिले जयप्रकाश मल्लले गरिदिएको ताम्रपत्र देखाई यो जग्गा त हाम्रो हो भन्ने पारी जग्गा मेँठ्याएछन् । यसपछि भट्टले उजूर गरेछन् । अनि विचारी लक्ष्मीनारायणको इजलासले सो बिर्ता भट्टकै हो भन्ने ठहऱ्याएछन् ।

यसबीच राजदरबारमा एक काण्ड मच्यो । श्री ५ प्रतापसिंह शाहको मृत्युपछि राजमाता राजेन्द्रलक्ष्मीलाई सती पठाई अधिकार हात लाउने चेष्टा गुरुज्यू व्रजनाथ पण्डितले गरे । तर यत्तिकैमा बहादुर शाह आइपुगेका हुनाले पण्डितज्यूको योजना सफल भएन र उनी नेपालबाट निष्कासित गरिए; उनको सर्वस्व भयो ।[६] यस अवसरमा गिरिहरूले फेरि टाउको उठाएछन् उनीहरूले बिचारी लक्ष्मीनारायण त व्रजनाथका कार्वाही मुख्तियार हुन्; उनले हामीलाई अन्याय गरे भन्ने पारी अनि उही जयप्रकाश मल्लको ताम्रपत्र देखाई सो बिर्ता गिरिहरूले नै मिचो खाएछन् । यसपछि निकै वर्षसम्म यो बिर्ता गिरिहरूकै हातमा रह्यो ।

व्रजनाथ पण्डित निकालिँदा उनका चार वर्षका छोरा रङ्गनाथ पनि निकालिएका थिए ।[७] निकालिए पछि उनीहरू काशीमा बस्न थालेथे । रङ्गनाथ काशीमै हुर्केका हुनाले उनले अध्ययन गर्ने सुविधा पाएथे । वि.सं. १८५७ मा स्वामी महाराज रणबहादुर शाह काशी पुगेपछि रङ्गनाथहरूको भाग्य फेरि जाग्यो । काशीमा श्री ५ रणबहादुर शाहलाई आवश्यक मद्दत रङ्गनाथहरूले गरेका हुनाले उनी रङ्गनाथदेखि प्रसन्न थिए ।[८] श्री ५ रणबहादुर शाह काशीबाट नेपाल फर्केपछि रङ्गनाथहरू पनि उनीसँगै नेपाल फर्के । अब उनीहरू "पण्डितराज" कहलाए ।[९]

---

६. 'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. ४०–४१

७. 'ऐतिहासिक पत्र संग्रह' (पहिलो भाग), पृ. ४१

८. चित्तरञ्जन नेपाली 'ज. भीमसेन थापा र तत्कालीन नेपाल' पृ. २५५

९. योगी नरहरिनाथ 'इतिहास प्रकाश' अङ्क, १, पृ. १४६

यस ताम्रपत्रमा व्रजनाथलाई पनि "पण्डितराज" भनिएको हुनाले[१०] यो ताम्रपत्र गराउनामा पण्डितराज रङ्गनाथको हात छ भन्ने अनुमान सजिलैसँग गर्न सकिन्छ। रङ्गनाथहरू नेपाल फर्केपछि भट्टले व्रजनाथकाण्डमा गिरिहरूले गरेको थिचोमिचोको कुरा उनीसँग उठाए-छन् र यस विषयमा सांढे वैद्यको इजलासमा फेरि विचार गराई विर्ता भट्टकै हो भन्ने ठह-याइएछ। जयप्रकाश मल्लले गरिदिएको ताम्रपत्र पहिले नै खिँचिएको भए यो कलह उठ्ने नै थिएन। वि.सं. १८६२ मा आएर मात्र जयप्रकाश मल्लको सो ताम्रपत्र खिँचियो र विवादको जड उखेलियो।

जग्गाजमीनसम्बन्धी मुद्दामामिलाको छिनफान गर्ने अधिकार लिच्छविकालका शासकहरूले स्थानीय पाञ्चालीलाई सुम्पने नीति लिएका थिए।[११] यसै परम्पराअनुसार मध्यकालमा पनि यस्ता मुद्दाहरूको छिनफान पञ्चप्रमानको वेखरेखमा गरिन्थ्यो। साथै पञ्चप्रमानको मद्दतको लागि सरकारतर्फबाट विचारीको नियुक्ति गरिन्थ्यो।[१२] यही परम्पराअनुसार शाहकालको न्यायव्यवस्थामा विचारीको प्रमुख स्थान रह्यो। श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई गद्दीमा राखी श्री ५ रणबहादुर शाहले बाँधेका स्थितिहरूमा विचारीको कामकर्तव्यको उल्लेख गर्दा पञ्चहरू राखी विचारीले निष्पक्षसँग मुद्दा मामिलाको छिनफान गर्नू भनी स्पष्टसँग तोकिएको छ।[१३] यसै हुँदा यस पत्रमा भट्ट र गिरिहरूको जग्गासम्बन्धी मुद्दाको छिनफान विचारीको वेखरेखमा भएको उल्लेख ठाउँठाउँमा आएको हो। लक्ष्मीनारायण पहिले विचारी थिए, पछि उनी डिट्ठा बनेका थिए। साथै उनी श्री ५ रणबहादुर शाहको पालामा "साढेवैद्य" बनाइएका थिए यस ताम्रपत्रमा उल्लिखित साढेवैद्य लक्ष्मीनारायण हुन् भन्ने देखिन्छ।[१४]

यसरी तात्कालिक केही कुरा बुझ्न यो ताम्रपत्र उपयोगी रहेको छ।



१०. तात्कालिक पत्रमा व्रजनाथलाई 'पण्डितराज' भनिएको पाइदैन; 'पण्डित' मात्र भनिएको पाइन्छ।
'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग) पृ. ३६–४३

११. 'लिच्छविकालका अभिलेख' पृ. १५०–१५२

१२. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. १५६

१३. 'श्री ५ रणबहादुर शाह' पृ. १२६
यो अभिलेख माथि गइसकेको छ

१४. 'इतिहास प्रकाश' अङ्क १, पृ. ७३–७४

[ १२१ संख्या ]

# पशुपति-भण्डारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरीराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरदावली-विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गीर्वाण-युद्धविक्रम

२. साह वहादुर सम्सेर जङ्देवानाम् सदा समरवीजयीनाम् ... आगे सोभा-वति ब्राह्मणिके सम्वत् १८६१ साल फागुन शुदि ६ रोज ५ य-

३. स दिनमा श्रीविष्णु प्रिति गरि श्रीवुवाज्यूका कांछा विवाहमा संकल्प भयाका षेतमध्ये षेत ३ घड्यारि रोपनि १५ कुश डल्लो संकल्प विर्त्ता वित्तलपको मोहोर तावा-

४. पत्र गरिवक्स्यौं, यस्मध्ये पाटनको अम्वल कंगलषेत रोपनि पाच ५ पूर्व पश्चिम उत्तर दषिन प्रजाको सुनाविर्ता लुहुकिल दफे वाकडो षोलो रोपनि ४॥ पूर्व

५. दषिन उत्तर प्रजाको सुना विर्ता लुहुकिल पश्चिम बाटो लुहुकिल दफे संघुपषषेत रोपनि ६ पूर्व दिपमाला श्रीमच्चिन्द्रनाथको गुठि लुहुकिल दषिन पश्चिम प्र-

६. जाको सुना विर्ता लुहुकिल उत्तर मुल वाटो लुहुकिल दफे ईकोहिट्टिव्याक-समेत् रोपनि १॥— पूर्व पश्चिम उत्तर दषिन प्रजाको सुनाविर्ता लुहुकिल दफे चुगल वा-

७. कसमेत रोपनि ४ पूर्व दषिन उत्तर प्रजाको सुनाविर्ता लुहुंकिल पश्चिम कुलो लुहुकिल दफे मासिल बाटोमनि माथि रोपनि ३।— पूर्व दषिन पश्चिम उत्तर पाटन्या

८. प्रजाको सुनाविर्ता लुहुकिल दफे ममठु रोपनि ३ पूर्व दषिन पश्चिम उत्तर प्रजाको सुनाविर्त्ता लुहुकिल दफे बुषनाषेल रोपनि २।। पूर्व पश्चिम उत्तर प्रजाका सु–

९. नाविर्ता लुहुकिल दषिन लमचाको सांध लुहुकिल दफे व्याङ्गाल रोपनि २।== पूर्व दषिन प्रजाको सुना विर्ता लुहुकिल पश्चिम कुलो लुहुकिल उत्तर बाट्टो लुहुकिल द–

१०. फे वेंचो रोपनि १ पूर्व दषिन उत्तर प्रजाको सुनाविर्ता लुहुकिल पश्चिम रैकर लुहुकिल दफे ढपाल रोपनि ३ पुर्व पश्चिम उत्तर दषिन प्रजाका सुनाविर्ता लुहुकिल दफे घु–

११. सिंषेल रोपनि १ पूर्व दषिन प्रजाको सुनाविर्ता लुहुकिल पश्चिम उत्तर बाटो लुहुकिल दफे ईमाडोल रोपनि २ व्वाकसमेत् पूर्व ऊफड्याङ् लुहुकिल दषिन.

१२. पाटन्या प्रजाको सुनाविर्ता लुहुकिल पश्चिम बाटो सुनाविर्ता लुहुकिल उत्तर वाडाको विर्ता लुहुकिल दफे सैवुग्वाषट् रोपनि १९। पूर्व मुल बाटो लुहुकिल दषिन रैकर–

१३. लुहुकिल पश्चिम प्रजाको सुनाविर्ता लुहुकिल उत्तर दयालक्ष्मि ब्राह्मणिको विर्ता लुहुकिल दफे नाइषेल रोपनि २ पूर्व पश्चिम उत्तर दषिन रैकर लुहुकिल दफे

१४. सैवुग्वाषंट् रोपनि ६ पूर्व रैकर लुहुकिल दषिन लुहुकिल पश्चिम मुल बाटो लुहुकिल उत्तर गंगा ब्राह्मणिका विर्ता लुहुकिल दफे वाग्णेश्वरटार रोपनि

१५. ९ पुर्व पश्चिम उत्तर दषिन रैकर लुहुकिल दफे वमडु रोपनि १।। पूर्व गोदावरि षोला लुहुकिल दषिन कुलामुनिको लुहुकिल पश्चिम उत्तर प्रजाका सुना विर्त्ता

१६. लुहुकिल दफे पडेक्वाजु रोपनि ३ पुर्व पश्चिम उत्तर दषिन पाटन्या नेवारको

सुनाविर्ता लुहुकिल दफे मिलषु रोपनि १॥। पूर्व हरिसिद्धिको मुल बाटो
१७. लुहुकिल दषिन पश्चिम उत्तर प्रजाको सुनाविर्ता लुहुकिल दफे षंगडोल
रोपनि ८ पूर्व षोलो लुहुकिल दषिन पश्चीम उत्तर प्रजाको सुनाविर्ता लुहु-
किल येति चा–
१८. र किल्लाभित्र षेत रोपनि पचहत्तरि ७५ घडेरि रोपनि १५ कुस विर्ता
वित्तलप जानि संतान दर्संतानपर्जंत सुषभोग्य गर. यो विर्ता वक्संदा
संकल्प वाक्यवक्ता
१९. प्रोहित जदुनाथ अर्ज्याल पानि हाल्न्या काजि भिमसेन थापा संधियार
कासि (राम) पाडे भानु पाध्या षनाल ज्योतिकर अर्ज्याल श्रीनाथ पंथ
वंसविर्राना हरिवंस
२०. वोहोरा भास्कर पाध्या दुगल धनवन्त जगतसिंजु षग्त सान्या षवास सहेर्वासि
चार किल्लाभन्दा अर्घ्यालो विर्तवारले नचापनु विना तक्सीर सर्कारबाट न-
२१. हुनु. माटो बेचदा सर्कारमा साधनु. सर्कारमा नलिया अन्यत्र बेचनु. जो
यस बन्देजमा रहोईन सो यस श्लोकमा भन्याको पातकि होला. स्वदत्ताम्
प–
२२. रदत्ताम्वा यो हरेच्च वसुन्धराम्, षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमि,
ईति सम्वत् १८६२ साल मिति श्रावण वदि १० रोज १ शुभम् –

व्याख्या–

श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट वि.सं. १८६२ मा शोभावती ब्राह्मणीको नाउँमा यो ताम्रपत्र गरिदिइएको हो । यसमा कुशविर्ता दिइएका जग्गाहरूका चारकिल्ला खुलाई दिएका छन् । विर्ता दिई गरिएका ताम्रपत्रहरूमा प्रायः यस्तै कुरा परेका हुन्छन् । यस्ता ताम्रपत्र-हरूमा सो विर्ता किन दिइएको हो भन्ने कुरा पनि संक्षेपमा खुलाइएको हुन्छ । यस ताम्रपत्रमा पनि शोभावती ब्राह्मणीलाई कुशविर्ता दिनाको प्रसङ्ग खुलाइएको छ । जुन कुरा चाखलाग्दो छ । यस ताम्रपत्रमा "सम्वत् १८६१ साल फागुन शुदि ६ रोज ५ यस दिनमा श्रीविष्णु-प्रिति गरि श्रीबुबाज्यूका कांछा विवाहंमा संकल्प भयाका षेत" भन्ने उल्लेख परेको छ । यस-बाट स्वामी महाराज रणबहादुर शाहले काशीबाट फर्केपछि विवाह गरेका रहेछन् भन्ने थाहा

पाइन्छ । तात्कालिक प्रसिद्ध ज्योतिषी लक्ष्मीपति पाँडेको टिपोटबाट पनि उक्त कुराको पुष्टि हुन्छ ।[१] लक्ष्मीपति पाँडेले आफ्ना पात्रामा स्वामी महाराजले दुइ विवाह गरेको कुरा यसरी टिपेका छन्–

"विक्रमसंवत् १८६१ वैशाष कृष्ण प्रतिपदा ( वैशाख १५ गते ) श्रीस्वामिनो विवाह"
"विक्रमसंवत् १८६१ फाल्गुन शुक्ल सप्तमी ( फाल्गुन २६ गते ) श्रीस्वामिनो विवाह"

वाग्वतीको भीमसेन थापाको स्तम्भलेखमा वाणीविलास पण्डितले श्री ५ रणबहादुर शाहका कान्छा महारानी ललितत्रिपुरसुन्दरी हुन् भन्ने कुरा "इनै रणबहादुर साह महाराजाधिराजका श्रीललितत्रिपुर सुन्दरीदेवी कान्छा महारानी हुनुभयो" भनी लेखेका छन् ।[२] यस ताम्रपत्रमा "श्रीबुबाज्यूका कांछा विवाहमा" भन्ने उल्लेख परेको छ । यसबाट वि.सं. १८६१ फाल्गुनमा भएको स्वामी महाराजको विवाह ललितत्रिपुरसुन्दरीदेवीसँग भएको हो कि भन्ने अनुमान हुन्छ ।[३]

जे होस्; तात्कालिक अलिकता कुरा बुझ्न यो अभिलेख पनि उपयोगी नै रहेको छ । यस ताम्रपत्रमा साक्षी बस्ने भारादारहरुप्रति दृष्टि दियौं भने भीमसेन थापाको उदय र पुराना अरू भारादारको पतनको झलक पनि हामी यताबाट पाउन सक्छौं ।



१. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. ४४

२. यो अभिलेख तल आउँदैछ ।

३ पण्डित सुन्दरानन्दले काशीबाट फर्केर काठमाडौं दरबार पसेपछि श्री ५ रणबहादुर शाहको सबभन्दा पहिले ललितत्रिपुरसुन्दरीसंग भेट भएको देखाएका छन् । तर यो वर्णन प्रामाणिक छैन जस्तो देखिन्छ ।
'त्रिरत्नसौन्दर्यगाथा' पृ. १८३

[ १२२ संख्या ]

# लम्जुङको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

लम्जुङका भैरवप्रसाद मिश्रसंग केही ताम्रपत्र रहेका छन्। तिनमध्ये एउटामा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८६२ दिइएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि-विराजमान मानोन्न-

२. त श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रम साह बहादुर सम्सेर जङ् देवा-

३. नाम् सदा समरविजयीनाम् – – – आगे नन्दु मिश्र वैद्यके सम्वत १८६२ साल मिति पौष

४. वदि १० रोजका दीन खड्ग्रहशान्तिमा संकल्प भयाका षेतमध्ये षेत २ घड्यारि रोपनि १४ कुश डल्लो

५. संकल्प विर्ता वितलपका मोहोर तावापत्र गरिवक्स्यौ. यसमध्ये ताकुका अम्वल माटो र डंम्रिषेत दु–

६. इ २ घड्यारि रोपनि यघार ११ समेत तस्को साध पुर्व रैंकर आलि वाटो प्रषालको लुहुकिल दषिन

७. रैंकर ठाडो आलि लुहुकिल पश्चिम ठाडो आलि रैंकर लुहुकिल उत्तर रैंकर पाषो डहर कांह्ला लु–

८. हुकिल यतिभित्र मुलको पानि वरोवर लगाउनु औ गाउं घड्यारि उपली सिकर रोपनि ३ सांध पू–
९. र्व रैकर वाटो सालको पेद लुहुकिल दषिन रैकर भिरका टाउकाको सांध लुहुकिल पश्चिम रैक–
१०. र सालको फद वाज थला मनि पषेराको लुहुकिल उत्तर ठाडो वाटो लुहु-किल येति चार
११. किलाभित्रको षेत र घड्यारि रोपनि १४ कुशविर्ता वितलप जानि सन्तान वर्शन्तानपर्यन्त सुषभोग्य
१२. गर. यो विर्ता वक्सदा संकल्पवाक्य पढ्न्या प्रोहित यदुनाथ अर्ज्याल पानि हालन्या काजि भिमसेन थापा संघी–
१३. यार श्रीनिधि पंथ बंसविर्राना श्रीनाथ अर्ज्याल भानु पाध्या वनाल कासि-राम पाडे हरिवंश वोहोरा कृस्नान–
१४. न्द पाध्या रिमाल अमलि अहिवर्ण कार्कि डगोल महर्तसिं अमृतसिं महि-न्द्रसिं गरि जेठावुढा गंगाध–
१५. र घिमिन्या माधौ भट्ट रामकृस्न जैसि जगन्नाथ अधिकारि हेमनिधि पांडे हर्कदेउ पोषन्याल सदाशि–
१६. व रेग्मि ललितावल्लभ ढकाल राजाराम पंथ चन्द्रशेषर पंडित भुवनेश्वर पाध्या कालु सेढा–
१७. त्रि चार कीलाभन्दा अर्घ्यालो वित्तवारले नचापनु, विना तक्सिर सर्कारबाट नहर्नु. जो य–
१८. स बन्देजमा रहोइन, सो यस श्लोकमा भन्याको पातकि होला. स्वदत्ताम् परदत्ताम्वा यो
१९. हरेत वसुन्धराम्, षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमि इति

व्याख्या–

श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट वि.सं. १८६२ मा नन्दु मिश्र वैद्यलाई कुशविर्ता दिई यो ताम्रपत्र गरिदिइएको हो। यसमा लमजुङ तांकुमेकका जग्गा दान दिइएको कुरा परेको

छ। यसमा दान दिइएका जग्गाका चारकिल्ला पनि खुलाइएका छन्। यसबाट ताकुमेकका जग्गाको प्रकार बुझ्न केही मद्दत पाइन्छ ।

यी नन्दु मिश्र वैद्यको विशेष परिचय प्राप्त गर्न सकिएको छैन। वि.सं. १८५५ को पशुपतिको प्रसिद्ध ताम्रपत्रमा सही हाल्ने भारादारहरूमा यी नन्दु मिश्र पनि थिए।[1] यसबाट त्यस वेला राजदरबारमा प्रवेश पाएका भारादारमध्ये यिनी पनि थिए भन्ने थाहा पाइन्छ। यस ताम्रपत्रमा नन्दु मिश्रलाई "वैद्य" भनिएको छ। नन्दु मिश्रका वंशजहरू अझै पनि वैद्यवृत्ति गर्दछन्। त्यस वेला वैद्यहरूले कायचिकित्साबाहेक ग्रहशान्ति आदि कार्य पनि गर्दथे भन्ने संकेत यस अभिलेखबाट पाइन्छ। यस अभिलेखमा "आगे नन्दु मिश्र वैद्यके सम्वत् १८६२ साल मिति पौष वदि १० रोजको दीन लङ्ग्रहशान्तिमा संकल्प भयाका षेत" भन्ने उल्लेख परेको छ। पशुपतिको १८५५ सालको प्रसिद्ध ताम्रपत्रमा साँढे वैद्यले गर्ने काममा यस्तै ग्रहशान्ति आदिको पनि चर्चा परेको छ।[2]



१. पशुपति–भण्डारमा नन्दु मिश्रको धर्मपत्र रहेको छ।
२. पशुपतिको उक्त अभिलेख माथि गइसकेको छ।

[ १२३ संख्या ]

# मुक्तिनाथको सुवर्णप्रभाको अभिलेख

मुक्तिनाथको प्रसिद्ध मन्दिरको ढोकाको बार्यापट्टि रहेको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८६३ दिइएको छ।

'सन्धिपत्रसंग्रह'को ६५८ पृष्ठमा योगी नरहरिनाथद्वारा यो प्रकाशित भएको छ।

## मूलपाठ

पृथ्वीनारायणोभून्नरपतिमुकुटश्रेणिनीराजितांघ्रि
तत्सूनुः कीर्तिवर्मा नरपतितिलको नाम सिंहप्रतापः।
तस्माच्छ्रीचक्रवर्तिह्यजनि रणबहादुरसाहः प्रतापी
तत्कान्ता श्रीस्वरूपा जगति जयति सा स्वर्णपूर्वा प्रभाख्या ॥१॥
शाके श्रीवारुणाक्षारुणशशियुते ईश्वराब्दे शुचौ मा-
से शुक्ले वासरेऽस्मिन् त्रिदिवपतिगुरोर्गौरीतिथौ पुष्यभे।
व्याघाते श्रीधर्मशाला त्रिभुवनपतेर्मुक्तिनाथस्य प्रीत्यै
श्रीस्वर्णप्रभा यान्नदानसहिता देव्या तया निर्मिता ॥ २ ॥
श्रीरणोद्योतसाहः समशेरसाह एव च।
पुत्रौ यस्याः प्रवर्तेते मुक्तिनाथस्य सेवया ॥३॥
मुक्तिनाथचरणाम्बुजयुग्मार्चनार्थसमुपागतनृणाम्।
अन्नदाननिवसत्यभिसिद्ध्यै कर्मणेष वरदोस्तु मुनेश ॥४॥

सिद्धिरस्तु, तत्सत् अद्य ब्रह्मणो द्वितीयपरार्धे स्वेतवाराहकल्पे वैवस्वत मन्नोंतर कलियुगस्य प्रथमपादे जांम्बुद्विपे भारथवर्षे आर्ज्यावर्तस्य हेमवत दक्षिनपावे मुक्तिक्षेत्रे इहंव पुन्नभुमौ मासोत्तममासजेष्ठमासे सुक्लपक्षे त्रितीयापरे तिथौ बृहस्पतिवासरे चन्द्रमसि कासिवगोत्रायाः श्रीसोवर्णप्रभादेव्या कायिकवाचिकमानसिकपापमोचनार्थं आयुरारोग्यजनधनलक्ष्मी–तिसन्तानवृद्धयर्थे ईहलोक अर्थधर्मकाममोक्षप्राप्त्यर्थं परलोकशिवलोकप्राप्तिकामनया ॥

आहादेषि बेससाधा. शाके सम्वत् १७२८ नेपालसम्वत् ९२६ विक्रमसम्वत् १८६३ सालमाहा श्रीमहारानी सोवर्णप्रभादेवीले श्रीमुक्तिनाथप्रिति गरि धर्मशाला बनाई सदावर्त राष्या. यो सदावर्तको जगा राषु दोवा गाउ वुइ षेत सय पचिस मुरि तिस २५३० तसको साध पूर्व पर्वत कालिगंडकि पश्चिम काम षोलो उत्तर भुज्यालगढि दक्षिन ठुलो सिमलदेषि अघिबाट सानु षोलो कालिगंडकिको दोभान् पूर्व कदुञ्ज्या षोलो पश्चिम पर्छ. (चा)जंभुमि उत्तर बुढोचि दक्षिण निगलपानि यति साधभित्रको ग्रामदानि बालिले सदावर्त ब्रामन सन्नासी अतित अभ्यागत मागन्याहरूकन तपसिल जनहि चामल माना २ दालमुठि ५ नुन तोला ४ घिउ तोला ४ हर्दि मासा २ दाउवा येति यति सर्जामबमोजिम दिनु.

यसमा लोभानि पापानि जसले गर्ला. तसलाइ पंचमहापातक लागला. लेष्याबमोजिमका सराजाम दिया हुंदि पंचायेन देवताको सुदृष्टि. यो सदार्वत धर्मशाला जसले हर्न बिगार्नमा पसला. तसलाइ चन्द्र सूर्य छंज्याल नरकवास होला. शुभम् ॥

## अनुवाद

राजाहरूका शिरपेचले पाउ झलमल्ल भएका पृथ्वीनारायण शाह हुनुभयो। उहाँका छोरा कीर्ति फैलिएका राजाहरूमा टीका जस्ता सिंहप्रताप शाह हुनुभयो। उहाँबाट प्रतापी चक्रवर्ती राजा रणबहादुर शाह हुनुभयो। उहाँकी महारानी लक्ष्मी जस्ती सुवर्णप्रभा हुनुहुन्छ।

शकसंवत् १७२८ ( विक्रमसंवत् १८६३ ) ज्येष्ठ शुक्ल तृतीया बृहस्पतिवार पुष्यनक्षत्र

आयातप्रयोगको दिन तीनै भुवनका अधिपति मुक्तिनाथलाई प्रसन्न पार्न श्रीसुवर्णप्रभादेवीले धर्मशाला बनाउन लाउनुभयो; सदावर्तको पनि बन्दोबस्त गर्नु भयो ।

मुक्तिनाथको सेवाले गर्दा जुन सुवर्णप्रभाका श्रीरणोद्योत शाह र श्रीसमरशेर शाह दुइ छोरा हुनुहुन्छ ।

मुक्तिनाथका चरणकमलको पूजाको लागि आएका मानिसहरूलाई खान, बस्न सुविधा होस् भनी गरिएको यस धर्मकर्मले मुक्तिनाथ प्रसन्न भई वरदान दिऊन् ।

सिद्धि होस् । आज ब्रह्माको द्वितीय परार्ध, श्वेतवराहकल्प, वैवस्वत मन्वन्तर, कलियुगको पहिलो पाउमा, जम्बूद्वीप भारतवर्ष आर्यावर्तमा, हिमालयको दक्षिण फेदी मुक्तिक्षेत्र यहीँ पुण्यभूमिमा, उत्तम महीना ज्येष्ठ शुक्ल तृतीया बृहस्पतिवारमा, काश्यपगोत्रकी श्रीसुवर्णप्रभादेवीले शरीर वचन र मनसम्बन्धी पापबाट मुक्ति पाउनाको लागि, आयु आरोग्य जन धन लक्ष्मी सन्तानको वृद्धि होस् भनी यस लोकमा धर्म अर्थ काम मोक्ष प्राप्ति र परलोकमा शिवलोक प्राप्ति होस् भनी ( यो धर्म कर्म गरिएको हो । )

व्याख्या—

गण्डकीप्रदेशको हिमालीभेकमा स्थित मुक्तिनाथको मन्दिर नेपालका प्रख्यात देवस्थलमध्ये एक हो । मुक्तिनाथको प्रसिद्धि नेपालबाहिर भारतभेकमा पनि केही फैलिएको छ । नेपालका बाहेक भारतका पनि दर्शनार्थीहरू यहाँ आउँथे । विशेष गरी जोगी संन्यासीहरू आउँथे । मुक्तिक्षेत्रमा आउने यात्रीहरूको लागि धर्मशाला र सदावर्तको आवश्यकता हुनु स्वाभाविक छ । यस्तै आवश्यकताको अनुभव गरी सुवर्णप्रभादेवीले मुक्तिनाथमा धर्मशाला बनाई सदावर्तको बन्दोबस्त गरी यो अभिलेख कुँदाइएको हो । दुर्गमस्थल मुक्तिनाथमन्दिरको ढोकानिर रहेको यो अभिलेख अलि अशुद्ध रूपमा कुँदिएको छ तापनि यस अभिलेखको महत्त्व कम छैन । यस अभिलेखले एकातिर सुवर्णप्रभादेवीको धार्मिक प्रवृत्ति, लोकको उपकार होस् भन्ने भावनालाई दर्शाइरहेको छ भने अर्कोतिर नेपालको एकीकरणपछिको सांस्कृतिक उत्थानको झलक पनि अलिकता यस अभिलेखबाट पाइन्छ । मुक्तिक्षेत्र उहिले चौबीसीराज्य अन्तर्गत थियो । त्यस बेला पनि त्यहाँ दर्शनार्थी कष्टसाथ पनि केही पुग्दथे । वि.सं. १८४३ मा पर्वतराज्य विजयपछि मुक्तिक्षेत्र एकीकृत विशाल नेपालअन्तर्गत रह्यो । अनि यस क्षेत्रमा दर्शनार्थ जाने यात्रीहरू बढ्नु स्वाभाविक थियो । यसैले मुक्तिक्षेत्रमा दर्शनार्थ आउने यात्रीहरूको लागि बस्न, खान सुविधा होस् भनी धर्मशाला, सदावर्तको बन्दोबस्त गर्ने काम शाह

राजा र राजपरिवारबाट हुन थाल्यो । सुवर्णप्रभादेवीबाहेक श्री ५ रणबहादुर शाह र श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट पनि मुक्तिक्षेत्रका यात्रीहरूको लागि सुबिधा होस् भनी गरिएको बन्दोबस्तको उल्लेख तल आउने ताम्रपत्रमा परेको छ ।

यस्ता सदावर्तको उपयोग प्रायः सबै तहका मानिसले गर्न पाउँथे । यस अभिलेखमा ब्राह्मण संन्यासी अतिथि अभ्यागत र माग्नेहरूले उपयोग गर्न पाउने कुराको चर्चा छ । साधारण नेपालीले खाने राम्रो पर्याप्त खानाको बन्दोबस्त यस्ता सदावर्तमा भएको हामी पाउँछौं । यस अभिलेखमा पनि दुइ माना चामल, पाँच मुठी दाल, चार तोला नुन, चार तोला घिउ, दुइ मासा हलेदो र दाउरासमेत सदावर्तको रूपमा दिने उल्लेख परेको छ । यसरी यस्ता धर्मकर्मले बहुसंख्यक यात्रीहरूलाई सुबिधा हुने स्पष्ट छ ।



[ १२४ संख्या

# पशुपति-भण्डारको गीर्वाणयुद्धविक्रम शाहको पालाको अभिलेख

'कन्ट्रिब्युशन्ज् टू नेप्लिज् स्टडिज्' वर्ष १ अंक २ को १०५ पृष्ठमा टेकबहादुर श्रेष्ठद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

श्रीदुर्गाज्यू

१. स्वस्ति श्रीशाके १७२८ श्रीसम्वत १८६३ साल मिति आश्विन शुक्ल पंचमी ५ गुरुवा–
२. सरेः तद्दिने लिषित. श्रीबुद्धिरेषा गोदार्नी आगे मेरा पेवा धनमध्ये मेरा ग–
३. लाका विजवन्दसमेत सुनाको विज लोतहा. थाल वटुको. पनिउ. डाडु. को–
४. परा. दियो. थाक्रो. कांग्यो. चुल्यासि. स्यांगी. गागृ. षर्कडो. यति वस्तु श्रीपशुपतिमा
५. प्रीति गर्‍यां. धनावति कमारि. मेरा पेवा १५ रूपैयाले किन्याकि पार ग–
६. रिदियां यस पत्रका साछि मेरा छोरा राजवल थापा र छोरी ३ बुहारि १
७. नानि २ समेत उद्यतवेव नारायन पाध्या ढुंगाना. कविराज भंडारि
८. एति धनमा लोभानि पापानि जो गर्ला श्रीपशुपतिको कुद्रिष्टि पंचमा–
९. हापातक लागला. पत्रलेखक साछि शक्तिवल्लव दे(व)कोटा ईति शु–
१०. भमस्तु.

व्याख्या–

पशुपति-भण्डारमा रहेका सयौं ताम्रपत्रहरूमध्ये केही ताम्रपत्र पशुपतिनाथलाई भाँडा-कुँडा आदि सरसामान चढाई कुँदाइएका पनि छन्। तिनलाई केलाई उपयोगी केही ताम्रपत्र यस संकलनमा समावेश गरेका छौं। केही त्यस्ता ताम्रपत्र माथि गइसकेका छन्; एउटा यो पनि हो। यस ताम्रपत्रमा वि.सं. १८६३ मा बुद्धिरेखा गोदारनीले आफ्नो अंशमध्येका केही वस्तु पशुपतिनाथलाई चढाएको कुरा परेको छ। हाम्रो यहाँ राजा तथा प्रजाले आफ्ना भाँडा-कुँडा आदि सरसामान पशुपतिनाथलाई चढाएको उल्लेख निकै अघिदेखि पाइन्छ। कति राजाले त आफ्नो सारा सम्पत्ति नै पशुपतिनाथलाई चढाएको उल्लेख पनि हामी पाउँछौं। उदाहरणार्थ राजा अनन्तमल्लको घटनालाई देखाउन सकिन्छ। वि.सं. १३६४ मा राजा अनन्तमल्लले आफ्नो समस्त सम्पत्ति पशुपतिनाथलाई चढाई एक किसिमले राजकाजबाट संन्यास नै लिएथे। यस कुराको उल्लेख गोपालराजवंशावलीमा परेको छ।[1] यो परम्परा पछिसम्म कायम रहेको थियो। बुद्धिरेखा गोदारनीले सोही परम्पराको अनुसरण गरी आफ्ना सरसामान पशुपतिनाथलाई चढाएकी हुन्।

यस ताम्रपत्रमा अर्को एक उल्लेखनीय कुरा परेको छ। बुद्धिरेखाले आफ्नो सम्पत्तिको एक अंश पशुपतिनाथलाई चढाएको सिलसिलामा धनावती नामकी एक कमारी पनि पार गरिदिइएकी रहेछ। दासप्रथाअनुसार कमारा कमारी पनि आफ्नो सम्पत्ति जस्तै मानिन्थ्यो। ऋण लिँदा कमारी धरौटी राख्ने चलन थियो। अंशबण्डा गर्दा दासदासीको पनि बाँडचुँड गरिन्थ्यो। दासदासीको किनबेच विधिपूर्वक हुन्थ्यो। दासदासीको किनबेच गर्दा "पञ्चभलाद-मीहरू" साक्षी राखी गरिन्थ्यो। पञ्चभलादमीहरूले नै कमारा कमारीको मूल्यनिर्धारण गर्थ्ये।[2] यस ताम्रपत्रमा "धनावति कमारि मेरो पेवा १५ रुपैयाले किन्याकि" भनी मूल्यसमेत खुला-इएको छ। यसबाट त्यस बेला एक कमारीको प्रचलित मूल्यको हामी झलक पाउँछौं। यहाँनिर तुलना गर्ने योग्य कुरा के छ भने त्यसताका एक घोडाको मूल्य ५० देखि ६५ रु. सम्म पर्दथ्यो।[3] मानिसको मूल्य भने निकै कम पन्ध्र रु. मात्र रहेछ। तुलना त्यस बेलाको १ रु. अहिलेको एक सय रु. भने जस्तै पर्न आउँछ। तैपनि मानिसको मूल्य निकै थोरै रहेको तथ्य यसबाट झल्किन्छ।

---

१. 'पूर्णिमा' ४ पूर्णाङ्क, पृ. ३७

२. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ६३

३. 'दोलखाको ऐतिहासिक रूपरेखा' पृ. ५४

हाम्रो यहाँ लिच्छविकालदेखि नै अन्तको तुलनामा दासप्रथा कम थियो तापनि दास-प्रथाको अस्तित्व यहाँ थियो । श्री ५ पृथ्वीनारायण शाह आदि शासकहरूले दासप्रथालाई रोक्ने केही चेष्टा गरेका थिए[४] तापनि यसको अस्तित्व चन्द्रशमशेरको समयसम्म रह्यो । तर उदार व्यक्तिहरू आफ्ना दासदासीहरूलाई स्वेच्छाले मुक्त पनि पारिदिन्थे । यस कुराका उदाहरण केही पाइन्छन् । यस ताम्रपत्रले पनि उक्त कुराको पुष्टि गरेको छ ।



४. 'ऐतिहासिक पत्रसंग्रह' (पहिलो भाग ) पृ. २७

[ १२५ संख्या ]

# पशुपतिको भोट्टु पाँडेको अभिलेख

पशुपतिनाथको मन्दिरको दक्षिणपट्टि रहेको श्री ५ रणबहादुर शाहको सालिकको पाद-पीठमा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८६३ दिइएको छ।

'संस्कृतसन्देश' वर्ष १ अङ्क ६ को १८ पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ।

## मूलपाठ

वर्षे वह्निरसेभेन्द्रधरणीसंख्यामिते माधवे
मासे देवगुरौ षडाननतिथौ पक्षे सिते सत्वरं।
साध्वी शंभुसरित्तटे रणबहादूरेण भर्त्रा समं
त्यक्त्वा देहमगाद् गिरीशपदवीं श्रीराजराजेश्वरी ॥

सम्वत् १८६३ साल आसिन सुदि १३ रोज मा यो सालीक श्रीकपर्दार भोटु पाँडेले बनाई चह्नायाको हो ॥ शुभम् ॥

## अनुवाद

वि.सं. १८६३ वैशाख शुक्ल षष्ठी बृहस्पतिवारको दिन, वाग्मतीको किनारमा पतिव्रता श्रीराजराजेश्वरी पति रणबहादुर शाहसँग सती गइन्; छिटो शिवपदमा पुगिन्।

व्याख्या–

कपर्दार भोटु पाँडे एकातिर समाजसेवामा सक्रिय व्यक्ति थिए भने अर्कोतिर उनी

अत्यन्त राजभक्त थिए। शाह राजा र राजपरिवारप्रति उनको आस्था र भक्ति उल्लेखनीय रहेको छ। राजकाजको दाउपेचदेखि टाढा रहेका भोटु पाँडे शाहराजपरिवारप्रति अत्यन्त भक्ति राख्दथे भन्ने कुराको पुष्टि यस अभिलेखले पनि गर्छ। स्वर्गवासी श्री ५ रणबहादुर शाहको सालिक पशुपतिमा स्थापना गरी त्यसको पादपीठमा यो अभिलेख कुँदाइएको हो।

यस अभिलेखमा भोटु पाँडेले विशेष गरी राजराजेश्वरीदेवीप्रति आस्था प्रकट गरेका छन्। हुन पनि पतिव्रता राजराजेश्वरीदेवीको चरित्र निकै उज्ज्वल र प्रभावशाली रहेको छ। शुरुदेखि अन्त्यसम्म पतिप्रति उनी कर्तव्यपरायण रहिन्। यद्यपि उनी प्रायः पतिद्वारा उपेक्षित नै रहिन्। तैपनि आफ्नो कर्तव्यपालनमा उनी कहिल्यै पछि परिनन्; पतिको लागि जस्तोसुकै जोखिमको कदम उठाउन पनि उनी पछि हटिनन्।

स्वामी महाराज रणबहादुर शाह काशीबाट नेपाल फर्केपछि राजराजेश्वरीदेवीलाई हेलम्बुमा निष्कासित गरेका थिए[१]। वि.सं. १८६३ वैशाख १५ गते श्री ५ रणबहादुर शाहको वध गरिए पछि हेलम्बुबाट आई राजराजेश्वरीदेवी सती गइन्। यसरी अन्तिम समयमा पनि राजराजेश्वरीदेवीले तात्कालिक धारणाअनुसार आफ्नो कर्तव्य पूरा पारिन्। कपर्दार भोटु पाँडेलाई राजराजेश्वरीदेवीको यस उज्ज्वल चरित्रले निकै प्रभाव पारेको देखिन्छ। यसै हुँदा श्री ५ रणबहादुर शाहको सालिक स्थापना गरी कुँदाइएको यस अभिलेखमा उनलाई भन्दा राजराजेश्वरीदेवीलाई बढी महत्त्व दिई वर्णन गराइएको छ।

यस सालिकको स्याहार संभार र अरु आवश्यक कुराको लागि भोटु पाँडेले निकै जग्गा गुठी पनि राखेका थिए। पशुपति भन्डारमा यससम्बन्धी ताम्रपत्र रहेको छ। सो अभिलेख तल आउँदैछ।



१. 'नेपालको संक्षिप्त इतिहास' पृ. १४६

[ १२६ संख्या ]

# पशुपतिको भोटु पाँडेको अभिलेख

पशुपतिनाथ-मन्दिरसँगै दक्षिणपट्टि रहेको प्रसिद्ध धर्मशिलामा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८६३ दिइएको छ।

'संस्कृतसन्देश' वर्ष १, अङ्क ४ को २७–२८ पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ।

## मूलपाठ

स्वस्ति श्रीसम्वत् १८६३ साल कार्तिक शुदि १५ रोज ४ तस दिनमा दक्षिणद्वारको धर्मशिला अधिका तावाका पाता बिग्रदा तस पातालाई थामी नया बनाई श्रीपशुपति प्रिति गरि श्रीकपर्दार भोटु पांडे पुत्र बलभञ्जन पांडे गरुडध्वज पांडे गजदल पांडेसहितले चह्रायाको हो. शुभम्

व्याख्या–

पशुपतिनाथको मन्दिरसँगै दक्षिणपट्टि धर्मशिलानामक प्रसिद्ध ठूलो शिला रहेको छ। यसलाई तामाको पाताले मोडिएको छ। हरेक पूर्णिमाको दिन पशुपतिनाथलाई महाभोग महाबलि यसै शिलामा राखी दिइन्छ। महाभोग दिइने समग्र सामग्री यहीँ विधिपूर्वक सिंगारेर राखिन्छन् अनि पवित्र सूत्रले पशुपतिनाथलाई र यस शिलालाई छुवाई महाभोग अर्पण गरिन्छ। भट्ट, पुजारीवर्गबाहेक अरूले पशुपतिनाथलाई छुनु वर्जित छ। तर यस धर्मशिलामा पशुपतिनाथको शिवत्व सारी स्पर्श र दर्शन सबैले गर्न पाउँछन्। यसरी सर्वसाधा-

रएको लागि यस धर्मशिलाको महत्त्व रहेको छ। मल्लराजाहरू राजनैतिक सन्धि गर्दा पनि त्यसमा स्थायित्व रहोस् भनी पशुपतिनाथको यो धर्मशिला छोई धर्म भाक्ने, शपथ खाने गर्दथे। यस कुराको उल्लेख मल्लकालका सन्धिपत्रमा आएको छ।[1] यसै हुँदा यस शिलाको नाम "धर्मशिला" रहन गएको देखिन्छ।

यसरी पशुपतिनाथको यस धर्मशिलाको धार्मिक महत्त्व ठूलो रहेको छ भन्ने स्पष्ट छ। यसै हुँदा तात्कालिक भारादारहरूमा सामाजिक कार्य गर्नामा अग्रणी रहेका कपर्दार भोटु पाँडेले उक्त धर्मशिलाको तामाको पाताको जीर्णोद्धार गरी यो अभिलेख कुँदाएका हुन्। भोटु पाँडेबारे माथि निकै लेखिसकेको हुनाले यहाँ दोहऱ्याउनु आवश्यक छैन। यस सानो तर उल्लेखनीय कृतिले भोटु पाँडेलाई अझ बढी स्मरणीय बनाएको छ भन्ने कुरामा सन्देह छैन।



---

१. डिल्लीरमण रेग्मी, 'मिडिइभल नेपाल' भाग ३. पृ. ७२,९०

[ १२७ संख्या ]

# पशुपति-भण्डारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदा-
२. वलिविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गी-
३. र्वाणयुद्धविक्रम साह वहादुर सम्सेर जङ् देवानाम् सदा समरविज-
४. यीनाम् ... ... ... ... आगे कपर्दार भोटू पाडेके तैंजिले श्रीबुबाज्यू-
५. को सालिक बनाइ श्रीपसुपतिका दक्षिण दरवाजामा राष्याको तस्को गुठि रा-
६. ष्नाकन हांम्रा हजुरमा विंति गरिस् र षेत ६ घड्यारि रोपनि सवा तेत्ति-
७. स् ३३। तेरातर्फबाट गुठि राष्नानिमित्त विर्ता वितलप गरि मोहर ताम्राप-
८. त्र गरिबक्स्यौं यसमध्ये सहर पाटनको अम्वल लुभुसेराको सहनडोल षेत
९. रोपनि यक्सय पचिस् १२५ ताकं षेत ५ तस्का साध पूर्व दषिन रैंकर
१०. सेरा आलि लुहुकिल पश्चिम मूलवाटको लुहुकिल उत्तर रैंकर पाषो आ-
११. लि सहनढल लुहुकिल औ सहर काठमाडौंको पकनाजोर षेत रोपनि
१२. तेइस् २३ ताके षेत मुरि ६२ तस्को साध पूर्व श्रीलोकनाथ पंडितज्यूका वां-
१३. धा षेतसितको लुहुकिल दषिन पकनाजोर बाभाको डिल लुहुकिल पश्चि-
१४. म् मूलवाटको लुहुकिल. उत्तर षोप श्रीतलेजुको षेत र. श्रीलोकनाथ पंडित
१५. ज्यूको वाधा षेत. वहिवु दल आलि लुहुकिल दफे वचिषेत रोपनि २ ताके
१६. षेत मुरि ८ तस्को साँध पूर्व पश्चिम उत्तर रैंकर लुहुकिल दषिन श्रीलो-

१७. कनाथ पंडितज्यूको वाधा षेतका अर्गलि लुहुकिल औ घड्यारी लुभुको अंचल
१८. नकधा पाषो रोपनि सवा तेत्तिस साघ पूर्व पाषो रैंकर लुहुकिल दषिन.
१९. सेराको लुहुकिल. पश्चिम. पाषा. रैंकर लुहुकिल उत्तर रैंकर षेत र
२०. वाटो लुहुकिल. येति चार किल्लाभित्र षेत ६ घड्यारि रोपनि सवा तेत्तिस्
२१. ३३। विर्त्ता वितलप जानि गुठि राष. यो जगाह् धर्मनिमित्त वक्स्यौं. कसैले लोभ
२२. राषि गुठि षण्डित गर्नामा पस्या श्रीपसुपतिको कुदृष्टि लागोस्. थाम्नामा पस्या सुदृष्टि
२३. लागोस्. मैले वक्संदाका साक्षि श्रीचौतरिया प्राण साह् श्रीचौतरिया रणउ–
२४. द्योत्साह् काजि रणजित पांडे काजि भिमसेन थापा काजि रणध्वज थापा. का–
२५. जि वहादूर भंडारी. काजि वालनरसिं कवर. षजांचि उदै गिरि. सधियार
२६. श्रीनाथ पंथ. श्रीभक्त अर्ज्याल. कासिराम पाडे. भानु पाध्या षनाल हरिवंस
२७. वोहोरा वंसविर्राना. भास्कर पाध्या. कृष्णानन्द पाध्या कृष्णानन्द पाध्या रिमाल
२८. डंगोल धन्त. धनउत्त. जगत. सिंजू. अम्वली अमृतनारान. भाजू देउ
२९. द्वान्या. अडै जग्यनारन डोट्याल. भवानिदास. गोवर्धन वैठक्या छोरा स–
३०. मेत. थरि रामकृष्ण पाध्या पौड्याल. वैजनाथ सावकोटा. विसं पाध्या.पू–
३१. र्ण भट्ट. प्रभानन्द लामिछान्या. रामेश्वर दगोल. धिर्जविर्रासिं धनवन्त
३२. प्रधान. इति सम्वत् १८६३ साल मिति माघ सुदि ८ रोज १

मार्फत प्राण साह् रुजु रणध्वज थापा मार्फत. वहादुर भंडारी
मार्फत. रणउद्योत साह रुजु रणजीत पांडे मार्फत वालनरसिं कुवर

व्याख्या–

श्री ५ रणबहादुर शाहको वध जुन अवस्थामा जसरी भयो; त्यो अवश्य पनि शोचनीय थियो। यसबाट उनीप्रति आस्था र भक्ति राख्नेहरूलाई दुःख हुनु स्वाभाविक थियो। श्री ५

रणबहादुर शाहको वधले दुःखी हुनेहरूमा कपर्दार भोटु पाँडे प्रमुख थिए । बाहिरी दुःख प्रकट गर्नेहरू त धेरै थिए । तर तिनीहरूमध्ये भोटु पाँडे भिन्नै प्रकृतिका थिए । उनले श्री ५ रण-बहादुर शाहप्रति रहेको आफ्नो आस्था र भक्तिलाई चिरस्थायी बनाउने सोचे । अनि श्री ५ रणबहादुर शाहको सालिक बनाई पशुपतिनाथको दक्षिण ढोकानिर स्थापना गरे । वि.सं. १८६३ आश्विनमा सो सालिक प्रतिष्ठा गरिएको थियो । सो सालिकको अभिलेख माथि पढ्न-सकेको छ ।

यसपछि श्री ५ रणबहादुर शाहको सो सालिकको स्याहार संभारको लागि भोटु पाँडेले अर्को कदम उठाए । सालिक स्थापनापछि त्यो स्थायी होस् भनी त्यसको लागि गुठी राख्नुपर्ने कुराको अनुभव भोटु पाँडेले गरे। हाम्रो यहाँ प्राचीनकालदेखि नै सांस्कृतिक, धार्मिक, लौकिक कति कुराको संरक्षणको अभिभारा 'गोष्ठी'लाई सुम्पने परम्परा थियो ।[१] गोष्ठीप्रथा शाहकालमा पनि पूर्ववत् कायम थियो । यसै हुँदा भोटु पाँडेले श्री ५ रणबहादुर शाहको सालिकको संरक्षणको लागि गुठी राखी यो ताम्रपत्राभिलेख कुँदाउन लाएका हुन् । आफ्नोतर्फबाट मात्र गुठी राख्दा त्यसको लोप हुने डर हुन्छ । यस कारण राजा बक्साई यो अभिलेख राख्न लाइएको हो। यस्तो शुभ कार्यमा सरकारतर्फबाट प्रोत्साहन दिइनु स्वाभाविक थियो । यस ताम्रपत्रमा तात्कालिक प्रसिद्ध निकै भारादारहरू साक्षी बसेका छन् । यसबाट ती भारादारहरूले पनि भोटु पाँडेको यस शुभ कार्यको सहर्ष समर्थन गरेको थाहा पाइन्छ ।



१. धनवज्र, 'लिच्छविकालको लौकिक जीवनमा गोष्ठीको स्थान' पूर्णिमा १३ पूर्णाङ्क, पृ. १–६

[ १२८ संख्या ]

# पाल्पाको अमरसिंह थापाको अभिलेख

पाल्पा तानसेन बजारको पूर्वपट्टि अमरनारायण मन्दिर रहेको छ। सो मन्दिरका पुजारी-सँग रहेको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ शकसंवत् १७२८ वि.सं. १८६३ दिइएको छ। 'सन्धिपत्रसंग्रह'को ५५१ पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ।। स्वस्ति श्रीमन्नृपतिनरभूपाल आसीज्जगर्त्यां गोर्वाल्यायां वितरणरणा–

२. पार्थकर्णार्ज्जुनः सः ।। यद्धर्मद्रुः प्रफलति सतां मानसे राजहंसः शश्वत्सारं निजजयफलं साहवंशा–

३. वतंसः ।१। पृथ्वीनारायणीसूनरपतितिलकोन्वर्थनामार्कधामा तस्मात्सिंह-प्रतापी हरिर्वरिकरिणां

४. केसरीव प्रतापी ।। तत्पुत्रश्चात्र राज्ञां जगति रणबहादूरसाहस्तुराषाद् श्रीमान्गीर्वाणयुद्धोर्ज्जन जनकस–

५. मो विक्रमांतस्ततोपि ।२। गीर्वाणयुद्धाविकविक्रमश्रीराजाधिराजोत्तममंत्रि-गोत्रे ।। जाग्रज्जयश्रीवसुकी–

६. र्तिचंद्रः शौर्याब्धिरासीद् भुवि वीरभद्रः।३। तदीयतनयो नयोदयजमंत्रि-लक्ष्म्यालयो लयीकृतखलविरोधि–

७. नां सदनुरोधिनां यो जयः ।। रणे प्रहरतां वरो विजयवत्स पृथ्वीतलेतुले विजयतेतरामममरसिंहमन्त्री चिरम् ।४।

८. सुराणां गुरुर्दानवानां कविश्च रघूणां सुमंत्रः कुरूणां हि सूतः ।। यदूनां यथा चोद्धवो मुख्यमंत्री तथैषोस्य सप्तां–

९. गजा जज्ञिरे ते ।५। तत्र ज्येष्ठोहार्यकार्ये यविष्ठो राज्ञः प्रेष्ठो मंत्रिषु श्रेष्ठ एव ।। युद्धे स्थेष्ठो मान्यमर्त्ये ह्लसिष्ठो धीव–

१०. षिष्ठो भीमसेनो वरिष्ठः ।६। श्रीभीमसेनोमरसिंहपुत्रोभूदेव भूदेवसुरद्रुमः सः ।। यद्दानमानश्रवणाद्वभूवुः क–

११. र्णादयो वर्णविवर्णवक्त्राः ।७। अभूद्रणे वैरिणि कालदण्डश्रुते नये चापरि-खिन्नपण्डः ।। गुणेन सिंहो नय-

१२. नः प्रकाण्डः, स मध्यमो जन्मनि दानशौण्डः ।।८।। यशोत्र विक्रम्य विकीर्य युद्धेभिमन्युरेवं नयनस्तु सिंहः ।। यु–

१३. धिष्ठिरक्ष्मापतिभीमसेनस्वतातकीर्त्तीः कलयन्नतः स्वः ।।९।। जज्ञे चत्वार इतोनु सिंहः शौर्येण रोद्धा युधि

१४. योधिरंहः ।। अन्वर्थनामामृतसिंह ऊह श्रीमान्कनिष्ठो रणवीरसिंहः ।१०। पञ्चापि ते पञ्चजनीनयत्ना ज्येष्ठा–

१५. त्मजाः सेवितराजरत्नाः ।। ज्येष्ठा कनिष्ठा रणवम्सुतेन वीरप्रसूनां च रणध्वजेन ।।११।। द्वीपेषु सप्तस्वपि शास–

१६. नं किं प्राघोषयन्तः पृथिवीमघोनः ।। सप्तांगराज्येमितकर्म सप्त प्राज्ये पृथक्कारिण एव रेजुः ।।१२।। श्रीमन्नारा-

१७. यणस्य त्रिभुवनभवनस्यापि भक्तघोर्जशुक्ले वार्धारारामवामं गजभुजजलदैः शालिवाहस्य शाके ।। निर्माति स्मा–

१८. त्र मंत्री गुणरसवसुभूविक्रमादित्यसम्वत् कर्तुर्भूभर्तुरेतद् द्वितयममरसिंहः कचन्मंदिरं सः ।।१३।। स्वर्गमोक्षपथपा–

१९. शिसद्मनो मंदिरं ह्युपरि चत्वरावधि ।। पञ्चलोकसुखदं वरं हरेः सत्यमेत-दिति सत्यमुच्यते ।१४। श्रीमते भगवते

२०. समर्पितं क्षेत्रयुग्ममपि मंदिरं त्विदम् ।। पालयेदथ च यो विनाशयेत् तस्य तुष्यतु स रुष्यतु प्रभुः ।१५। संक्षेपभाषा

२१. जस्का दानले संग्रामले कर्ण अर्जुन व्यर्थ भया। जस्को पुण्य तरु संतान दर्स-

तान तलुक् वारंवार जयफलक–

२२. न फलाउँछ । जो त सज्जनका मनैरूपी मानसरोवरमा रहन्या राजहंस हुन्, सो साहवंशका मुकुट श्रीमहाराज

२३. नरभूपाल साह गोर्षा सहरमा थिया ।। सूर्य जस्ता तेजस्वी नाउँ जस्ता गुण भयाका राजन्मा श्रेष्ठ श्रीपृथ्वीना–

२४. रायण साह तन्देषि भया ।८। दिशाका शत्रुरुपी हातीको नाश गर्दामा सिंह जस्ता प्रतापी श्रीमहाराजा सिंहप्रताप

२५. तन्बाट भया । एस् पृथ्वीतलमा राजन्का ईन्द्रः श्रीरणबहादुर साह् तन्का पुत्र भया । पराक्रमका सीवाना शून्याञि व–

२६. ह्लाञिले पिता जस्ता श्रीगीर्वाणयुद्धविक्रम साह तनैका पुत्र विराजमान छन्। राजाधिराज श्रीगीर्वाणयुद्धवि–

२७. क्रम साहका मुख्य मंत्रिका आत्रेय गोत्रमा भयाका वीरभद्र थापा थिया ।। तनैका पुत्र श्रीकाजी अमरसिंह थापा इ–

२८. न्का ७ पुत्र । तन्मा जेठा श्रीकाजी भीमसेन १ नयनसिंह २ वषतवारसिंह ३ अमृतसिंह ४ रणवीरसिंह ५ रणवम् ६ रण

२९. ध्वज ७।। इनै श्रीकाजी अमरसिंहले १७२८ सहकालमा १८६३ संवत्मा श्रीअमरनारायणको मंन्दिर वनाइसिध्याया शुभम् ।

व्याख्या–

कर्नालीप्रदेशका खस राजा आदित्यमल्ल, पुण्यमल्लहरूको प्रभुत्व गण्डकीप्रदेशमा पनि फैलिएको थियो।[1] तर यो खसराज्य टुक्रिएर बाईसी राज्य खडा भएपछि त्यहाँका शासकहरूले गण्डकीप्रदेशलाई कज्याउन सकेनन् ।[2] यता नेपाल-उपत्यकाका राजामा यक्ष मल्लले एकचोटि गोरखा पाल्पासम्म आफ्नो प्रभाव फैलाएका थिए ।[3] तर उनको मृत्युपछि मल्लराजाहरूमा परस्परमै कलह भएको हुँदा नुवाकोटभन्दा पर उनीहरूको प्रभाव रहेन । यस अवस्थामा उता पश्चिममा मुकुन्द सेनको उदय भयो । निकै ठूलो क्षेत्रमा आफ्नो प्रभुत्व कायम गर्न उनी समर्थ

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ३१

२. 'पाञ्चालीशासनपद्धतिको ऐतिहासिक विवेचना' पृ. १२०, १२५–१२६

३. 'दोलखाको ऐतिहासिक रुपरेखा' पृ. २०–३०

भए। काठमाडौं-उपत्यकामा पनि उनले आक्रमण गरेथे।[४] यस नयाँ उठाएको शक्तिको केन्द्रस्थल पाल्पा रह्यो। यसो हुँदा चौबीसी राज्यमा पाल्पाको विशिष्ट स्थान रह्यो।

पश्चिमतिरको एकीकरण अभियान सफल पार्न राजकुमार बहादुर शाहले पाल्पालाई चौबीसीहरूबाट फुटाई आफ्नो पक्षमा मिलाएका थिए। यसरी पाल्पा आश्रित राज्य बन्यो र एकीकृत नव नेपालको एक अङ्ग बन्यो। यसबाट पश्चिममा भेरी साँध लाउन निकै मद्दत मिल्यो। यस सहायताको फलस्वरूप नेपालसरकारले पाल्पालाई आर्थिक र अरू निकै सुविधा प्रदान गर्‍यो।[५] जसबाट प्रोत्साहित भई पाल्पाका राजा महादत्त सेनले वि.सं.१८४४मा पाल्पामा नयाँ राजधानी 'श्रीनगर'को निर्माण गरेथे।[६] यसरी नव नेपालको आश्रित राज्य बन्नाले पाल्पालाई पनि लाभ नै भएथ्यो।

राजकुमार बहादुर शाहको पतनपछि पाल्पाप्रतिको नेपालसरकारको नीतिमा परिवर्तन आउन थाल्छ। वि. सं. १८५५ मा श्री ५ गीर्वाणयुद्धविक्रम शाहको राज्याभिषेकको उत्सवमा पाल्पाका राजा पृथ्वीपाल सेन बोलाइन्छन्। श्री ५ गीर्वाणयुद्धविक्रम शाहको राजतिलक पृथ्वीपालसेनको हातबाट सम्पन्न गरिन्छ। अनि उनी कही काल काठमाडौंमैं रोकिइन्छन्। वि.सं. १८५६ मा मात्र छुट्कारा पाई पृथ्वीपाल सेन पाल्पा पुग्छन्। पछि श्री ५ रणबहादुर शाहद्वारा उनी फेरि बोलाइन्छन्। यहाँ पुगेपछि उनलाई नजरबन्दमा राखिन्छ। उता वि.सं. १८६१ मा पाल्पालाई सोझै नेपालराज्यमा मिलाउने काम हुन्छ।[७] वि.सं. १८६३ वैशाखमा श्री ५ रणबहादुर शाहको वध गरिएपछि त्यस काण्डमा पृथ्वीपाल सेनको पनि हात छ भनी त्यस काण्डको सिलसिलामा उनी मारिन्छन्।

पाल्पाको प्रशासनको लागि भीमसेन थापाले आफ्ना बाबु अमरसिंह थापालाई पठाएका थिए। अमरसिंह थापा निकै मात्रामा कुशल शासक सिद्ध भए। उनले पाल्पा पुगी 'लब्ध-प्रशमन'को लागि अनेक कार्य गरे। तिनमा पाल्पाको सांस्कृतिक विकास पनि एक थियो। अमरसिंह थापाले 'अमरगञ्ज' बसाई तानसेन शहरको केही विस्तार पनि गरे। त्यहीँ भव्य मन्दिर बनाई अमरनारायण स्थापना गरी यो ताम्रपत्राभिलेख कुँदाइएको हो।

यस अभिलेखमा शुरूमा नरभूपाल शाहदेखि गीर्वाणयुद्धविक्रम शाहसम्मका शाह राजा-हरूको वर्णन गरिएको छ। अनि वीरभद्र थापा, अमरसिंह थापा र उनका भीमसेन थापा आदि छोराहरूको वर्णन परेको छ। यसरी तात्कालिक केही कुरा बुझ्न यो अभिलेख उपयोगी रहेको छ।

卐

---

४. महेशराज पन्त र दिनेशराज पन्त, 'नेपालखाल्डोमा पाल्पाली राजा मुकुन्द सेनको हमला' पूर्णिमा ४३ पूर्णाङ्क तथा पूर्णिमा ४२ पूर्णाङ्क।

५. जयरत्नाकरनाटक, पृ. १४२

६. 'पाञ्चालीशासनपद्धतिको ऐतिहासिक विवेचना' पृ. ७३–७४

७. महेशराज पन्त, 'नेपाल अंग्रेजयुद्धको तयारी' पूर्णिमा २ पूर्णाङ्क, पृ. ७४

[ १२१ संख्या ]

# जनकपुरको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

जनकपुर राममन्दिरस्थित गुठीसंस्थानको कार्यालयमा केही ताम्रपत्रहरू रहेका छन्। तीमध्ये एउटा ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८६४ दिइएको छ।

'प्राचीन नेपाल' संख्या २६ को २६–२७ पृष्ठमा देवीप्रसाद लंसाल र राधेश्याम भट्टराईद्वारा यो छापिएको छ।

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रम साह बहादुर सम्सेर जंङ

२. देवानाम् सदा समरविजयीनाम्– आगे काजि अम्बरसिंह थापाके जनकपुरमा श्रीरामलक्ष्मणको नयां मन्दिर बनायाको तस्त्रातरफबाट गुठि सदावर्त राख्नानिमित्त वक्स्या–

३. का जिल्ला महुत्तरि प्रगन्ना कोराडिमध्ये मौजे मनिपट्टि मभौरा अवादि बिगहा ५० बौरानि बिगहा १५० ज्मा बिगहा २०० तस्को चौतर्फि सांध शिवाना पूर्वका शिवाना मौजे नरहि–

४. या डिहिका नैरित्य कोना दिवराकाभिउपर कोईला तिस्को सोझोसौ उत्तर दषिन सरासर पूर्व मौजे नरहिया रैकार पश्चिम मौजे मनिपट्टि मझौरा

विर्त्ताको शिवाना १ दषि–

५. नको शिवाना मौजे पडुरेश्वर विर्ताका भंडार कौनदेनि पोषरिको पश्चिम नदि, नदिको पुरानु बांध बांधका सोझो पश्चिम पाकडिका गाछ गाछका पश्चिम मुपैनि पूराना डी–

६. डामु पूरानु बांधतक तिस्का सोझा पुर्व पश्चिम सरासर दषिन मौजे मनि-पट्टिका जमिन रैकर उत्तर मौजे मनिपट्टि विर्ता पूर्व पश्चिम शिवाना १ पश्चिमका शिवाना मौजे मनिप–

७. ट्टि बस्ति बाबुराम राईका टोलाका भन्दारकोन नदि नदिका पश्चीम ठुटा पिवरका गाछ, गाछका ईसानकोन सात लगापर दिवराकाभिउपर कोईला तिस्का सोझा उत्तर द–

८. षिन पश्चिम मौजे मनिपट्टिका जमिन रैकर पुर्व मौजे मनिपट्टिका विर्ताका शिवाना १ उत्तरका सिवाना मौजे भगवानपट्टिका दषिन वारि शिवाना पर नदि नदि–

९. मु पूर्व पश्चिम पूराना बांध बांधका सोझा पश्चिम पश्चिममु पैनि पैनि सरासर पूर्व पश्चिम उत्तर मौजे भगवानपट्टि रैकर दषिन मौजे मनिपट्टि विर्ताको शिवाना १

१०. चकलाबन्दि नापका पूर्व वारि शिवाना मौजे नरहियाका पछवारि शिवा-नाका भिउपर कोईला, तेस्का सोझा पश्चिम सरासर पछवारि शिवाना मनिपट्टि बाबु–

११. राम राईका टोलाका भन्दारकोन नदिका पश्चिम ठुटा पिपरका गाछ तस गाछका ईसानकोन सात लगापर दिवराका भिउपर कोईलातक् पूर्व पश्चिम रस–

१२. रि १४।२ दषिन वारि शिवाना बाबुराम राईको टोला दषिन पूर्व पश्चिम पैनि तेसका उत्तर भगवानपट्टि मझौराका दषिन वारि शिवानापर बांध पश्चिम ते–

१३. स्का दषिन रसरि १४।३ ताके बिगहा १९९।। उठकोनधि मौजे मजकुरको ईसानकोन नरहियाका शिवाना लगाई बग दश १० यति कीलाभित्र ज्मा

विगहा २०० सम्व-

१४. त् १८६३ साल मिति चैत्र सुदि १४ रोज ३ देषि शिवाये कल्यानधन्न सर्व-
कर अकर सर्वाङ्ग माफ कुश पानि डल्लो संकल्प गरि विर्ता वितलपको
मोहर तावांपत्र

१५. गरिबक्स्यौं, आपना षातिरजामासंग विर्ता वितलप जानि गुठ सदावर्त राषि
धर्म चलाव. यो विर्ता बक्संदा संकल्पवाक्य पढ्न्या प्रोहित यदुनाथ पंडित
अर्ज्याल पानि

१६. हालन्या काजि भिमसेन थापा संधियार जिल्लै महतरिको सुधा नयनसिं
फौजदार रमानन्द पाध्या मुनसिफ श्रीहर्क पाध्या पैसकार धर्मपतिदास
नारानदत्तदास

१७. चौधरि भिषंदास वैकलम कालिदास् कानुगोये तोतिरामदास् जेठरयत रघु-
नाथ राई महंत रामगुलेलादास् गोसाञि आईतवार गीरि गोसाञि वि-

१८. भुति गिरि जेठरैति पृथि राउत् गोसाई तुलागिरि गोसाई विसंभरदास ।।
स्वदत्ताम् परदत्ताम् वा यो हरेत वसुन्धराम् षष्टिवर्षसहस्राणि

१९. विष्ठायां जायते क्रिमि ।। इति सम्वत् १८६४ साल वैशाष सुदि १४ रोज
४ शुभम्

व्याख्या–

नेपालको एकीकरणको सिलसिलामा गोरखाली भारादारहरू जहाँ जहाँ गए; त्यहाँ त्यहाँ प्रायः उनीहरूले आफ्नो कृति केहीनकेही राख्ने गरेको पाइन्छ। यसले गर्दा नेपालको राजनैतिक एकताको साथै सांस्कृतिक एकतालाई पनि निकै बल मिलेको थियो भन्ने चर्चा माथि ठाउँ ठाउँमा गरिसकेको छ। गोरखाली भारादारहरूले राखेका यस्ता कृतिहरूमा प्रसिद्ध अमरसिंह थापाले जनकपुरमा निर्मित राममन्दिरको पनि विशिष्ट स्थान रहेको छ। वि.सं. १८३९ मा अमरसिंह थापाले बनाउन लाएको सो राममन्दिर नेपाली वास्तुशैलीमा भव्य रूपको छ।

जनकपुरमा उक्त राममन्दिर बनाउँदा अमरसिंह थापा सरदार मात्र थिए। उनको प्रसिद्धि त्यसै वेला पनि केही फैलिन थालेको थियो तापनि नेपाली भारादारहरूको मर्यादा-क्रममा त्यस वेला अमरसिंह थापाको स्थान त्यति उच्च भइसकेको थिएन। पछि कार्यक्षेत्रमा

आफ्नो योग्यता, ईमानदारी देखाउँदै गएपछि अमरसिंह थापाको उन्नति भयो र यो ताम्रपत्र गरिएताका उनी काजीका रूपमा प्रख्यात भइसकेका थिए। यस बेला उनी सुदूर पश्चिममा कार्यरत थिए।

देवमन्दिर आदिको संरक्षणको अभिभारा हाम्रो यहाँ प्राचीन कालदेखि नै "गोष्ठी"ले वहन गर्दथ्यो। कार्यसञ्चालन गर्न आयस्रोतको रूपमा जग्गाजमीन प्रदान गरिन्थ्यो। त्यही जग्गाको आयस्ताले नित्य नैमित्तिक पूजाआजा र अरू दानधर्म सम्पन्न गरिन्थे। यस प्रकारको गुठीको बन्दोबस्त भएन भने देवमन्दिरको स्याहार संभार पनि हुन पाउँदैनथ्यो। यसै हुँदा अमरसिंह थापाले जनकपुरमा निर्मित राममन्दिरमा गुठी सदावर्त आदिको बन्दोबस्त गरी यो ताम्रपत्र गर्न लाएका हुन्। गुठी, सदावर्तको स्थायित्वको लागि राजा बाट यो ताम्रपत्र राजातर्फबाट गर्न लाइएको हो। यस्ता धार्मिक, सामाजिक कार्यमा सरकारतर्फबाट प्रोत्साहन दिइनु स्वाभाविक थियो। गुठी जग्गामा पछि खिचोला नउठोस् भनी यहाँ राम्ररी चारकिल्ला खुलाइएको छ। त्यसबाट महोत्तरीभेकको आबादी, आर्थिक पक्ष आदि विचार गर्न पनि केही मद्दत पाइन्छ।

यो ताम्रपत्र गरिएताका नेपालको केन्द्रीय राजकाजमा निकै अन्तर आइसकेको थियो। वि.सं. १८६३ वैशाखमा श्री ५ रणबहादुर शाहको वध गरिएपछि नेपालको राजनीतिले अर्को मोड लियो। अब श्री ५ पृथ्वीनारायण शाहद्वारा स्थापित "चारवर्ण छत्तीस जातको साझा फुलबारी"को भावनामा अन्तर आउन थाल्यो। शासनसत्ता वर्गविशेषमा केन्द्रित गर्ने प्रक्रिया शुरू भयो।[१] यस कुराको अलिकता संकेत प्रकारान्तरले यस ताम्रपत्रबाट पनि पाइन्छ। यस ताम्रपत्रमा साक्षी बस्ने भारादारहरूमा काजी भीमसेन थापाको मात्र उल्लेख छ।



१. 'पाञ्चाली शासनपद्धतिको ऐतिहासिक विवेचना' पृ. २२२–२२५

[ १३० संख्या ]

# पशुपति-भण्डारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलिवि-
राज-

२. मान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रम
साह् वहा-

३. दूर सम्सेर जङ् देवानाम् सदा समरविजयीनाम्.........

४. आगे रामरेषाके टुकुचाछेउ तत्रिले वनायाका पाटिको गुठि राष्नानिमित्त
दह्चोकका

५. अम्बलमा बलंबु ष्याजोल षेत मुरि ४० तस्को साध पूर्व दाँष. पश्चिम षेत
रैंकर लुहु-

६. किल. उत्तर. रैंकर पाषो लुहुकिल येति किलाभित्रको षेत मुरि ४० विर्त्ता.
फिक्धा-

७. र गरि मोहर तावांपत्र गरिवक्स्यौं, आपना षात्तिरजामासंग विर्त्ता फिक्धार
जानि गु-

८. ठि राष. यो विर्ता वक्सदाका संधियार श्रीनाथ अर्ज्याल भानु पाध्या वनाल
कासिराम पांडे.

९. श्रीनिधि पंथ. हरिवंस वोहोरा. वंसविर्राना. कृष्णानन्द पाध्या रिमाल
डनोल पत्त. ज-

१०. गत्त. ग्रत्त: वलबुंको द्वान्या. दलषम्व बस्न्यात: नाइक्या धनरुद्र. गजेन्द्र. थरि माधौ.

११. गोत्ताम्या दत्तांस कार्कि. स्वदत्तां परदत्ताम्वा यो हरेत बसुन्धराम्. षष्टि-वर्षस–

१२. हस्राणि विष्टायां जायते क्रिमि: ईति सम्वत १८६४ साल मिति जेष्ट वदि १३ रोज ४ शुभम् ॥

व्याख्या–

धारा, पाटी, पौवा ग्रादि जनहित र लोकोपकार हुने कृतिहरू राख्न लाउने कुरामा प्राचीनकालदेखि नै नेपाली नारीवर्गको उल्लेखनीय हात रहेको थियो भन्ने कुराको चर्चा माथि ठाउँ ठाउँमा गरिसकेको छ । यस ग्रभिलेखले पनि उक्त कुराको केही पुष्टि गरेको छ । रामरेखा नामकी एक नारीले टुकुचानजीकै बाटोमा पाटी बनाएको कुराको उल्लेख यस ग्रभि-लेखमा परेको छ । पाटी बनाउँदा त्यहाँ ग्रापना इष्टदेवताको मूर्ति पनि स्थापना गर्ने चलन रहेको छ । साथै पाटीमा विशेष ग्रवसरमा सिधा-दान ग्रादि दानधर्म गर्ने चलन पनि रहेको थियो । यसो हुँदा पाटी बनाएपछि गुठीको पनि बन्दोबस्त गरिन्थ्यो । रामरेखाले पनि श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट बक्साई गुठी राखेको कुरा यस ग्रभिलेखमा परेको छ । रामरे-खाको परिचय पाउन सकिएको छैन । उनी राजदरबारमा प्रवेश पाएकी द्वारिनी ग्रादि कुनै पदमा थिइन् होला भन्ने ग्रनुमान हुन्छ ।



[ १३१ संख्या ]

# पशुपति-भण्डारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-विराजमान मानोन्नत श्रीमन्म-

२. हाराजाधिराज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रम साह् वहादूर सम्सेर-जङ्ग देवानाम् सदा समरविज-

३. यिनाम्.........आगे कपर्दार भोटू पांडेके तजिले. चौधरा पोषरि धारा बनायाको तस्को जिउनि रा-

४. ध्नानिमित्त. ५६ सालमा हांम्रा हजूरमा विंति गरिस र तेरा तर्फबाट गुठि राष्नु पोषरि बनाउनु भनि षेत

५. रोपनि १० गुठि र पोषरि पन्नाके षेत रोपनि ७ विर्त्ता बक्स्याको मोहर-बमोजिम आज मोहर तावापत्र गरिब-

६. क्स्यौं तेमध्ये पसिनडि षेत रोपनि ८ तस्को सांध पूर्व श्रीविगुतलेको गुठको सांध दषिन कुलो पश्चिम नेवारको सूना-

७. विर्त्ता उत्तर कर्मिको विर्त्ता दफे पोडेपा षेत रोपनि २ तस्को सांध पूर्व पाषो दषिन नेवारको विर्त्ता पश्चिम वाटो

८. उत्तर कुलो औ पोषरि षंनाउनाके विलपति तमोटको कपनाडोलको षेत रोपनि २ निलनरसिं प्रधानको क-

९. पनाजोलको षेत रोपनि ३ दांछि धनजुको कपनाजोल षेत रोपनि येति जग्गह् पूत्तदरपूत्तसम्म गुठि

१०. राष यो गुठि विर्त्ता बक्संदाका संधियार हर्क्या पंथ. कासिराम पांडे. हरि अर्ज्याल भानु पाध्या बनाल विरू बोहो–

११. रा बंसविर राना. डगोल. धनवन्त. जगत. काल्या. स्वदत्ताम् परदत्ताम्वा यो हरेत वसुन्धराम् षष्टिवर्षसह-

१२. श्राणि विष्टायां जायते क्रिमि इति सम्वत् १८६४ साल मिति जेष्ठ वदि १३ रोज ४ शुभं– – –

व्याख्या–

लोकोपकार हुने धारा पाटी पौवा पुल पोखरी आदि कृतिको निर्माणमा कपर्दार भोटु पाँडे निकै अग्रणी थिए भन्ने कुरा माथि गएका उनका अनेक अभिलेखले देखाएका छन् । यस अभिलेखले पनि उक्त कुराको पुष्टि गरेको छ । यस अभिलेखमा भोटु पाँडेले चौघरा, धारा, पोखरी बनाउन लाएको र त्यसको लागि श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट उनलाई विर्ता बक्स भएको कुरा परेको छ । यसरी यस अभिलेखले पनि भोटु पाँडेको लोकोपकारी स्वभावको परिचय दिएको छ ।



[ १३२ संख्या ]

# पशुपति-भंडारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि-
विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीम–

२. हाराजे गीर्वाणयुद्धविक्रम साह् वहादूर सम्सेर्जङ्देवानाम् सदा समरविजयी-
नाम्– – – – – – – – – – –

३. आगे कपर्दार भोटु पांडेके तख्लि श्रीपशुपतिमा श्रीवुवाज्यूका सालिक
स्थापना गन्याको श्रीपसुपति श्रीगुह्येश्वरी श्रीगोरखनाथका वादरके मकै
पुवाउनालाई तेरा तरफवा–

४. ट गुठि राख्नानिमित्त रानिवनको टेको पाषो रोपनि साढे विस २०॥
तस्को सांध पूर्व काठमाडौ तलछोटोलको टेकं ज्यापुको र अरू

५. प्रजाको सुनाषेत आलि लुहुकिल दषिन ठाडो वाटो लुहुकिल. पश्चिम
झेलछे मकुन्दका सुनाषेत रैकर डिलको लुहूकिल उत्तर

६. पकनाजोरका श्रीवाडेश्वरका गुठसितको लुहूकिल दफे टेको पाषो रोपनि ८
सांध पूर्व प्रजाको सुनाषेत आलि लुहूकिल दषिन

७. ठाडो वाटो लुहूकिल पश्चिम पकनाजोर श्रीवाडेश्वरका गुठसितको लुहू-
किल उत्तर प्रजाका सुनाषेतसितको लुहूकिल. दफे टे–

८. को रोपनि ६ सांध पूर्व प्रजाको सुनाषेत. आलि लुहूकिल. दषिन वाटो लुहू-
किल पश्चिम उत्तर प्रजाको सुनाषेत लुहूकिल दफे दे–

९. को कनुवा दस ।।= सांध पूर्व पश्चिम उत्तर दषिन. प्रजाको सुनाषेत लुहू-
किल दफे टेको कनवा चौध ।।।= सांध पूर्व उत्तर प्र-

१०. जाको सुनाषेत लुहूकिल पश्चिम दषिन रेकर लुहूकिल यति चार किल्ला-
भित्रको पाषो रोपनि छत्तिस विर्त्ता वित्तलप गरि गु-

११. ठि राषि मोहर तांवापत्र गरिववस्यौ. आफना षातिरजामासंग विर्त्ता
वित्तलप जानि गुठि राष. यो विर्त्ता गुठि वक्सदाका सधिया-

१२. र कासिराम पाडे भानु पाध्या षनाल भवानिसंकर अर्ज्याल श्रीनिधि पंथ.
हरिवंश वोहोरा. रणसिं राना. भास्कर पाध्या कृ-

१३. स्नानन्द पाध्या रिमाल. वैजनाथ पाध्या सावकोटा. हेमन्त प्रधान. तुलाराम
घर्ति शिवानन्द वैद्य दंगोल धनवत्त नायक. च-

१४. ऋसिं मिघराम. विस्न मिझार महान पुदेउ. मोहिनायक जैधर्मसिं चिकिढि
महान. स्वदत्ताम्परदत्तामवा यो हरेद्वै वसु-

१५. न्धराम् षष्ठिवर्षसहस्राणि विष्टायां जायते क्रिमि. इति सम्वत् १८६५
साल मिति जेष्ट सुदि ७ रोज ४ शुभम्- - - -

व्याख्या-

नेपाल-उपत्यकाका प्रसिद्ध देवस्थलहरू प्रायः "वनगढ" रूपमा रहेका थिए। चाँगुनारायण, पशुपतिनाथ, स्वयम्भूनाथ, आदिनाथ, वज्रयोगिनी आदि देवस्थलहरू "वनगढ" रूपका थिए। पशुपतिनाथबाहेक उक्त देवस्थल डाँडोमाथि रहेका छन्। पशुपतिनाथको मन्दिर भने अलि होचो ठाउँमा स्थित छ तापनि उहिले यो देवस्थल पनि "गढ" रूपमै थियो। यस गढलाई उहिले "आराबुगढ" भनिन्थ्यो। कान्तिपुरका अन्तिम मल्ल राजा जयप्रकाश मल्लको पालासम्म पनि उक्त "वनगढ"हरू कायम थिए। उनले यी "वनगढ"को सुरक्षाको लागि बन्दोवस्त गरेका थिए। वनगढको सुरक्षाको बन्दोवस्त गरी राखिएको उनको ताम्रपत्रमा "स्वयम्भूगढ, आराबुगढ, गोकर्णगढ, चांगुगढ, वज्रयोगिनीगढ यति देवस्थलका सिमानढ (रूखको किल्ला = वनगढ)बाट कसैले एक टुक्रा दाउरा पनि काटी लिन पाईदैन" भन्ने बन्देजको साथै यी वनगढका बाँदरहरूलाई मार्न पाईदैन भन्ने उल्लेख पनि परेको छ।[१] यसबाट बाँद-

१. 'ऐतिहासिक पत्रसंग्रह' (दोस्रो भाग) पृ. ६१-६०

रहरू "वनगढ"का एक अङ्ग रहेछन् भन्ने संकेत पाइन्छ। पशुपतिनाथ, स्वयम्भूनाथ आदि देवस्थलमा बाँदरहरू प्रशस्त हुनामा उपर्युक्त कारण रहेको रहेछ भन्ने पनि यताबाट थाहा पाइन्छ।

यो अभिलेख भोटु पाँडेले पशुपति गुह्येश्वरीभेकका बाँदरहरूलाई मकै खुवाउन गुठीको बन्दोवस्त गरी राख्न लाइएको हो। भोटु पाँडेको अनुरोधमा श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट वि.सं. १८५६ मा यो ताम्रपत्र गरिदिइएको हो। बाँदरलाई मकै खुवाउने कुरा हेर्दा सानो जस्तो देखिन्छ। तर यस्ता कुरामा पनि भोटु पाँडेको दृष्टि पुग्नुचाहिँ कम उल्लेखनीय छैन। भोटु पाँडे एक सहृदय, लोकोपकारी प्रकृतिका, नेपाली संस्कृतिको रक्षामा दत्तचित्त तथा हृदयैदेखि राजभक्त व्यक्ति थिए भन्ने कुरा माथि धेरै ठाउँमा लेखिसकेको छ। सानो कुरामा पनि दृष्टि पुगेको यस उदाहरणले भोटु पाँडेको महत्त्व अझ बढाएको छ भन्दा अत्युक्ति हुँदैन।

卐

[ १३३ संख्या ]

# नन्दिकेश्वर बहालको सुवर्णप्रभाको अभिलेख

नक्साल नन्दिकेश्वर बहालभित्र मन्दिरको पश्चिमपट्टि घण्टासँग यो अभिलेख कुँदिएको ठूलो शिलापत्र रहेको छ। यस अभिलेखमा माथि संस्कृत भाषामा, तल नेपाली भाषामा कुरा परेका छन्। परन्तु अभिलेख कुँद्नेको प्रमादवश यस अभिलेखको संस्कृत भागमा अर्थको अनर्थ गर्ने धेरै अशुद्धि परेका छन्। यो अभिलेखका रचयिता पण्डित वाणीविलास पाँडेलाई आफ्नो रचना यसरी अशुद्ध रूपमा कुँदिँदा पीर परेको देखिन्छ। यसैले अर्को शिलापत्रमा संस्कृत भाग शुद्ध रूपमा कुँदाई मन्दिरको उत्तरपट्टि राख्न लाइएको छ। यस कारण यहाँ संस्कृत भाग उत्तरपट्टिको शुद्ध पाठ भएको शिलापत्रबाट दिइएको छ। यसो गर्दा यहाँ पङ्क्ति दुइथरी पर्न गएका छन्।

'अभिलेखसंग्रह' बाह्रौं भागका ९–१२ पृष्ठमा संशोधन-मण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

(उत्तरपट्टिको शिलापत्रबाट)

१. श्रीगणपतये नमः ॥ ॥ पृथ्वीनारायणोऽभून्नृपमुकुटमणिश्रेणिनिराजिताङ्-
घ्रिर्वैरिव्रातप्रतापज्वलदनललस–

२. ज्ज्वालशान्त्यम्बुपूरः ॥ एतस्य प्रस्नुषेयं जयति नृपमणेः सत्स्नुषा श्रीप्रताप-
सिंहस्योदग्रतेजोनृपतिरणबहादूरसाहस्य भार्या

३. ॥१॥ नेपालेऽत्र विभाति कान्तिनगरे नाम्ना सुवर्णप्रभा रूपेणाऽनुपमा
मनोगतविदा प्राणप्रिया स्वामिनः ॥ पूर्वोपा–

४. र्जितपुण्यपुञ्जवशतो नानागुणालीमणिश्रेणिमण्डितमूर्त्तिरग्र्यमहिषी सिंहास-

नाध्यासिनो ॥२॥ याऽऽस्ते गोद्विजदेव-

५. तार्थमसुभृद्धर्मैकचर्यापरा दीनानाथदयावती मतिमती नारायणाराधिका ॥ शम्भुश्रीगिरिजादिदैवतगणाभेदेन यस्या-

६. लिते राज्ये नो करभार आस्थित इह स्वानन्दयुक्ताः प्रजाः ॥३॥ यस्या अस्ति च मुक्तिनाथसविधे श्रीधर्मशाला परा यस्यां यात्रि-

७. कलोकसन्ततिमुदे भात्यत्र सत्रं सदा ॥ श्रीमद्भागवतार्थसंश्रवणतः सञ्जातसज्ज्ञानतः सारासारविवेचनेन निखिलस्व-

८. प्नायितं यद्दृशि ॥४॥ असूतां यत्पुत्रौ सुकृतफलरूपौ निरुपमौ सदा धर्मासक्तौ नयविनययुक्तौ जनमतौ । रणोद्योतः

९. साहोऽग्रजनुररिवर्गोग्रमहिमा गुणग्रामोदग्रोऽजनि समरसेरस्तदनुजः ॥५॥ एतौ प्रेमणि रामलक्ष्मणसमौ नाराय-

१०. णाराधने प्रह्लादध्रुवसच्चरित्रलसितौ कन्दर्पदेवोपमौ । सौन्दर्येऽत्र विलोक्य यौ रिपुगणा भ्रष्टास्त्रशस्त्रा ह्रिया संनम्रा अपि मु-

११. क्तनीविवसनास्तारुण्यघूर्णाङ्गनाः ॥६॥ श्रीमद्भागवतस्य शास्त्रविधिना सप्ताहयज्ञे कृते पुत्राभ्यां युतयाऽनया ग्रह-

१२. महीहैमाम्बरैरर्पितैः ॥ दासीदासगजाश्वहैमवलयैर्मुक्ताफलैस्तोषितो वक्ताऽन्ये च धनैर्यदद्भुतमिहैतत्किंवचो गोपरः

१३. ॥७॥ श्रीनन्दीश्वरदेवमन्दिरमिदं नानेन्दिरासुन्दरं श्रीमन्नेत्रचकोरचन्दिरमुपर्युद्धेमकुम्भान्वितम् ॥ निर्मायात्र च सं-

१४. स्कृतस्त्रिजगतोनाथः शिवोऽभ्यर्च्यते द्वारा विप्रजनस्य सोत्सवमहो राज्ञ्याऽनयाऽहर्निशम् ॥८॥ यस्या देवालयस्याभि-

१५. त उपरचिता धर्मशाला विशाला वासायानाश्रयाणां विलसति नितरामन्नसत्रं च यत्र दीनाऽनाथान्धखञ्जा-

१६. तिथिवधिरबुभुक्षातुराभ्यागतादिप्रीत्यै केनात्र वर्ण्या नृपवरमहिला श्रीसुवर्णप्रभेयम् ॥९॥ निर्मायात्र सम-

१७. र्पिता भगवते राज्ञ्याऽनया शम्भवे सत्पुष्पा सुफलस्तनाऽलिकुलसत्केशा नवीना वरा ॥ उत्कृष्टावरणा समीक्षकजना-

१८. नन्दप्रदा राधिका देवस्य प्रमदेव भाति निकटे वाटी मनोहरिणी ॥१०॥ राज्ञ्या निर्माय भूरिद्रविणवितरणैः स्नानपा–

१९. नावगाहाद्यर्थं भूतव्रजेभ्यो जयति भुवि समुत्कृष्ट एषोऽतिरम्यः ॥ नानाशिल्पैस्तडागो नृपतिरिव नयी जीवना–

२०. धारभूतो गंभीरोऽच्छः सुशीतो गुणगणलसितः पात्रदस्तापहर्त्ता ॥११॥ शाके त्रिशन्नगेन्दु १७३० प्रमितिम–

२१. ति शुचौ मासि पक्षेऽसितेऽन्त्ये भे योगे शोभनाख्ये दितिजगुरुदिने सन्मुहूर्ते नवम्यां ॥ प्रीत्यै देवस्य धर्मोद–

२२. वसितसरसीवाटिकानां प्रतिष्ठां कृत्वा सर्वं न्यवेदीन्नृपवरवनिता श्रीसुवर्ण-प्रभेयम् ॥१२॥ निर्मायात्र निके–

२३. तनं च परमं संकष्टनिर्मूलिनीं स्पर्शालोकनकीर्तनस्मरणतो लोकस्य भक्ते-ष्टदाम् ॥ अस्मिन्नेव दि–

२४. ने शुभे सुरवरैरर्प्यार्चितां संकटामूर्त्तिं स्थापितवत्यसौ सुविधिना राज्ञी सुवर्ण-प्रभा ॥१३॥ इह नवत्यधि–

२५. काष्टशतीमुरि व्यवहृतं विधुमौलिमुदेऽनया ॥ अनुदिनान्नविसर्जनवाञ्छया सजलवप्रमदो विनि–

२६. वेदितम् ॥१४॥ यदवधि स्थिरतां भवति क्षितिर्दिनकरो रचयत्यपि वास-रान् । तदवधि क्षितिपाल–

२७. मृगीदृशः स्फुरतु कीर्तिरियं वसुधातले ॥१५॥ वाणीविलासबुधकीर्तित-कीर्तिमालां राज्ञ्या इमां

२८. श्रवणसौख्यकरीं निपीय ॥ लोको विलोक्य च कृतिं शमिहाऽस्त्वमुत्र चेत्या-शिषं भुवि ददातु ससूनु–

२९. राज्ञ्यै ॥१६॥ इति संवत् १८६५ साल मिति आषाढ वदि ११ रोज १ शुभम् ।

( पश्चिमपट्टिको शिलापत्रबाट )

२१. ... और देवल धर्म्मसाला पाति हिटि वारि पोखरीको चिताई गर्नालाई सदावर्तको गुठियार

२२. जना २ ले सिलापत्रमा ल्येष्याको तावापत्रबमोजिमका गुठि जगाको आम्-
दनि नगदि अन्नले नित्य नैमित्य वर्षवन्धनको षर्च सर्धावर्त चलाऊ–
२३. नु ॥ नन्दीग्राम लगा सम्पत् सर्व्व रकम् माफ गरि तहलुवा गाऊ १ गुज-
राति बाजा ६ नगारा कर्नाल् २ चोक बढान्याँ कुसल्या २ र सुनागु–
२४. ठि वेषाहिटो षेत् रोपनि २२२॥ के कुत चावल मुरि २२२।१०।० गहु कुत
मुरि ४४।१०।० पराल मोल कुट रूपैया ६॥।≡। चोष्येलविहि रोपनि
४४॥
२५. के कुत् धान् मुरि २४।१।० घिऊषानि रुपैया २२। यति आम्दनिले सदा-
वर्तको षर्च चलाउनु ॥ ॥ मेकि सन्तजनके जना २१ के दिनक्व
२६. पाथि ४ का दरले मैह्ला १ के मुरि ६ वर्ष १ के मुरि ७२ दाल् दिनको
मना २ मुथि १ को दरले वर्ष १ के चावल मुरि ८।८ नुन् दिनको १
मानाका द–
२७. दरले वर्ष १ के मुरि २।५।० के चावल मुरि ११।११।७ बेसार दिनको ५
मुठिको दरले वर्ष १ को मुरि १।२।४ को चावल मुरि १।१६ घिऊ दि–
२८. नको २१ तोलाको दरले वर्ष १ को धार्नि ३५ के चावल मुरि ११।१५।४
पात दिनको दुइ पैसाको दरले वर्ष १ को रुपैया ११। ताके चावल मुरि ४
२९. ।१०।० हडिया दिनको २१ का दरले वर्ष १ के ७५६० पार्न्या कुह्मालके
बालि मुरि १०।१० चावल बोक्न्याके सिधा मुरि १।१० बारिका चिताई
३०. दार २ के मुरि ७ गुठियार २ के मुरि १८ वहिदार १ के मुरि ७ पानि
बोक्न्या २ के १० तहलुवा २ के मुरि १० सदावर्त्तको दारु–
३१. वा बोक्न्या २ के सिधा मुरि १०।१० वानादार २ के मुरि ७ गुठिषेतको
मोहिनाईक्या २ के मुरि ६ सवावर्तको चावल फल्दाको घट–
३२. ति मिनाहा मुरि ७।१५।० ॥ ॥ श्रीशंकटाको नित्य नैमित्य वर्षवन्धनका
पूजाके बलि चन्ध धुप सिंदुर सुपारि धागो नैवेद्य जन्न–
३३. को सराजाम् गैह्लको षर्च वर्ष १ के रुपैया २९ के पाथि ८ को भावले
मुरि ११।१२। पुजाहारी अचार १ के चावल मुरि ४। काठमाडौं
३४. वतु सालको तेलमध्य बति भिजाउनाके पाथि ३ बाति बाल्नाके पाथि

६॥ बाकि धान चावल गहुँमध्ये सिबरात्रि रोजिन्दा बाहि-

३५. क रोजिनाका सरञ्जामबमोजिम भेकि सन्त ६०० के सिधा डेढ मानाका हिसापले चावल मुरि ५।१२।४ हाडि पात नुन दाल घिउ ह-

३६. दि दारुवा भोजके ज्मा रुपैया १२ हादि ६०० के रुपैया २।—॥ घिउ धार्नि ६ सेर २ के रु ३॥=॥। नुन् मना १० के रु॥☰॥ मास् पाथि ३ म-

३७. ना ३ के रु ॥=॥। हर्दि मना ४ के रु = पात् रु ☰॥ भोजके रु २॥।॥ श्रीजयवागेश्वरिको जगा रोपनि १॥। पौवे दुइ फुलवारिमा आउदा

३८. तस्को बालि धान मुरि १।१०। सालबसाल भरिदिनु श्रावनभर महिनाके रोजको पाथि ३ को दरले परेवा षुवाउनाके धान् ज-

३९. मा मुरि ४।१० नन्दीग्रामको दन्द कुन्द पैदावार अपुतारिको नगद जिनिस् षाल् षेत्को बालि सुनागुठिका मोहि-

४०. ले ल्याऊन्या दारुवा भारि ३५ के रुपैया ४।= चारदां ठेकिको रु २।— बारिका सिधामा झिक्याको चावल मुरि १ पोषरी सोह-

४१. न्याको षाजा मुरि ४ यतिल्य पवित्रारोहमा रु. २७॥—॥।१ लाई षर्च गर्नु त्यतिल्य पुकेन भन्या भंडारबात षर्च लाऊनु यो आ-

४२. म्दानि षर्च गुठियार रकमि बसि सालिन्ना बहिमा ल्यषाउनु बाकी रह्याको नगद धान चावल गहुँ गुठका चावल बेच-

४३. दामा पनि समय सालका भावल्य यति रकमि बसि बेच्नु गुठियारल्य मौवासि भै काम नगर्नु सल्लाहासित का-

४४. म गर्नु. देवल धर्मसाला पाटि हिटि बारि पोषरि बिग्रदामा पनि सल्लासित बाजवि षर्च लाई बहिमा लेषाऊ-

४५. नु चाहि आयाको बाजवि काममा षर्च लाई बाकि भण्डारमा जगेरा राषनु साल पुग्यापछि रकमि सब बसि

४६. जगेरा यति रह्यो भनि जमा बहिमा ल्यषाऊनु. रकमिल्य आफना २ काममा रुजु रहनु ॥ यस सिलापत्रमा

४७. लेष्याबमोजिम् धर्म्म चलाया श्री ३ नन्दीकेश्वरको सुदृस्ति होला. लोभानि पापानि जो गर्ला तसलाई श्री ३ नन्दीकेश्वरको कुदृस्ति

४८. पंच महापातक होला बालिमा दैवागत पऱ्यो भन्या जगेराको रुपैयाले सदावर्त चलाऊनु. तेतिल्ये पुण्य–

४९. न भन्या हाम्रा हजुरमा बिन्ति गर्नु. जगेरा जंमा रहन्या ८ पाथिका बिक्रिले रु १२२ समेहेका बिक्रिको कि–

५०. फाईत् रु. जम्मा रु. स्वदत्तां परदत्तां वा यो हरेच्च वसुंधराम् ।। षष्ठी वर्षसहस्राणि विष्टायां जायते क्रिमिः ।। १ ।। शुभम् ।। ।।

व्याख्या–

नेपाली संस्कृतिको संरक्षण र संवर्द्धनमा नारीवर्गको पनि निकै हात रहेको थियो । हाम्रो यहाँ लिच्छविकालदेखि नै नारीवर्गले देवमन्दिर, पाटी पौवा धारा पोखरी आदिको निर्माण गरी जनहितकार्य गरेको हामी पाउँछौं । यो परम्परा शाहकालमा पनि कायमै रहेको थियो । नेपाली संस्कृतिको रक्षा, जनहितकार्य गर्ने शाहकालका नारीहरूमा सुवर्णप्रभादेवीको पनि महत्त्वपूर्ण स्थान रहेको छ । सुवर्णप्रभादेवीका अनेक उल्लेखनीय कृति रहेका छन् । तिनमध्ये केहीको चर्चा माथि भइसकेको छ ।

यस अभिलेखमा वि.सं. १८६५मा सुवर्णप्रभादेवीले नक्साल नन्दिकेश्वर महादेवको भव्य मन्दिर बनाएको तथा विशाल धर्मशाला पोखरी फुलबारी आदि बनाएको कुराको वर्णन परेको छ; संकटामूर्ति स्थापना गरेको, प्रशस्त जग्गा गुठी राखेको, सदावर्तको प्रबन्ध गरेको वर्णन पनि यस अभिलेखमा परेको छ । यसरी सुवर्णप्रभादेवीको उल्लेखनीय कृतिमा यो पनि परेको स्पष्ट छ ।

राजनैतिक दृष्टिले माहिला महारानी सुवर्णप्रभादेवीको बराबर उत्थान, पतन भइरहेको हामी पाउँछौं । सर्वप्रथम श्री ५ रणबहादुर शाहको ठूलो घण्टाको वि.सं. १८५४को अभिलेखमा सुवर्णप्रभादेवीलाई महारानीका रूपमा घोषित गरिएको पाइन्छ । वि.सं. १८५५को पशुपतिको प्रसिद्ध ताम्रपत्रमा हर्ताकर्ता नायब (राजप्रतिनिधि) राजराजेश्वरीदेवीको साथसाथै सुवर्णप्रभादेवीलाई पनि केही अख्तियार दिइएको हामी पाउँछौं । वि.सं. १८५७मा स्वामी महाराज रणबहादुर शाहको साथै राजराजेश्वरीदेवी काशी गएपछि पशुपतिको ताम्रपत्र-अनुसार हर्ताकर्ता नायबीको अख्तियार सुवर्णप्रभादेवीको हातमा आयो । राजराजेश्वरी काशीबाट फर्केपछि फेरि अन्तर आयो । वि.सं. १८६३ वैशाखमा मुख्तियार श्री ५ रणबहादुर शाहको वध गरिएपछि हेलम्बूबाट आई राजराजेश्वरीदेवी सती गइन् । त्यसपछि पशुपतिको

ताम्रपत्रको व्यवस्थाअनुसार फेरि सुवर्णप्रभादेवीको हातमा अख्तियार आएको संकेत यस अभिलेखबाट पाइन्छ। यस अभिलेखमा "अग्र्यमहिषी" "सिंहासनाध्यासिनी" भनी सुवर्णप्रभाको वर्णन गरिएको छ। "यत्पालिते राज्ये" भन्ने वाक्यले पनि उक्त कुराको पुष्टि गर्छ। तर यसको लगत्तैपछि भने जस्तै ललितत्रिपुरसुन्दरीदेवीको उदय हुन्छ; अनि सुवर्णप्रभादेवीको अस्त हुन्छ।

जे होस्; सुवर्णप्रभादेवीले अनेक कृतिहरू छोडेर गएका छन्। तिनीहरूले पछिसम्म उनी-लाई संझाइरहने कुरामा शङ्का छैन। विशेष गरी दुर्गम हिमाली क्षेत्र मुक्तिनाथमा बनाइएका धर्मशाला सदावर्त आदिले र नक्साल नन्दिकेश्वर मन्दिरको निर्माण धर्मशाला सदावर्त आदिको प्रबन्धले सुवर्णप्रभादेवीको संझना चिरस्थायी हुने स्पष्ट छ।

नक्सालको यस अभिलेखको संस्कृतभागका रचयिता तात्कालिक प्रसिद्ध विद्वान् वाणी-विलास पाँडे हुन्। पं. वाणीविलास पाँडेले रचेका अभिलेख अहिलेसम्म पाँचवटा प्राप्त भएका छन्। तिनमा एक अभिलेख यो पनि हो। वाणीविलास पाँडेको पाण्डित्यअनुरूप यस अभिलेखको रचनाशैली प्रौढ रहेको छ।



[ १३४ संख्या ]

# पशुपति-भंडारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

१. सम्वत् १८६५ साल मिति आषाढ सुदि ११ रोज श्रीपशुपतिमा श्रीस्वा-
मिज्यूको सालिक वनाइ श्रीकपर्दार भोटू पांडेले स्थापना गऱ्याको

२. श्रीपसुपतीका बांदरलाई मकै षुवाउनाकन श्रीकपर्दार भोटू पांडेले संकल्प
गरि गुठि राष्याको रानिवनको ढोका पाखो रोपनि ३६

३. यति पाषोका ऊपजनी ठवहिलको धनवन्त श्रेष्ठ, षिलटोलको धिर्जविर्सि
मास्की यो दुई जना गुठीहारले लेष्याको तप–

४. सिलवमोजिम गुठि चलाउनु. यो लेष्यावमोजिमको गुठी गुठीहारले नच-
लाया श्री पसुपतीको कोप कुद्रिष्टि होला. यो गुठी लेष्यावमो–

५. जिमको गुठीहारले चलाया श्रीपसुपतीको कृपा सुद्रिष्टि होला. अरू जो
कोइ पापात्मा यो गुठि षंडीत गर्नमा पसला. तसलाई श्रीपसुपती–

६. को कुद्रिष्टि होला. जो कोइ धर्मात्मा यो गुठि थामनामा पसला तसलाई
श्रीपसुपतीको सुदृष्टि होला– – –

आमदानीको तपसील

७. आसामि-——-—— पाषोरोपनि——— दर पाथि——ताके मकै मुरी–

८. रानीवनको ढेको पाषो रोपनी ३६– – –– ।१२। – – – – – – – –२१।१२

९. यसमध्ये षर्च मकै मुरि ——————————— २१।१२।

१०. श्रीपशुपतिको बंदरलाई रोजीना मकै माना ४ ताके वर्ष दिनको मुरि–६।०।

११. श्री गुह्येश्वरीको बंदरलाई रोजिना मकै माना ३ ताके वर्ष दिनको मुरि–६।१५।

१२. श्रीगोरखनाथको बंदरलाई रोज्जिना मकै माना १ ताके वर्षदिनको मुरि –२।५।

१३. वर्ष १ को जकिरा राष्नु मकै मुरि––––– १।१२। कदाचित दैवी पऱ्या यो जकिराले गुठि चलाउनु–

१४. गुठीहार जना २ के १ को षानगी मकै मुरि – – – २।०।–

१५. स्वदत्तां परदत्तां वा यो हरेच्च वसुंधराम्. षष्ठीवर्षसहस्राणि विष्ठायां जायते क्रिमि – – –

व्याख्या–

पशुपतिमा श्री ५ रणबहादुर शाहको सालिक स्थापना गरी त्यसै प्रसङ्गमा कपर्दार भोटु पांडले पशुपति गुह्येश्वरीभेकका बाँदरहरूलाई मकै खुवाउन गुठी राखेको ताम्रपत्र माथि गइसकेको छ। त्यसै गुठीको दुइ जना गुठियार नियुक्त गरी यो ताम्रपत्र गरिदिइएको हो। लक्ष्यअनुसार गोष्ठी राम्ररी चलाउन "गौष्ठिक" (गुठियार) नियुक्त गर्ने चलन हाम्रो यहाँ लिच्छविकालदेखि नै प्रचलित थियो। उहिले गुठियारहरूको सामाजिक मान्यता पनि निकै हुन्थ्यो। गुठीको निश्चित विधानअनुसार गुठीको सञ्चालन गर्ने पूरा अभिभारा गुठियारमा रहन्थ्यो। गुठी चलाएर बाँकी रहेको आयस्ता अथवा तोकिएको अंश गुठियारले भोगचलन गर्न पाउँथे। यस ताम्रपत्रमा दुइ जना गुठियारको लागि वर्षको दुइ मुरी मकै तोकिएको छ। साथै पशुपति, गुह्येश्वरी र गोरखनाथभेकका बाँदरहरूलाई प्रतिदिन कति कति मकै खुवाउने आदि विवरण पनि यसमा खुलाइएको छ।

यसरी तात्कालिक सामाजिक कुरा बुझ्न यो अभिलेख पनि अलिकता उपयोगी नै देखिएको छ। यसै हुँदा यस संकलनमा यसलाई समावेश गरिएको हो।



[ १३५ संख्या ]

# पशुपति-भंडारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

श्री

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि-विराजमान मानोन्नत श्रीमन्महाराजाधिरा–

२. ज श्रीश्रीश्रीमहाराजे गीर्वाणयुद्धविक्रम साह वहादूर सम्सेर जङ् देवानाम् सदा समरविजयिनाम् – – – – – – – – – – – – – – – – –

३. आगे काजि रणध्वज थापाके टौड्याङ्चामा तजिले स्थापना गर्‍याका श्रीकालिका श्रीज्यला श्रीकामाक्षाको गुठि राष्नानिमित्त सहर पाटनका अम्वल -

४. मध्ये नौडेषेत रोपनि ४ तस्को सांध पूर्व रैकर आलि लुहूकिल दषिन. पश्चिम प्रजाको सुनाषेत आलि लुहूकिल उत्तर मुल वा–

५. टो लुहूकिल दफे मत्ति रोपनि ३ साध पूर्व सदावर्त्त गुठि आलि लुहूकिल दषिन वाटो र प्रजाको सुना षेत आलि लुहूकिल. पश्चि–

६. म टौड्याल गुठ आलि लुहूकिल उत्तर रैकरआलि लुहूकिल दफे मत्ति जवा यक । पूर्व टंगल आगम गुठि आलि लुहूकिल दषिन

७. रैकर पाषो लुहूकिल पश्चिम चित्रकारिको सुना षेत लुहूकिल उत्तर बाटो लुहूकिल दफे वलमदु रोपनि ६ सांध पूर्व कुलो

८. र प्रजाको सुनाषेत आलि लुहूकिल दषिन मुलवाटो लुहूकिल पश्चिम उत्तर रैकर प्रजाको सुनाषेत आलि लुहूकिल दफे वुइ–।

९. दा टंगि रोपनि २। सांध पूर्व दषिन पश्चिम प्रजाको सुना षेत श्रालि लुहू-
किल उत्तर क्वाछेको गुठ र प्रजाको सुना षेत श्रालि लुह-
१०. किल दफे घुमोल रोपनि साढे पांच ५।। सांध पूर्व वाटो र प्रजाको सुना
षेत श्रालि लुहूकिल दषिन प्रजाको सुना षेत श्रालि लुहूकिल
११. पश्चिम उत्तर मूल वाटो लुहूकिल दफे उषु रोपनि ४।। पुर्व कुलाको डिल
लुहूकिल दषिन प्रजाको सुना षेत र. रैंकर. श्रालि लुहू-
१२. किल पश्चिम सदावर्त गुठ श्रालि लुहूकिल उत्तर श्रीमचिन्द्रनाथको गुठ
श्रालि लुहूकिल दफे उषु रोपनि ६ सांध पूर्व दषिण प्रजाको सु-
१३. ना षेत श्रालि लुहूकिल श्रीमचिन्द्रनाथको गुठ लुहूकिल. उत्तर कुलाको
डिल लुहूकिल मफे उषु रोपनि ५।।। सांध पुर्व दषिन-
१४. पश्चिम उत्तर प्रजाको सुना षेत श्रालि लुहूकिल दफे ईङ रोपनि २।० साध
पुर्व रैंकर श्रालि लुहूकिल दषिन उत्तर प्रजाको सु-
१५. ना षेत श्रालि लुहकिल पश्चिम कुलाको डिल वाटो लुहकिल दफे इउट्
रोपनि १ सांध पुर्व दषिन पश्चिम उत्तर प्रजाको सुना-
१६. षेत श्रालि लुहूकिल दफे मलवु रोपनि ५।।― सांध पूर्व उत्तर प्रजाको
सुनाषेत श्रालि लुहूकिल दषिन वाटो लुहूकिल पश्चिम प्र-
१७. जाको सुना षेत र जफति गुठ श्रालि लुंहकिल दफे फंदोल रोपनि ३।।।―
सांध पूर्व दषिन प्रजाको सुना षेत लुहूकिल. पश्चिम-
१८. कुलो वाटो लुंहूकिल उत्तर बनारस गुठ लुहुकिल श्रौ घड्यारि वागदो
रोपनि २ तस्को सांध पुर्व उत्तर प्रजाको सुना षेत कांह्लो श्रा-
१९. लि लुहूकिल दषिन मुलवाटोको डिल लुहूकिल पश्चिम वाटो लुंहकिल दफे
वागदो रोपनि १ सांध पुर्व दषिन उतर प्रजाको सुना-
२०. षेत लुहूकिल पश्चिम वाटो लुहूकिल दफे वागदो रोपनि २।। सांध पूर्व
दषिन उत्तर प्रजाको सुना षेत लुहूकिल पश्चिम वाटो-
२१. लुहकिल दफे वागदो जया ।।। साध पुर्व वाटो वाभ्रो लुहूकिल, दषिन.
पश्चिम सुनाषेत लुहूकिल उत्तर रैकर लुहूकिल दफे वा-
२२. गदो रोपनि ३।।। सांध पुर्व वाटो र प्रजाको सुना षेत लुहूकिल दषिन रैंकर

र प्रजाको मुन षेत लु हकिल पश्चिम उत्तर रंकर लु–
२३. हकिल यत्ति चार किल्लभित्र षेत र घड्यारि रोपनि १० कुश डल्लो संकल्प सर्वकर अकर सर्वाङ्क माफ विर्त्ता वितलप मोहोर
२४. तावापत्र गरिवक्स्यौं आफना षातिरजामासंग विर्त्ता वितलप जानि गुठि राष्. यत्ति षेतका उवजनि चावंल्गहु घिउषानि ले(ले)व–
२५. मोजिम तपसिलको सराजाम सौदा गरि पुजा गर्नु पुजाहारिके षानगि चावल मुरि १५ दिनु. वाकि रह्याको जगेरा राष्नु. कदाचि–
२६. त् षेतमा देवागत पर्न गयाका समयमा लेष्यावमोजिम्को सराजाम कति नघटाई जगेरा राष्याका अनाजले पूजा गराउनु. देव–
२७. ल भत्क्या टुट्याको बनाउनु– – – – – – – – – – – – –

तपसिल

२८. नित्य पूजा वर्ष १ के सरजाम वर्द्द रूपैया – – – – – – – ४६।।
२९. श्रीषण्डके रूपैया – – ३ रगत्त चन्दनको रूपैया – – – १।। अक्षता रोजिना पैसा १
३०. फुल रोजिना पैसा १ को धुप रोजिना पैसा का हिसावले १ का हिसावले वर्ष १ के रूपैया – – –५।।= वर्ष १ के रूपैया–५।।=
३१. हिसावले वर्ष १ के रू.– ५।।= वातिके रोजिना पैसा १ का दरले रू. ५।।=
३२. नैवेद पैसा १ का दरले रू. ५।।= वात्ति वालनाके घिउ रोजिना पैसा ३ का दरले रूपैया – – – – – – – १६।।=
३३. वडा दसैंके रूपैया – – – – – – – – – – – – – – २०।।
३४. रागा – – ३ के रू – – ६ वोक्यो ३ को – – ४।। चण्डिपाठके दक्षिणा रू. – – – १।।
३५. देवता ३ के भेटि रू. – १।। नरिवल ३ के रू – ।।= पगरि ३ के रू.– ।।।
३६. सिंदुर सुपारि वात्तिके रू – ।। घीउके रू – – १।। नैवेदके रू – ।=
३७. अक्षता फुलके रू – ।।

३८. चैत्या दसैंके रूपैंया – – – – – – – ११

३९. वोका ३ के रूपैंया – ४।। भेटि रूपैंया १।। चण्डिपाठ दक्षिणा रूपैंया – १।।

४०. नरिवल ३ के रू – ।= पगरि ३ के रूपैंया – १।।। सिन्दुर सुपारी धुप वात्तिके रू – ।=

४१. घिउके रूपैंया – १।। फुल अक्षताके रू ।= नैवेदके रू =

४२. यो गुठि संकल्प हुदा वाक्य पढ्न्यां प्रोहित यदुनाथ अर्ज्याल. पानि हालन्या काजि भिमसेन थापा. साक्षि श्रीआदित्य चन्द्रादि देवता मनुष्य-माका

४३. साक्षि श्रीचौतरिया प्राण साह श्रीचौतरिया रणउदयोत् साह काजि रण-जित पांडे काजि वहादूर भडारी. काजि वालनरसिं कुवंर. कपर्दा-

४४. र भोटू पाडे. षजांचि उदै गिरि. सांध लगाउन्या थर घर. हरिवंस वोहोरा. भानु पाध्या षनाल. काशिराम पांडे. श्रीनिधि पंथ भवानिसंकर

४५. अर्ज्याल. रणसिं राना. कृष्णानन्द पाध्या. भास्कर पाध्या. डगोल. धनवंत. जगत. महिन्द्र अम्बरसिंह जैसि. मोति नाइक्या लाष्वा

४६. हेमंत. जामादार वहादूर थापा. अहिमान थापा. लोभ पाप गरि यो गुठ षण्डित गर्नामा जो पस्ला तश्लाई पंचमहापातक श्रीकालिका श्रीज्यला श्रीकामाक्षाको को-

४७. प कुदृष्टि होला, जो धर्म जानि गुठि थाम्नामा पस्ला तश्लाई महायग्यको पुण्य र श्रीकालिका श्रीज्यला श्रीकामाक्षाको कृपा सुदृष्टि होला. स्वदत्ता-म्परदत्ताम्वा यो हरे-

४८. त्च वसुंधराम् ।। षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमिः इति सम्वत् १८६५ साल मिति भाद्र वदि १ रोज १ शुभम्

व्याख्या–

वि.सं. १८६५ भाद्रमा श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट काजी रणध्वज थापाको नाउँमा यो ताम्रपत्र गरिबिइएको हो । यी काजी रणध्वज थापा प्रसिद्ध बूढा काजी अमर-

सिंह थापाका छोरा हुन् । बूढा काजी अमरसिंह थापा सुदूर पश्चिमको काजमा खटिएपछि यी रणध्वज थापा भीमसेन थापाका साथ राजदरबारमा रहन थालेथे । आफ्नो कार्यकुशलताले गर्दा रणध्वज थापाले राजालाई र भीमसेन थापालाई रिझाए; अनि उनी भीमसेन थापाका विश्वस्त सहायक बन्न पुगे । पछि कारोबारी काजीका रूपमा रणध्वज थापा पनि निकै प्रभावशाली रहे ।[१]

बूढा काजी अमरसिंह थापा पूर्व पश्चिम जहाँ जान्थे; प्रायः त्यहाँ केही कृति राख्न लाउने प्रयास गर्दथे ।[२] यही स्वभाव केही अंशमा उनका छोराहरूमा पनि सरेको पाइन्छ । यस कुराको केही पुष्टि यस अभिलेखले पनि गरेको छ । यस अभिलेखमा रणध्वज थापाले स्थापना गरेका देवताको पूजाआजाको लागि गुठी राखेको कुरा परेको छ । भारादारहरू गुठी राख्दा त्यसको स्थायित्वको लागि राजा बक्साउने गर्दथे । त्यसै गरी काजी रणध्वज थापाले पनि श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट बक्साई यो ताम्रपत्र कुँदाएका हुन् । यस अभिलेखमा गुठी राखेका जग्गाको चारकिल्ला राम्ररी खुलाउनाको साथै नित्यपूजाको लागि चाहिने सरसामानहरू पनि खुलाई लेखिएका छन् । यसबाट तात्कालिक धार्मिक, सामाजिक अलिकता कुरा बुझ्न मद्दत पाइन्छ । अतः यो अभिलेख पनि अलिकता उपयोगी नै रहेको छ ।



---

१. महेशराज पन्त, 'नेपाल अंग्रेजयुद्धको तयारी' पूर्णिमा २ पूर्णाङ्क पृ. ७०
यी रणध्वज थापा भीमसेन थापाका भाइ रणध्वज थापा नै पो हुन् कि भन्ने प्रश्न पनि हाल उठ्न लागेको छ । यस विषयमा पछि विचार गरिनेछ ।

२. अमरसिंह थापाका त्यस्ता केही कृतिको चर्चा माथि परिसकेको छ । प्रकाशमा नआएका उनका कृति अरू पनि छन् । उदाहरणार्थ लम्जुङ कुन्छा पौवाको अभिलेखलाई देखाउन सकिन्छ । अप्रकाशित त्यस अभिलेखमा वि.सं. १८६४ मा अमरसिंह थापाले धर्मशाला पौवा बनाएको उल्लेख परेको छ ।

[ १३६ संख्या ]

# पशुपति-भण्डारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि विराजमान

२. मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम साह वहादूर सम्सेर जङ्

३. देवानाम् सदा समरविजयीनाम्

४. आगे हरिकृस्न वझाके सम्वत् १८६४ साल वैशाष सुदि ७ रोजका दिन श्रीवुवाज्यूका व–

५. र्षान्त श्राद्धमा संकल्प भयाका षेतमध्ये षेत मुरि २५ घड्यारि रोपनि १। कुश डल्लो सं–

६. कल्प मोहोर तावापत्र गरि विर्ता वक्स्यौं यसमध्ये देउपाटनको अम्वल घर क्वाठ रोपनि ३ तस्को सा–

७. ध पुर्व मुल वाटो लुहुकिर दषिन वाटो लुहुकिल पश्चिम स्यामलाल अर्ज्याल– लको विर्ता लुहुकिल उत्तर रै–

८. कर लुहुकिल दफे काठमाडौको वाग्मतिका तिरको विह्लौटो कुवसि रोपनि ४।= घड्यारि समे–

९. त तस्को सांध पुर्व स्याम वझाको विर्ता र रैकर कुलो लुहुकिल पश्चिम टेवाहल–

१०. को वेषार्सि अवालको सुनाषेत लुहुकिल उत्तर मजेश्वरीका कृश्नसिंका सुनाषेत लुहुकिल यति सिमानाका

११. चार लुहुकिलभित्रका षेत मुरि २५ घड्यारि रोपनि १ कुश विर्ता जानि पुस्तदरपुस्तपर्य–

१२. न्त सुष भोग्य गर. यो विर्ता वक्सदा संकल्पवाक्य पर्न्या प्रोहित यदुनाथ पंडित पौ–

१३. ड्याल पानि हालन्या काजि भिमसेन थापा साध लगाउन्या थर घर कासि-राम पा–

१४. डे रणसिं राना भवानिसंकर अर्ज्याल श्रीनिधि पंथ भानु षनाल हरिवंस बोहोरा

१५. व्रह्मानन्द पाध्या रिमाल भलामानिस देउपाटनको अम्ववी व्रह्मा जैसि घिमिन्या

१६. द्वान्या प्रधान चिकुटि मर्दविर मोहिनायक भाजुमन वहिदार मर्लसिं योग–

१७. नारान विश्वानन्द वैद्य लक्ष्मिसिं कसाहि डगोल धनवन्त जगत महिन्द्रसिं पुर्नसिं

१८. – काला धनवन्त हेमन्त मोहिनायक. चारकिल्लाभंदा अर्ध्यालो विर्तवारले नचाप–

१९. नु विना तक्सिर सर्कारवाट नहर्नु. जो यस वन्देजमा रहोइन सो यश श्लोकमा भ–

२०. न्याको पातकि होला स्वदत्ताम्परदत्ताम्वा यो हरेच्च वसुन्धराम् षष्टि वर्षसह–

२१. स्राणि विष्टायां जायते क्रिमि इति सम्वत् १८६६ साल मिति भाद्र वदि ५ रोज २ शुभम्

व्याख्या–

वि.सं. १८६३ वैशाख शुक्ल षष्ठी उप्रान्त सप्तमीको दिन स्वामी महाराज श्री ५ रणबहादुर शाहको बध भएको हो। त्यसको एक वर्षपछि वि.सं. वैशाख शुक्ल सप्तमी वर्षान्त

श्राद्धको दिन हरिकृष्ण ओझालाई कुशविर्ता संकल्प गरी दिइएको थियो । त्यसैको ताम्रपत्र गरीयो दिइएको हो । यसै गरी स्वामी महाराजको वर्षान्त श्राद्धको दिन दामोदर अर्ज्याललाई कुशविर्ता दिई गरिएको ताम्रपत्र तल आउँदैछ । यस्ता ताम्रपत्रबाट एकातिर तात्कालिक सामाजिक कुरालाई औंल्याएको पाइन्छ भने अर्कोतिर तात्कालिक आर्थिक पक्षबारे बुझ्न पनि यताबाट अलिकता मद्दत पाइन्छ ।

स्वामी महाराज श्री ५ रणबहादुर शाह वि.सं. १८६० फाल्गुनमा काशीबाट नेपाल फर्केका थिए । यसपछि उनको हातमा शासनाधिकार गयो । त्यसवेला एकातिर सैनिक शक्ति बढाउनुपर्ने अनुभव गरिएको थियो भने अर्कोतिर त्यसको लागि "राजकोष"मा पर्याप्त धन थिएन । यस कारण सरकारी आम्दानी बढाउनुपर्ने समस्या अगाडि देखापऱ्यो । यसका लागि "जाँचआयोग" गठन भयो । कनकाई तिष्टापश्चिम गढवालपूर्वको विशाल नेपालको जाँचको लागि वि.सं.-१८६२मा गठित "जाँचआयोग"लाई चालीस सवाल लेखिदिइएका थिए ।[1] त्यसै सिलसिलामा ब्राह्मणहरूका पनि केही बिर्ता हरिए; जसलाई "बासट्ठीहरण" भनिन्छ । त्यस वेला सरकारिया पाठशाला थिएनन् । ब्राह्मणहरू बिर्ताको आधारमा पठन पाठन गर्दथे । यस कारण "बासट्ठी-हरण" ले विद्याको क्षेत्रमा असर पर्ने सम्भावना थियो । यसैले केही भारादारहरू "ब्रह्मस्व" हरण नगर्ने पक्षमा थिए ।[2]

"बासट्ठीहरण" सैनिक शक्ति बढाउन आवश्यक हुँदा विवश भई मात्र गरिएको थियो; ब्राह्मणका बिर्ता हर्ने उद्देश्यले गरिएको थिएन भन्ने संकेत यस अभिलेखबाट केही पाइन्छ । यस अभिलेखमा वि.सं. १८६४ मा ब्राह्मणलाई कुशविर्ता दिइएको कुरा परेको छ । यो कुरा विचारणीय छ ।



१. दिनेशराज पन्त, 'स्वामी महाराज रणबहादुर शाहको वि.स. १८६२ को बन्दोबस्त' पूर्णिमा २४ पूर्णाङ्क, संशोधन-मण्डल, पृ. २३८–२६७

२. 'नेपालको संक्षिप्त इतिहास' पृ. १४५–१४६

[ १३७ संख्या ]

# पर्वतको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

यो ताम्रपत्राभिलेख बेनीबजारनिवासी श्रोम्‌बहादुर बोगटीसँग रहेको छ।

'सन्धिपत्रसंग्रह' को ६५८ पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ। 'कन्ट्रि-व्यूशनज् टु नेप्लिज् स्टडिज्' वर्ष ३ अंक २ को ८०–८१ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि-विराजमान मानोन्नत

२. श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम शाह वहादूर सम्सेर जङ्गदेवाना-

३. म् सदा समरविजयीनाम्- – – – – – – – – – – –

४. आगे वसन्त वोकटिके पर्वतको अम्वल राषु पूर्व रात्ताभिरका डांडो दषिन सालिक्ग्रामि राहू गाउ

५. पश्चिम पिपलको रूष उत्तर दोवाटो ढुंगा येति चार किल्लाभित्रको जग्गा श्रीमुक्तिनाथ जान्या रस्तामा पौवा व-

६. नाउनु. वघैचा वनाई आप. सुन्तला. दारिम. कटहर. विविरा. केरा लगाउनु. जोगि सन्यासि वैरागि-

७. लाइ षान दिनु भनि श्रीबुवाज्यूवाट मोहोर गरिवक्सनुभयाको रहेछ, तेही मोहोरको सहि थामि पछि

८. हामिले पनि त्यो पौवा बघैंचाको सम्भार वेरामि मेष निमित्य सदावर्त्तकन महभिरको वाभ्को मु–

९. रि यक्सय तिन १०३ विह्लाउन उपल्लो कुभिन्ड्या मुरि ५ तल्लो मुरि १० वालम डांडो मुरि २० आमरूक्–

१०. को नाउलो मुरी ४० ज्मा मुरि यक्सय अठहत्तर येति जग्गाको पानफुल रूपैया ६०० लि गुठि राषि व–

११. क्स्याको हो, आज तेहि सहि थामि गुठिको मोहोर तावापत्र गरिवक्स्यौं. यस्मा लोभानि पापानि गरि ह–

१२. र्नामा जो पश्ला तसइ श्रीमुक्तिनाथको कोप कुदृष्टि होला. महापातक लागला यो धर्म जो थाम्नामा पश्ला तश्ला–

१३. ई महाजग्यको पुण्य र श्रीमुक्तिनाथको कृपा सुदृष्टि होला. यस गुठिको चिताई लाटु उपाध्याका सं–

१४. तानले गर्नु. षोस्मोस् नगर्नु गरिवक्स्यौ. आफ्ना षातिरजासंग मेषको टहल गरि वाकि

१५. सेष रह्याको भोग्य गर. इति सम्वत् १८६६ साल मिति आश्विन सुदि २ रोज ३ शुभम्

व्याख्या–

गण्डकीप्रदेशको हिमाली भेकमा स्थित मुक्तिनाथको मन्दिर नेपालका प्रख्यात देवस्थल-मध्ये एक हो । मुक्तिनाथको प्रसिद्धि नेपालबाहिर भारतभेकमा पनि केही फैलिएको थियो । नेपालका बाहेक बाहिरका पनि दर्शनार्थीहरू यहाँ आउँथे । विशेष गरी जोगी संन्यासीहरू आउँथे । यी यात्रीहरूको लागि धर्मशाला, सदावर्त आदिको आवश्यकता हुनु स्वाभाविक थियो । यसै आवश्यकताको अनुभव गरी श्री ५ रणबहादुर शाह, सुवर्णप्रभादेवी आदिले मुक्तिनाथक्षेत्रमा धर्मशाला बनाएको, सदावर्त राखेको चर्चा माथि गरिसकेको छ ।

मुक्तिनाथको मन्दिर पुग्ने बाटो त्यति सजिलो थिएन; यो क्षेत्र दुर्गम रहेको छ । यस कारण मुक्तिनाथ-मन्दिरको आसपास धर्मशाला, सदावर्तको बन्दोबस्तले मात्र पुगेन; बाटोमा

पनि पौवा आदिको बन्दोबस्त हुनुपर्छ भन्ने अनुभव गरी श्री ५ रणबहादुर शाहले मुक्तिनाथ जाने बाटोमा पौवा बनाउन लाएको उल्लेख यस अभिलेखमा परेको छ। साथै दान दिइएका जग्गामा बगैंचा बनाई आँप, सुन्तला, दारिम, कटहर, केरा आदि लाउनू भन्ने उल्लेखनीय व्यवस्था पनि श्री ५ रणबहादुर शाहबाट गरिएको रहेछ भन्ने यस अभिलेखबाट थाहा पाइन्छ। यसबाट एकातिर फलफूलको उत्पादन हुने भयो; अर्कोतिर तीं फलफूलको आम्दानीले जोगीहरूलाई बाटामा खुवाउने बन्दोबस्त पनि हुने भयो। आफ्ना पिताबाट राखेको गुठीलाई थामी श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट सदावर्तको लागि केही जग्गा थपिदिएको उल्लेख पनि यस अभिलेखमा परेको छ ।

यसरी तात्कालिक केही कुरा बुझ्न यो ताम्रपत्र पनि केही उपयोगी रहेको हुनाले यस संकलनमा समावेश गरिएको हो।



[ १३८ संख्या ]

# बद्रीनाथको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

यो ताम्रपत्रको नकल कौसी तोसाखानामा रहेको छ । 'पूर्णिमा' १६ पूर्णाङ्कका २२१–२२३ पृष्ठमा दिनेशराज पन्तद्वारा यो छापिएको छ ।

## मूलपाठ

स्वस्ति श्रीगणपतये नमः श्रीबदरीनाथाय नमो नमः ।।

अद्य श्रीसालिवाहनीयशकेऽतिधृत्यष्टि १७१६ मिते विभवनामसंवत्सरे श्रीसूर्ये उत्तरायणे माघमासे कृष्णपक्षे चतुर्दश्यां पुण्यतिथौ सोमवासरे मूलनक्षत्रे व्याघातयोगे गरकरणे शिवमुहूर्ते मकरराशिस्थिते दिनकरे धनूराशिस्थिते हिमकरे मीनराशिस्थिते देवगुरावन्येषु यथास्थानस्थितेषु सत्सु ।।

स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादिविविधविरुदावलि-विराजमान मानोन्नत श्रीमन्महाराजाधिराजश्रीश्रीश्रीमहाराजगीर्वाणयुद्धविक्रम-साहबहादूरसम्सेरजङ्देवानाम् सदा समरविजयीनाम् ।

श्रीमज्जनन्या श्रीकान्तवतीदेव्या श्रीबदरीनाथप्रीतये तत्सन्निधौ प्रत्यब्दं वैशाखमासमारभ्य कार्तिकमासपर्यन्तं सति संभवे षट्शताधिकपञ्चविंशतिसहस्र-संख्याकेभ्यो ब्राह्मणादिसमस्ताभ्यागतजनेभ्यो मुष्टित्रयपरिमितद्विदलतोलक-द्वयपरिमितलवणतत्परिमितघृताद्युपकरणयुक्तः पञ्चदशमुष्टिपरिमिततण्डुल-प्रदानरूपसदाव्रतविधानाय पूर्वोक्तमासेषु तस्मै जगदीश्वराय प्रतिदिनं यथासंभवो-पचारपूजनपूर्वकमहाभोगनैवेद्यनिवेदनाय च निरुपमप्रतापास्मदीयजनकश्रीमन्म-

हाराजाधिराजरणबहादूरसाहविक्रमोपार्जितकूर्माचलभूभागान्तर्गतससस्यक्षेत्रदि-
सस्यस्थलीगृहपुष्पवाटिकादिसहितपूर्वदिग्वर्त्तमानमौनुबेरौलिदषिनदिग्वर्तमानबा-
जग्रामपश्चिमदिग्वर्तमानकांकरघट्टावारिणगनरसमनरसग्रामोत्तरदिग्वर्त्तमानसिर-
सग्रामप्रान्तस्थितकीलकचतुष्टयविद्यमानो भूदेववितीर्णतत्तद्देवतार्पितप्रपावा-
टिकाप्रणाल्यादिसंरक्षणार्थंसमुत्सृष्टग्रामक्षेत्रादिभिन्नः स्वदेशभाषावक्ष्यमाननृपा-
दिकर्तृकतत्तत्करग्रहदण्डादिविनिर्मुक्तकोटौलिगर्षाभिधानः ससीमग्रामः एकः
स्वसीमान्तर्गततत्तद्ग्रामक्षेत्रादिसहितो भगवते श्रीबदरानाथाय समर्पितः इदानी-
मस्माभिरपि स्वकीयनामाङ्कितताम्रपत्रेणालङ्कृत्य स एव धर्मः प्रतिपालितः
अथ लोभादिना ये केचिद् तद्धर्मलोपं करिष्यन्ति ते पञ्चविधमहापातकिनो
भविष्यन्ति तेषु च पूर्वोक्तदेवस्य त्रयस्त्रिशत्कोटिदेवानां च कुदृष्टिपाता भवि-
ष्यन्ति ।। ये चैतद् धर्मरक्षणं विधास्यन्ति ते पञ्चविधयज्ञजन्यपुण्यभाजस्तद्देव-
कृपाकटाक्षनिलयाश्च भविष्यन्त्यत्र साक्षिणः आदित्यचन्द्रादयो देवा पृथिव्यादि-
महाभूतानि च मानवा अपि चौतरियेति प्रसिद्ध एकश्चत्वारो मन्त्रिणश्चेति ।।

अतः परं देशभाषा ।।

श्रीमुमाज्यू श्रीकान्तवतिदेविले संवत् १८५४ साल मिति माघ वदि १४ रोज २ का दिन श्रीबदरीनाथका प्रीति संकल्प गरि गुठि चह्राउनुभयाको जिल्लै कुह्राउमध्ये कोटौलि गर्षा १ अबादि वैरानि ससीमसमेत तस्को सांध पूर्व मौनुबैरोलि दषिन बाजगाउ पश्चिम कांकरघाट्वार गनरस मनरस गाउ सिरिस गाउ येति चार किल्लाभित्रको कुशविर्ता र देवदेवता पाटि पौवाको गुठ् अरू गर्षाको जिमिबाहेक औ हाम्रो अम्बल भयादेषि वढो कोटौलि गर्षामा दरियाको जिमि गाउ ज्यूलाघर द्रव्यभंडार गंजभंडार कचहरि ड्यौढिभन्डार कमिन कुशहि मुनसिफि सायेर षयेर साल जगात करिया अंकरिया डन्ड कुन्ड मन्यो अपुतालि पंचषत् सुवाङ्गि फौजदारि मिझारि घिउकर रागो बोक्या षसि सर्वाङ्ग मारि मेटि सदावर्तका निमित्त विर्ता बितलव गरि श्रीबदरीनाथलाई चह्रायाको जग्गाको षसोषास पैदावार लि वैशाषदेखि कार्तिकसम्म मैह्ना सात् सदावर्त दिनु. अतिथ अभ्यागत बैरागि संन्यासि जात्रु ज्मा जना पचिस हजार छ सयलाई

जह्नि चाँवल माना डेढ् १॥ दाल मुठि तिन ३ नुन तोला २ घिउ तोला २ येस हिसाबले सदावर्त दिनालाई चांवलके रुपैंया छ सय ६०० दालके रुपैंया यक्सय बिस १२० नुनके रुपैया चौउन्न ५४ घिउके रुपैया यक्सय अठाईस १२८ देवतालाई सात महिनासम्म नित्य भोग चह्राउनाके रुपैया ३४ चौतिस सराजाम बोकि लंजान्या भरियाके रुपैया जनहि आना आठ् ॥ का हिसाबले ज्मा रुपैया तिन सय छ ३०६ सदावर्त्तको जिमि अबाद तहसिल गरि नगद् लंजाई जिनिस षरिद गरि सदावर्त बाड्न्या चिताईदारके षर्च रुपैया यक्सय ज्मां रुपैया तेह्र सय बयालिस १३४२ येति रुपैयाले लेष्याबमोजिमको षर्च लाईकन यस्मा सेषि बांकि रह्याको र गर्षाको पैदावारमा तेह्र सय बयालिसभन्दा अधिक जति पैदावार हुन्छ. यो दुवै थोक्को किफाईत रुपैया ज्मा गरि सालबसाल गुठियारका जीम्मा षजना राषि कुंभका मेलामा षर्च गर्नु.

यस्मा जो लोभानि पापानि गर्ला. तस्लाई पंचमहापातक् लाग्ला. श्रीबदरीनाथको कुदृष्टि पर्ला. जो लेष्याबमोजिमको षर्च लाई धर्म चलावला. उसलाई पंचमहायज्ञको पुण्य र श्रीबदरीनाथको सुदृष्टि होला. जिनिस षरिद गर्दाको किफाईत र पचिस् हजार छ सय अतिथ अभ्यागत् जात्रुको घट्ति बढ्ति हिसाव गर्षाको पैदावार तेह्र सय बयालिसभन्दा बढ्ता यो तिनै थोक्को बहि राउल दफदरिलाई सालबसाल बुझाई रसिद लिनु ॥

अथ मधेशिया भाषा ।।

श्रीमुमाज्यु श्रीकान्तवतिदेविने सम्वत् १८५४ साल मिति माघ वदि १४ रोज २ मों संकल्प कर्के चढायेका जमिन जिल्लें कुह्राउमध्ये कोटौलिगर्षा १ अवादि वैरानि ससिम्समेतका सांव पूर्व मौनुबैरोलि दषिन वाज्गाउ पश्चिम फाफरवाट्वार गनरस मनरस गाउ उत्तर सिरिस गाउ इस चारौ तरफ मेड्बन्दि चकलाबन्दिका जग्गहमों कुशबिर्ता देवदेवता पाटि पौवाका गुठ औ दोश्रा गर्षाका जमिन् शिवाए हमरा अम्बल भयेसौं इधर कोटौलि गर्षामों दरियेका जमिन गाउ ज्यूला घर द्रव्यभन्डार गंजभण्डार कचहरि औढिभण्डार कुशहि मुनसिकि कमिन सायेर षयेर जाल जगात् करिया अकरिया डन्ड कुन्ड मन्यो अपुतालि पञ्चषत सुबाङ्गि फौजदारि मिझारि भैंस छागर षसि सर्वाङ्ग षसोषास सदावर्त्तके वास्ते

विर्ता विललप कर्के चढाये श्रीबदरीनाथको चढायेका गर्षाका पैदावार लेके वैशाषसौं लगाइत कार्तिक मैह्ल साततक् सदावर्त देना, अतिथ अभ्यागत् वैरागि संन्यासि ज्मा जवान पचिस हजार छ सय २५६०० कौं फि जवान् चावल माना डेढ १॥ दाल मुठि ३ निमष तोला २ घि तोला २ यह हिसाबसै सदावर्त देना,

कौचावरका रुपैया ६०० दालके रुपैया १२० निमषके रुपैया ५४ घिके रुपैया १२८ देवताके मैह्ल साततक् नित्ये भोग चह्राउनेका वास्ते रुपैया ३४ सरसाराजाम लेजानेवाले बोभियेकौं फि जवान् आने आठ्का हिसाब सौं ज्मा रुपैया ३०६ सदावर्त्त का जमिन अबाद तहसिलकौं नगदसौं जिनिस षरिद कर्के सदावर्त्त देनेवाले कारोबारिकौं षर्च रुपैया १०० गोसवारा ज्मा रुपैया तेह्र सव बयालिसकौं शिवाए पैरावार होए. यह दोनु रकम्का किफायेत ज्मा कर्के साल बसाल गुठियारके जिम्में षजना रषिकै कुंभका मेलामों षर्च कर्ना, यस्मो जो जन लोभ पाप करै. तेस्को महापञ्चपातक लगैगा औ श्रीबदरीनाथका कुदृष्टि होगा जो लेषाबमोजिम् षर्च लगाईको सदावर्तका धर्म चलावैगा. उस्कों पञ्च महायज्ञ-का पुण्य औ श्रीबदरीनाथका सुदृष्टि होगा, जिनिस षरिद कर्तेका किफाईत् अतिथि अभ्यागत् जात्रिका घटति बढतिका हिसाव गर्षाका पैदावरमों तेह्र सव बयालिस सौंशिवाय यह तिनु रकमका वहि राउल दफरिकौ सालबसाल बुझायेके रसिद लेना. मोहोर तांवापत्र कर्के चढाये यह सदावर्तका जग्गा संकल्प होनेका साक्षि प्रोहित दैवज्ञकेसरि चौतरिया बम साहका भाइ हस्तदल काजि त्रिभुवनसिं काजि दामोदर पांडे काजि किर्तिमानसिं काजि नरसिं षरिदार सुकदेव जोसि सिरिराम जैसि द्वारा भवानन्द भैरविसि षवास्.

स्वदत्तां परदत्तां वा यो हरेत्च वसुन्धराम् ।
षष्टिवर्षसहस्त्राणि विष्टायां जायते क्रिमिः॥

इति सम्वत् १८६६ साल मिति आश्विन वदि ६ रोज ६ शुभम्.

व्याख्या—

नेपालको एकीकरणको सिलसिलामा नेपालीहरू सुदूर पश्चिममा कसरी अगाडि बढे भन्ने कुराको चर्चा माथि ठाउँठाउँमा गरिसकेको छ। वि.सं. १८४९ सम्म नेपालको यमुना

साँध लागेको थियो । त्यस प्रसङ्गमा बदरीनाथ जस्तो प्रसिद्ध देवस्थल पनि विशाल नेपाल-अन्तर्गत पर्न आयो । यो नेपालीहरूको लागि गौरवको कुरा हुनु स्वाभाविक थियो । अतः बदरीनाथको दर्शनार्थ आउनेहरूलाई पूरा सुविधा होस् भन्ने कुरामा नेपालीहरूले दृष्टि पुऱ्याए । नेपालका अरू प्रसिद्ध देवस्थलमा जस्तै बदरीनाथमा पनि विशिष्ट कृति राख्ने कुरामा शाह राजपरिवारको पनि दृष्टि गयो । तदनुसार वि.सं १८५४ मा महारानी कान्तवतीदेवीले बदरीनाथको दर्शनार्थ आउनेहरूलाई सुविधा होस् भनी सदावर्त राख्न कुमाउँभेकका प्रशस्त जग्गा संकल्प गरिन् । त्यसै संकल्पअनुसार श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट यो ताम्रपत्र गरिदिइएको हो ।

बदरीनाथ दुर्गम हिमालीभेकमा रहेको छ । हिउँदमा त यहाँ हिउँ नै पर्छ । यस कारण वैशाखदेखि कार्तिकसम्म मात्र दर्शनार्थीहरू यहाँ जाने गर्थे । यसै हुँदा यस अभिलेखमा वैशाखदेखि कार्तिकसम्म सात महीनाको लागि सदावर्त दिने बन्दोबस्त गरिएको छ । अतिथि संन्यासी जात्रु आदि गरी जम्मा पचीस हजार छ सयलाई सदावर्त दिने उल्लेख यस अभिलेखमा परेको छ । यसका लागि पर्याप्त आयस्ता तोकिएको थियो । साथै यस अभिलेखमा उल्लेख गरिए अनुसारको सदावर्त चलाई बाँकी रहेको पैसा कुम्भमेलामा खर्च गर्ने उल्लेख पनि यसमा परेको छ ।

यसरी विशाल नेपालको कुरा बुझ्नाको लागि यो अभिलेख पनि उपयोगी छ भन्ने स्पष्ट छ । यसै हुँदा यसलाई यस संकलनमा समावेश गरिएको हो ।

卐

[ १३९ संख्या ]

# लम्जुङको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

लम्जुङ ताकुं घाटनिवासी पद्मराज रेग्मीको संग्रहमा यो ताम्रपत्राभिलेख रहेको छ । यसमा वि.सं. १८६६ दिइएको छ ।

## मूलपाठ

श्री

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि विराजमा–
२. न मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गिर्वाणयुद्धविक्रम शाह वहा–
३. दूर सम्सेर जङ् देवानाम् सदा समरविजयिनाम्............आगे भक्तराम पाध्याके सम्व–
४. त १८६३ साल ज्येष्ट वदि ४ रोज ३ का दिन श्रीबुबाज्यूका सुद्ध शान्तिमा संकल्प भयाका षेतमध्या मुरि ४०घ–
५. ड्यारि रोपनि २।।।— कुश डल्ला संकल्प विर्ता मोहोर तावापत्र गरिवक्स्यौं यसमध्ये ताकुको अ–
६. ग्वलमा वावटार षेत मुरि २० पानि षेत नपुग्याको मुरि २० को पाषो रोपनि ३० दरले रोपनि ६ को मु–
७. रि २४ घड्यारी रोपनि २।।।—के मुरि ११।८। सुद्ध ज्मा षेत पाषो मुरि

मुरि ५५।५ तस्को सांध पूर्व डहर ग–
८. ल्लि कांल्हाको लुहुकिल दषिन रामशर्म पंडितको लुहुकिल पश्चिम रेवति लामिछान्याका
९. विर्ताको लुहुकिर उत्तर बाटमनिको लुहुकिल यति शिमानाका चार लुहु–किलभित्रका ज–
१०. ग्गा मुरि ५५।५ कुशविर्ता जानि पुस्तदरपुस्तपर्यन्त सुष भोग्य गर यो विर्ता वक्सदा संक–
११. ल्प वाक्य पढ्न्या प्रोहित यदुनाथ पण्डित अर्ज्याल पानि हालन्या काजि भिमसेन थापा सा–
१२. ध लगाउन्या थरघर वालकृष्न वोहोरा केहेरसिंह राना कासि पांडे लिलाधर अज्याल भानु–
१३. पनाल श्रीनिधि पन्थ भास्कर पाध्या कृस्नानन्द पाध्या रिमाल डंगोल चिकुटि विस्नसिं. चार–
१४. किल्लाभन्दा अर्घ्यालो विर्तवारले नचापनु विना तक्सिर सर्कारबाट नहनुं जो यस वन्देजमा रहोई–
१५. न सो यस श्लोकमा भन्याको पातकि होला स्वदत्तम्परदत्तम्वा यो हरेत्च वसुन्धराम् षष्टिवर्षसहस्राणि वि–
१६. ष्टाया जायते क्रिमि ईति सम्वत् १८६६ साल मिति माघ वदि ९ रोज शुभम्–



[ १४० संख्या ]

# टिस्टुङ्गको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

टिस्टुङ्गनिवासी श्रीसानुबाबु अर्ज्यालसंग रहेको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ। यसमा वि. सं. १८६६ दिइएको छ।

'टिस्टुङ्ग चितलाङमेकको ऐतिहासिक सामग्री'का २८-३० पृष्ठमा हेमन्त राणा र धनवज्र वज्राचार्यद्वारा यो प्रकाशित भएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि-विराजमान मानोन्नत श्रीमन्महाराजा-

२. धिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धविक्रम साह बहादूर सम्सेर जङ् देवानाम् सदा समरविजयीनाम्............

३. आगे दामोदर पाध्या अर्ज्यालके सम्वत् १८६४ साल वैशाष सुदि ७ रोजका दिन श्रीबुवाज्यूका वर्षान्त श्राद्धमा

४. संकल्प भयाका षेतमध्ये षेत् मुरि ६० धन्यारि रोपनि ४= कुश डल्ला संकल्प विर्ता मोहोर तावपत्र गु-

५. रिबक्सौं, यसमध्ये तिष्टुङको अम्बल बाहालि षेत मुरि ६० तस्को सांध पुर्व रैंकर बाटो आलि बाध्या ढुं-

६. गो लुहकिल, दषिन रैंकर आलि लुहकिल, पश्चिम बाटो कुलो मुहानको लुहकिल उत्तर बा-

७. टो बाँध्या ढुंगो, पुर्वको लुंहुकिल औ घड्यारि, कुन्छाको अम्बल जैसिथोक घड्यारि रोपनि ४═। तस्को
८. साँध पुर्व कुले लुहुकिल, दषिन रैकर आलि लुहुकिल, पश्चिम तेर्छो बाटो दोबाटोके लुहुकिल उत्त–
९. र बाटो लुहुकिल, येति शिमानाका चार लुहुकिलभित्र षेत मुरि ६० घड्या-रि रोपनि ४═। कुशविर्ता
१०. जानि पुस्तदरपुस्तपर्यन्त सुष भोग्य गर. यो विर्ता बक्संदा संकल्प वाक्य पन्ह्यां प्रोहित यदुना–
११. थ पंडित अर्ज्याल, पानी हाल्न्या काजि भिमसेन थापा सधियार लिलधर अर्ज्याल, बंसविर राना का–
१२. सिराम पांडे श्रीनाथ पन्थ, भानु षनाल, बिरु बोहोरा, भास्कर पाध्या कृष्णानन्द पाध्या रिमाल डंगोल टोप्न्या
१३. नाईक्या बम राइ माहान्या बाल्या अमृत जर्गसि. चार किल्लाभन्दा अघ्यालो विर्तवारले नचापनु. विना त–
१४. क्सेर सर्कारबाट नहुनु. जो यस बन्देजमा रहोइन. सो यस श्लोकमा भन्या-को पातकि होला. स्वदत्ता–
१५. न्परदत्ताम्वा यो हरेच्च वसुंधराम्, षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमि, इति सम्वत् १८–
१६. ६६ साल मिति माघ वदि ६ रोज शुभम्.

व्याख्या–

यो दुइ ताम्रपत्राभिलेख श्री ५ रणबहादुर शाहको शुद्ध शान्तिको अवसरमा र वर्षान्त श्राद्धको अवसरमा ब्राह्मणलाई कुशविर्ता दिई श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट गरिदिइ-एका हुन् । श्री ५ रणबहादुर शाहको वर्षान्त श्राद्धमा गरिदिइएको अर्को ताम्रपत्र माथि गइ-सकेको छ । तात्कालिक सामाजिक कुरा र आर्थिक कुरा बुझ्न यस्ता अभिलेख पनि अलिकता उपयोगी नै रहेका छन् ।

ब्राह्मणहरूलाई कुशबिर्ता दिई गरिएका यी ताम्रपत्रहरूबाट "बासट्ठीहरण"को पृष्ठभूमि बुझ्न केही मद्दत पाइन्छ । काशीबाट फर्केपछि श्री ५ रणबहादुर शाहले राष्ट्रको सैनिकशक्ति बढाउनुपर्ने महसूस गरे । तर राजकोशमा भने चाहिंदो धन थिएन । यस कारण सरकारी आम्दानी कसरी बढाउने भन्ने कुरामा ध्यान दिन थालियो । यसका लागि एक "जाँचआयोग" पनि गठन गरियो । यसै सिलसिलामा ब्राह्मणहरूका केही बिर्ता पनि हरिए । जुन इतिहासमा "बासठ्ठीहरण" भनी प्रसिद्ध रहेको छ । "बासठ्ठीहरण" सैनिक शक्ति बढाउन आवश्यक भई मात्र गरिएको थियो; ब्राह्मणहरूको बिर्ता हर्ने उद्देश्यले गरिएको थिएन भन्ने कुराको संकेत ६२ सालपछि ब्राह्मणहरूलाई नयाँ कुशबिर्ताहरू बिई गरिदिइएका यी ताम्रपत्रहरूबाट पाइन्छ । यस कुराको चर्चा माथि पनि गरिसकेको छ ।

卐

[ १४१ संख्या ]

# विष्णुमतीको भोटु पाँडेको अभिलेख

नरदेवीबाट स्वयम्भू जाने विष्णुमतीपुलपारि बायाँतिर रहेको शिलापत्रमा यो अभिलेख कुँदिएको छ ।[१] यहाँ विक्रमसंवत् १८६७ दिइएको छ ।

'संस्कृत-सन्देश' वर्ष २, अङ्क ४–५–६ को २९–३० पृष्ठमा श्यामराज पोखे्रल, मोहननाथ पाण्डे, बाबुराम नेपाल, किशोरमणि आ. डी., सुशीलकुमार पोखे्रलद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. श्रीविष्णुमत्यै नमः॥ श्रीशिवपुरी पर्वत्मा विराजमा–
२. न भयाका श्रीविष्णुका नाभिदेषि उत्पन्न भयाकी विष्णुमती–
३. का जल पाप नाश गर्न्या निर्मल भयाका गंगाजीका जल झाइ प–
४. वित्र भयाका जलकन दिनदिनै प्रमाण गर्छु, हिमालयपर्वतका
५. नजिकमा रह्याका गोर्षा पर्वतमा सुबुद्धि भयाका गणेश पा–
६. डे भैगया. तन्को पुत्र उत्तम यश भयाका विष्णु पाडे भया. तन्को
७. पुत्र विरु पाडे भया. तन्को पुत्र कुलको मणि झाइ भयाका वली
८. पाडे भया तन्को पुत्र विष्णुदाश पाडे भया. तन्को पुत्र धर्मात्मा
९. भयाका लडाइमा ठूलो पराक्रम भयाका तुलाराम पा–

१. हाल यो शिलापत्र उक्त ठाउँमा रहेको छैन; कहाँ राखिएको छ; थाहा हुन सकेन ।

१०. डे भया तन्को पुत्रहरू सरस्वतीका गर्भबाट जन्म्याका
११. चार जना भया. तिनिहरूको जेठा शत्रुहरूकन सदै जित्न्या
१२. स्वभाउ भयाका जगजित्पाडे माहिला वुद्धिमान् नीति जान्या
१३. स्वधर्ममा लाग्याका रणजित् पाडे काहिला व्रजवासी पाडे
१४. तिनिहरूको कांछा उदार स्वभाउ भयाका सज्जनहरूका अघिवा–
१५. ट वषान गर्ण योग्य भयाका आफुले गर्न्याका दिशाका अंतसं–
१६. म पुक्याका कीर्तिले पृथ्वीमण्डल व्याप्त गरिरह्याका ब्राह्मणह–
१७. रूका पाउका धुलाले अतिपवित्र आङ भयाका ठूला ठूला तीर्थ
१८. स्नान गर्‍या ठूला ठूला यज्ञ गर्‍या ठूला ठूला दान गर्‍या विषये लाग्याका
१९. बाबा महतारीका सेवाले पवित्र भयाका श्रीभोटु पांडे थिया
२०. तन्का पुत्रहरू अन्नपुर्णाका गर्भबाट जन्म्याका वलभंजन पाडे गजद–
२१. ल पाडे यशोदाका गर्भबाट जन्म्याका गरूरध्वज पाडे इ तीन जना पुत्र–
२२. ले सहित भयाका श्रीभोटु पाडेले संवत् १८६७ सालका वैशाष महि–
२३. नाका शुक्लपक्षका पूर्णिमाका दिन बाटो हिंन्या गाइ मानिस किमिला-
२४. हरू सुखसित हिंडुन्भनि नदि वारि पारिका पाटिले सहित विष्णुमतीका
२५. पुराणु बिगन्याका सागु रास्रो गरि नञा बनाऔ ॥ ॥ अथ संस्कृतम् ॥
२६. श्रीविष्णुमत्याः सलिलं प्रभूतं मुञ्जाद्रिशृंगस्थमुरारिनाभेः
२७. भागीरथीनीरमिवातिपूतं पापघ्नमच्छं प्रणमामि नित्यम् ॥१॥
२८. गोर्षानामनगे नगेन्द्रनिकटे आसीद् गणेशः सुधीस्तस्याजा–
२९. यत विष्णुरुत्तमयशास्तस्यापि पुत्रो विरुः ॥ तस्याभूद्बलिसंज्ञकः
३०. कुलमणिः श्रीविष्णुदासो बलेस्तस्माद्भीमपराक्रमो युधि तुला–
३१. रामोऽभवद् धार्मिकः ॥२॥ चत्वारस्तनयास्ततः समभवन्सारस्व–
३२. तेया वरा तेष्वाद्यो जगजित्सपत्नविजयी तस्यानुजो बुद्धिमा–
३३. न् नीतिज्ञो रणजित्स्वधर्मनिरतो मान्यो ह्यमात्याग्रणीस्त–
३४. स्यान्यो व्रजवासिसंज्ञक इति ख्यातो जगन्मण्डले ॥३॥ एतेषा–
३५. मनुजोऽप्युदारचरितो ह्यासीत्सतामग्रणीः सत्कीर्त्या निजया
३६. दिगंतगतया चाकीर्णभूमण्डलः ॥ पूतात्मा द्विजपादप–

३७. द्बमरजसा पित्रोस्तथा सेवया सत्तीर्थाटनदानयज्ञनिरत

३८. : श्रीभोटुपाडेऽभिधः ।।४।। यस्याभूद् बलभंजनो गजद–

३९. लो द्वावप्पूर्णाजनी सत्कीर्तिर्गरुडध्वजः समभवत्पुत्रो

४०. यशोदोदरात् ।। राधे मासि नगाङ्कनागकुमिते वर्षे हि राका–

४१. तिथौ जीर्णः सेतुरकारि तेन सुभगो नूत्नोऽध्वगानां मुदे ।।५।। शुभम्

व्याख्या–

शाहकालका भारादारहरूमा कपर्दार भोटु पाँडेको बेग्लै स्थान रहेको छ; उनको प्रसिद्धि राजकाजले भन्दा जनहित हुने सामाजिक कार्यले गर्दा बढी फैलिएको छ भन्ने कुराको चर्चा माथि ठाउँठाउँमा गरिसकेको छ। विष्णुमतीमा पुल बनाई राखेको यस अभिलेखले पनि उक्त कुराको राम्ररी पुष्टि गरेको छ।

भोटु पाँडेको वासस्थान काठमाडौं नरदेवी थियो। यसैले नरदेवीस्थानबाट स्वयम्भू जाने अतिचल्तीको बाटोमा पर्ने विष्णुमतीको पुल बनाउने कुरामा भोटु पाँडेको ध्यान गएको देखिन्छ। नरदेवीबाट स्वयम्भूस्थान जाने विष्णुमतीको उक्त पुल ने.सं. ७८३ (वि.सं. १७२०)मा कान्तिपुरका प्रसिद्ध राजा प्रताप मल्लले बनाएथे।[१] त्यसको डेढ शताब्दीपछि भने जस्तै वि.सं. १८६७ मा भोटु पाँडेले फेरि नयाँ पुल बनाई यो अभिलेख कुँदाइएको हो। यस अभिलेखमा "श्री भोटु पाडेले संवत् १८६७ सालका वैशाष महिनाका शुक्लपक्षका पूर्णिमाका दिन बाटो हिंन्या गाइ मानिस किमिलाहरू सुखसित हिंडून् भनि नदि वारिपारिका पाटिले सहित विष्णुमतीका पुरानु बिगन्याका साणु राम्रो गरि नया बनाऔं" भनी पुल बनाउनुपर्ने आवश्यकतामाथि प्रकाश पारिएको छ। यसबाट भोटु पाँडे मानिसहरूलाई मात्र सुविधा होइन; गाई आदि अरू प्राणीलाई समेत सुविधा होस् भनी चाहने दयालु, उपकारी स्वभावका थिए भन्ने झल्किन्छ। गाई, ब्राह्मणप्रति त उनको अरू विशेष श्रद्धा रहेको थियो। यस अभिलेखमा भोटु पाँडेको वर्णनमा "ब्राह्मणहरूका पाउका धुलाले अतिपवित्र आङ भयाका" भन्ने विशेषण उनमा लाइएको छ। गाईप्रतिको श्रद्धाले गर्दा उनले 'गौचर' आदि राखेको कुरा माथि गएका उनका अभिलेखमा परेको छ।

भोटु पाँडे गोरखामा द्रव्य शाहको राज्य स्थापना गर्नामा मद्दत गर्ने प्रसिद्ध गणेश पाँडेका

---

१. गौतमवज्र वज्राचार्य र महेशराज पन्त, 'अभिलेखसंग्रह' (तेस्रो भाग), संशोधन-मण्डल, पृ. २२

वंशज हुन् । यसैले यस अभिलेखमा गणेश पाँडेदेखिको वंशक्रमको वर्णन परेको छ । यहाँ वर्णित सो वंशक्रम यस प्रकारको छ–




भोटु पाँडेका बाबु काजी तुलाराम पाँडे श्री ५ पृथ्वीनारायण शाहका विश्वासपात्र भारादार थिए । एकीकरण अभियानमा तुलाराम पाँडेको पनि उल्लेखनीय योगदान रहेको थियो ।[२] भोटु पाँडेका दाजु काजी जगजित् पाँडे पनि राजकुमार बहादुर शाहको पालामा शक्तिशाली बनेथे ।[३] अर्का दाजु काजी रणजित् पाँडे पनि श्री ५ रणबहादुर शाहको शासनकालमा एक चोटि शक्तिशाली बनेथे ।[४] बाबु र दाजुहरूको तुलनामा भोटु पाँडे त्यति शक्तिशाली भएनन्; उनी कपर्दार र महाकोशाध्यक्ष पदमा मात्र रहे । तर आफ्नो राजभक्ति र जनहितकार्यले गर्दा भोटु पाँडेको पनि कम प्रसिद्धि फैलिएको छैन । भोटु पाँडेलाई संझाउने उनका अनेक कृतिमध्ये विष्णुमतीको पुल र वारि पारि पाटी बनाई राखेको यो कृति पनि उल्लेखनीय रहेको छ । यसबाट उनको संझना चिरस्थायी बनाउनामा मद्दत भएको छ भन्ने स्पष्ट छ ।



२. यस विषयको चर्चा माथि गरिसकेको छ ।

३. यस विषयको चर्चा माथि गरिसकेको छ ।

४. यस विषयको चर्चा माथि गरिसकेको छ ।

[ १४२ संख्या ]

# हनूमानूढोकाको अभिलेख

काठमाडौँ हनूमान्ढोका राजदरबारको मूल सुनढोकामा यो अभिलेख कुँदिएको छ। यसमा वि.सं. १८६७ दिइएको छ।

'हनूमान्ढोका राजदरबार'को २६७ पृष्ठमा गौतमवज्र वज्राचार्यद्वारा यो अभिलेख प्रकाशित भएको छ।

## मूलपाठ

१. अभ्राङ्गनागधरणीमितवैक्रमेब्दे भाद्रे मले शुभतिथौ मदनेथ सौम्ये, । गोरक्षरा–

२. जनृपशेखरशासनेन सौवर्णपट्टजटितं रचितं कपाटम्, ताम्रपत्रको आम्दानीले

३. मार्फत श्रीकाजि भीमसेन थापा: श्रीकाजि बहादुर भदारि ।।

## अनुवाद

वि.सं. १८६७ भाद्र शुक्ल त्रयोदशी बुधवारको दिन गोरखाका राजाका शिरोमणिको सरकारले सुनको पाटा जडिएको खापा बनाइएको हो।

व्याख्या–

नेपालको एकीकरणपछि राजधानी बन्ने अवसर काठमाडौँले पायो। यस कारण 'हनूमान्ढोका राजदरबार'को ऐतिहासिक महत्त्व झन् बढयो; एकीकृत नेपालको 'केन्द्र' हनूमान्–

ढोका राजदरबार रह्यो । यसैले शाहकालमा हनूमान्ढोका राजदरबारको पुनर्निर्माण कार्य हुँदै रह्यो ।[१] कान्तिपुरविजयको लगत्तै एक वर्षपछि श्री ५ पृथ्वीनारायण शाहले "बसन्तपुर" निर्माण गरी हनूमान्ढोका राजदरबारलाई झन् आकर्षक पारेथे । यो क्रम पछि पनि जारी रह्यो । विशेष गरी श्री ५ राजेन्द्रविक्रम शाहको पालामा भीमसेन थापाको देखरेखमा हनूमान्ढोकालाई सजाउने कार्य भएथ्यो । त्यही पुनर्निर्माणको शुरुआतको रूपमा श्री ५ गीर्वाणयुद्धविक्रम शाहको पालामा वि.सं. १८६७ मा हनूमान्ढोका राजदरबारको मूलढोकाको निर्माण गरी यो अभिलेख कुँदाइएको हो ।



१. गौतमवज्र वज्राचार्य 'हनूमान्ढोका राजदरबार' पृ. २६–२८

[ १४३ संख्या ]

# जनकपुरको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

जनकपुर गुठी संस्थान कार्यालयको संग्रहमा रहेको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८६७ दिइएको छ।

'प्राचीन नेपाल' २६ संख्याको २८–२९ पृष्ठमा देवीप्रसाद लम्साल र राधेश्याम भट्टराईद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-विराजमान मानोन्नत श्रीमन्महाराज गीर्वाणयुद्धविक्रम साह

२. वहादूर सम्सेरजङ् देवानाम्सदा समरविजयिनाम्– – – – – – –

३. आगे महंत अमर गिरिके तिम्रा पुर्षा महंत चतुर्भुज गिरिलाई अघि सम्वत् १११४ साल श्रावन सुदि ३ रोजका दिन मकवानी राजा इन्द्रविधाताले श्रीसीताराम श्रीलक्ष्मीनारायण प्रीति कु–

४. श विर्ता वितलव गरि चह्राायाको औ मकवानि राजा हेमकर्न सेनले सम्वत १८०८ साल माघ सुदि ११ रोजका दिन तिम्रा वाज्या गुरु चन्दनगिरिलाइ थामिदियाको

५. हाम्रा अम्वल भयापछि श्रीधुढाज्यूज्यूवाज्याबाट पनि सम्वत् १८२६ साल माघ वदि ४ रोज २ का दिन तिम्रा गुरु रेवा गिरिलाइ थामिवक्स्याको

श्रो सम्वत १८३१ फागुन सुदि १५ रो–

६. ज ५ का दिन श्रीज्यूज्यूवाज्याबाट र सम्वत् १८३४ साल फागुन वदि १४ रोज ४ का दिन श्रीवुवाज्यूवाट पनि थामिवक्स्याको श्रो सम्वत् १८६३ साल मार्ग वदि १२ रोज १ का दिन

७ हामिले पनि थामिवक्स्याको जिल्लै महुत्तरी प्रगन्ना कोराडिमध्ये मौजे जनकपूर मौजे विसहरा मौजे सहोदरा ज्मा ससीम मौजे तिन् ३ सावीक वदस्तुर तस्को चौतर्फि साध. व–

८. मोजीम् मेडवन्दी मौजे जनकपूरका पूर्वारि सिमाना पूर्व दुधानै नदिसौ पछीम दषिन पोषरि विसहरिका दषिन पोषरा दुइ एकराहि दुवै पोषराक उत्तर पछिम पोषरा

९. तिति ताहि पोषराक पछवारि मोहारसौ पूर्व तिनो पोषराक उत्तर पोषरा दुइ ताहि पोषराक पछवारि मोहारसौ पूर्व उत्तरतरफ आषाढ आषाढक उत्तर पोषरा दुइ पू–

१०. र्व पछिम तादिसौ दषिन मौजे विसहराका सांध पूर्व दुध्यनै नदीमध्यं वाँध ताहिसौ दषिन मुह पैनीक तोकदारि ताहिसौ दषिन पछिम डावर डावरक दषिनवारि का–

११. घी दछिनका सिमाना पर पैनी पछिम मुह डोडातक डोडासौ पछिम मुह सरासर किलाकोइला ताहिसौ सिधा पछिम पूर्व पछिम सरासर धुर सहोडाक पू–

१२. र्वारि दषिनवारि कोनेतक धुरतक पछिमका सिमाना १ सहोडाक आगन कोनसौ उत्तर दषिन धुर सरासर उत्तर लगाइत् पाकरिक गाछका उत्तर

१३. चिलकुसढानका षेत षेतका उत्तर वारि आरि पर पुराना धूर ताहिसौ पूर्व पछिमका सिमाना १ तिस् जगहसौ सरासर पूर्व उत्तरका सीमाना सिधा पूर्व डोडा डोडा–

१४. सौ पूर्व लगाइत् मुरलि पोषरिक दषिनवारि भोड पर कोइलाकिला ताहिसौ सरासर पूर्व पुराना धुर ताहिसौ सरासर दुधानै नदीतक सिमाना १ मौजे

१५. सहोदराका साध उत्तर गामक सिमा सहोदरा पोषरिक उत्तर डहर पूर्व

पछिमे डहरसौ उत्तर पुरंदहि पोषरिक दछिनवारि मोहोरसौ दषिन पुरं–
१६. द ढिक पछवारि मोहारक पछिम पंनी छेक पछिम मुह षनुवा वाहक उत्तर मुह जाए पिदारिक डोडातक ताहि डोडासौ स्योभा पछिम मुह पंनी नद्य सहोरना
१७. वाधतक ताहिसौ ताहि पैनी डोडासौं दषिनवारि काधोसौ सहोदरा उत्तर-वारि सिमा वहे पछवारि सिमा नदी सहोरना वाधसौ दषिन नदि दषिन मुह
१८. जाए वेलाक उत्तरपर साघटतक पछिम भर सिमा वहे दषिन वारि सिमा पर सा घाटक पूर्व वांध दामोदर राउत्क पूर्ब पछिमे ताहि वांधसौ दषिन अगनै
१९. कोनकै वांध दोसरा ताहिसौ दषिन सहोदाक गाछ ताहिसौ दषिन वांध दषिन मुह जाए वहि वाधसौ पछिम वेला पूर्व सहोदरा दषिनवारि सिमा पुराना धुर पू–
२०. वें पछिमे धुरक पूर्व घानतक तकदा पूर्व डोडि दषिन मुह जाए डोडीक पछ-वारि काधीसौं वेला पूर्व सहोदरा फेरि वहि डाडिपूर्व मुह जाए श्रीगैवि–दासक
२१. वाधतक ताहिसौ उत्तर सहोदरा दषिनवारि काधी काधीसौ सोनापाराक पुभर कुवा ताहि पर धात उत्तर दषिने बाट ताहि बाटसौ पूर्व पिपरका गाछ गाछ–
२२. का पछिम भीडसौं पूर्व कुवा भीडसौ पछिम सहोदरा दषिन भर सिमा वहि पूर्वारि सिमाबाट घाटक पूर्वबाट वाटक पूर्वक भीडसौ उत्तर कटौया दाव
२३. रतकरा पछिम वाध उत्तर दषिन ताहिसौ पछिम सहोदरा पोषरि तकरा पछवारि भिडसौ पछिम ताहिसौ उत्तर पुरन्दवि पोषरिक दषिन डहर पु–
२४. वें पश्चिमे एति सिमानाका चार किलाभीत्रका माल माटो र वुमावन गोडधोवाइ गादिममारष जलकर थलकर दंडकुंड मन्यो अपुतालि छोरहि पुरोहिति चौ–
२५. धरि कानुगोयका दस्तुर फर फर्माइस वेठ वेगार सगौढा सिगार हाट वन पन पिपाइ आमिलान दस्तुर मैराज अंक सर्वकलम् मारि मेटि मुनि–
२६. यासमेत् कुश विर्ता वितलव श्रीसीताराम श्रीलक्ष्मीनारायण प्रिति आज

हामिले मोहोर तावापत्र गरिवक्स्यौं आफ्ना षातिर्जामासँग मौजे मजकुरको तरदूद तलास आवाद गु–
२७. लजार गरि जो पैदावार भयाकाले श्रीसीताराम श्रीलक्ष्मीनारायणको नित्ये नैमित्येक पुजा गरि सदावर्त चलाइ वाकि सेष रह्याको सिष्योपसिष्य मिलि पुस्तदरपुस्तपर्य्य–
२८. न्त सुष भोग्य गर हाम्रो जय मनाई आसिर्वाद दिन्या गर यो जगगाका मेडवन्दि गरी साध सिमाना लगाउन्या फौजदार इन्द्रमनि वस्न्यात् फौजदार गभु
२९. षवास् गुमाले फौजदार कालु राउत् विचित्र महत् पेस्कार भतन्दास पृथि- दास वहोरादास जानकिरामदास देवानदास जुकिया रामदास सि,
३०. मानदार परसुराम राउत वाकि फकिर वंधुरामदास कानुगोये गौहाइ बन्धु- चौधरि अस्थान कपिलेश्वर वैजनाथ गिरि अस्थान् कुवा हरिनन्द गि–
३१. रि स्वदत्तां परदत्तां वा यो हरेच्च वसुंधराम् षष्टिवर्षसहस्राणि विष्टाया जायते क्रिमि ।। इति सम्वत् १८६७ साल मिति फागुण शुदि १ रोज ७ शुभं



[ १४४ संख्या ]

# जनकपुरको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

जनकपुर गुठी संस्थान कार्यालयमा रहेको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ। यसमा विक्रमसंवत् १८६७ दिइएको छ।

'प्राचीन नेपाल' २६ संख्याको २७ पृष्ठमा देवीप्रसाद लंसाल र राधेश्याम भट्टराईद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज

२. गीर्वाणयुद्धविक्रम साह बहादुर सम्सेरजङ्गदेवानां सदा समरविजयीनाम्.

३. आगे महंत विसंभरदासकें जिल्लै महुत्तरी प्रगन्ना कोराडिमध्ये मौजे जनक-पुर मैदाषिलि वैलाहिपट्टि ससीम् मौजे १ सावीक वद-

४. स्तुर अघि सम्वत् १७८४ साल कार्तिक सुदि ७ का दिन मकवानी राजा मानिकसेनले सर्व अङ्क विर्ता वितलप गरी श्रीजानकी प्रीती चह्लायाको औ

५. राजा हेमकर्णसेनले १७९० साल फागुन वदि ७ का दिन मेडबन्दीसमेतको दानपत्र गरि थामिदियाको रहेछ. हाम्रा अम्बल भया-

६. पछि श्रीज्यूज्यूबाज्याबाट पनि थामिबक्सनुभयाको रहेछ. हामिले पनि ६३ साल मार्ग वदि १३ का दिन दर्बारबाट गयाका जनहरूले र आमी-

७. लहरूले दुष दिंदा विर्तवारलाई दर्बार डाकि कच्चा पक्का जाचबुझ गरि पत्रपात्र हेरि पक्का विर्ता ठहरियो र मौजे मजकूरको माल

८. वियाहदानी कठियारि सगौय जलकर वनकर डंड गुनाहगारि सिंगार हाट समेत श्रीजानको प्रीति विर्त्ता वितलप बहाल गरि

९. थामिबक्स्याको तस्को चौर्तफि सांध दक्षिण वेदिसौ उत्तर तेलपोषराक दक्षिण वारीमोहारसौ उत्तर बस्तिक पूर्व पौषरितक

१०. र पछवारि बाटसौ उत्तर वारिमोहारसौ उत्तर पूर्व दूधानेसौ पश्चिम उत्तर रजौरक सिमापर भिसा ताहिसौ दक्षिण भंडारकोनरस–

११. नसायरक पूर्व डोदा ताहि डोदाक पछवारि अलंगसौ पूर्व पश्चिम पिडारिक डिहसौ पूर्व पिडारिक डीहक दक्षिण चौरतक र पुवारि

१२. अलंगपर द्विवशाक भिड ताहिसौ पूर्व दक्षिण सहौदरापट्टिक सिमानसौ उत्तर वेदिक पश्चिम दुहपौषरि ताहि दषिनवारि

१३. पौषरिक पछवारि मोहारसौ पश्चिम उत्तरवारि पौषरिक पूर्वारि मोहरसौ पश्चिम एति सिमानाका चार कोलाभीत्रका जमी–

१४. नमा अघिदेषि आजसम्म षाइ बेहोरि चचि आयाको विर्ता बितलब आज मोहोर तावापत्र गरि श्रीजानकी प्रीति बह्लायौं

१५. आपना षातिर्जमासंग मौजे मजकुरको तरद्दुद तलास आबाद गुलजार गरि जो पैदावार भयाकाले श्रीजानकीको

१६. नित्ये नैमित्येक पुजा गरि सदावर्त चलाई सिष्योपसिष्य मिलि पुस्तदरपुस्त पर्यंत सुष भोग्य गर. हाम्रो जय

१७. मनाइ आसीर्वाद दिन्या गर औ चुमावन गोडधोवाइ गादिम्मारष छौरहि पुरोहिति चौधरि कानुगोयका द्–

१८. स्तुर फरफर्माइस् बेठ बेगार वनपन पियाइ आमिलान दस्तुरमै राजअङ्क सर्वकलम् मारि मेटि माफ गरिब–

१९. क्स्यौं, स्वदत्तां परदत्तां वा यो हरेच्च वसुन्धराम् षष्टिवर्षसहस्त्राणि विष्टा-यां जायते क्रिमि ॥ इति सम्वत १८६७ साल मि–

२०. ति फाल्गुण शुदि १० रोज २ शुभम्—— ——

व्याख्या–

वि.सं. १८६७ मा श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट महन्त अमरगिरि र महन्त विश्वंभरदासलाई यी दुइ ताम्रपत्र गरिदिइएका हुन् । यी ताम्रपत्रबाट मकवानी सेन राजा र जनकपुरका जानकी देवी आदिबारे अलिकता प्रकाश पर्छ । यस कारण यी दुइ ताम्रपत्र केही उपयोगी नै छन् ।

नेपालको मध्यकालको इतिहासमा मुकुन्द सेनको उदयको ठूलो महत्त्व रहेको छ । सो सेनराज्य खडा नभएको भए नेपालको तराईभागको अस्तित्वमा खतरा पर्ने संभावना थियो। तर मुकुन्द सेनको उदयले नेपालको तराई भागको अस्तित्व जोगाएथ्यो । मुकुन्द सेनका कान्छा छोरा लोहाङ्ग सेन पनि महत्त्वाकाङ्क्षी पुरुष थिए । उनले मकवानपुरदेखि विजयपुरसम्म आफ्नो राज्यविस्तार गरेथे ।[१] पछि हरिहर सेनले पनि यस मकवानी सेनराज्यको अलिकता विस्तार गरे । तर हरिहर सेनको पालामा मकवानी सेनराज्यमा गृहकलह शुरू भयो । यस गृहकलहको परिणामस्वरूप मकवानी सेनराज्य मकवानपुर र विजयपुर दुइ राज्यको रूपमा परिणत भयो ।[२] मकवानपुरको गद्दीमा हरिहर सेनका छोरा शुभ सेन बसे; विजयपुरको गद्दीमा उनका भतिजा विधाता इन्द्र सेन बसे । यस अवस्थामा काका भतिजामा ठ्याँक नमिल्नु स्वाभाविक थियो । यसैले नेपाल-उपत्यकाका मल्ल राजा र अरू चौबीसी राजाको गुहार लिई एकले अर्कोलाई अँठ्याउन बराबर प्रयास गरिए । पछि काका भतिजा दुवै शत्रुको कैदमा परेपछि पूर्वको सेनराज्यमा "राजव्यसन" पैदा भएथ्यो । तर त्यहाँका मन्त्रीहरूले बुद्धि पुऱ्याएर शुभ सेनका दुइ छोरामध्ये महीपति सेनलाई विजयपुरमा र माणिक सेनलाई मकवानपुरको गद्दीमा राखे ।[३] माणिक सेनका छोरा हेमकर्ण सेन हुन् ।[४] वि.सं. १८१६ सम्म मकवानपुरमा हेमकर्ण सेनले शासन गरेका थिए ।

१. 'पाञ्चाली शासन पद्धतिको ऐतिहासिक विवेचना' पृ. १२६

२. उही, पृ. १२७

३. धनवज्र 'मध्यकालीन नेपाल' नेपालपरिचय, पृ. ६८

४. वि.सं. १८०१मा शिवलिङ्ग स्थापना गरी राखेको अभिलेखमा हेमकर्ण सेनले आफ्नो वंशबारे यस्तो लेखाएका छन्–

"श्रीमहाराजाधिराजहरिहरसेनस्य प्रपौत्र श्रीमहाराजाधिराजशुभसेनस्य पौत्र श्रीमहाराजाधिराजमानिकसेनस्य जदुपतिसेनापरनामधेयस्य प्रथमपरिणीताराजमहिषी श्रीजगन्नावती महादेवी श्रीधनावतीपितृगृहनामधेया तस्या उदरजातः श्रीमान् पुत्र महाराजधिराजा कुमार श्रीश्रीदिग्बन्धनसेनस्य जनक महाराजाधिराजश्रीश्रीश्रीहेमकर्णसेनप्रसिद्धाभिधानो हिन्दुपतिराजचक्रचूडामणिः"

मोहनप्रसाद खनाल'अभिलेख-संकलन' पृ. १२६-१२७

नेपालका प्रसिद्ध देवमन्दिहरूमा जनकपुरको जानकीमन्दिर पनि एक हो । जानकीदेवीको स्थापना कहिले, कसरी भयो भन्ने कुरा थाहा पाउन सकिएको छैन । तर मकवानी सेनराजाको पालामा जनकपुरमा जानकीदेवीको स्थापना भइसकेको थियो भन्ने कुराचाहिँ यी ताम्रपत्र र अरू सामग्रीबाट हामी थाहा पाउँछौं । यी दुइ ताम्रपत्रमध्ये पहिलो ताम्रपत्रमा संवत् ११११४ (वि.सं. १७६४ तिर) विधाता इन्द्रले सीताराम लक्ष्मीनारायण प्रीति गरी कुशविर्ता चढाएको कुरा परेको छ । त्यसलाई वि.सं. १८०८ मा हेमकर्ण सेनले थामिदिएका थिए भन्ने उल्लेख पनि त्यसमा परेको छ । वि.सं. १८१९ मा श्री ५ पृथ्वीनारायण शाहले मकवानपुरराज्य जितेथे। त्यसपछि श्री ५ पृथ्वीनारायण शाहले पनि उक्त विर्ता थामिदिएको, पछि श्री ५ रणबहादुर शाह आदिले पनि थामिदिएको कुरा यस ताम्रपत्रमा परेको छ'।

दोस्रो ताम्रपत्रमा वि.सं. १७८४ मा मकवानी राजा माणिक सेनले जानकी प्रीति गरी विर्ता चढाएको, त्यसलाई वि.सं. १७९० मा हेमकर्ण सेनले थामिदिएको कुरा परेको छ । श्री ५ पृथ्वीनारायण शाहले पनि मकवानपुर विजयपछि त्यसलाई थामिदिएका थिए । अनि श्री ५ गीर्वाणयुद्धविक्रम शाहले पनि उक्त विर्ता थामी वि.सं. १८६७ मा यो ताम्रपत्र गरिदिएका हुन् ।

यसरी यी दुइ ताम्रपत्र पनि तात्कालिक कुरा बुझ्न केही उपयोगी छन् भन्ने स्पष्ट छ ।

卐

[ १४५ संख्या ]

# पशुपतिको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

पशुपतिनाथको भण्डारमा सयौं ताम्रपत्रहरू रहेका छन् । तिनमध्ये एक ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यसमा वि.सं. १८६८ दिइएको छ । यही बेहोराको लालमोहर चित्तरञ्जन नेपालीद्वारा 'ज. भीमसेन थापा र तत्कालीन नेपाल'का २६४–२६८ पृष्ठमा छापिएको छ ।

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरूदावली विराजमान मानोन्नत् श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गिर्वाणयुद्ध विक्रम साह बहादुर सम्सेर जङ् देवानाम् सदा समरवि–

२. जयिनाम् ... ... ... ... ...

३. आगे काजि भिमसेन थापाके सहर काठमाडौं इकुवहाल लगनटोलमध्ये पूर्व लगनबाट यगाल झरन्या गल्ली दक्षीण धंचा वाडाका घरको इनारको प्रषाल विन्नरसिंका घरको गारो, विस्नुसिंका. ढालपाटको प्रषाल

४. भान्नरसिंका वारीको प्रषाल. अर्को भान्नरसिंको घर. सिंधपति वाडाको घर नाउँको घर. चिकटी वाडाको घर तसै मनीको गल्ली देवानन्द वाडाको घर बौद्ध भगवान दफे देवानन्द वाडाको घर मूल गल्लीको सांध. पश्चीम ध-

५. र्म्मनारान नारानको घर वैलोचन भगवान र इनैको वारी नासलदेवताको वारी प्रषाल. पिठ्वहाल. गल्लीको सांध उत्तर मूल गल्ली यगालको सांध येती चार किलाभित्र हिटीहिटीको गुठि. पाटी गल्लिवाहिक तपसिलबमोजि-

६. मका असामीलाइ आफ्ना आफ्ना घर वारीको सांटो जगा र नगदी रूपैया वक्सी राजी गराइ रैकर तुल्याई ज्मा घर षा २८ जवा ३ हात ६ अगुल २ पाताल ज्मा षा १० जवा २ हात २० अंगुल २ वारी पात्ताल ज्मा षा ८३ जवा

७. १ हात ४ अंगुल १० घर बनाऊनलाइ थपी आफ्ना पुराना घरसमेत. विर्त्ता वित्तलव पिकटारको मोहर तामापत्र गरिवक्स्यौं आफ्ना षातिरज्मासंग विर्त्ता वित्तलव पिकटार. जानि पुत्रपौत्रादिस्म. परम सुष

८. भोग्य गर. सधिआर चौतरीया वक्ष साह. काजी बिरकेसर पांडे. काजी वहादुर भडारी. काजी अजम्वरसिंह पंथ. सर्दार वषतसिंह वस्न्यात. टक्सारी चंद्रशेषर पाध्या. सर्दार रणगंज साहो लक्ष्मीदास पंथ

९. जिवनाथ अर्ज्याल भानु पाध्या षनाल. गुमानसिं पंथ जालिमसिं वस्न्यात. सुवेदार जयेद्रथ अधिकारी सुवेदार. वलवार. सुवेदार. अनुपसिं अधिकारी सुवेदार. वांका षत्री. डिठ्ठा लक्ष्मीनारायण कुमेदान

१०. प्रिथि हमाल ज्मादार. कनकसिं षडका ज्मादार. सन्तविर वस्न्यात. सदासीव षनाल. चंद्रशेषर दाहाल. मेजर गौरीसंकर उपाध्या. मेजर भक्तविलास. मापन्या कर्म्मी नायक. चिकटी. लक्ष्मी. गोपाल. भाग्नारा–

११. येण. जैसि गजीन्द्र. जन. भाजुमन–[१] – – – – – – – – –

३३. इति सम्वत् १८६८ साल मिती चैत्र शुदि १५ रोज ६ मोकाम कान्तीपूर शुभम्–

व्याख्या–

आधुनिक नेपालको इतिहासमा भीमसेन थापाको उदय अलि अर्कै किसिमले भएथ्यो। लडाइँको मैदानमा वीरता देखाई तथा कार्यक्षेत्रमा कुशलता, ईमान्दारी देखाई अगाडि बढ्ने, बढाउने पूर्वपरम्पराको विपरीत भीमसेन थापाको उदय राजनैतिक दाउपेचको भरमा भएथ्यो। यस विषयको चर्चा तल वाग्मतीको स्तम्भलेखको प्रसङ्गमा गरिएको हुनाले यहाँ यस विषयमा बढी लेख्नु आवश्यक देखिँदैन। वि.सं. १८६३ मा श्री ५ रणबहादुर शाहको वधपछि क्रमशः भीमसेन थापाको हातमा असीम शक्ति आउन थाल्यो। अनि शक्तिले उनलाई झन् महत्वा-

१. यस अभिलेखको बीचको तपसील भाग स्थानाभावले यहाँ समावेश गरिएको छैन।

काङ्क्षी बनायो। वि.सं. १८६८ मा "जनरल" पदवी लिई उनी एकातिर अरू भारादारहरू-भन्दा विशिष्ट बन्न पुगे भने अर्कोतिर उनी अरू भारादारभन्दा उच्चस्तरको रहन-सहनमा रहन थाले। त्यसै सिलसिलामा भीमसेन थापाले आफ्नो लागि "दरबार" बनाउन शुरू गरेथे। यो ताम्रपत्र त्यसै सिलसिलामा गरिबिइएको हो। यसमा श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट भीमसेन थापाको लागि जनताका घर जग्गा अधिग्रहण गरी उनलाई बक्स भएको कुरा परेको छ।' यसै गरी भीमसेन थापाको लागि घर जग्गाहरू बिर्ताका रूपमा दिई गरिएका अनेक ताम्रपत्रहरू पशुपति-भण्डारमा रहेका छन्। स्थानाभावले ती जम्मै ताम्रपत्रहरू यहाँ समावेश गर्न सकिएन।[1] भीमसेन थापाले लिएको बिर्ताको नमूनाको रूपमा यस ताम्रपत्रलाई यस संकलनमा समावेश गरिएको हो।

भीमसेन थापाको यस नीतिले एकातिर पुराना वरिष्ठ भारादारहरूलाई हीनताको भावनाले ग्रस्त पाऱ्यो भने अर्कोतिर खुद भीमसेन थापालाई पनि यसले हित गरेन; उनको पतनका अनेक कारणमध्ये आफूलाई प्रशस्त बिर्ता लिनु पनि एक कारण बन्यो। यस कुराको पुष्टिको लागि वि.सं. १८९२ मा कम्याण्डर इन चीफ बन्दा लिएको लालमोहरलाई देखाउन सकिन्छ। वि.सं. १८९२ को सो लालमोहरमा भीमसेन थापाले विरोधी पक्षबाट आफूलाई लगाइएका सारा आरोपको सफाइ राजाबाट लेखाई लिएका छन्। त्यसमा शुरूमै भने जस्तै बिर्ता लिएको कुरामा पनि सफाइ लिने चेष्टा भीमसेन थापाले गरेका छन्। सो निकै चाख लाग्दो हुनाले विचारार्थ यहाँ उद्धृत गरिन्छ–

"तेस्तै समयमा श्री ६ बुवाज्यू हर्ष खुस प्रसन्न हुनुभै तिमिलाई बिर्ता बक्सन्छु भनि हुकुम हुँदा चित्त लायेनछौ, वाहापछि श्री ६ बज्याज्यूका हजुरमा पावलागनु भै जनरललाइ बिर्ता बक्सन्छु भनी हुकुम हुँदा बढीया हो यस्तो कदर चाहिन्छ भंन्या जवाफ भै तिमिले अघि श्री ६ बज्याज्यूबाट रिजमा बक्स्याको बिर्ता पनी लियेनौ. पछि मैले नानीसंग विति गरी बिर्ता दिलाउँदा कबूल गरेनौ. श्री ६ बज्याज्यूका साथ छोडी बस्याको सार्थ भई मैले नातिको मुहार देषता येतिको हर्ष उत्सव मलाई कंल्हे लागन्याछैन नानी एकलै हुनुहुन्थ्यो र चित्त संधै पासमा रहन्थ्यो नाती पैदा हुदा अब चित्तमा षातिर्जमा भयो हाम्रा दर्बारमा ठूलो हर्ष भयाको बेला नानीबाट बिर्ता बक्सनहुंछ कबुल नगन्या बढिया परैन. नानीबाट हुकुम भयाको कबुल गर भनी श्री ६ बज्याज्यूबाट पनी हुकूम हुंदा श्री ६ बुवाज्यूबाट बिर्ता लिनैपर्छ भनी हुकुम हुंदा तिमिले कबुल गऱ्याका रह्याछौ. तेस्मा पनी तिम्रो दाना देषता बहुत षुस लाग्यो.।[2]"

---

१. ती अभिलेखलाई दोस्रो भागमा समावेश गरिनेछ।

२. चित्तरञ्जन नेपाली, 'ज. भीमसेन थापा र तत्कालीन नेपाल' पृ. २४६–२४७

यसरी मैले स्वेच्छाले बिर्ता लिएको होइन; खुद राजा र राजमाताको करकापबाट मात्र बिर्ता लिएको हुँ भन्ने भाव यहाँ झल्काइएको छ। तर ढाँटेको कुरा काटे पनि मिल्दैन भने जस्तै यहाँ पनि कुरा बाझिएको छ। यहाँ श्री ५ राजेन्द्रविक्रम शाहको जन्मको खुशियालीमा मात्र बिर्ता लिइएको हो भन्ने भाव पारिएको छ। तर घर जग्गा बिर्ता लिई गरिएको यो ताम्रपत्र वि.सं. १८६८ को शुरूको हो। श्री ५ राजेन्द्रविक्रम शाहको जन्म भने वि.सं. १८७० मा मात्र भएको हो।[३] यसरी श्री ५ राजेन्द्रको जन्मको खुशियालीमा मात्र बिर्ता लिएको भन्ने कुरा सत्य देखिदैन।

卐

३. शङ्करमान राजवंशी 'ऐतिहासिक कुण्डली' पृ. १८४

[ १४६ संख्या ]

# विजयपुरको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

यो ताम्रपत्र विजयपुरका भैरवप्रसाद खनालको संग्रहमा छ । यहाँ वि.सं. १८६८ दिइएको छ ।

'पुरातात्वपत्रसंग्रह' तेस्रो भागको २७–३० पृष्ठमा शंकरमान राजवंशीद्वारा यो अभिलेख छापिएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलीविराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्री–

२. महाराज गीर्वाणयुद्धविक्रम साह् बहादुर सम्सेर जङ् देवानाम्सदा समरविजयिनाम् – – – – – – – – – –

३. आगे जिल्लै विजैपूरका श्रीकालीकाको नित्य नैमितिक पूजा गर्नानिमित्य अघि मकवानीका पालादेषि गुठि रह्याको हाम्रा अम्बल भयापछि

४. हाम्रातर्फबाट पनि थामिबक्सिआयाको जग्गह जिल्लै मोरंग प्रगन्ना अठमौजामध्ये दावामाडी ससिम गछ्र एक १ औ प्रगन्ना कटहरि

५. वरीयातिमध्ये हरठुवा ससीम् गछ्र एक १ औ प्रगन्ना अठमौजामध्ये मौजे मकवानपुरमध्ये भवानीपुर ससीम गछ्र एक १ जंमा ससीम ग–

६. छ्र तिन ३ तस्को बमोजीम् मेडबन्दी दावामाडी गछ्र १ का चौतर्फि सांध पूर्वका

सिमानामा एक भीड है तिस्सौ पश्चिम तिसे भीडसौ वारलगी उत्त-
७. र एक धुरहुं सो धुर पूर्वदेकै उत्तर गया उत्तरकोनामा एक चंपटा भीड है
तिस्सौ सामने पश्चिम पन्ध्र लगी परसात लगी उत्तर गया ताहा ए-
८. क चंपटा भीड हुं तिस्का तिन लगीपर एक छोटा भीड हुं सो भीडसौ तिन
लगी पश्चिमसौ उत्तर एक छोटा डीहका पुर्वारि किनारा होके उत्तर धा-
९. नारामका जोतका दषिनवारि आलीतक सिमाना १ दषिनका सिमाना
गौरिया नदीका पूर्वारि कीनारामा छोटा आलि हुं तीस् आलीसौ उत्तरसौ
१०. आली सामने पूर्व गया पचीस लगी पर एक छोटा धुर हुं सो धुर पूर्व गया
तिस्सौ १२ लगी उत्तर एक चपटा भीड हुं सो भीडसो पूर्व लालगिरिका
११. हवेलिका पश्चिम एक धुर हुं अंजनका बनाया पोषरिका पछवारिकोनासौ
पूर्वारि कोनाका छ लगी उत्तरसो उत्तर सिमाना गया सिमाना १ पश्चिमका
सिमा-
१२. ना गौरिया नदीसौ पूर्व एक गाछ है तिस्का पूर्व होके एक पैनीदेकै दषिन
गया थोरा दूर पूर्व दषिन कोनामो एक पैनी देकै गौरिया
१३. नदिमो गया सो गौरिया नदि सामने दषिन गया सिमाना १ उत्तरका
सिमाका धानारामका जोतका आलीसौ दषिन ताहासौ थोरा दुर प-
१४. श्चिमसौ दुह लगी उत्तर घुमिकै पश्चिम गया १२ लगी पश्चिम जायकै
छ लगी दषिन गया तिस्सौ थोरा दूर पश्चिम जाकै दषिन गया ताहा
१५. एक भीड हुं नरपर फेर दोसरा भीड हुं तिस्सौ दषिन थोरा दुर जायकै आठ
लगी पश्चिमसौ उत्तर १२ लगीतक गया तिस्सौ ४ लगी पश्चिम
१६. सौ ३ लगी उतर जायकै पश्चिम पासविटातक गया ताहासौ पोलगी दषिन
जायकै ४ नर पश्चिमसौ दषिन एक पैनीदेकै सामने पश्चिम गौरिया नदी
१७. काठपुसमेत नया धारतक गया सिमाना १ हरठुवा गछ १ का चौतर्फि पूर्व-
का सिमाना लछिमिनियानहलासौ ७ नर अंतरसौ पश्चिम ति-
१८. स्का दषिनमा ३ मंदरका घरका पश्चिम एक महला हुं तिस महलासौ
पश्चिम तिस्का दषिन ढापका पछवारि किनारामो पिपरका गाछ है ति-
१९. स्का पश्चिम ताहासौ दषिन नदीसौ पूर्व नदिका पुवारि किनारासौ पिपर-

का गाछ्‌ हैं तीस्सौ ७ नर उत्तर एक आली है सौ आलिसौ पूर्वमा एकदे–
२०. रिका गाछ है भीड़पर तिस्सौ १५ नर पूर्व मनसा राममंदर वैरियाका
तिस्का जोनसौ पश्चिम तहासौ दषिन जंगली मंउरका जोतका पछ्‌वारि
२१. आलीमा काभिका गाछ हैं तिस गाछसौ पश्चिम ताहासौ दक्षिण गया
सिमाना १ दषिनका सिमाना सौरिका गाछ सौ दुइ नर उत्तरसौ उत्तर
२२. सिमाना १ पश्चिमका सिमाना एहि गाञीका पश्चीम एक धार हैं तिस्का
पस्छिम पलासका गाछ हैं तिस्सौ पूर्व ताहासौ उत्तर मौजे हथिवंन्ध्याको
गा–
२३. छ दार लछेन मदुरका घरका पूर्व एक धार है सौ धारका पछ्‌वारि किनारासौ
पूर्व ताहासौ उत्तर धारका उत्तर वारि किनारासौ एक पिपरका गाछ
२४. हैं तिस्का इसानकोना २॥ र सरिसौ दषिन सिमाना १ उत्तरका सिमाना-
मा एक पिपरका गाछ हैं तिस्सौ दुइ नर उत्तरसौ दषिन मौजे कवैया–
२५. कारै एतिका रूझाका जोतसौ दषिन तिस्का पूर्व एक नदी है तिस्का पूर्व
एक भीड परकर माइनिका गाछ है तिस्सौ पूर्व गछ्र मझारका मदारि मदर-
२६. का जोतसौ दषिन तिस्का पूर्वमो ४ नर उत्तरसौ पूर्व लछिमिनिआ नदी-
तक गया सिमाना १ भवानिपूर गछ १ को चौतर्फि पूर्वका सिमाना धूरके
मुहडापर
२७. एक भीड हैं ताहिसौ दोलगीसौ दषिन गया ताहांपर एक भीड है ताहोपर
क्यामुनाका गाछ है पूर्व दषिन घुमिकै गया ताहिसै सामने दषिन डिहकै पू-
२८. र्व कोनमैं मैनका गाछ हैं सिमाना १ दक्षिणका सिमाना मैनका गाछसौ
सामने पश्चिम जियालका गाछ है ताहासैं पश्चिम ३ नर पछिम तौसियाका
गाछ है ताहीसैं उत्तर सिधाका गा–
२९. छसौ छ लगी पश्चिमतक १ पश्चिमका सिमाना डिहसै पश्चिम दस नरपर
ताहीसौ सामने उत्तर गया नआ दीहका पश्चिम छोटा धुर है सो धुर सामने
उत्तर गया एक नरमो भीड है उत्तर दक्षि–
३०. णमो गया सिमाना १ उत्तरका सिमाना धुरके पश्चिम मुहडापर एक भीड
है ताहि भीडसौ सामने पूर्व गया सिमाना १ तिन गछका एति सिमानाका

चार किलाभीत्रको जग्गामा श्रीकालीकालाई चह्राया-

३१. को गुठी गाउको सर्व अंक माफ गरि ६० सालमा मोहोर गरिवक्स्याको आज पनि श्रीकालीका प्रीति मोहोर तावापत्र गरि चह्रायौ, रामचन्द्र पंडीतके मौजे मजकुरको श्रीकालीका पुजा अघिदेषि तन्त्रा पुर्षलि गरि आया-

३२. को रहेछ भनि वेष बुन्यादको मोहोर गरिबक्स्याको हो ६० सालमा र ६३ साल श्रीकालीकाके पुजा तिमिलाई विर्ता गरो श्रीकालीकालाई चह्रायाको गाउका पैदावारले श्रीकालीकाको नित्ये नैमित्येक पुजा गरि सेष बाकी रह्या–

३३. को आपना संतानसंम भोग्य गर्न आसीर्ब्बाद दिनु. यो पुजा तिम्रा संतान-वाहिक अरूलाई जो दिन दिलाउनमा पस्ला तस्लाई श्रीकालीकाको कुदृष्टि पर्ला पञ्चमहापातक लागला भनि लालमोहोर गरिबक्स्याको

३४. आज सोहिवमोजीम् पुजा विर्ता मोहोर तावापत्र गरिवक्स्यौ. आपना षातिर्जामासंग मौजे मजकुरको तरद्दूद तलास आवाद गुलजार गरि जो पैदावार भयाकाले श्रीकालीकाको नित्ये नैमित्यक पूजा धु–

३५. प दीप गरि सेष वाकी रह्याको संतती संतानसंम पुजा विर्ता जानी सुष भोग्य गर हाम्रो जय मनाइ आसीर्वाद दिन्या गर. यो तिनै जगाको ६७ सालमा साध सिमानाको मेडबन्दी गर्न्या दिठा

३६. रामचन्द्र पंडीत पेस्कार गंगादत्त कंठ मुनसि फहजारसिं राये नर्वासदा प्रेमनारायणदास कठैत् जैमंगल पाध्या भूपसिं राये अमलै सुवा हरिकृष्ण दास दामावाडीको जमीवार बुझन चौ–

३७. धरी कानुगोए वर्जबल्लभदास हरिचरन चौधरी नवलसिं मंडार जानीव-कार धनाराम मंडर टुना मंदर साकीन दामावाडी औ हरठुवा गछको जमीदार वैजनाथ चौधरी कानुगो–

३८. येक कमलादत्तदास जानीवकार लछेन मंडर भानुकर विसवास साकीन हथिवंधा वैरियाका गंगादास डगराका लोटन मंडर हरठुवाका कुढाइ मंडर औ भवानीपुर गछका जमीदार

३९. बुधन चौधरी दाताराम चौधरी पेस्कार वर्जवल्लभ जैवार हरिचरण चौधरी

हुडहुडियाका गोडि सिमर गोदर धामी बछु तर मंडर डिठा रामचन्द्र पंडितका सांध सिमानाका मेडवन्दी ग-

४०. न्या बमोजिम तावापत्र गरि चह्लाऔ. चार किलाभंदा अघ्र्यालो विर्तवारले नचापनु. विना तकसीर श्रीसरकारबाट नहुनु. जो एस बन्देजमा रहौन सो एस श्लोकमा भन्याको पातकी होला. स्वद-

४१. त्तां परदत्तांम्वा यो हरेच्च वसुंधराम् षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमि ।। इमि सम्वत् १८६८ साल मिति श्रावण बदि १२ रोज ४ शुभम्

卐

[ १४७ संख्या ]

# विजयपुरको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

यो ताम्रपत्र विजयपुरका भैरवप्रसाद खनालको संग्रहमा रहेको छ। यहाँ वि.सं. १८६८ दिइएको छ। 'पुरातत्त्व-पत्रसंग्रह' तेस्रो भागको ३०–३२ पृष्ठमा शङ्करमान राजवंशीद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्धवि–

२. क्रम साह वहादूर सम्सेर जङ्ग देवानाम् सदा समरविजयीनाम् – – आगे जिल्लै विजयपुरका श्रीकालीकाको नित्ये नैमित्ये–

३. क पूजा गर्नाकन अघि मकवानीका पालादेषि गुठि रह्याको हाम्रा अम्वल भयापछि हामिवाट पनि थामिवक्स्याको जग्गह जिल्लै मोरंग प्रगन्ना नोनिगा–

४. उमध्ये मौजे परिहारपूर वमठौरा मौजे हसपोसा ससीम जमा मौजे तीन ३ तस्को वमोजीम् मेडवन्दी चौतर्फि मौजे परिहारपूरका सांध पूर्वका सिमा–

५. ना उत्तर पूर्व कोनामो किलाकोइला है ताहिसँ सामने दषिन गया दो

विगहा २ दषिनसँ सामने पूर्व ताहिसँ भमरपट्टिका डिहिका सामने उत्तर पश्चीम

६. कोनाको किलाकोइला है ताहिसँ सामने दषिन पैंनीका उत्तर मुहडा पर किलाकोइला है ताहिसँ सामने पूर्व गया पैंनीका दषिन किनारँमो भीड है

७. ताहिसँ सामने दषिन गया बीस २० लगी पर सेहरा नदि है ताहिसँ पश्चिम गया दषिनका सिमाना सेहरा नदीका पश्चिम एक धुर है सो धुरसे साम–

८. ने पश्चिम गया लगौना डिहिका पूर्व एक १ विगहा पर किलाकोइला है ताहिसँ सामने उत्तर पिपरका गाछ है तिस्सौ थोरा घुमिकँ पश्चिम उत्तर

९. लगौनाका डिहिका उत्तर मुहूडापर किलाकोइला है ताहिसँ सामने पश्चिम गया पोंषरि है तिस्का दषिन पूर्व कोनातक पश्चिमका सिमाना पोषरि–

१०. का पश्चिम उत्तर कोनासे सामने उत्तर गया एक १ विगहा ताहिसँ सामने पश्चिम हकराहा पैंनीते ताहिसँ उत्तर हकराहा पैंनीमो सिमाना हकराहा पैं-

११. नीसँ पूर्व गया उत्तरका सिमाना हकराहा पैंनीसँ सामने पूर्व गया पोषरिका उत्तर कोनसँ सामने पूर्व गया पूर्व कोनानो किलाकोइला है मौजे म–

१२. झौराका सांध पूर्वका सिमाना सेहरा नदिसँ पश्चिम सेहरा नदि घुमिकँ सामने पश्चिम गया दषिनका सिमाना सेहरा नदिसँ उत्तर पश्चिमका सिमा–

१३. ना सेहरा नदीसँ सामने उत्तर छोटा आली है सो सामने उत्तर गया एक मराहला भीड है ताहिसँ सामने पश्चिम किलाकोइला है ताहिसँ सामने उत्तर गया झौ–

१४. राका उत्तर किनारामो सिमलका गाछ है ताहिसँ पूर्व उत्तर कोनामो एक सिमलका गाछ है ताहिसौ पूर्व उत्तरका सिमाना सिमलमा गाछसँ उत्तर पूर्व को–

१५. नामो आमका वगँचा है ताहिसँ सामने पूर्व सिसौका गाछ है गाछके नगीच एक पैंनी है सामने पूर्व सेहरा नदीतक मौजे हसपौसाका सांध पूर्वका सिमा-

१६. ना सुकूमारि पैंनीले थरिका डीहसँ सामने पश्चीम पैंनी है ताहिसँ सामने दषिन गया मरहला भीडका आलीसँ सामने पश्चिम गया एक पिडारका गाछ

१७. है हनुमाननगरका डीहसं पूर्व मरहला भीड है सामने दषिनमो पंनीसौ उत्तर दषिनका सिमाना डिहिका उत्तर पिपलका गाछ है पोषरिका उत्तर वारि

१८. किनारामो पिपलका गाछ है ताहिसं सामने पश्चिम पंनी उत्तर गया सेहरा-नदीतक पश्चिमका सिमा सेहरा नदीसौ पूर्व उत्तरका सिमाना पोषरि–

१९. सं सामने पूर्व पिपरका गाछ है ताहिसं सामने दषिन पंनी है. ताहिसे पूर्व एक भीड है भीडका नगीच कदमका गाछ है ताहिसं सामने पूर्व गया सिमाना

२०. १ एति सिमानाका चार किलाभीत्रको जगा श्रीकालीकालाइ चह्रायाका गुठी गाउको सर्व अंक माफ् गरि ६० सालमा मोहोर गरिवक्स्याको आज श्रीकालीकाको तालुक–

२१. का गुठीको गाउ गछका पैदावार भयाकाले अघि परंपरादेषि गरि आया-वमोजीम नित्य नैमित्येक पूजा गर्नु मैन्हावारि वुद्द अष्टमिमा छागवलि-दानस–

२२. मेलको पूजा जाप पाठ गर्नु चैत्राष्टमि महाष्टमिमा महिषवलिसहित पूजा जाप पाठ गर्नु र अघिदेषि चली आयाको मामुलि पुजा पाठ जाप गर्नकन हा–

२३. मिले मोहोर तावापत्र गरि श्रीकालीका प्रीति चह्रायौ श्रीकालीकाको तालुकका गुठीको गाउ गछको गाउ गछको वेठ वेगार माफ रामचन्द्र पंडीतके मौजे मजकुर–

२४. को श्रीकालीकाको पुजा अघिदेषि तम्रा पुर्षाले गरि आयाको रहेछ भनी वेष वुन्न्यादको मोहोर गरिवकस्याको हो ६० सालमा र ६३ सालमा श्रीकालाकाको पूजा

२५. तिमिलाइ विर्ता गरि श्रीकालीकालाई चह्राथाको गुठी गाउका पैदावरले श्रीकालीकाको नित्ये नैमित्येक पूजा गरि सेष वाकी रह्याको आपना संतानसंम भोग्य

२६. गर्नु सदा आसीर्वाद दिनु – यो पूजा तिम्रा संतानवाहिक अरूलाई जो दिन दिलाउनमा पस्ला तस्लाइ श्रीकालीकाको कुदृष्टि पञ्चमहापातक लागला भनि

२७. लालमोहोर गरिवकस्याको आज सोहिवमोजीम पुजा विर्ता मोहोर तावा- पत्र गरिवक्स्यौ आफ्ना षातीर्जमासंग मौजे मजकुरको तरदूद तलास आवाद गु

२८. ल्जार गरि जो पैदावार भयाकोले श्रीकालीकाको नित्ये नैमित्येक धुप दीप पुजा र लेष्यामाफीकको पर्व पर्वमा गर्न्या विधिपूर्वकको पूजा जाप पाठ कति नघटा–

२९. इ पुजा गरि सेष वाकी रह्याको पुजा विर्ता जानी सेष भोग्य गर. हाम्रो जय मनाइ सदा सर्वदा आसीर्वाद दिन्या गर ६३ सालमा यो जगाको सांध सिमानाको जाच

३०. वुझ गरि मेडवन्दी गर्न्या डिठा रामचन्द्र पंडित पेस्कार गंगादत्त कंठ मोनसिफ हजारसिं राये नर्वासिंदा प्रेमनारान जंवार जानीवकार हुलास माझी

३१. सिंध माझी दिनासिकदार षुदिराम चौधरी विदेसि मडर किनु माझी अकलु चौधरी नैन् चौधरी नैन माझी चौतरफि अगागि घुमन्या अनद माझी

३२. डिठा रामचन्द्र पंडीतका सांध सिमानाको जांच वुझ गरि मेडवन्दी गर्न्या वमोजीम तावापत्र गरि चह्रायौ. यो सिमानाभन्दा अर्घ्यालो विर्तवारले नचाप–

३३. नु विना तकसीर श्रीसरकारवाट नहर्नु, जो एस वन्देजमा रहौन सो एस श्लोकमा भन्याको पातकि होला स्वदत्तां परदत्तांम्वा यो हरेच्च वसुन्ध–

३४.. राम् षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमि ।। इति सम्वत् १८६८ साल श्रावण शुदि ७ रो शुभम् ।।

व्याख्या–

श्री ५ पृथ्वीनारायण शाहद्वारा नेपालको एकीकरण गर्नुभन्दा पहिले नेपालराष्ट्रभित्र खडा भएका अनेकौं राज्यहरूमध्ये विजयपुर पनि एक हो । मुकुन्द सेनका कान्छा छोरा लोहाङ्ग सेनले यस सेकमा आफ्नो आधिपत्य कायम गरेका थिए । मकवानपुरदेखि विजयपुरसम्मको

प्रदेशमा उनको प्रभुत्व जमेको थियो । यस राज्यभित्र उब्जाऊ तराईभाग पनि प्रशस्त परेको हुनाले यो राज्य आर्थिक दृष्टिले केही समृद्ध थियो । हिन्दूपति हरिहर सेनको अन्तिम समयमा पूर्वको यस सेनराज्यमा गृहकलह जस्तै देखापऱ्यो । जसको परिणामस्वरूप पूर्वको हिन्दूपति राज्य मकवानपुर र विजयपुर दुइ राज्यका रूपमा देखापऱ्यो । केही कालपछि चौदण्डी पनि अर्को राज्यको रूपमा देखापऱ्यो । यसरी अंशबण्डा गरे जस्तै राज्य पनि बाँडेर लिने त्यस ताका हाम्रो यहाँ सर्वत्र भने जस्तै फैलिएको रोगले पूर्वको सेनराज्य पनि ग्रस्त रह्यो ।

यसरी एकीकरणअगाडि मकवानपुर र विजयपुर भिन्नै राज्यको रूपमा रहेका थिए । श्री ५ पृथ्वीनारायण शाहद्वारा मकवानपुर वि.सं. १८१९ मै जितेका थिए; विजयपुर भने यसको बाह्र वर्षजतिपछि मात्र जितेका थिए । तर राज्य टुक्रिनुभन्दा पहिले पूर्वको सेन-राज्यको मुख्य केन्द्र मकवानपुरमा रहेको हुनाले पछि मकवानपुर र विजयपुर दुइ भिन्नाभिन्नै राज्यका रूपमा रहे तापनि साधारणतः पूर्वका सेनराजालाई "मकवानी राजा" भन्ने चलन चलेको थियो । यसो हुँदा विजयपुरका दन्तकालीको गुठी थामी गरिदिइएका माथिका यी दुइ ताम्रपत्रमा "अघि मकवानीका पालाबेखि गुठी रह्याको" भन्ने उल्लेख परेको हो ।

मध्यकालमा कुनै पनि बस्तीको आबादी मात्र बढ्दैमा सो बस्ती "नगर" "पुर" कहलाउँदैनथ्यो । "पुर" "नगर" कहलाउन सो बस्ती एक त सुरक्षाको दृष्टिले मजबूत अर्थात् "गढ" रूपको हुनुपर्दथ्यो; अर्को सो बस्तीको सांस्कृतिक विकास पनि हुनुपर्दथ्यो । अर्थात् त्यहाँ विविध सम्प्रदायका देवमन्दिर, मण्डप आदि पनि हुनुपर्थ्यो । "पुर" को सो परिभाषाअनुरूप "विजयपुर" शहरको पनि विकास भएको हामी पाउँछौं । विजयपुर एक त "बनगढ" रूपको बस्ती थियो; अर्कोतिर यहाँ सांस्कृतिक विकास पनि केही भएको हामी पाउँछौं । विजयपुरमा "तल्लो दरबार" र "माथिल्लो दरबार" नामले प्रख्यात पुराना दुइ दरबारका केही भग्नावशेष अझै रहेका छन् । देवमन्दिर पनि यहाँ अनेक रहेका छन् । तिनमा दन्तकाली र पिण्डेश्वर बढी प्रसिद्ध छन् ।

वि.सं. १८६८ मा विजयपुरका दन्तकालीको गुठी थामी, केही थपी श्री ५ गीर्वाणयुद्ध-विक्रम शाहबाट यी दुइ ताम्रपत्र गरिदिइएका हुन् । दन्तकालीको नित्य र नैमित्तिक पूजाको लागि मकवानी सेनराजाहरूले नै जग्गा गुठी राखिदिएका थिए । श्री ५ पृथ्वीनारायण शाहद्वारा विजयपुर विजय गरेपछि ती गुठी थामिएका थिए । अहिले केही जग्गा थपी श्री ५ गीर्वाण-बाट यी ताम्रपत्र गरिदिइएका हुन् । यी देवी कालिका हुनाले गोरखा आदि ठाउँका कालिका-स्थानमा जस्तै प्रत्येक महीनाका दुइ अष्टमीमा यहाँ छागबलि दिने चलन रहेछ । चैते दसैं र बडा दसैंको दिनचाहिँ महिषबलिसहित पूजा गर्ने, जप पाठ गर्ने विधान रहेछ ।

दन्तकालीको नित्य र नैमित्तिक पूजा गर्ने अधिकार रामचन्द्र पण्डित र उनका सन्तानलाई सुम्पिएको कुरा यी ताम्रपत्रमा परको छ । यी रामचन्द्र पण्डित "डिट्ठा" हुन् भन्ने पनि यी ताम्रपत्रबाट थाहा पाइन्छ । मकवानी सेन राजाको पालादेखि नै यी रामचन्द्र पण्डितका पूर्वजहरू दन्तकालीका पुजारी थिए । यसै हुँदा रामचन्द्र पण्डितलाई उक्त अख्तियार दिइएको हो भन्ने कुरा यी ताम्रपत्रबाट थाहा पाइन्छ ।

जे होस्; विजयपुरतिरको केही कुरा बुझ्न यी ताम्रपत्र पनि केही उपयोगी हुनाले यिनलाई यस संकलनमा समावेश गरिएको हो ।



[ १४८ संख्या ]

# पशुपति-भंडारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

श्रीदुर्गायै

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गीर्वाणयुद्ध-विक्रम साह् वहादूर सम्सेर जङ् देवानाम् स-

२. दा समरविजयिनाम् - - - - - आगे गोसायी भीमगिरिके मौता-लुकै मकवानपूर जिल्लै वारा पर्सा प्रगन्ना टोकनिमध्ये. मौजे नोतना वहु-अरि ससी-

३. म् मौजे एक १ औ प्रगन्ना सिधमासमध्ये मौजे वंरिया ससीम् मौजे एक १ ज्मा दाषिलीसमेत् ससीम मौजे तिन ३ अघि मकवानि राजाले विर्ता गरि दियाको हाम्रा अम्वल भया पछि श्रीज्यूज्यूवुवाज्यूबाट कु-

४. श विर्ता श्रीसिव प्रीति वेतलव गरिवक्सनुभयाको रहेछ ३७ सालमा श्रीवुवा-ज्यूबाट थामि वहाल गरिवक्स्याको ६४ सालमा पत्रपात्र हेरि जाच वुझ गर्दा पक्का विर्त्ता ठहरियो र हामिले पनि

५. थामि बहाल गरिवक्स्याको वमोजीम् मेडवन्दी तस्को चौतर्फि मौजे नौतना-मै दाषिली वहुअरि समेतका सांध पूर्वका सिमाना. गाउका पूर्व उत्तरका इसानकोन सिगियाहि नदिका पछ्-

६. वारि किनारै किनार सरासर दषिन मुहाजा येकै मौजे मजकुरका पोषरि-
का पूर्व सिगियाहि नदिका पश्चिम भीडकानिवे कोइला तिसहि कुछ दूर
वहि नदि दक्षिण जायकै तहांसं पश्चिम मुह

७. नदि घुमिकै दषिन मुहघर मोर कुछ दूरतक जायकै मौजे लछमनवा विर्ताका
सांध तिसहि विर्ताका किलाकोइलातक पूर्वका सिमाना १ तिसहि किला-
कोईलासं सोभ पश्चिम सरासर षेत–

८. का आली पोषरिका उत्तर वारि आट पछवारि किनारा दिवारका भीडका
नीचे कोइला तिस्सौ पश्चिम षेत सहरिका आली दोपसि पैनीतक तिससै
लगा तिन् ३ उत्तर जायेकै पश्चिम कुछ दूर जा–

९. ये दिवार भिड २ तसं उत्तर लगा तिन ३ जायेकै पश्चिम पैनी लगा पांच ५
उत्तर जायेकै पश्चिम दोश्रा पैनीसौ पश्चिम कुछ दूर पर मौजे लछमनवा
विर्ताका उत्तर मैदानडीहपर कोइला ति–

१०. स्सौ पश्चिम तासिका पूर्व दिवारक भीड, तिस भीडसौ पश्चिम नासिका
पछवारि किनारासौ पश्चिम नासिका दषिन वारि किनारा दिवारका भीड
का नीचे. कोइला मौजे प्रिपराका दषिन पूर्वका को–

११. ना मौजे मजकुरका नीरत्ये कोनातक दक्षिणका सिमाना १ ताहासं उत्तर
मुह मौजे पिपरागाउका पूर्व पाकरिके गाछका लगा पांच ५ पूवसं उत्तर
जायकै पिपरका गाछसं नैरित्ये कोना लगा आ–

१२. ठ ८ षेत्त सहरिका आली भीडकै नीचे कोइलाका लगा तिन ३ उत्तर
जायेकै पश्चिम मुहषतका सरासर आली पुरन् चौधरिका पैनीतक पैनिका
पूर्वारि किनारेकिनारे उत्तरमुह सरासर जाये–

१३. कै वटु घोरा नदिका पूर्वारि किनारे किनारे उत्तर मुह घर मोर जैसा जायेकौ
मौजे मजकुरका वाईव्यै कोना मौजे चैनपुर रैकरका पश्चिम दषिनका
कोनातक पश्चिमका सिमाना १ ताहांसै–

१४. नदि सौ पूर्व कुछ दूर पर ति जमिनसै पूर्व षेत सहरका सरासर आलि मौजे
चैनपूरका दषिन वारि सिमाना मौजे मजकुरका उत्तर वारि सिमाना पर
सिमर पिरका गाछके निचे कोइला ता–

१५. हासँ पूर्व लगा चौध १४ उत्तरे दषिने पैनीसँ पूर्व षेतका आलीसँ पूर्व दुआ पेनि उत्तरे दषिने तिसहि पूर्व षेतका आली कुछ दुर पुरव जायकँ मौजे चैनपुर डिहका आगनै कोनासँ पूर्व मौजे

१६. सिंहपुरका सांधका दषिन पश्चिमका कोनासँ पूर्व नौतनाका उत्तरे दषिने पैनीसँ जायेकँ सिगियाहि नदिका मैह पूर्वे पश्चिमे मौजे मजकुरका इसान कोनातक उत्तर सिमाना १ मौजे

१७. वैरियाका सांध मौजे मजकुरका पूर्वका सिमाना पैनीका पूर्व मौजे सिसि-हारि गाउका उत्तर पिप्रका गाछमो कोईलासँ दषिन लगा छ ६ पर पैनी दषिन मुहा सरासर जायेकँ मौजे सि–

१८. सिहारि संकरदासका पुराना डोह वसगितसँ उत्तर पुराना पैनीतक पूर्वका सिमाना १ ताहासँ पश्चिम मुह पुराना पैनी मौजे केहनिका उतर वारि सिमाना डोडातक ताहासँ पश्चिम पैनी पार हो–

१९. कँ डोडाका उत्तर वारि किनारे किनार सरासर जायेकँ मौजे मजकुरका नैरित्ये कोनातक दषिनका सिमाना १ ताहासँ उत्तर डोडाका पूर्वारि किनारै किनार कुछ दूरसँ डोडा छोडकँ पूर्व लगा चार ४

२०. सँ उत्तर मौजे हरिनगरका पूर्वारि सिमाना षेत सहरिका विचला आली नासि षेतका पछवारि आलीसँ उतर कुछ दर पर पैनी सरासर उतर जायकँ मौजे मजकुरका वाइव्ये कोना मौजे हरि–

२१. नगर गाउका पूर्व पुल बांध धुरतक पश्चिमका सिमाना १ ताहासँ पूर्व बाध धुर सरासर नयां पैनीतक ताहासँ पैनी दषिन लगा सात ७ सौ पूर्व मुह पुराना पैनी सरासर कुछ दषिन जाये–

२२. कँ पिपरका गाछतक उतरका सिमाना १ एति सिमानाका चार किला-भीत्र. नाप चकलावन्दी मुलुक वरवस्त सरह नाप मौजे वहुअरी नौतवाका विगहा आठ सये त्रिपन्न छ कठा ८५३।१ मौजे वै-

२३. रियाका विगहा एक सये नब्य उंनाइस् कठा १९०।।।४ जंमा विगहा एक हजार सवा चवालीस १०४४। को. अघि मकवानी राजाले विर्ता गरि दियाको ६३ सालमा कच्चा पक्का जाच वुझ गर्दा पत्र पात्र

२४. हेरि पक्का विर्ता ठहरियो र हामिले पनि थामि वहाल गरिवक्स्याको.

मौजे मजकुरको अघिदेषि आजसम्म. चर्चि वेहोरि आयावमोजीम्माल रहता सायेर र वियाहदानी सगौढा कठियारि जलकर

२५. वनकर दंड गुनहगारि मऱ्यो अपुतालि वेठ वेगार सिंगार हाटसमेत् आंज मोहोर तावापत्र गरि श्रीसिव प्रीति चह्रायौ. आफ्ना षातिर्ज्मासंग मौजे मजकुरको तरदूद तलास आवाद गुल–

२६. जार गरि. जो पैदावार हुंछ सो महंतले लौ आफ्ना नीति धर्ममा रहि श्रीसिवको नित्ये नैमित्यक पूजा धुप दीप गरि सदावर्त चलाई सेष वाकि रह्याको सिष्योपसिष्य मिली सुष भोग्य गर हा–

२७. श्रो जय मनाई सदा आसीर्वाद दिन्या गर. जग्गाको ६७ सालमा सांध सिमानाको मेडवंदी गर्न्या डिठा भक्तसिं कार्कि देउसर्म्म पाध्याका तर्फसौ मोनसिफ लछिमन भडारि संकर जैसी. तहरी–

२८. र मानीकदास. रूजु पैस्कार राधेकृष्णदास. नापि नर्वासिदा. सौनमनि दास. जरीवकस्य. जानकि राउत्. हिरा राउत्. जमीदार सिवनारान चौधरि. कारि चौधरि. नन्दन चौधरि. तेजमनि

२९. चौधरि. कानुगोये सिताराम दासका नायेव. उमानाथ दास. प्रगन्ना मजकुर. जानीवकार सांधका जैवार हिरामनि महतौ मौजे हरीनगर विसाल महतौ. मौजे सिसिहारि विराजि राम म–

३०. हतौ. मौजेके कहुनिया. प्रगन्ना मजकुर. मौजे नौतनामै दाषिलि बहुअरि समेतको सांध सिमानाका मेडवंदी गर्न्या डिठा मोनसिफ तहरीर पेस्कार-मजकुर नर्वासिदा. इश्वरीदत्त मोनमनि दा–

३१. स. जरीवकस्य. जुठिसिं संषलाल महवंद. जमीदार ठिठरू चौधरि मन वोधन चौधरि. कानुगोये. भवानीदत्त दासका नायेव. महेसदत्त दास जानी-वकार जैवार कारी राउत् महतौ मौजे चै–

३२. नपूर रैकर प्रगन्ना मजकुर. ओलाराम महतौ. मौजे लछुमनमा विर्ता प्रगन्ना मजकुर सिता राउत् महतौ रूजु नथै राउत् मौजे पिपरा प्रगन्ना मजकुर डिठा भक्तसिं कार्कि देउसर्म्म पा–

३३. ध्याका सांध सिमानाको मेडवन्दीवमोजीम् मोहोर तावापत्र गरिवक्स्यौ

यो सिमानाभंदा अघ्याँलो वितंवारले नचापनु. विना तक्सीर श्रीराजाले नहनुं. जो एस वन्देजमा रहौन. सो एस श्लो-

३४. कमा भन्याको पातकी होला. स्वदत्तां परदत्ताम्वा यो हरेच्च वसुन्धराम्. षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमि ॥ इति सम्वत् १८६८ साल मिति श्रावण शुदि ५ रोज ५ शुभम्

व्याख्या–

पशुपति-भण्डारमा रहेका सयौं ताम्रपत्रहरूमा एक यो पनि हो। यसमा श्री ५ गीर्वाणयुद्ध-विक्रम शाहबाट वि.सं. १८६८मा भीम गिरि गोसाईंलाई प्रशस्त जग्गा सदावर्त-गुठी थामी दिइएको कुरा परेको छ। "श्रीशिव" प्रीति गरी यो सदावर्त-गुठी राखेको भन्ने उल्लेख यसमा परेको छ। तर कुन शिव हुन्; कुरा खुल्दैन। पशुपति-भण्डारमा रहेको हुनाले "श्रीशिव" भनी पशुपतिनाथलाई नै लक्ष्य गरिएको होला भनी अनुमान गर्न नसकिने होइन। तर यस ताम्रपत्रमा "अघि मकवानि राजाले विर्ता गरिदियाको" भन्ने उल्लेख परेको छ; साथै जग्गा मकवानपुर जिल्लाअन्तर्गत वारा पर्साका तीन मौजा गुठी राखिएको छ। सो विर्तालाई पछि श्री ५ पृथ्वीनारायण शाह र श्री ५ रणबहादुर शाहले पनि "कुशविर्ता श्रीशिव प्रीति बेतलव" गरिदिएका थिए भन्ने पनि उल्लेख यसमा परेको छ। यसरी यस ताम्रपत्रमा उल्लिखित "श्रीशिव" कहाँका हुन् भन्ने प्रश्न उठेको छ। विधाता इन्द्र आदि मकवानी सेन राजाले काठमाडौं-उपत्यकाको यात्रा गरेको उल्लेख हामी पाउँछौं। त्यस्तै यात्राप्रसङ्गमा मकवानी राजाले पशुपतिनाथलाई लक्ष्य गरी तराईभेकका जग्गा गुठी राखिदिएको पनि हुन सक्छ। यो कुरा सत्य हो भने मकवानपुर र उपत्यकाको सम्बन्धमा यसबाट केही नयाँ प्रकाश पर्छ। तर प्रमाणको अभावमा यस विषयमा निश्चित रूपले केही भन सकिँदैन। यसो विचार गर्दा यो ताम्रपत्र पशुपति-भण्डारमा रहे तापनि पशुपतिनाथसँग यसको सम्बन्ध छैन; मधेसभेकका कुनै शिवमन्दिरसँग यसको सम्बन्ध छ भन्ने देखिन्छ।

भीम गिरि गोसाईंलाई यो ताम्रपत्र गरिदिइएको हो। यी भीम गिरि गोसाईंको पनि परिचय पाउन सकिएको छैन। एक जना भीम गिरि गोसाईंको उल्लेख केही दशक अगाडिको एक ताम्रपत्रमा आएको छ। कुरा श्री ५ पृथ्वीनारायण शाहको समयको हो। पशुपतिका पुजारि कृष्ण भट्ट श्री ५ पृथ्वीनारायण शाहसँग मिले भन्ने आरोप लगाई कान्तिपुरका राजा जयप्रकाश मल्लले कृष्ण भट्टको विर्ता खोसेर सो विर्ता चार जना गिरिहरूलाई दिइएको थियो। ती चार जना गिरिहरूमध्ये एक जनाको नाम "भीम गिरि" थियो। उक्त ताम्रपत्रमा

भीम गिरिलाई "परदेशी" भनिएको छ। त्यसबाट उनी काठमाडौं-उपत्यकाका थिएनन्; मधेस-तिरका थिए भन्ने संकेत पाइन्छ। यस ताम्रपत्रमा उल्लिखित भीम गिरि उनै त होइनन् भन्ने प्रश्न नउठ्ने होइन। तर बीचमा निकै वर्षको अन्तर परेको हुनाले यस विषयमा पनि निश्चित रूपमा केही भन्न सकिँदैन।

जे होस्; एक हजार चवालीस बिगाहा जग्गा सदावर्त-गुठी राखिएको यो ताम्रपत्र तात्कालिक सामाजिक र धार्मिक कुरा बुझ्न केही उपयोगी नै रहेको छ। "सदावर्तप्रथाको जनजीवनमा स्थान" बारे विचार गर्न यस ताम्रपत्रबाट पनि निकै मद्दत हुने देखिन्छ।



[ १४६ संख्या ]

# पशुपति–भंडारको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणत्यादि विविधविरुदावलि-
विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्री–

२. महाराज गीर्वाणयुद्धविक्रम साह् वहादूर सम्सेर जङ् देवानाम् सदा समर-
विजयीनाम् ...

३. आगे गोसाइ वघम्वरि बुनियादनाथका भाई गोसायि भिनक् गिरिके. मोता-
लुके मकवानपूर जिल्लै वारा प्रसा प्रगन्ना नौरगिया।

४. मौजे मिर्जापूरमध्ये विर्ता जमिन विगहा १५ पंधू काजि उजिरसिं थापा.
मातवरसिं थापाका मरवट विर्त्तामा त्यो जमिन जादा. तस्को

५. साटो प्रगन्ना मजकुरतरफ् वलुवा मौजे. झलमहियामध्ये अवादि विगहा
१।।।३ वैरानि विगहा ४।४ ज्मा विगहा १५।२ तस्को

६. सांध. पहिला चक्ला उत्तर सिमाना पैनि पैनिका दषिन वारिका तेसों
दषिन प्रति माटाका पछवारि कातभिडत्तक लगा वयासि

७. ८२ पूर्व शिमाना मौजे. वरवाका पैनि पैनिका पछवारिका तसो पछिम
पिपरका गाछसौ १५ लगा पूर्वतक् लगा ५७ दोश्रा चक्–

८. ला. उत्तरपट्टि माटकका पछ्वारिकातभिडसौ दषिन श्रौ धाराईका जौत षेतका दषिन. वारि श्रारिमा. पतितक

९. लगा ४४ पूर्व शिवना. श्रौ घरायेका षेतका पूर्वारि श्रारि पँनिसौ पश्चिम. गोपाल हजराका पछ्वारि श्रारितक् ल–

१०. गा ३१ येति चार किलाभित्रको जग्गा कुश विर्ता तावापत्र गरिवक्स्यौं श्राफना षातिरजामासंग शिष्योपशिष्य मिलि पैदा–

११. वार भयाको लि भोग्य गर यो विर्ता वक्संदाको सधियार. मुव्वा शक्ति-वल्लभ पाध्या. जिमिदार केरू चौधरि. कान्नुगोए भ–

१२. वानिदत्त दास मोहोरिमंया भामदास. जँवार धुर्व पाध्या. मौजे मिर्जापूर भोला ठाकुर लोहार कृपाराम राउत मानिक

१३. राउत. तोलाराम दास पटवारि. कठेत मानिक् भगत. चार किलाभन्दा श्रघ्यालो विर्त्तवारले नचापनु विना त–

१४. विसर्सरकारवाट नहुनु जो यस वन्देजमा रहोईन सो यस श्लोकमा भन्याको पातकि होला स्वदत्ताम्परदत्ता–

१५. म्वा यो हरेच्च वसुंधराम् षष्टिवर्षसहस्राणि विष्टायां जायते क्रिमिः सम्वत् १८६८ साल मिति कार्तिक

१६. वदि ९ रोज १ शुभम् ...

व्याख्या–

श्री ५ पृथ्वीनारायण शाहले आफ्नो दिव्योपदेशमा "लडाईंमा मन्यो भन्या उसका छोरा षुंडा हाल्न्या नहुन्ज्याल् मरवट दिनु षुंडा हाल्न्या भयापछि जागिरमा उकालिदिनु." भनी बोलेका छन् । श्री ५ पृथ्वीनारायण शाहको यो मरवटनीति निकै सफल रह्यो; यस नीतिले वीर योद्धाहरू जन्माउनामा निकै मद्दत गन्यो।[१] यस मरवटनीतिको अनुसरण श्री ५ पृथ्वीनारायण शाहपछि पनि केही अंशमा हुँदै रह्यो ।

वि.सं. १८६३ मा किल्ला कांगडाको लडाईंमा भीमसेन थापाका भाइ नयनसिंह थापाको

---

१. दिनेशराज पन्त, 'श्री ५ पृथ्वीनारायण शाहको मरवटनीति' पूर्णिमा २२ पूर्णाङ्क, पृ- ११७–११९

मृत्यु भयो ।[२] नयनसिंह थापाका उजीरसिंह थापा र माथवरसिंह थापा दुइ छोरा थिए । उजीरसिंहको जन्म वि.सं. १८५२ र माथवरसिंहको जन्म वि.सं. १८५५ मा भएको थियो ।[३] यसरी वि.सं. १८६३ मा नयनसिंह थापाको मृत्यु हुँदा उनका दुवै छोरा कच्चै उमेरका थिए । यसो हुँदा उनीहरूलाई विशिष्टरूपको "मरवट" दिइएको थियो । विशिष्ट मरवट दिंदा गरिएको पत्रको एक अंश यस प्रकारको छ–

"आगे काजी उजिरसिं थापा मातवरसिं थापाका महतारिसमेतके, काजि नयनसिं थापाले हाम्रा काजमा कोट काँगडाका लडाजिमा जिउ दियाको रिझ... विर्ता वितलप मरवट फिक्-धार सर्वकर अकर सर्वकलम् मारि मेटि बक्स्यौं आपना षातिरजामासँग विर्ता वितलप मरवट् फिक्धार जानि सुष भोग्य गर...इति सम्वत् १८६३ साल "[४]

उजीरसिंह थापा र माथवरसिंह थापालाई "मरवट" दिइएको थियो भन्ने कुराको पुष्टि यस ताम्रपत्रबाट पनि हुन्छ । उजीरसिंहहरूलाई मरवट दिइएको जग्गामध्ये पन्ध्र बिगाह्रा जग्गा मिर्जापुर मौजाको परेको हुँदा त्यसको सट्टा भिनक गिरि गोसाईंलाई अर्को जग्गा दिई यो ताम्रपत्र गरिदिइएको हो ।

卐

२. महेशराज पन्त, 'वीर भक्ति थापा' पूर्णिमा १७ पूर्णाङ्क, पृ. ५५–५८

३. शङ्करमान राजवंशी, 'ऐतिहासिक कुण्डली' पृ. २११–११३

४. महेशराज पन्त 'वीर भक्ति थापा' पूर्णिमा १७ पूर्णाङ्क, पृ. ५८

[ १५० संख्या ]

# वाग्वतीको भीमसेन थापाको स्तम्भलेख

थापाथली, वाग्वतीको वारिपट्टि घाटोमा रहेको शिलास्तम्भमा यो अभिलेख कुँदिएको छ। यसमा वि.सं. १८६८ दिइएको छ।

'संस्कृतसन्देश' १।७ का १–१९ पृष्ठमा श्रीगुरु नयराज पन्तद्वारा यो प्रकाशित भएको छ।

## मूलपाठ

( पूर्वपट्टि )

१. श्रीगणेशाय नमः ॥ श्रीवाग्वत्यै नमः ॥ जननि वाग्वति त्व–
२. त्स्तुतोरवाङ्मनसगोचराः कर्तुमीश्वराः ॥ जगति पामरा मादृशा न–
३. राः कथमलंतरामत्र सह्यताम् ॥१॥ जलरुहं जलाज्जायते जलं जलरुहान्न
४. हि व्याप्तिमत्र ताम् ॥ इति विधेर्हरस्यम्ब भीतिभिः शिवमुखाब्जजा त्वं
५. सती भुवि ॥२॥ पशुपतेः स्फुटां त्वां दयामहं जननि वेद्मि यत्त्वामुपा–
६. गताः ॥ शिवपुरे जना भस्मधारणाः शशिविभूषणा नन्दिवाहनाः
७. ॥३॥ जलकणैर्युतो मारुतो वहन्नयति शुद्धतां दिग्विदिक्स्थितान् ॥

८. जननि जन्मिनः पातकात्मनः सुरपुरेन्ततः स्पर्शमात्रतः ॥
९. ४ ॥ तव जलं समाश्रित्य यो जनः शिशिर आगते कम्पते ततः ॥ स्मर–
१०. शरव्यथाकम्पनं जनाद्दधत उर्वशीमुख्यनायिकाः ॥५॥ पतति यज्ज–
११. ले वस्तु तल्लघु किमपि यत्र वाःपूर एति तम् ॥ ननु यतो भवत्यम्ब
१२. तत्र किं त्वयि पतज्जनस्त्वेति तं शिवम् ॥६॥ जलगतं च यत्तच्च मज्ज–
१३. ति गुरु किलेह यस्त्वज्जले जनः ॥ जननि पातकाद्योघसंचितो
१४. भवति मग्न उन्मज्जतोर्म्भसि ॥७॥ धनविसर्जनं देवतार्चनं जन–
१५. नि तर्पणं पिण्डपातनम् ॥ तव तटे जनो यत्करोत्ययं भवति त–
१६. स्य तत्पुण्यमक्षयम् ॥८॥ तव जलामृतं हस्तसंभृतं यदिह संततं
१७. पीयतेमृतम् ॥ जननि मन्यते तन्न चामृतं जलधिनिःसृ–
१८. तं दैवतामृतम् ॥९॥ तव तटे जनन्यत्र वासतः पशुपतिर्जगन्मु–
१९. क्तयेऽस्थिराम् ॥ परिहसत्यहो विश्वनाथसत्कृतसुरापगां काशिका–
२०. वहाम् ॥१०॥ तव तटोदरे तीर्थकोटयस्तदुपवर्णने चेच्चतुर्मुखः ॥ दशश–
२१. ताननः स्यामहं तदा किमु भवेयमीदृक् तु न क्षमः ॥११॥ पशुपतिः
२२. शिवो ज्योतिरीश्वरः सकलसिद्धिदा गुह्यकालिका ॥ विजयते मुदा
२३. त्वत्तटे सदा त्वमिह सर्वदात्रेति नाद्भुतम् ॥ १२॥ सलिलसन्निधौ
२४. दैवयोगतो मृतिमुपागता ये चराचराः ॥ विरहिता अमी को–
२५. टिजन्मसंचितमलैर्व्रजन्तीशपत्तने ॥१३॥ शिव जगत्पते पार्व–
२६. तीपते पशुपते महादेव शंकर ॥ इति सुजल्पतोऽर्हनिशं मम भ–
२७. वतु त्वत्तटे गङ्गिके स्थितिः ॥१४॥ तव जलेथवा जह्नुजाजले शि–
२८. व शिवेति वा राम राम वा ॥ मरणसन्निधौ जिह्विका मम वदतु
२९. ते स्तुतेरम्ब पाठतः ॥१५॥ यदमलाम्बुनो नित्यसेवनं वृजि–
३०. ननाशनं दुःखदारणम् ॥ भविकभावनं मुक्तिकारणं शरणमेमि
३१. तां वाग्वतीमहम् ॥१६॥ सूरीन्द्ररामहृदयस्य सुतेन भक्त्या वाणी–
३२. विलासविदुषा रचितस्तवोऽयम् ॥ अस्योषसि प्रपठनाद्भवतु प्र–
३३. सन्ना श्रीवाग्वती वरनदी निखिलाघहन्त्री ॥१७॥ इति श्रीमन्महारा–
३४. जाधिराजराज्ञ्याः श्रीललितत्रिपुरसुन्दरीदेव्या आज्ञया रामहृदय–
३५. पण्डितात्मजवाणीविलासपण्डितकृतं वाग्वतीस्तोत्रम् ॥ शुभम्

(उत्तरपट्टि–)

१. श्रीगणेशाय नमः ।। श्रीवाग्वत्यै नमः ।। श्रीवैष्णव्यै नमः ।। यद–
२. मलाम्बुनो नित्यसेवनं वृजिननाशनं दुःखदारणम् । भविकभा–
३. वनं मुक्तिकारणं शरणमेमि तां वाग्वतीमहम् ।।१।। भक्तै तद्देशभूपाभ्युद–
४. यशतकरी कालिका जागरूका योगी गोरक्षनाथोऽपि च जयति
५. सदा यत्र विघ्नं विनिघ्नन् । शूराः सन्ति प्रजाः स्वप्रभुहितनिपुणा
६. न्याययुक्ताः स्वतन्त्राः सोऽयं गोर्खाभिधानो जगति विजयते कोऽपि
७. रम्यः प्रदेशः ।।२।। तत्र द्रव्येशसाहो नृपवर उदितः पूर्णसाहोऽस्य पुत्रस्त–
८. स्य श्रीरामसाहो विरचितविविधश्लाघ्यलोकव्यवस्थः । तस्माच्छ्रीडम्ब–
९. राख्योऽजनि तनयवरस्तत्सुतोऽभून्महात्मा नाम्ना श्रीकृष्णसा–
१०. होऽभवदमलयशा रुद्रसाहोऽस्य सूनुः ।।३।। भूपः पृथ्वीपतिस्तत्सुतवर उद–
११. भूत्तज्जनिर्वीरभद्रस्तस्मात्सत्सिद्धिशाली समजनि नरभूपालसाहो
१२. ऽवनीशः । पृथ्वीनारायणोऽस्मादुदभवदवनावुद्यदुद्दामकीर्तिर्नेपा–
१३. लक्षोणिपालप्रबलरिपुकुले कल्पकालानलाभः ।।४।। भूपो भक्तिभरे–
१४. ण योऽल्पवयसि प्राप्यैव वाराणसीं यात्रानन्तरमागतौ स्वमहसा मार्गा–
१५. वरोधोद्यतान् । हत्वारीन् स्वपुरीं प्रविश्य च नवाकोटाख्यदुर्गं बलाज्जित्वा
१६. प्राप च काष्ठमण्डपपुरीं संहृत्य कोटीर्द्विषाम् ।।५।। तस्मात् सिंहप्रतापो
१७. ऽजनि नृपतिपतिः पुण्यवान्सत्प्रतापः प्रादुर्भूतोऽप्यमुष्माज्जगति र–
१८. णबहादूरराजाधिराजः । बालामालावशीलावलयरिपुकुलालोल–
१९. लीलाविलासोल्लासासक्तावलालीकुचकलशविधिव्यर्थताकर्तृ ते–
२०. जाः ।।६।।दाता पाताऽनुशास्ता निखिलगुणनिधिर्गानविद्यादिवि–
२१. द्याऽभिज्ञो यः कम्पमाना विपुलभयवशात्पालयन्त्यादरेण ।
२२. प्राक्प्रत्यक्सव्यसव्येतरत उपचरन्तोऽधिपा यस्य विज्ञा राज्ञा–
२३. माज्ञां मनोज्ञाः करकमललसत्कुड्मलोल्लासिशीर्षाः ।।७।। सौन्द–
२४. र्यातिशयादमुष्य नृपतेः प्राणाधिकप्रेयसी श्रीमत्कान्तिमती त्रिलो–

२५. कविविदिता जायाऽभवद्वीक्ष्य याम् । एषा कापि सुराङ्गनासु किमि-
२६. यं किं नागकन्यासु वा कामस्येति रतिः प्रिया किमथवा लोकोऽयमा-
२७. शङ्कत ॥८॥ पुत्रं पर्वतचक्रवर्तिनृपतिं सिंहासनाध्यासितं स्वीयं वीक्ष्य वि-
२८. धाय दाननिकरानङ्के स्थिता स्वामिनः । एषा भागवतार्थमन्तसमये
२९. वाणीविलासाद् बुधादाकर्ण्यैव हरिं निधाय हृदये लीना परब्रह्मणि
३०. ॥९॥ ललितत्रिपुरादिसुन्दरी चरमामुष्य नृपस्य सुन्दरी । ज-
३१. यति त्रिजगत्सु सुन्दरी भुवि कैलाश इवेशसुन्दरी ॥१०॥ स्वाङ्के
३२. स्वस्वामिना श्रीगुणवति निहिते भूमिपे पुत्रवर्ये प्राणानाधाय नाराय-
३३. णाचरणमनाः पुण्यकर्माणि नित्यम् । कुर्वाणाऽनाथदीनागतिकज-
३४. नकृपापारवारां निधिः सा साध्वीनामग्रगण्या जगति विजयते भू-
३५. मिपालेन्द्रपत्नी ॥११॥ गीर्वाणोत्तरयुद्धविक्रमनृपः प्रोद्भूत उर्वीभृतः
३६. पुत्रोऽस्माज्जलधेः सुधांशुरिव सद्धामाभिरामोदयः । लोकानन्दक-
३७. रः प्रचण्डमहसः सार्द्धाब्दको लब्धवान् यो राज्यं जनकान्निजाज्जगति
३८. सज्जन्युव्रजानां मुदे ॥१२॥ कर्णे दानं मनोजे श्रुतिमृतसुकृते धर्म्म-
३९. राजेऽर्जुने सच्छौर्यं गाम्भीर्यधैर्ये अधिजलधि रवौ तेज आह्लादक-
४०. त्वम् । चन्द्रे भोजे प्रसादं कविजनकवितास्वाद आधाय नूनं वाञ्छन्ने-
४१. कत्र धाता स्थितमिदमखिलं सृष्टवान्द्रष्टुमेतम् ॥१३॥ ज्येष्ठा श्रीसि-
४२. द्धिलक्ष्मीर्विलसति महिषी यस्य गोरक्षराजलक्ष्मीश्चैतद्द्वयीयं पति-
४३. भजनपरा सर्वसाध्वीषु धन्या । प्रायो भूयोऽपि भूयोऽद्भुतकलिमहिमोद्भू-
४४. तभूभारहेतुध्वस्त्यै कृष्णोऽवतीर्णोऽयमियमपि मुदे रुक्मिणीसत्यभा-
४५. मा ॥१४॥ यस्य श्रीभीमसेनः सचिवकुलमणिर्भाति भूपालमौलेः कस्मि-
४६. श्चिद्घोरविघ्ने निपतति विधितो धीरगम्भीरधीर्यः । आवीद्भूपं धियोपद्रवश
४७. ममकरोत्स्वीययायुष्यहेतो राज्ञः कीर्त्यै च नानाविधविमलयशोहेतु-
४८. कर्माणि मन्त्री ॥१५॥ जरन्नव्यं रम्यं प्रमदवनमध्वादिघटनं पुरद्वारं वृष्ट्या-
४९. तपविकललोकाश्रमयुतम् । तथा बारुत्खानाभिधमथ भजाग्देवल
५०. इति प्रसिद्धं गोर्खायामपि नृपगृहं भीमरचितम्॥१६॥यो दक्षं लक्ष्यवेधे रुचि-
५१. रहरिकथाकर्णनैकाग्रचित्तं तुङ्गं रिङ्गत्तुरङ्गं व्यधित वशयितुं संप्रवीणं प्रभुं स्व

५२. म् । बाल्ये नद्यादिबाहुप्रतरणनिपुणं वर्ण्यनानागुणौघं मन्त्रीन्द्रो भीमसेनः सु
५३. कृतचयवशाल्लब्ध आभाति यस्य ॥१७॥ यत्क्रोधश्रुतिमात्रतोऽप्यरिवधू-
वृन्दाश्रु-
५४. धारा वृहद्धारा वोपचिता निरीक्ष्य नटति द्राङ्नीलकण्ठावली । यो मातेव पि-
५५. तेव बन्धुरिव सत्स्त्रीव प्रभौ दासवच्चास्ते तत्र निधाय भीमसचिवे राज्यं नृ-
५६. पः क्रीडति ॥१८॥ कश्चिच्चीनपचक्रवर्तिरचितः सन्धिः समृद्धोऽनिशं यन्म-
५७. न्त्रान्मनसापि नेच्छति भियाक्रान्तुं प्रवृद्धोऽप्यरिः । ताम्रास्योऽमरसिंहम-
५८. न्त्रिवरतः सीम्नि स्थितात्यपितुः सोऽयं मन्त्रिशिरोमणिर्हितकरो यस्यास्ति सो
५९. ऽयं नृपः ॥१९॥ स्वाम्यर्थाय हि जीवनं भवति तद्भ्रातर्व्रज त्वं युधीत्याज्ञ-
प्तो रणसं-
६०. मुखे नयनसिंहथापा यदीयोऽनुजः । स्वप्राणानजहाद्रिपून् भुजबलादाक्रम्य
६१. काङ्डाह्वये कोटे विलष्टपथे प्रवेशसमये मन्त्री स यस्यास्त्यसौ ॥२०॥ नेपा
६२. लोऽयमुपद्रवावलिशतस्थानं प्रभुर्बालकः संरक्ष्यो मम सर्वथा गृहसुखं त्यक्त्वे-
६३. ति भूपालये स्थित्वान्तर्बहिरन्यधीविलसितो दृष्टिं प्रदायानिशं यो जागर्त्ति
६४. स भीमसेनसचिवो यस्यानुरक्तोऽस्त्यसौ ॥२१॥ अनुजबलतवारो येन सम्यङ्
नियु-
६५. क्तः प्रतिपदमवनीशं सावधानोऽवति स्वम् । यममृतरणवीरौ भ्रातरौ भ-
६६. क्तिमन्तावनुसरत उदारौ सोऽस्ति भीमो यदीयः ॥२२॥ लोका जानीत यूयं
प्रभुहितकृ-
६७. तये नाभवन्नास्ति भावी नो मन्त्री भीमसेनादपर इह लसद्बुद्धिचातुर्ययुक्तः । त
६८. स्माद्भीमो गरूत्मानयमुत हनुमान् सेवितोऽनेन भूपः कृष्णो वा राघवोऽवा-
तर-
६९. दिति कथयत्यत्र वाणीविलासः ॥२३॥ श्रुत्वा यन्मन्त्रिकर्माद्भुतमतिचकितः
७०. (स्फूर्ज)यित्वा स्वमूर्ध्ना कम्पेन द्रष्टुमत्र क्षितितलविवराच्छेष एत्य
स्थितः कि-
७१. म् ॥ कायव्यूहेन भीमोत्कटकृतिमिषतो मन्य इत्थं हि नो चेद्भूकम्पोऽभूद्वि
७२. दीर्णा धरणिरपि कथं मन्त्रिकृत्यं च शुभ्रम् ॥२४॥ यत्सचिवं भीमसेनं सं

७३. मन्त्र्य च वाग्वतीतटे घटनम् । सेतोरकृत सुकीर्त्यै श्रीललितत्रिपुरसु–
७४. न्दरीदेवी॥२५॥यस्मिन् सुन्दरसेतुवर्यरचनं श्रीभीमसेनान्वयात् ताराधीशरू
७५. (चा वि)भाति हितकृच्छ्रीलक्ष्मणोपेतता । वैदेहीति वचो जनो धरणिभृद्रामा
७६. (नुभा)वात्सदा लंकायादरमेति तत्सुचरितं रामायणं मन्महे ॥२६॥ पारावा
७७. (रनि)वासिजन्तुनिवहानायासतो निम्नगामेतां मातृकुले तथा पितृकुले
७८. भर्त्तुः कुले संस्थिताः । ये ये ते पितरोऽपि दुस्तरभवाम्भोधिं प्रमोदान्विता–
७९. स्तीर्त्वोद्यान्त्विति वाञ्छयाऽकृत वरं सेतुं नृपेन्द्रप्रिया ॥२७॥पारावारतटस्थ
८०. लोकवसतिग्रामाभिरामोदया वाग्वत्यां विहितेयमालिरुपलाबद्धप्रघट्टा–
८१. न्विता । राज्ञ्याः श्रीललितादिमत्रिपुरसुन्दर्याः स्फुरत्यद्भुता मुक्तिश्रीपुररत्न
८२. वृन्दविजयोद्यत्ती पताका किल ॥२८॥ गीर्वाणोत्तरयुद्धविक्रमनृपायुर्वृद्धिदा
८३. लेखनी दैवी निर्मलभीमसेनमनसो वृत्तिः स्फुटा मूर्तिधृक् । कीर्तिः कापि
८४. शलाकिका त्रिपुरसुन्दर्याः स्वनिश्रेयसश्रीपूर्द्वारवरुद्धयोररयोरुद्घाटि
८५. कोद्घाटने ॥२९॥ आलङ्घ्य शतयोजनो जलनिधिर्यो जानकीजानिना जा
८६. यायै तरणाय वानरवरानीकस्य बद्धः पुरा । चित्रं तत्र किमत्र तत्त्रिपुरसु–
८७. न्दर्या स्वभर्त्रादिकोद्धारायाऽक्रियताऽप्यपारभववार्निध्येष सेतुर्दृढः ॥३०॥
८८. शाके १७३२ द्वित्रिमुनीन्दुमानिनि नगाङ्गाहिक्ष्मासम्मिते संवद् १८६८ मास्यधि
८९. सिद्धिपौष्णवणिजे मार्गे गुरोर्वासरे । शुक्लैकादशिकान्विते रणबहादूराधि-पश्रेयसे
९०. राज्ञीयं मकरोदये कृतवती सेतोः शिलान्यासनाम् ॥३१॥ गीर्वाणोत्तरयुद्ध विक्र
९१. महाराजाधिराजाज्ञया कर्मण्यत्र स भीमसेनसचिवो लक्ष्म्यादिनारायणम् ।डि
९२. ट्ठेति प्रथितं सुकर्मनिपुणं प्राज्ञं नृपाज्ञाकरं प्राचीनानुचरं न्ययुङ्क्त मतिमान्
९३. श्रद्धाभरेण द्रुतम् ॥३२॥ सुब्बेतिव्यपदेशभाग्द्विजवरः श्रीलोकनाथाह्वयः पांडेः सेवनवि–
९४. ज्जयद्रथ इति ख्यातः सुबेदारकः । वीरो ज्ञो दलवारसंज्ञकसुबेदारो वरो बुद्धिमा–

९५. न् सुब्बाः पीहुवराभिधोऽतिनिपुणस्तद्वन्नियुक्ता अमी ।।३३।। एतान् पञ्च नियोज्य कर्मनि–
९६. पुणान् प्राधान्यतः पावकेष्वग्नीन्दु १३५३ प्रमितैः करैः परिमितं सेतुं दृढं सुन्दरम् ।
९७. कृत्वा सिद्धमिमं प्रभुं नृपवरं तन्मातरं स्वामिनीं सन्तोष्यास्य स भीमसेनस–
९८. चिवो व्यज्ञापयत्संस्कृतिम् ।।३४।। अथ नरपतिमात्रा दैवतार्चां विधाय बहुल–
९९. वसुविसर्गैर्हव्यवाहं सुतर्प्य । द्विजसमुदयदीनानाथलोकान् प्रतोष्य निज–
१००. पतिपरधामप्राप्तये संस्कृतोऽयम् ।।३५।। संव १८६८श्रागतुं नागावनिप-रिकलिते चैत्रि–
१०१. के कृष्णपक्षे सप्तम्यां कुम्भगेऽर्के सुरगुरुदिवसे मैत्रभे हर्षणाख्ये । योगाग्न्ये द्वन्द्वल–
१०२. ग्ने ववकरणयुते हैमसिंहध्वजोद्यत्कीर्तिस्तम्भाभिरामो नृपतिमहिलया सेतु-रुत्सृ–
१०३. ष्ट एषः ।।३६।।

(दक्षिणपट्टि)

१. गीर्वाणोत्तरयुद्धविक्रममहाराजाधिराजाज्ञया जाता श्रीललितोत्तरत्रिपुर-सुन्दर्य्या
२. परात्मेशितुः ।प्रीत्यै कीर्तिरियं परा विजयतां वाणीविलासस्तुता कल्पान्तावधि भीम–
३. सेनसचिवप्रोद्यत्प्रभावान्विता।।३७।।अतः परं संस्कृतवाणीमजानानामपि भ–
४. टित्यर्थबोधाय स एवार्थः संक्षिप्य भाषया प्रकटीक्रियते. श्रीगोर्खादिशमा
५. पहिले श्रीद्रव्येश साह महाराज हुनुभयो । उहापछि उनका पुत्र श्रीपूर्ण साह. उन–
६. का पुत्र संपूर्ण लोकमा स्थिति बांधन्या श्रीराम साह. उनका पुत्र श्रीडंबर साह. उनका

७. पुत्र श्रीकृष्ण साह. उनका पुत्र श्रीरुद्र साह. उन्का पुत्र श्रीपृथ्वीपति साह. उन्का पु–

८. त्र श्रीवीरभद्र साह. उन्का पुत्र देवताको प्रसाद पायाका अनेक सिद्धिले युक्त भयाका

९. श्रीनरभूपाल साह. इनैका पुत्र बाल्यावस्थैमा श्रीकाशीयात्रा गरि फिर्दामा छेकन

१०. आउन्या चौकीदार प्रभृति शत्रुसैन्यकन कत्तल गरि गोर्खा सहरमा प्रवेश गऱ्या–

११. पछि नुवाकोट नेपाल प्रभृति देश मारि श्रीमहाराजे बहादूर सम्सेर जङ् पदवी पाउ–

१२. न्या श्रीपृथ्वीनारायण साह महाराजा हुनुभयो. इनैका पुत्र प्रजारंजन गर्दामा

१३. निपुण भयाका श्रीसिंहप्रताप साह महाराजा हुनुभयो. इनैका पुत्र अति–सुन्दर मू–

१४. ति भयाका सकल शत्रुको संहार गर्न्या दातामा अग्रगण्य देशका बडा बडा

१५. राजाविषे पनि हुकुम चलाउन्या शस्त्र शास्त्र संगीत तंत्रादि सकल विद्याका निधान

१६. श्रीरणबहादूर साह महाराजाधिराज पुत्रलाइ राज्य दीकन स्वामी हुनु-भयो. इ–

१७. नैका अत्यन्त सौन्दर्यले युक्त भयाका प्राणभंदा पनि प्यारा श्रीकान्तिमती

१८. नाम भयाका पत्नी स्वामिनी हुनुभयो. आफना पुत्रकन पर्वतदेशमा चक्रवर्ती

१९. महाराज हुनुभयाका सिंहासनमा चढ्याका यस्ता देषन पाईकन सं–

२०. तोषले युक्त भई शास्त्रमा लेख्याका जो जो दान छन्. तो सबै दान गरीकन

२१. अंतकालविषे पनि आफना स्वामीले संग भई वाणीविलास पण्डितका

२२. मुखदेखिन् संपूर्ण श्रीभागवत पुराणका अर्थ श्रवण गरी नारायणकन

२३. हृदयविषे राखी परम धाममा प्राप्त हुनुभयो इनै रणबहादुर साह महा-राजा–

२४. धिराजका श्रीललितत्रिपुरसुन्दरी देवी कांछा महारानी हुनुभयो. ब–
२५. हुत सौंदर्यले युक्त भयाका कैलासविषे विराजमान भयाकी साक्षात् पा–
२६. र्वती जस्ता श्रीस्वामीज्यूले आफ्ना कासमा राखिदियाका पुत्र श्रीगीर्वाण-
युद्धवि–
२७. क्रम साह महाराजाधिराजविषे प्राण राखीकन नारायणका चरणारविन्द–
२८. विषे चित्त लगाई सर्वदा पुण्यकर्म गर्न्या भयाका दीन अनाथ जस्का गति
२९. केही पनि छैन यस्ता जनविषे करुणा बहुतै गर्न्या पतिव्रतामा अग्रग–
३०. ण्य भयाका यस्ता सो कांछा महारानी हुनुहुन्छ. श्रीरणबहादूर साह महारा–
३१. जाधिराजदेखिन् समुद्रदेखि उदायाका पूर्णचन्द्रले झैं सकल लोककन
३२. अत्यन्त आह्लादन गर्न्या डेढ वर्षका उमेरमा आपना पितादेखिन् राज्या–
३३. भिषेक पायाका कर्णभन्दा पनि बडा दाता कामदेवभन्दा पनि अति–
३४. सुन्दर धर्मराज जस्ता अतिसत्यवादी सदा धर्म कर्म गर्न्या अर्जुन जस्ता
३५. बडा शूर समुद्र जस्ता अतिगंभीर पनि धीर पनि भयाका सूर्य जस्ता
३६. बडा तेजस्वी भोजराजभन्दा पनि कविता सुन्दा बडो प्रसाद दिन्या इ–
३७. त्यादि सकल राजगुणले युक्त भयाका श्रीगीर्वाणयुद्धविक्रम साह
३८. महाराजाधिराज पैदा हुनुभयो. जसका जेठा महारानी श्रीसिद्धिलक्ष्मी–
३९. देवी हुनुहुन्छ । कान्छा महारानी गोरक्षराजलक्ष्मीदेवी हुनुहुन्छ इनै महारा-
४०. ज महारानीमा कलियुगका महिमाले फेरी भूमीमा जो जो भारका का–
४१. रण छन्. तिन्को विनाश गर्नानिमित्त कृष्णजीको अवतार महाराज रुक्मि–
४२. णीजीको र सत्यभामाजीको अवतार इ दुई महारानी हुन् भनि लोक य–
४३. स्तो तर्कणा गर्दछन्. जस् महाराजाका सकल मंत्रीविषे शिरोमणि भ–
४४. याका भीमसेन थापा काजी छन्. जो काजी दैववशले श्रीस्वामीज्यूको
४५. अकस्मात् परलोक हुनु एहि घोर विघ्न आउंदामा पनि धीर गंभीर बुद्धिले
४६. सकल उपद्रवको निवारण गरि श्रीमहाराजाको रक्षा गर्न्या श्रीमहाराजा–
४७. को आयुष्य पुण्य प्रताप कीर्ति राज्य बढोस् भन्नानिमित्त बहुत दिनदेखि
४८. जीर्ण भयाको भंडारखालकन अनेक तरहका चूनागिरिले जग् जग् भ–
४९. याका अनेक तरहका फलफुलका वृक्ष औषधि लतादिले पूर्ण भयाको अ–

५०. तिसुन्दर तुल्याउन्या जग्गा जग्गामा बाटोको संस्कार गरि सडक बनाउन्या
५१. सहरका ढोका ढोकाछेउका पाटीहेरू दर्वारको सुनको ढोकाहेरू बनाइ संस्का–
५२. र गर्न्या बारुदखाना मजाकदेवल विष्णुमतीको पूल वारीपारीका धर्म–
५३. शाला घाट् सुनको धारा गोर्खाको दरबार इत्यादि बनाउन्या आफ्ना प्रभुकन
५४. बाल्यावस्थैमा धनु हान्न हरिकथा श्रवण गर्न घोडा चढ्न पौह्रन इत्या–
५५. दि सकल राजनीतिमा कुशल तुल्याउन्या जस्का क्रोधमा सब थर्थराय–
५६. मान कांप्दछन्. जो आफ्ना प्रभुविषे महतारि झैं हित गर्दछन्. पिता झैं
५७. उपदेशको वार्ता बिन्ती गर्दछन्. बंधुवर्ग झैं स्नेह गर्दछन्. सत्स्त्री झैं सुख दिं-
५८. न्छन् सेवामा दास झैं जो रहन्छन्. जस्का मंत्रणामा चीनका पात्साहसितको
५९. धाहा पनि बंदो जान्छ. जस्का मंत्रणाले आफ्ना बाबा अमरसिंह थापा काजी-
६०. लाई सिमानामा राख्नाले बढ्याको फिरंगी पनि आकन शक्दैन जस्का भाई
६१. नयनसिंह थापाले पनि काङ्डाकोटमा प्रभुका निमित्त लडायिमा प्राण दि–
६२. या. जो काजी यो नेपाल उपद्रवको घर हो प्रभु भन्या बालक मैले सह्यार गर्न्या
६३. हो भन्नानिमित्त गृहसुख छोडी पनि दरबारमा बसी भित्र बाहिर सर्वत्र नजर दि
६४. खबर्दारि भै रहन्छन्. जसले लगायाका भाई बखतवारसिंह काजी श्रीमहा– राजा–
६५. का हजूरमैमा बसी श्रीमहाराजको रक्षा रात दिन गर्दछन् जस्का रक्षानिमित्त ग्रडा
६६. भ्रातृभक्त भयाका अमृत काजी र रणवीर काजी सर्वदा साथ रहन्छन्.
६७. जस्काजीले सेवा गरियाका श्रीमहाराजाविषे कविजनहेरु यस्तो वर्णन गर्दछन्.
६८. श्रीमहाराजा कृष्णजीका अवतार हुन् भन्या इ काजी गरुडका अवतार हुन्. श्रीमहा–

६९. राजा रामजीका अवतार हुन् भन्या ई काजी हनूमान्का अवतार हुन् भनि इत्या-
७०. दि प्रकारले वर्णन गर्दछन्. यस्ता काजो प्रभुको सर्व प्रकारले हितै गर्न्या जस्
७१. महाराजाका प्रीति पात्र छन्. तिनै भीमसेन थापा काजीसित सल्लाहा गरी ओल-
७२. लितत्रिपुरसुन्दरदेवी नाम भयाका श्रीस्वामी रणबहादूर साहका कांछा महा-
७३. रानीले कीर्ति र श्रीस्वामीज्यूको उद्धार हवस् भन्नानिमित्त यो वाग्वतीको
७४. पूल बनाउनाकन इच्छा गरी हुकुम बक्सनुभयो. वाहादेषी सकल राज्यको
७५. भार पायाका प्रमुख भक्त भयाका बडा बुद्धिमान् भीमसेन थापा काजीले ए-
७६. स् काममा बहुत चित्त लगाई लक्ष्मीनारायण डिट्ठा मुख्य गरी लोकनाथ पा-
७७. डे सुब्बा जयद्रथ सुबेदार दलवार पिहुवर लामा सुब्बा प्रभृति अनेक
७८. मनुष्यकन लगाई शाके १७३२ सम्वत् १८६७ सालका मार्गशीर्ष महिनाका
७९. शुक्ल पक्षका एकादशी तिथि रेवतीनक्षत्र सिद्धियोग वणिक्करण वृहस्प-
८०. तिवार मकरलग्नमा शिलान्यासपूर्वक एक वर्षमा तेह्र शय त्रिपन्न
८१. हातको यो पूल सुवर्णसिंहध्वज भयाका कीर्तिस्तम्भले शोभायमान भया-
८२. को वारीपारी धर्मशाला ग्रामहेरु भयाको सिद्ध गरी महाराजा महारानी-
८३. कन सन्तुष्ट गराया. वाहादेषी १८६८ सालका चैत्र कृष्ण सप्तमी वृहस्प-
८४. तिवार अनुराधानक्षत्र हर्षणयोग ववकरण मिथुनलग्नमा कुं-
८५. म्भको आदित्य छंदामा यज्ञ दान पुण्य गरी पुत्र श्रीगीर्वाणयुद्धविक्रम
८६. साह महाराजाधिराजले संग भई श्रीललितत्रिपुरसुन्दरी महारानीले
८७. श्रीजगदीश्वरप्रीतिपूर्वक श्रीस्वामीज्यूका उद्धार निमित्त वारी पारी
८८. धर्मशाला गुठी खेतले संग भयाको यस् पूलको उत्सर्ग गर्नु-
८९. भयो. शुभम्भूयादीश्वरप्रसादात् ।।

## अनुवाद

श्रीगणेशलाई नमस्कार । श्रीवाग्वतीलाई नमस्कार । श्रीवैष्णवी(लक्ष्मी)लाई नमस्कार ।

जसको शुद्ध पानीको सधैं सेवनले पाप नाश गर्छ, दुःख हर्छ, कल्याण गर्छ, मुक्ति दिन्छ, ती वाग्वतीको म शरण पर्छु ॥१॥

यो देशका(गोरखाका) भक्त राजाका शत्रौं उदय गर्ने कालिका देवी जहाँ रहन्छिन्, विघ्न नाश पार्ने योगी गोरखनाथ जहाँ सधैं रहन्छन्, जहाँका दुनियाँ शूरा आफ्ना राजाको भलो गर्ने हक्की तथा स्वतन्त्र छन्, त्यस्तो गोरखा भन्ने संसारमा राम्रो कुनै देश छ ॥

त्यस गोरखा देशमा असल राजा द्रव्य शाह हुनुभयो। उहाँका छोरा पूर्ण शाह हुनुभयो। उहाँका छोरा अनेक असल रीति-स्थिति बाँध्ने राम शाह हुनुभयो। उहाँका छोरा डम्बर शाह हुनुभयो। उहाँका छोरा ठूलो विचार भएका कृष्ण शाह हुनुभयो। उहाँका छोरा सफा कीर्ति फैलिएका रुद्र शाह हुनुभयो। उहाँका छोरा पृथ्वीपति शाह हुनुभयो। उहाँका छोरा वीरभद्र शाह हुनुभयो। उहाँका छोरा असल सिद्धि पाएका नरभूपाल शाह हुनुभयो। उहाँबाट पृथ्वीमा ठूलो कीर्ति फैलिएका नेपाल(खाल्डो)का बलिया शत्रु राजाहरूका लागि प्रलयकालको आगो जस्ता भएका पृथ्वीनारायण शाह हुनुभयो ॥३–४॥

जुन राजा कच्चै उमेरमा ठूलो भक्तिले काशी पाउ लाग्नुभयो। जसले यात्रा गरी फर्कंदा बाटो छेक्न आउने शत्रुहरूलाई आफ्नो पराक्रमले कत्तल गरी आफ्नो शहर(गोरखा)मा प्रवेश गर्नुभयो, बलले नुवाकोट किल्ला जित्नुभयो; करोडौं शत्रुहरूलाई सिध्याई काठमाडौंमा प्रवेश गर्नुभयो ॥५॥

उहाँबाट प्रतापी धर्मात्मा सिंहप्रताप(प्रतापसिंह) हुनुभयो। उहाँबाट आइमाईहरूलाई वश पार्न सक्ने पृथ्वीमण्डलका शत्रु राजाका विलासी स्वास्नीहरूका स्तनलाई व्यर्थ पार्न सक्ने शक्ति भएका(सारा शत्रुहरूलाई सखाप पार्ने) रणबहादुर शाह हुनुभयो ॥६॥

जुन राजा दानी रक्षा गर्ने हुकूम चलाउने आदि सारा गुणले युक्त भएका, गानविद्या आदि विद्या जान्ने हुनुभयो। जुन राजाको आज्ञालाई पूर्व दक्षिण पश्चिम उत्तर चारै दिशाका ठूलठूला चतुरा राजाहरू पनि सलामीमा हाजिर भएर हात जोडीकन शिरोपर गरी मान्दथे ॥७॥

उहाँ राजाका अतिसुन्दरी हुनाले प्राणभन्दा पनि प्यारी भएकी, सर्वत्र नाउँ चलेकी रानी कान्तिमती हुनुभयो। जसलाई देखेर कुनै अप्सरा हुन् कि वा कुनै नागकन्या हुन् कि अथवा कामदेवकी प्यारी रति नै हुन् कि भनीकन मानिसहरू अड्कल गर्दथे ॥८॥

गिरिराजचक्रवर्ती भई सिंहासनमा बसेका आफ्ना छोरालाई देख्न पाईकन अनेक दान पुण्य गरीकन रानी कान्तिमती आखिर समयमा स्वामी महाराजको काखमा बसी पण्डित वाणीविलासको मुखबाट श्रीमद्भागवतको अर्थ सुनी मनले हरिलाई संझी परमधाम जानुभयो ॥९॥

महाराज रणबहादुर शाहका कान्छा महारानी कैलाशमा बस्ने पार्वती जस्तै राम्री भएकी ललितत्रिपुरसुन्दरी हुनुहुन्छ ॥१०॥

आफ्ना स्वामी(रणबहादुर शाह)ले आफ्नो काखमा राखिदिएका गुणी छोरा महाराजमा प्राण राखी नारायणमा मन दिईकन सधैं धर्मकर्म गर्ने, गरीब-गुरुवा दुःखी टुहुराहरूमाथि दया राख्ने, पतिव्रताहरूमा श्रेष्ठ भएका उहाँ कान्छा महारानी हुनुहुन्छ ॥११॥

उहाँ महाराज(रणबहादुर शाह)बाट समुद्रबाट उदाएका पूर्ण चन्द्रमा भैं अत्यन्त राम्रा, दुनियालाई आनन्द दिने गीर्वाणयुद्धविक्रम शाह पैदा हुनुभयो । प्रतापी आफ्ना बाबुबाट डेढ वर्षको उमेरमै राज्य पाएका महाराज गीर्वाणयुद्धविक्रम सज्जनहरूलाई आनन्द गराउने हुनुहुन्छ ॥१२॥

कर्णको दानीपन, कामदेवको सौन्दर्य, धर्मराजका सत्य र धर्म, अर्जुनको शौर्य, समुद्रका गम्भीरता र धीरता, सूर्यको तेज, चन्द्रमाको आनन्द दिनेपन, कविहरूको कविता चाख मानी सुनी भोज राजाले गर्ने निगाह (यी सबै गुणलाई) एकै ठाउँमा राखी हेर्न खोज्ने ब्रह्माले यहाँ महाराजलाई सृष्टि गरेका हुन् कि क्या ? ॥१३॥

यहाँ महाराजका जेठा श्रीसिद्धिलक्ष्मी र (कान्छा) गोरक्षराज्यलक्ष्मी गरी पतिको सेवा गर्ने पतिव्रताहरूमा श्रेष्ठ भएका दुइ महारानी हुनुहुन्छ । कलिकालको महिमा ज्यादै बढ्नाले भएको पृथ्वीको भारलाई हटाउनाका लागि साक्षात् कृष्णले नै यहाँ महाराज (गीर्वाणयुद्धविक्रम)को अवतार लिनुभएको हो कि, रुक्मिणी र सत्यभामाले चाहिं यहाँ दुइ महारानीको अवतार लिनुभएको हो कि ? ॥१४॥

जुन महाराजका मुख्य मन्त्री श्रीभीमसेन थापा छन् । दैववशले कुनै ठूलो विघ्न आइपर्दा जुन मन्त्रीले धैर्य र गम्भीर बुद्धिले राजाको रक्षा गरे, आफ्नो बुद्धिले उपद्रवलाई शान्त पारे । जसले राजाको आयु बढोस् कीर्ति फैलियोस् भनी किसिम किसिमका यश फैलिने कामहरू गरे ॥१५॥

जुन मन्त्री भीमसेन थापाले बिग्रिराखेको प्रमदवन (दरबारको बगैंचा भंडारखाल)लाई

नयाँ राम्रो बनाए; बाटोघाटो बनाए; शहरका ढोका र ती ढोकानिर वर्षा घामले पिरिएका दुनियाँलाई बस्नाका लागि पाटी पौवाहरू बनाए; बारुदखाना मजगदेवल बनाए तथा गोरखामा राजदरबार बनाए। यो कुरा सबैलाई थाहै छ ॥१६॥

जसले आफ्ना राजालाई बालककालदेखि तारो हान्न सिपालु तुल्याए; रसिला हरिका कथा सुन्नामा मन लगाउने बनाए; रिङ्ने अग्लो घोडालाई काबुमा ल्याउन सक्ने पारे; राम्ररी पौडी खेल्न सिकाए; इत्यादि अनेक असल गुणले युक्त तुल्याए। त्यस्ता मुख्य मन्त्री भीमसेन थापालाई राजाले ठूलो भाग्यले पाउनुभएको छ ॥१७॥

जो रिसाएको सुन्दा खेरि शत्रुका आइमाईहरूका आँखाबाट बगेका आँसुका धारालाई देखेर वर्षा भएको हो कि भन्ने ठानी झटपट मुजुरहरू नाच्न थाल्दछन्। जो आफ्ना मालिकमा आमा जस्तै, बाबु जस्तै, दाजुभाइ जस्तै, पतिव्रता स्वास्नी जस्तै, नोकर जस्तै छन्। त्यस्ता मन्त्री भीमसेन थापामा राज्यभार सुम्पी राजा निस्फिक्रीसँग रहनुहुन्छ ॥१८॥

जसको सल्लाहले चीनका बादशाहसँगको सन्धि दिनदिनै बलियो हुँदै गएको छ। बढ्दै आइरहेको शत्रु अंग्रेज पनि जसका बाबु अमरसिंह थापा सीमानामा रहेका हुनाले डराईकन आक्रमण गर्ने मनले पनि आँट्न सक्दैन। त्यस्ता हित गर्ने मुख्य मन्त्री उहाँ राजाका हुन् ॥१९॥

हामीले जिउनु मालिकके लागि हो; हे भाइ, तिमी लडाइँमा जाऊ भनी अह्राइएका जसका भाइ नयनसिंह थापाले जान गाह्रो किल्लाकाँगडामा शत्रुहरूलाई बलले मिच्तै पस्दा खेरि त्यहीँ लडाइँमा प्राण दिए। त्यस्ता मन्त्री यहाँ राजाका छन् ॥२०॥

यो नेपाल भनेको अनेक उपद्रवहरूको घर हो; राजा भने बालक हुनुहुन्छ; मैले (आफ्नो) घरको सुख छोडीकन पनि राजाको रक्षा गर्नुपर्छ भनी राजदरबारमै बसी भित्र बाहिर सबै ठाउँमा दृष्टि पुन्याई बुद्धिमान् जुन मन्त्री हरबखत जागा रहन्छन्। यस्ता भक्त मन्त्री भीमसेन थापा उहाँ राजाका छन् ॥२१॥

जसले राम्ररी खटाइएका भाइ बखतवारसिंह होशियार भईकन हरबखत आफ्ना राजाको रक्षा गरिरहन्छन्। भाइ अमृतसिंह र रणवीरसिंह भक्तिपूर्वक जसको साथमा रहिरहन्छन्। त्यस्ता भीमसेन थापा उहाँ राजाका छन् ॥२२॥

हे लोकहो, बुद्धि तथा चतुर्याई भएको भीमसेन थापाभन्दा अर्को आफ्नो राजाको हित

गर्ने मन्त्री पहिले भएका पनि थिएनन्; अहिले पनि छैनन्; पछि पनि हुने छैनन् भन्ने कुरा सबैले बुझ्नुपर्दछ। त्यस कारण यी मन्त्रीले सेवा गरिएका राजा (गीर्वाणयुद्धविक्रम शाह) रामजीका अवतार हुनुभएको भए मन्त्री (भीमसेन थापा) हनूमान्का अवतार हुन्। राजा (गीर्वाणयुद्धविक्रम शाह) कृष्णजीका अवतार हुनुभएको भए मन्त्री (भीमसेन थापा) गरुडका अवतार हुन् भनी वाणीविलास भन्दछन् ॥२३॥

जुन मन्त्रीको अद्भुत कार्य सुनेर ज्यादा आश्चर्य मानेका शेषनाग आफ्ना फणा फिंजाएर तथा हल्लाएर ठूलठूला काम गर्ने तिहुँले कायव्यूह (अर्को अर्को रूप लिनु) गरीकन पाताल-बाट यहाँ हेर्न आएर रहेका हुन् कि भनी ठान्दछु। होइन भने भूकम्प किन हुन्थ्यो; पृथ्वी किन फाट्थ्यो ? यी मन्त्रीका काम पनि त असलै छन् ॥२४॥

जुन मन्त्री भीमसेन थापासँग सल्लाह गरीकन सुकीर्ति फैलियोस् भनी श्रीललितत्रिपुर-सुन्दरी देवीले वाग्मतीको किनारामा पुल बनाउन लाउनुभयो ॥२५॥

भीमसेनको (भीमसेन थापाको, अर्को पक्षमा ठूलो सेनाको) प्रबन्धबाट बनाइएको श्री लक्ष्मण (असल चिह्न; अर्को पक्षमा लक्ष्मण रामका भाइ) भएको पुलमा ताराधीशको (चन्द्रमाको; अर्को पक्षमा सुग्रीवको) चहकले शोभा हुन्छ। वैदेहीति ( देऊ; अर्को पक्षमा सीता भन्ने) वचन सुनिन्छ। राम ( राम्रो; अर्को पक्षमा रामचन्द्र ) राजाको प्रभावबाट दुनियाले सुबिस्ता पाउँछ (अर्को पक्षमा लङ्कामा पुग्छ)। यस कारण यो कीर्ति (पुल) रामायण जस्तै भएको छ भनी हामी सम्झन्छौं ॥२६॥

वारपारमा बस्ने प्राणीहरूले यस खोलालाई सजिलैसँग तरेर जान सकून् तथा मातृकुल पितृकुल र पतिका कुलका जो जो पितृहरू छन्, तिनीहरूले पनि तर्न गाह्रो संसाररूपी समुद्रलाई खुशीसाथ तरेर जान सकून् भन्ने इच्छाले महारानी (ललितत्रिपुरसुन्दरी)ले यो असल पुल बनाउनुभयो ॥२७॥

यो वाग्मतीको पुलको वारिपारि बस्ती बसाइयो; ढुङ्गा छापी घाट बनाइयो; यसो हुँदा यस पुलको सौन्दर्य बढ्यो। यसरी यो पुल मुक्ति विने श्रीपुर (वैकुण्ठ)का रत्नहरूलाई जित्न उठेको महारानी ललितत्रिपुरसुन्दरीको अद्भुत झण्डा जस्तो भएको छ ॥२८॥

राजा गीर्वाणयुद्धविक्रम शाहको आयु बढाउने देवताको कलम जस्तो भएको, भीमसेन थापाको निर्मल मनको साक्षात् मूर्ति जस्तो भएको, ललितत्रिपुरसुन्दरीको कीर्तिस्वरूप भएको यो पुल मुक्ति विने श्रीपुरको ढोकामा लाएको आग्लो उघार्ने तालो जस्तो भएको छ ॥२९॥

उहिले श्रीरामचन्द्रले सीतालाई पाउन बानरसैन्य तार्न लङ्कासम्म ४०० कोशको समुद्रमा पुल बाँध्नुभएकोमा के आश्चर्य छ र ? किनभने ललितत्रिपुरसुन्दरीले आफ्ना पति र अरूको उद्धारका लागि अपार भवसागरमाथि यो बलियो पुल बनाउनुभएको छ ।।३०।।

शकसंवत् १७३२ विक्रमसंवत् १८६७ मार्ग शुक्ल एकादशी बृहस्पतिवार रेवतीनक्षत्र सिद्धियोग वणिक्करण मकरलग्नमा महारानी ललितत्रिपुरसुन्दरीले रणबहादुर शाहको मुक्तिको लागि पुलको शिलान्यास गर्नुभयो ।।३१।।

महाराजाधिराज गीर्वाणयुद्धविक्रम शाहको आज्ञानुसार बुद्धिमान् मन्त्री भीमसेन थापाले काम गर्न जान्ने राजाको हुकूम तामिल गर्ने अधिवेत्तिका सेवक बुद्धिमान् डिट्ठा लक्ष्मीनारायण-लाई मन लाईकन यस काममा खटाए ।।३२।।

ब्राह्मण सुब्बा श्रीलोकनाथ पाँडे, सेवा गर्न जान्ने सुबेदार जयद्रथ, शूरा चतुरा सुबेदार दलबार, सिपालु सुब्बा पोहुवर पनि यस काममा खटाइए ।।३३।।

काम गर्न सिपालु यी पाँच जनालाई मुख्य रूपमा खटाई १३५३ हात लामो बलियो राम्रो यो पुल तयार भएपछि मन्त्री भीमसेन थापाले आफ्ना मालिक राजा र राजमातालाई सन्तुष्ट पारे तथा यसको प्रतिष्ठा गर्ने कुरा बिन्ति गरे ।।३४।।

यसपछि राजमाताले पनि देवताको पूजा गरी ब्राह्मण गरीबगुरुवाहरूलाई धेरै दान दिईकन आफ्ना पतिको उद्धार होस् भनी यस पुलको प्रतिष्ठा गर्नुभयो ।।३५।।

वि.सं. १८६८ चैत्र कृष्ण सप्तमी बृहस्पतिवार अनुराधानक्षत्र हर्षणयोग बवकरणमा सूर्य कुम्भराशिमा रहेमा, मिथुन लग्नमा महारानी (ललितत्रिपुरसुन्दरी)ले कीर्तिस्तम्भसहित यस पुलको उत्सर्ग गर्नुभयो ।।३६।।

महाराजाधिराज गीर्वाणयुद्धविक्रम शाहको हुकूमबाट भएको, महारानी ललितत्रिपुरसुन्दरी देवीबाट परमेश्वरलाई प्रसन्न पार्न गरिएको, मन्त्री भीमसेन थापाको बल्दो प्रतापले युक्त भएको, वाणीविलासले स्तुति गरिएको यो ठूलो कीर्ति ( वाग्मतीको पुल र त्यसको खम्बाको प्रशस्ति) कल्पान्तसम्म रहिरहोस् ।।३७।।

अब संस्कृत भाषा नबुझ्नेले पनि चाँडै कुरा बुझून् भन्नाका लागि त्यही कुरा छोटकरीमा भाषामा दिइन्छ ।

व्याख्या—

शाहकालका अभिलेखहरूमा वाग्वतीको यस स्तम्भलेखको बेग्लै महत्त्व रहेको छ। शाहकालका अभिलेखमा मात्र होइन; नेपालमा पाइएका लिच्छवि, मल्लकालका अभिलेखहरूको तुलनामा समेत यस अभिलेखको महत्त्व रहेको देखापरेको छ। चाँगुको मानदेवको स्तम्भलेख, पशुपतिको द्वितीय जयदेवको अभिलेखपछि यसै अभिलेखको स्थान रहेको कुरामा विद्वान्‌हरू सहमत छन्।[१] हुन पनि कविताको प्रौढता, वर्णनशैली, ऐतिहासिक तथ्य आदिको दृष्टिले यो स्तम्भलेख उल्लेखनीय रहेको छ।

नुवाकोटकाण्डपछि, श्री ५ रणबहादुर शाहले काशीतिर प्रस्थान गर्नु भीमसेन थापाको उदयको मूल कारण बनेको थियो। काशीमा भीमसेन थापाले आवश्यक प्रबन्ध मिलाई श्री५ रणबहादुर शाहलाई प्रसन्न पारेका थिए। श्री ५ रणबहादुर शाहलाई काशीबाट नेपाल फर्काएर ल्याउनामा पनि भीमसेन थापाको कार्यकुशलता, साहसले ठूलो भूमिका खेलेको थियो। यस सफलताले भीमसेन थापाको प्रभाव बढ्यो र उनी एकैचोटि शक्तिशाली काजी बने। वि.सं. १८६२ मा स्वामी महाराज रणबहादुर शाह फेरि राजकाजमा उत्रे, मुख्तियार बनी शासनको भार उनले सह्याले।[२] तर मुख्तियार बनेको एक महीना जति पछि नै श्री ५ रणबहादुर शाहको बध गरियो। यस हत्याकाण्डले भीमसेन थापाको प्रभाव झन् बढ्यो। अब उनी मुख्तियार बने।[३] त्यस वेला राजा श्री ५ गीर्वाणयुद्धविक्रम शाह बालकै थिए। वि.सं.१८५५मा श्री ५ रणबहादुर शाहले बाँधेको व्यवस्थाअनुसार नायबका रूपमा राजमाताको हातमा केही अधिकार रहने व्यवस्था थियो। तर चतुर भीमसेन थापा नयाँ बनेका नायब ललितत्रिपुरसुन्दरीदेवीलाई पनि आफ्नो अनुकूल बनाउन समर्थ भए। यसरी अधिकार बढाउँदै जान सफल भएका भीमसेन थापाले अब अधिनायकवादी बाटोमा अगाडि बढ्न शुरू गरे। यसका लागि सेनामा आफ्नो अधिकार जमाउनु आवश्यक थियो तथा "भारादारी सभा"लाई

१. नयराज पन्त, 'गल्लीमा फ्याँकिएका कसिंगर'को उपोद्‌घात पृ. २–३
२. यसको सप्रमाण चर्चा माथि गरिसकेको छ।
३. भीमसेन थापा मुख्तियार बनेको ठीक साल ज्ञात हुन सकेको छैन। वि.सं. १८६२को लालमोहरमा "तेस् वषरमा तिमिले बहुतै दाना गऱ्याको कामदेषी श्री ६ बुवाज्यू बहुतै षुस हुनु भै राजकाजको मुष्त्यारि काम तिमिले गर. तिमि जो गरौला सो मंजूर गरौला भनी हुकुम बक्स्याको रहेछ." भनी लेखिएको हुनाले श्री ५ रणबहादुर शाहको वध भएको लगत्तै पछि नै उनले मुख्तियारी पाएको देखिन्छ।
चित्तरञ्जन नेपाली, 'ज. भीमसेन थापा र तत्कालीन नेपाल' पृ. २४६

निस्तेज पार्नु आवश्यक थियो। वि.सं.१८६८मा "जनरल" बनी भीमसेन थापाले सो प्रबन्ध पनि मिलाए। वि.सं. १८६८ मा जनरल बनाउँदा उनलाई जुन अधिकार सुम्पियो; अर्को शब्दमा त्यस बेला उनले जुन अधिकार हातलाए; त्यसले गर्दा शाहकालको राजनैतिक अवस्थाले नै अर्कै रूप लिन थाल्यो। पहिले जुन अधिकार राजामा मात्र निहित थिए; अब ती अधिकारमध्ये केही उपर्युक्त लालमोहरले गर्दा मुख्तियार भीमसेन थापाको हातमा पनि रहन लागे। अब सेनामा मुख्तियार भीमसेन थापाको पूर्ण नियन्त्रण हुने भयो; अब भारादारी सभाको कुनै डर भीमसेन थापालाई भएन। पहिले जुन काम कुरा काजीहरू र अरू "भाराप्ञ्च" हरूको "भारादारी सभा" मा ल्याई अन्तिम निर्णय गरी लागू गरिन्थे; अब ती काम कुराको निर्णय स्वयं भीमसेन थापाले नै अर्डेर गर्न सकिने भयो। भीमसेन थापाको निर्णयको विरुद्ध भारादारी सभामा अब प्रश्न उठाउन नसकिने भयो। अब भारादारहरू त भीमसेन थापाले गरेको काम सही छ भनी मार्फत रूपमा पुछे सही गर्ने जमातको रूपमा क्रमशः परिवर्तन हुन थाल्यो।[४]

यसरी भीमसेन थापाको उदय क्रमशः शक्तिशाली अधिनायकवादी शासकका रूपमा हुन थाल्यो। यो स्तम्भलेख राखिएताका मन्त्री भीमसेन थापाको हातमा असीम शक्ति आइसकेको थियो भन्ने कुरा यस स्तम्भलेखको अध्ययनबाट पनि सिद्ध हुन्छ।

मल्लकालमा काठमाडौं उपत्यकाका कान्तिपुर, भक्तपुर, ललितपुर तीन शहर तीन स्वतन्त्र मल्ल राजाहरूका तीन राजधानीरूपमा थिए। ती तीनै शहर ठूला ठूला गढका रूपमा थिए। अर्थात् तीनै शहरलाई खाई, अग्ला पर्खालहरूले चारैतिरबाट घेरिएको थियो। ढोकाहरू बन्द गरिएपछि शहरभित्र पस्नु सम्भव थिएन।[५] वि.सं. १८२६ सम्ममा यी तीनै शहरमा श्री ५ पृथ्वीनारायण शाहको प्रभुत्व जम्यो। यसपछि श्री ५ पृथ्वीनारायण शाहले पूर्वतिर टिस्टासम्म आफ्नो राज्य विस्तार गरेथे। अब श्री ५ पृथ्वीनारायण शाहले कान्तिपुरलाई राजधानी बनाए। श्री ५ पृथ्वीनारायण शाहपछि पश्चिम विजयको अभियान पनि शुरू भयो र यो स्तम्भलेख राखिएको ताकासम्ममा नेपालको सीँध सतलजसम्म पुगेको थियो।[६] यसो हुनाले कान्तिपुर, भक्तपुर, ललितपुर तीन शहरलाई पहिले जस्तै तीन "गढ" का रूपमा राखिराख्नु कुनै आवश्यक भएन। तीन शहरका ठूलठूला पर्खाल अब भत्काइन थालियो। यसको विधिवत् शुरूआत भीमसेन थापाले "बागदरबार" बनाउन थालेपछि भएको मान्नुपर्छ। भीमसेन थापाको सो दरबारको इलाका केही कान्तिपुर शहरभित्र पर्दथ्यो; केही शहरबाहिर

---

४. 'पाञ्चालीशासनपद्धतिको ऐतिहासिक विवेचना' पृ. २२२–२२४

५. धनवज्र वज्राचार्य 'मल्लकालमा देश रक्षाको व्यवस्था...' पूर्णिमा २ पूर्णाङ्क, पृ. २०–३३

६. 'नेपालको संक्षिप्त इतिहास' पृ. १४६

पर्दथ्यो । यस कारण सो दरवार बनाउन कान्तिपुरको गढको अङ्ग भएको पर्खाल नभत्काई भएको थिएन ।

यसै सिलसिलामा कान्तिपुर र ललितपुरलाई जोड्ने पुल बनाउनुपर्ने कुराको महसूस भीमसेन थापाले गरे । कान्तिपुरबाट ललितपुर जाने मूल बाटो त पहिले टेकू कुलेश्वर भएर जाने थियो । तर सो बाटो अब पाइक नपरेको हुँदा भीमसेन थापाले थापाथली भई जाने वर्तमान बाटो बनाए । यस बाटोबाट वाग्वती तर्न १३५३ हात लामो पुल बनाउनुपरेको कुरा यस अभिलेखमा उल्लिखित छ । वर्तमान पुल भागलाई मात्र हेर्दा उक्त कुरा अतिशयोक्तिपूर्ण छ कि भन्ने देखिन्छ । तर पुलका रूपमा वारि र पारि समेत निकै माथि उठाई बाटो बनाउनुपर्ने भएको हुँदा सो पुल १३५३ हातको हुन गएको हो ।

पुल मात्र बनाइएको होइन; यसभेकमा नयाँ बस्ती नै बसाइएको थियो; ढुंगा छापी घाट बनाएको थियो । यस कुराको वर्णन यस अभिलेखमा गरिएको पनि छ । यसरी कान्तिपुर र ललितपुरलाई जोड्ने काम भएको थियो ।

यस स्तम्भलेखको उठानमा वाग्वतीको स्तोत्र परेको छ । ललितत्रिपुरसुन्दरीको आज्ञाले सो स्तोत्र पं. वाणीविलास पाँडेले बनाएका हुन् । सो स्तोत्र पाण्डित्यपूर्ण छ । वाग्वतीको महिमा गाउन स्तोत्रकर्ता सफल छन् ।

त्यसपछि यहाँ गोरखाको वर्णन गरिएको छ । क्षेत्रफलको दृष्टिले आर्थिक दृष्टिले गोरखा तात्कालिक कति अरू राज्यभन्दा कमजोर रहेको थियो।[७] तर नेपालको एकीकरण गर्ने गौरवमय अवसर गोरखाले प्राप्त गरेको थियो । यसमा एक प्रमुख कारण गोरखामा राम शाहको पालादेखि विकसित न्याययुक्त स्वतन्त्र वातावरण पनि हो । वाणीविलास पाँडेले यो कुरा बुझेको देखिन्छ । यहाँ गोरखाका प्रजाहरूको चर्चा गर्दा "न्याययुक्ताः स्वतन्त्राः" भनी वर्णन गरिएको छ ।

त्यसपछि द्रव्य शाहदेखिको शाह राजाहरूको वर्णन यस स्तम्भलेखमा गरिएको छ । वर्णन अतिसंक्षिप्त रूपमा गरिएको छ तापनि प्रमुख राजाहरूको मुख्य मुख्य विशिष्टताको संक्षिप्त चर्चा पनि परेको छ । जस्तै राम शाहको वर्णन गर्दा "विरचितविविधश्लाघ्यलोकव्यवस्थ" भनी उनको विशिष्टतालाई औंल्याइएको छ । यही कुरा नेपालीमा लेख्दा "लोकमा स्थिति

७. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. ५५

बाँधन्या श्रीराम साह्" भनी राम शाहले स्थिति बाँधेको महत्त्वपूर्ण कुराको चर्चा गरिएको छ। श्री ५ पृथ्वीनारायण शाहको वर्णन गर्दा उनको काशीयात्रा, बाटोमा चौकीदारहरूको दर्पदमन, त्यसपछि नुवाकोटविजय र अनि नेपाल-उपत्यका विजयलाई प्रमुखता दिई वर्णन गरिएको छ। सिंधुलीमा अंग्रेजी सैन्यलाई हराएको र नेपाल-उपत्यका विजय गरी नेपालमा आफ्नो प्रभुत्व जमाएको हुनाले भारतमा समेत श्री ५ पृथ्वीनारायण शाहको प्रतिष्ठा फैलिएको थियो। यसै हुँदा दिल्लीका बादशाहले वि. सं. १८२७ मा श्री ५ पृथ्वीनारायण शाहलाई "बहादुर शमशेर जङ्ग" भन्ने पदवी दिएका थिए। पदवी प्रदान गर्दाको सक्कल पत्र परराष्ट्र मन्त्रालयमा रहेको छ। पं. वाणीविलास पाँडे श्री ५ पृथ्वीनारायण शाहका पनि सामान-कालिक हुनाले उनलाई यो कुरा थाहा थियो। यसै हुँदा यस स्तम्भलेखको नेपाली भागमा "श्रीमहाराजे बहादुर सम्सेर जङ् पदवी पाउन्या श्रीपृथ्वीनारायण साह्" भनी उक्त कुराको उल्लेख गरिएको छ।

पं. वाणीविलासले यस स्तम्भलेखमा श्री ५ पृथ्वीनारायण शाहका जेठा छोराको नाउँ "सिंहप्रताप" भनी लेखेका छन्। तर उनका पालाका टक, लालमोहर, ग्रन्थ आदि प्रामाणिक सामग्रीमा "प्रतापसिंह" भनी नामोल्लेख गरिएको पाइने हुनाले "सिंहप्रताप" भनी लेख्नु अशुद्ध हो भनी ठानिएको थियो। तर स्वयं प्रतापसिंह शाहकै वि.सं. १८२० को अभिलेखमा "सिंहप्रताप" भन्ने नामोल्लेख भएको हुनाले गद्दीमा बस्नुभन्दा पहिले "सिंहप्रताप" भन्ने नाम पनि प्रचलित भएथ्यो।[८] गद्दीमा बसेपछि आधिकारिक रूपमा "प्रतापसिंह" भनी कहलाए तापनि "सिंहप्रताप" यो नाम पनि अशुद्ध भनी भन्न नहुने देखिएको छ। पूर्व अभ्यासअनुसार वाणीविलासले पनि "सिंहप्रताप" नामलाई यहाँ लेखेका हुन् भन्ने देखिन्छ।

वाणीविलास पण्डित यद्यपि केही अंशमा शक्तिका पुजारी, स्तुतिकाररूपका कवि हुन् तापनि आत्मवत्ता भएका व्यक्ति थिए। अर्थ र यशको लागि स्तुतिपद्य लेख्ने उनको पेशा जस्तै थियो तापनि असत्य प्रशंसा उनी कम गर्दथे; उनी आँखा चिम्लेर प्रशंसा गर्दैनथे। उदाहरणार्थ श्री ५ रणबहादुर शाहको प्रशंसा गर्दा उनले व्यक्त गरेको उद्गारलाई लिन सकिन्छ। श्री ५ रणबहादुर शाहका कान्छा महारानी ललितत्रिपुरसुन्दरीदेवी र श्री ५ रणबहादुर शाहका अनुयायी भीमसेन थापाको प्रेरणाले यो स्तुतिपद्यको रचना वाणीविलासले गरेका हुँदा श्री ५ रणबहादुर शाहको वर्णन नगरी उनले भएको थिएन। तर श्री ५ रणबहादुर शाहको कति क्रियाकलापदेखि भने वाणीविलास भित्र भित्र त्यति सन्तुष्ट थिएनन्। यसो हुँदा वाणीविलासले श्री ५ रणबहादुर शाहको वर्णन गर्दा बडो चलाकी साथ गरेका छन्।

---

८. यस विषयको चर्चा माथि गरिसकेको छ।

संस्कृत पद्यमा श्री ५ रणबहादुर शाहको वर्णन गर्दा "बालामालावशी" "गानविद्यादिविद्याभिज्ञ" भनी लेखिएको छ । यो कुरा नेपालीमा पनि लेख्दाचाहिँ अर्कै किसिमले लेखेका छन् । कान्तवतीको प्रशंसा गर्दा पनि उनले बचाइकन गरेका छन् ।

यस स्तम्भलेख-रचनाको सबभन्दा मुख्य उद्देश्य भीमसेन थापाको यश कीर्ति फैलियोस् भन्ने हुनाले उनको प्रशंसामा पनि वाणीविलासले निकै शीप देखाएका छन् । भीमसेन थापाका दोषपक्षलाई थपक्क ढाकी गुणपक्षलाई मात्र सुन्दर शब्दावलीमा उनले व्यक्त गरेका छन् । श्री ५ रणबहादुर शाहको हत्याकाण्ड हुँदा राजाको गाथ गादीमा पनि खतरा देखापरेको थियो; तर योग्य मन्त्री भीमसेन थापा हुँदा नै उनले सो खतरा आउन दिएनन्; यसरी उनले शासनभार सह्यालेपछि राष्ट्रमा शान्ति छायो; निर्माणात्मक काम भए भन्ने कुरामा जोड दिइएको छ; शासन सुचारु रूपले चल्दछ भन्ने कुरा यसमा पारिएको छ ।

वाणीविलासले जति चतुरतासँग बयान गरे पनि यस वर्णनबाट भीमसेन थापाले पारिवारिक शासन स्थापित गर्ने गरेको प्रयास स्पष्ट झल्केको छ । यस स्तम्भलेखबाट भीमसेन थापा, उनका पिता, भाइहरूले विविध पदमा रही कसरी प्रख्याति पाउन थालेथे भन्ने झलक पाइन्छ । भीमसेन थापाका भाइ नयनसिंह थापाको किल्लाकाँगडाको लडाइँमा मृत्यु भएको थियो । यो कुरा भीमसेन थापालाई झण्डा देखाउने प्रमुख स्रोत बनेथ्यो । राजदरबारसँग अरू भारादारहरूको सोझै सम्बन्ध नरहोस् भन्ने चेष्टा पनि भीमसेन थापाले गरेथे । तर यस कुरालाई वाणीविलासले अर्कै रूपमा यहाँ चित्रण गरेका छन् । भीमसेन थापा जस्ता मन्त्री न उहिले भएका थिए; न पछि हुनेछन् भनी वाणीविलास पाँडेले यहाँ राम्रो शब्दमा वकालात गरेका छन् । यसरी भीमसेन थापालाई प्रसन्न पार्न वाणीविलासले उनको प्रशंसा गर्दा केही अंशमा सीमा नै नाघेका छन् भन्न सकिन्छ । यो कुरा उनको पाण्डित्यलाई सुहाउने भने थिएन ।

यसपछि वाग्वतीको पुल बनाएको प्रस्तुत विषयको चर्चा खुलाएर यस स्तम्भलेखमा गरिएको छ । जुन वर्णन प्रसङ्ग मिल्दो नै छ ।

यस ताका नेपालमा राजा, रानी र मन्त्री यी तीनमा नेपालको शक्ति छरिएको हुँदा वाणीविलास पाँडेले यस स्तम्भलेखमा यी "त्रिशक्ति"को प्रशंसात्मक एक सानो खण्डकाव्य नै प्रस्तुत गरेका छन् । पछि सुन्दरानन्द पण्डितले यसैको अनुसरण गरी बौद्ध मार्गमा अत्यन्त सम्मान प्राप्त "त्रिरत्न" शब्दलाई अँगाली राजा, रानी र मन्त्रीको प्रशंसा गरी "त्रिरत्नसौन्दर्यगाथा" नै लेख्न पुगे । यसरी सुन्दरानन्दले वाणीविलासको अनुसरण गरेको देखापरेको छ ।

जे होस्; वाणीविलास पाँडेको पाण्डित्यपूर्ण वाग्मतीको यो स्तम्भलेख अनेक दृष्टिले महत्त्वपूर्ण छ। वाणीविलास पाँडेलाई चिनाउने उनका अनेक ग्रन्थहरू पनि प्राप्त छन्। तर उनका अरू कुनै ग्रन्थ नपाइएका भए पनि यही एउटा स्तम्भलेखले पनि वाणीविलास पाँडेको विद्वत्ता, कवित्वशक्ति आदिलाई स्पष्ट देखाउन सक्ने थियो, यसमा शङ्का छैन।



[ १५१ संख्या ]

# जलेश्वरको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

जलेश्वरमा प्रसिद्ध महादेवस्थान रहेको छ । त्यहाँका पुजारीसँग रहेको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यसमा वि.सं. १८६६ दिइएको छ ।

## मूलपाठ

श्रीदुर्गासहाय

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-
विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गिर्वाण-

२. युद्धविक्रम साह वहादुर सम्सेर जङ्देवानाम् सदा समरविजयिनाम्- - - -

३. आगे गोसाञी दुंद गिरिके जिल्लै महुतरी प्रगन्ना महुतरीतर्फ सोरमध्ये मौजे
हरिनमरीमध्ये अवादी वाहीक् कालावंजर जमीन विगहा अठा-

४. इसै अघी वक्स्याको तसमाथी अवादी विगहा पचीस थपी ज्मा विगहा दुइसै
पचहत्तरी येस मौजेको साटो मौजे चौलको कंचनपुरका जमोन

५. अवादी वेएरानि विगहा दुइ सै पचहत्तरी २७५ सतसठ्ठि सालमा तामापत्रका
नाप गयापछि सांध लाग्याको सधिआरका नाव सुव्वा राघवसिं षड्का

६. सुव्वा नायेव गंगाप्रसाद गिरि मुनसीफ फौजदार ससीधर पाध्या पेस्कार
षेलपतिदास नवसींदा भवानीदत्त मंगलसिंहदास मुनसी

७. फका नवसीन्दा अनुपसिंदास ज्मोदार चौधरी लालसीं पांडे कानुनगोए
उग्रनारायेनदत्त वेरादर कानुनगोए लेषनारायनदत्त न-

८. बसीद्दा मोलीदास जेठरैमल रघुनाथ राये जरीब्रकल्म काशीराम थापा भिषारी राउत ज्मादार साहादेवसिं ज्मादार भ्रस्कर प्रलोषां ज्मादा-
९. र कारी जौवार जाचीवकार लोतारामदास वैष्णव विर्तवार मौजे चीकना स्थान वराही मोमलाना मोकद्दम खेलपति पाँडे मौजे विसंभरपु-
१०. र नन्दलालदास वैष्णवस्थान मटिहानी मोकद्दम मोदी मीसर मौजे गानाव थनाहा मोकद्दम लछन राए मौजे रसौलि मोकद्दम सोनफुलवा-
११. स मौजे फुलवरिया येतीले मुलुक वरवस्त सात गिरहका हातसौ नौ हातका लगा बीस लगाका रसरीले दानपत्रवमोजिम जगा जांची नापी
१२. मेडवंदी गन्याको पुवारी सिमाना महन्त धनारामदासका विर्ता मौजे चीक-नाका इसानकोनापर कोइला किलाको सामने पुरव मौजे बिसं-
१३. भरपुरका उत्तर वारी सिमानापर कोइला किला १ तिससौ सामने उत्तर भीस, भीसका उत्तर १० लगापर ग्रौराका गाछ गाछका नियेमो को-
१४. इला १ तिससौ सरासर उत्तर प्रकुसी नदीका चाफ थलीही नदीके पछवारी कांधी वरपीपर सीमरको गाछ, नदीसौ पश्चीम चिलको कंचन-
१५. पूर विर्ता सिमाना १ उत्तर वारी सिमाना थलहीनदीके कीनारे पर पिप-रका गाछ तिससौ सामने पश्चीम कंचनपुरका गढी गढी पुरव
१६. वनारका गाछ गाछसौ १ रसी दक्षीण पिपरका गाछ तिस गाछका पश्चीम १ र सरीपर कोइलाकीला १ तिससौ पश्चीम सरासर पिप-
१७. रका गाछ तिस गाछसौ पश्चीम कठही नदीतक उत्तर वारी सिमाना १ पछवारी सिमाना कठही नदीका पुरवारी कांधी, कांधीसौ सरास-
१८. र दक्षिण लागाइत महन्त धनाराम दासका विर्ता मौजे चोकनाका उत्तर वारी सिमानाका पछवारी उत्तर वारीकोना कठही नदीतक पछ-
१९. वारी सिमाना १ दक्षीण वारी सीमाना महन्त धनाराम दासको विर्ता मौजे चीकनाके उत्तर वारी सीमाना पछवारी कोना पर कठही नदीका
२०. किनारे पर कोइलाकिलासौ पुर्व लागाइत मौजे विसंभरपुरका उत्तर वारी सीमानापर कोइलाकीला १ तक सीमाना दक्षीण वारी १
२१. येती सीमानाभित्र नाप चकलावंदी ज्मा जांच दुइ सँ पचहत्तरी विगहा

चुमावन गोडधुवा गादीममारष वहता साएर ;वाहीक् माल सा–
२२. येर जलकर वनकर महालात फर्रोग्रात विग्राहदानी कठीग्रारा सगौढा डँड
ग्रपुताली ग्रामीलातर चौधरी कानुनगोएका दस्तुर सिगार
२३. हाट छौरहौ प्रोहीती ग्रामीलको वेठ वेगार फरफरमाइस श्रीशिव प्रिति सर्व
ग्रंक वेतलय मोहर तामापत्र गरिवक्स्यौं. ग्राफ्ना षातिरज्मासंग ग्रा–
२४. वाद गुलजार गरि पैदा भयाको लि सौष्योपसिष्यसम्म परम सुष भोग्य
गर हाम्रो जय मनाइ ग्रासीर्वाद दिन्या गर, यो विर्ता वक्संदा वाक्य पह्र–
२५. न्या पुरोहीत जवुनाथ पंडीत ग्रर्ज्याल पानी हालन्या काजी भिमसेन थापा
विर्तवारले किलाभंदा ग्रर्घ्यालो नचापनु विना तकसीर जवद नग–
२६. र्नु. जो एस बंबेजमा रहौन. सो एस श्लोकमा भन्याका पातको होला
स्वदत्तां परदत्तां वा यो हरेद् वै वसुन्धराम् षष्टिवर्षसहस्राणि विष्टायां
२७. जाएते क्रिमिः इति सम्वत् १८६९ साल मिती वुती वैसाष सुदी २ रोज ३
शुभम् ––

卐

[ १५२ संख्या ]

# जलेश्वरको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

जलेश्वर-शिवमन्दिरका पुजारीसँग रहेको ताम्रपत्रमा यो अभिलेख कुँदिएको छ । यसमा वि.सं. १८६९ दिइएको छ ।

श्रीदुर्गासहाये

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-

२. विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गिर्वाणयु-

३. द्धविक्रम साह बहादुर सम्सेर जङ्ग देवानाम् सदा समरविजयिनाम्-

४. आगे सम्वत् १८२७ साल ज्येष्ठ वदि ८ का दिन श्रीज्यूज्यूवाज्याज्यूवाट श्रीजलेश्वर प्रिति गरि प्रगन्ना

५. महुत्तरीतरफ षैरा डिहीमध्ये मौजे वजराही ससीम १ वृति चढाउनुभयाको तामापत्र

६. गर्नालाइ नाप जाच गर्न जान्या उदयसिं वस्न्यात् गणपति पाध्याले नाप जाच गरि

७. पठायाको वहता सायेर वाहीक येस विर्तिमा आजसंम र्चाच वेहोरी आयाको जि-

८. मी जगा रकम् कलम मोहर तामापत्र गरि श्रीजलेश्वर प्रिति गरि चह्रायुं. महन्त अ-

९. नुप गिरिका चेला महन्त वरजोर गिरिले यो जगा आवाद गुलजार गरि पैदा भया-

१०. को लि श्रीजलेश्वरको मामुल पुजा अक्षता फुल अखंड चढाइ सेष वाकी

रह्याको लि सि–

११. प्योपसिव्य मिलि भोग्य गर्नु, हाम्रो जय मनाउनु. गोडधुवा चुमावन गादीममारष

१२. यो तीन कलम लाग्दा अघीदेषी ढोका मानि आयाको रहेछ आज पनि जोन साल–

१३. मा यो तीन कलम लागि जाला सुवा तहसीलदारले टंटा तकार नगर्नु. महन्त आ–

१४. फै आइ ढोका मान्नु. विर्तवारले अघ्यालो जगा नचाप्नु विना तक्सीर जवद नग–

१५. र्नु जो एस्वन्धेजमा रहौंन सो एस् श्लोकमा भन्याको पातकी होला स्वदत्तां परदत्तां

१६. वा यो हरेद्व वसुन्धराम् षष्टिवर्षसहश्राणि विष्टायां जायते क्रिमि. इति सम्वत्

१७. १८६९ साल मिती जेष्ठ सुदि ९ रोज ५ शुभम्

卐

[ १५३ संख्या ]

# जलेश्वरको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

जलेश्वरमन्दिरको पुजारीसँग केही ताम्रपत्र छन् । तीमध्ये एउटामा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८६९ दिइएको छ ।

## मूलपाठ

श्रीदुर्गासहाये

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरूदावली-
विराजमान मानोन्नत श्री–

२. मन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गिर्वाणयुद्धविक्रम साह् वहादुर
सम्सेर जं देवानाम् सदा समर–

३. विजयिनाम्– – – – – – – – – – – – – – – –

४. आगे महन्त अनुप गिरिका चेला महन्त वरजोर गिरिके जिल्लै महुत्तरी
प्रगन्ना महुत्तरीमध्ये मौजे जलेश्वर

५. ससीम १ मौजे महादेव पटी १ मौजे वहेडा ससीम १ मौजे हरिहरपुर
मैडाभीपटी ससीम मौजे १ अघो मकमा–

६. नीले श्रीजलेश्वर प्रित्ति गरि चढाइ तिम्रा गुरु पुरुषा गोसायी घनश्याम
गिरि वनमारी गिरि जगदीस् गिरि अनुप

७. गिरिका नाउमा स्याहामोहर गरिदियाको हाम्रा श्रीज्यूज्यूवाज्याबाट पनि

३१ सालमा महन्त अनुप गिरिका नाउ–

८. मा लालमोहरले बहाल गरि जलेश्वर प्रिति चढाइ थामिबक्सनुभयाको षेम गिरि गोसायी वाला मौजे भारी

९. मध्ये जमीन् विगहा दस १० समेत तामापत्र गर्न लाइ ६७ सालमा नाप जाच गर्न ज्यान्या उदयसि वस्त्या–

१०. त् गणपति पाध्याले नाप जाचं गन्याको बहता सायेर वाहीक येस विर्ता सदावर्त्तको आजसम्म वर्ची वेहो–

११. री आयाको जिमी जगा रकम कलम मोहर तामापत्र गरि जलेश्वर प्रिति चढाइबक्स्यौ आफ्ना षातिर–

१२. ज्मासंग आवाद गुलजार गरि पैदा भयाको ली जलेश्वरको नित्य नैमीत्यीक पुजा सदावर्त्त चलाइ से–

१३. ष रह्याको सिष्योपसीष्यसम्म परम सुष भोग्य गर हाम्रो जै मनाइ आसीर्वाद दिन्या गर गोडधुवा चुमा–

१४. वन गाद्दोममारष यो तिन कलम् लाग्दा अघीदेषी ढोका मानि आयाको रहेछ आज पनि जौन साल–

१५. मा यो कलम लागी जाला महन्त आफै आइ ढोका मान्नु आमील तहसीलदारले टंटा तकरार नगर्नु

१६. विर्त्तवारले अर्घ्यालो नचापनु विना तकसीर जवद नगर्नु जो एस वंधेजमा रहौन. सो येस श्लो–

१७. कमा भन्याको पातकी होला स्वदत्तां परदत्तां वा यो हरेद्वै वसुन्धराम् षष्टि-वर्षसहस्राणि विष्टा–

१८. या जायते क्रिमि इति सम्वत् १८६९ साल मिती जेष्ठ सुदि ९ रोज ५ शुभम् – – –

व्याख्या–

नेपालको मध्यकालको उत्तरार्धको इतिहासमा 'सेनराज्य'को उदयको महत्त्वपूर्ण स्थान रहेको छ। तात्कालिक अरू कति शासकहरूको दृष्टि प्रायः नेपालको पहाडी भागमा मात्र

राज्यस्थापना, प्रभावविस्तार गर्नामा केन्द्रित रहेको थियो भने सेन राजाहरूले नेपालको तराई भागमा पनि आफ्नो आधिपत्य स्थापित गर्ने उल्लेखनीय उद्योग गरेका थिए। त्यसै उद्योगको फलस्वरूप पूर्व टिष्टासम्मको भने जस्तै तराई भागमा सेन राजाहरूको आधिपत्य स्थापित भएको थियो।[१] यसबाट पछि नेपालको एकीकरणको लागि निकै मद्दत पुग्न गएथ्यो। राजनैतिक प्रभावको प्रसारका साथसाथै सेन राजाहरूले तराई क्षेत्रमा सांस्कृतिक पुनरुद्धारको कार्य पनि गरेका थिए। तराई र आसपासका जनकपुर, जलेश्वर, चतरा, वराहक्षेत्र, विजयपुर आदि ठाउँका प्राचीन धार्मिक स्थलहरूलाई फेरि प्रख्यात गराउनमा सेन राजाहरूको उल्लेखनीय हात रहेको छ। उक्त स्थलका देवताहरूको नित्य, नैमित्तिक पूजा गर्ने र सदावर्त्त आदिका लागि तराईमैकका प्रशस्त जग्गा गुठी राख्ने आदि काम सेन राजाहरूले गरेथे।[२] नेपालको एकीकरणको सिलसिलामा यी प्रदेशमा श्री ५ पृथ्वीनारायण शाहको प्रभुत्व जम्यो।[३] नेपालका सांस्कृतिक र धार्मिक परम्परालाई उदारतापूर्वक संरक्षण र संवर्द्धन गर्ने नीति श्री ५ पृथ्वीनारायण शाह र उनीपछिका अरू शाह राजाहरूले पनि लिएका थिए।[४] यसो हुनाले जनक-

---

१. श्री ५ पृथ्वीनारायण शाहले वि. सं. १८३१ आश्विनमा अभिमानसिंहहरूलाई लेखेको पत्रबाट उक्त कुरा थाहा पाइन्छ। विचारार्थ त्यस पत्रको अलिकता सम्बद्ध अंश यहाँ उद्धृत गरिन्छ—

"ईस्लिम्बा चांथापुसम्म जति हाम्रो फौज पुग्यो त अब त्यो जग्गा छोड्नुछैन. बलिया गरि गढि तहि बनाउनाछन् बनाव. बाँकि इसलिम्बा चांथापुसम्म हाम्रो अम्बल भयापछि कनकापूर्व तिष्टापश्चिम पनि अम्बल गरि हाल्न्या हो घटिया जगा आफुले षाईकन आमद हुन्या बढिया देश छोडनाको प्रयोजन केही होईन. अम्बल गर्न्यै हो. तर इस्लिम्बा चांथापु साँध गरिकन पनि सुषिमले हामीसंग घायै गर्न पस्यो, कटक् गर्नामहा पसेन त कनका हेरि बुझी तर्नु. इस्लिम्बा चांथापु लिंदा सुषिम चंकिगयो. था तोढिहाल्यो त आषिर तेत्तिमहा पनि चटकि गयो त मधेस छोडन्या होइन. हिंदुपतिको साँध तिष्टासम्म चांडै गरिहालन्या हो,"

'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ११९४–११९५

२. सेनराजाहरूले गरिदिइएका यस विषयमा सक्कल स्याहामोहर, ताम्रपत्र आदि त पाइएका छैनन्। तर शाहकालका लालमोहर, ताम्रपत्रहरूमा यस कुराको उल्लेख आएको छ। त्यस्ता केही ताम्रपत्र यस संकलनमा समावेश गरिएका छन्। केही 'पुरातत्त्वपत्रसंग्रह' तेस्रो भाग आदिमा प्रकाशित भएका छन्।

३. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८४३–४४, ११५६, ११८८

४. 'पाञ्चाली शासनपद्धतिको ऐतिहासिक विवेचना' पृ. २०७
यस विषयको चर्चा माथि पनि ठाउँ ठाउँमा भइसकेको छ।

पुरका जानकीमन्दिर, राममन्दिर, जलेश्वरका शिवमन्दिर, वराहक्षेत्रका वराहमन्दिर, चतरामठ, विजयपुरका दन्तकाली, पिण्डेश्वर आदि देवमन्दिरहरूमा अघि सेन राजाहरूले चढाएका गुठीहरू थाम्ने र नयाँ गुठीहरू थप्ने काम श्री ५ पृथ्वीनारायण शाह आदि शाह राजाहरूले गरेका थिए।[५] यससम्बन्धी अनेक ताम्रपत्रहरू प्रकाशमा आइसकेका छन्। केही यस संकलनमा पनि समावेश गरिएका छन्।

माथि दिइएका जलेश्वरका शिवमन्दिरसम्बन्धी यी तीन ताम्रपत्र अप्रकाशित हुन्। यी तीन ताम्रपत्रमध्ये तेस्रो ताम्रपत्रबाट जलेश्वर-महादेवको नित्यपूजा, नैमित्तिकपूजा र सदावर्तको लागि मकवानी सेन राजाले गुठी चढाएका थिए; त्यसको सञ्चालनको अभिभारा गोसाईं गिरिको शिष्योपशिष्यपरम्पराले भोगचलन गर्न पाउने गरी सुम्पिएको थियो; त्यसलाई वि.सं. १८३१ मा श्री ५ पृथ्वीनारायण शाहले थामिदिएका थिए; पछि वि.सं. १८६६ मा श्री ५ गीर्वाणयुद्धविक्रम शाहको पालामा उक्त ताम्रपत्र गरिदिइएको हो भन्ने कुरा थाहा पाइन्छ। दोस्रो ताम्रपत्रबाट वि.सं. १८२७ मा श्री ५ पृथ्वीनारायण शाहले जलेश्वर-महादेवलाई प्रसन्न पार्न आफ्नो तर्फबाट गुठी चढाएका थिए भन्ने थाहा पाइन्छ। पहिलो ताम्रपत्रबाट श्री ५ गीर्वाणयुद्धविक्रम शाहबाट पनि जलेश्वर महादेवलाई प्रशस्त जग्गा चढाएका थिए भन्ने थाहा पाइन्छ। यसरी अघि सेन राजाहरूले चढाएका गुठी जग्गा थाम्नाको साथ साथै शाह राजाहरूले पनि जलेश्वर महादेवलाई प्रशस्त जग्गा गुठी राखिदिएका थिए भन्ने कुरा यी तीन ताम्रपत्रबाट थाहा पाइन्छ। नेपालका प्रख्यात शिव-मन्दिरहरूमा जलेश्वर-महादेवस्थान पनि पर्दछ। पद्मपुराणमा यी जलेश्वर महादेवको उल्लेख आएको छ भन्ने त्यहाँका पुजारी उमाकान्त पाठकको भनाइ छ। शिवरात्रिको वेला यहाँ विशेष पूजा हुन्छ ; अरू नित्य र नैमित्तिक पूजा पनि साबिकबमोजिम हुन्छन् ; यहाँ सदावर्त पनि चली नै रहेको छ भन्ने उहाँको भनाइ छ। पद्मपुराणमा जलेश्वरको उल्लेख छ कि छैन भन्ने कुराको परीक्षा भने हामीले गर्न भ्याएनौं।

जे होस्; पूर्वी तराईभेकको एक प्रसिद्ध शिवमन्दिरबारे केही जानकारी दिने हुनाले यी तीन ताम्रपत्र केही उपयोगी नै छन्। यी ताम्रपत्रबाट तराईभेकका जग्गामा लाग्ने रकम कलम आदि आर्थिक पक्षबारे विचार गर्न पनि अलिकता मद्दत पाइन्छ। बितलब बिर्ता जग्गामा पनि चुमावन, गोडधुवा, गादीममारख आदि केही, रकमचाहिँ लाग्दथे। जलेश्वर-महादेवलाई चढाइएका यी बितलब बिर्तामा चाहिँ चुमावन, गोडधुवा, गद्दीममारखसम्बन्धी अलि बेग्लै व्यवस्था परेको छ। राजदरबारमा हुने व्रतबन्ध, विवाह र राज्यारोहणको अवसरमा

५. यससम्बन्धी केही अभिलेख यस संकलनमा पनि समावेश गरिएका छन्। केही 'पुरातत्त्व-पत्रसंग्रह' तेस्रो भागमा प्रकाशित भएका छन्।

जलेश्वरका महन्तले खूब राजदरबार आई उक्त समारोहमा सामेल हुन पाउदा रहेछन्। उक्त कुरा यी ताम्रपत्रमा उल्लिखित "गोडधुवा, चुमावन, गादीममारथ यो तीन कलम लाग्दा अघीदेखि ढोका मानिआयाको रहेछ, आज पनि जोन सालमा यो तीन कलम लागि जाला, सुवा तहसीलदारले टंटा तक्रार नगर्नु. महन्त आफैं आइ ढोका मान्नु." भन्ने यी वाक्यबाट थाहा पाइन्छ।

卐

[ १५४ संख्या ]

# सल्यानकोटको गीर्वाणयुद्धविक्रम शाहको अभिलेख

धादिङ, सल्यानकोटका रत्नवीर नगार्चीको संग्रहमा यो ताम्रपत्र रहेको छ। यहाँ वि.सं. १८६६ दिइएको छ।

## मूलपाठ

श्रीदुर्गा

१. स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावली-
विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्रीमहाराज गिर्वाणयुद्ध-

२. विक्रम साह वहादुर सम्सेर जङ्गदेवानां सदा समरविजयिनाम्- - - - -

३. आगे चाम्या दमाईके सल्ल्यानकोट श्रीषंडादेविलाई नगारा १ वारण ३
वह्लायाको तस्को गुठिनिमित्त वक्स्याको सल्ल्यानको अमलमध्ये षोलाषेत
मुरि

४. अठतिस ३८ तस्को साध पुर्व वधुवा षोलाको ढिक लुहकिल दषिन पश्चिम
रैकर लुहकिल उत्तर फाप्र्या षोलाको ढिक लुहकिल दफे पातल्या षे-

५. त मुरि पंद्रह १५ तस्को साध पुर्व पध्यारा षोलसिको लुहकिल दषिन
कुलाको लुहकिल पश्चिम रैकर चिलाउन्याको रूष, लुहकिल उत्तर रैकर
काफल-

६. का रूष लुहकिल दफे पातल्या विह्लौटो षेत येक १। मुरि सत्ताइस २७
पाथो रोपनि विस २० तस्को साध पुर्व ठाडो षोलसि कटुजका रूष षेतका
आलि रैकर

७. चिलाउन्याको रूष ठाडो बाटो षेतको छेउको चौतारो चिलाऊन्याको रूष लुहुकिल दषिन तेर्छो काह्लो लुहुकिल पश्चिम षोलसै षोल्सा ऊधो अर्चल्याको लुहुकि-

८. ल उत्तर षोल्सी लुहुकिल येति चार किल्लाभित्र कंपनीका षेतवाहिक दफे अर्चल्या षेत मुरि बाह्र १२ तस्को साध पुर्व षोल्सीको लुहुकिल दषिन षेत-

९. का उपल्लो आलि लुहुकिल, पश्चीम रैंकरका आलि लुहुकिल उत्तर रैंकर आलि लुहुकिल दफे केवन्या सुवारो पाषो रोपनि चौविस २४ तस्को साध पुर्व

१०. दाको पनि ठुलो चिल्याउन्याको रूष दषिन कोवन्या पानीको लुहुकिल पोषराको कुलो पश्चिम जुक्या पानिको षोल्सी लुहुकिल उत्तर पैराको तेर्छो बाटो

११. लुहुकिल दफे पोषन्या षेत मुरि आठ ८ तस्को साध पुर्व दषिन रैंकर काह्लो लुहुकिल पश्चिम आमबोट्या षोलसीको लुहुकिल उत्तर रैंकर आलि लुहुकि-

१२. ल दफे थप वक्स्याको सल्ह्यानमा पोषन्या षेत मुरि सात ७ पाषो रोपनि १।।। तस्को सांध पुर्व रैंकर षेत बाटो लुहुकिल दषिन रैंकर काह्लो लुहुकिल पश्चि-

१३. म षोलसो लुहुकिल उत्तर आफनै गुठ लुहुकिल, दफे आप डंडांको पुछार कालु षत्रीले बिह्ल्याको षेत मुरि २२ तस्को साध पुर्व कुल्लि षोला कुलो,लु-

१४. हुकिल दषिन कुलो रैंकर काह्लो लुहुकिल पश्चिम रैंकर वाफो चिला-उन्याको रूष लुहुकिल उत्तर रैंकर पैरो षेत षेतका आलि लुहुकिल, दफे चांपवोट्या बिह्लौ-

१५. टो षेत मुरि येघारह ११ पाषो रोपनि तिनि ३ पानीषेत हुनाले डेढो घटाइ पानि षेत मुरि आठ ८ ज्मा मुरि उन्नैस १९ तस्को सांध पुर्व रैंकर काह्लो मुहान-

१६. को लुहुकिल दषिन पाषो काह्लो बाटको लुहुकिल पश्चिम रैंकर वाफोको लुहुकिल उत्तर रैंकर वाफो लुहुकिल. दफे पाषो रोपनि सवा १।. तस्को साध पुर्व

१७. दषिन पश्चिम उत्तर रँकर लुहुकिल यत्ति सिमानाका लुहुकिलभित्र षेत दुइ २ मुरि चालिस ४० घर घड्यारि पाषो रोपनि पचास ५० को गादिम-मारष चु–

१८. मावन गोडघ्युवा दमाईका जातवाहिकको धर्माग्रधिकार येति चार कलम वाहिक सर्व कलम झारासमेत मारि मेटि गुठि राषि हाम्रा संतानभर तेरा सं–

१९. तानलाई षोसमोस नगर्नु भनि वंधेज वाधि गुठिको मोहर ताम्रापत्र गरि-वक्स्यौं, आफ्ना षातिरज्मासंग वमोजिम तपसिलको सरजाम अमालिछेऊ

२०. लि वडा दसै गर्नु चैत्या दसैको र नगारा वना टुट्या फुट्याको वनाउनु. सादनु. गुठिबाट वनाऊदै रहनु. साज विहान श्रीषंडादेविका टहलमा रूजु रहि गु–

२१. ठि जानि भोग्य गर. यो गुठि वक्संदा साध लगाउन्या थरघर भवानिसंकर षनाल कासिराम पांडे लिलाधर अर्ज्याल श्रीनाथ पंथ विरू वोहोरा वंस–

२२. विर राना किष्णानंद रिमाल डंगोल धनवन्त चक्रसिं अमालि पुरन थापा द्वान्या जेठा वुढा दलसिं राना थरि बली पाध्या तिमीलसिना तिलै पाध्या साप–

२३. कोटा संकर पाध्या सापकोटा जोतिधर सापकोटा महेश्वर सिटौला दुर्गादास सिटौला सिरि पाध्या वसौला राघु गुनि श्रीकिस्न सुयाल पद्म पाध्या अ–

२४. धिकारि मधु पाध्या ढकाल राघु पांडे श्रीधर षनाल तुलाराम सुसान्या मार्चु. रत्या राना देउसिं कवर जैभद्र अधीकारि विरू महत जोषु षवास

२५. वंसु खडका रूप्या षत्री धादिग्या जुन्या दमाई मोत्या कटुवाल. स्वदत्ताम्प-रदत्ताम्वा यो हरेत्त्च वसुंधराम्. षष्टिवर्षसहस्राणि विष्टायाम् जायते कृमिः

तपसिल

| | |
|---|---|
| वडा दसै नगारा पुजाके वोक्या १ | चैत्या दसै नगारा पूजाके |
| सिंदुर सुपारि धुपके- – – – ऽ= | वोका – – – – १ |
| भेटिके रूपैया- – – – – – – १ | सिन्दुर सुपारि धुपके- – ऽ।= |

.........कपरा थान – – – – १ मेटिके रूपैया – १

नगराके गुठिमध्ये षेत १।५०

पाषो रोपनि पचास – ।५०

वना ३ के गुठिमध्ये षेत।६०

इति सम्वत् १८६६ साल मिति भाद्र वदि ८ रोज ७ शुभम्

व्याख्या–

सल्यानकोटकी देवी साक्षात् छन् भन्ने लोकधारणा रहेको छ।[१] प्रतिवर्ष मंसीरमा यहाँ ठूलो जात्रा हुन्छ। जसलाई "न्वागीजात्रा" भनिन्छ। दसैंमा पनि यहाँ विशेष पूजा हुन्छ। यसै गरी यहाँ नित्यपूजा र अरू नैमित्तिक पूजा हुन्छन्। नित्यपूजा गर्दा साँझ बिहान नगरा, तुरही आदि बाजा बजाइन्छन्। बाजा बजाउनु पूजाको एक अङ्ग नै रहेको छ। यहाँ मात्र होइन; नेपालका प्रसिद्ध अनेक देवस्थलमा नित्यपूजा गर्दा नगरा आदि बजाउनु अनिवार्य जस्तै रहेको छ।[२] यसो हुँदा नगरा आदि बजाउने कार्य नियमित होस्; यसमा बाधा नपरोस् भनी नगार्ची दमाईलाई प्रायः "जागीर" नै दिइएको पनि पाइन्छ। यससम्बन्धी अनेक लालमोहर आदि प्राप्त छन्। उदाहरणार्थ गोरखाका कालिका आदि देवस्थलमा नगरा बजाउने दमाईलाई दिएइका तीन अप्रकाशित लालमोहर यहाँ उद्धृत गरिन्छन्–[३]

(१)

"१. स्वस्ति श्रीमन्महाराजाधिराजकस्य रुक्का–
२. आगे गोरषा श्रीदेवताको नगरा दिदा जिवसाह काजीले ··· हजु–
३. रमा प्रजा पालदा जया विस्याका नाउमा जयाको आएछ. आ–
४. ज पनी उसैका छोरा बुवल्या बक्स्यौं. जागीर नेग आग ज्या
५. हिजो रीति हो सो बस्याका षायल हिटीको षाएल ज्या हो बक्स्या.

---

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ३१६

२. नित्य, नैमित्तिक पूजाको बन्दोबस्त गरी राखेका अभिलेखहरूमा प्रायः बाजा बजाउने व्यवस्था पनि भएको पाइन्छ। त्यस्ता निकै अभिलेख यस संकलनमा समाविष्ट छन्।

३. गोरखा, पोकरीथोक, वडा नं. २ मा बस्ने मछिन्द्रे दमाईसंग यी सकल लालमोहर रहेका छन्।

६. टहलमा रुजु रह. आफ्ना थातिर्जमासग भोग्य गर. इति सम्व-
७. त १८४६ साल मिति भाद्र शुदि १५ रोज. शुभम्—

मार्फत दामोदर पांडे"

(२)

"१. स्वस्ति श्रीमन्महाराजाधिराजकस्य रुक्का—
२. आगे दुवल्या दमाईके गोर्षा श्रीभवानिको नगरा बानास-
३. मेत् बजाउनाकन गजमान्या दमाईको थायल तलाइ बक्स्यौं.
४. अघिदेषि नगार्चिले थाइ चर्चि आयाबमोजीम जागि-
५. र नेग दस्तुर लि टहलमा रुजु रहि आफना थातिर्जामासं-
६. ग भोग्य गर. इति सम्वत् १८७५ साल मिति आश्विन वदी
७. ११ रोज ७ शुभम्.

मार्फत भीमसेन थापा"

(३)

"१. स्वस्ति श्रीमन्महाराजाधिराजकस्य-
२. आगे डम्बऱ्या दमाइके काल्या दमाइको थानगी श्रीकालीकाका नगरा थानगी षेत् १। जागी-
३. र बक्स्यौं आपना थातीरजंमासंग आफुलाई लाग्याको टहल्मा रुजु रहि जागी-
४. र जानी भोग्य गर. इति सम्वत् १९०५ साल मिति ज्येष्ठ वदि २ रोज ७ शुभम्."

यसै गरी सल्यानकोटकी माईकहाँ साँझ बिहान नगरा बजाउन पनि "जागीर" दिइएको थियो । त्यसका लागि भएको लालमोहरको एक अंश यस प्रकारको छ[४]—

"१. स्वस्ति श्रीमन्महाराजाधिराजकस्य रुक्का-
२. आगे जुठ्या नगार्चिके सल्यान...स्थानमा तेरा बाबु बराज्यूले थायाको नगरा १ कर्नाल
३. १ काहाल् १ बिजुलि १ पछि थपियाको नगरा १ शसा १ वाना बजाई तपसिल बमोजिमका षेत्

४. सल्यानकोट बस्ने हस्तबहादुर दमाईसंग यो लालमोहर रहेको छ ।

४. जागीर गरिबक्स्याको हो. केहि षेतमा षोलो पैरो हुँदा र अमालीको पजनी हुँदा अमालमा सा–
५. लवसाल थमौती गरि बानु. पजनी नगऊ भन्न्या षितिको बन्देज बाधि मोहोर गरिबक्स्यौं. तपसिल–
६. बमोजिम्का ज्मा षेत् मुरि १।४१ जागीर गरिदि साम ब्येहानको टहलमा हजु रहि जागीर
७. जानी भोग्य गर, – – – – – –

इति सम्वत् १८६६ साल मिति– – – – –"

सल्यानकोटकी माईकहाँ बाजा बजाउने दमाईलाई गरिदिइएका पत्रहरू अरू पनि पाइएका छन् । तर तिनलाई यहाँ उद्धृत गर्नु आवश्यक देखिँदैन । माथि उद्धृत पत्रबाट देवस्थलमा बाजा बजाउने दमाईलाई जागीरको राम्रो बन्दोबस्त गरिदिइन्थ्यो भन्ने थाहा पाइन्छ । यसबाट देवस्थलमा नित्यपूजामा बाजा बजाउनु एक अभिन्न अङ्ग जस्तै रहेको थियो भन्ने स्पष्ट हुन्छ ।

यस ताम्रपत्रमा चाहिँ "नगरा गुठी" राखेको उल्लेखनीय कुरा परेको छ । त्यस विषयको चर्चा गर्नु भन्दा पहिले सल्यानकोटको माईस्थानमा रहेका नगराको अलिकता परिचय दिनु आवश्यक देखिन्छ । यहाँ समय समयमा राजा र भारादार आदिले चढाएका अनेक नगरा रहेका छन् । तिनमध्ये एक नगरा नरभूपाल शाहको पालामा पृथ्वीनारायण शाहको प्रेरणाले एक द्वारेले चढाइएको हो ।[५] अर्को ठूलो नगरा गीर्वाणयुद्धविक्रम शाहले वि.सं. १८६५ मा चढाएका हुन् । त्यस नगरामा अभिलेख पनि कुँदिएको छ ।[६] सो यस प्रकारको छ–

"१. श्री ३ सल्यानका देवीप्रीतये श्री ५ महाराज गीर्वाणयुद्धविक्रम साहले यो नगरा... ........चाम्या दमाइलाइ नगारा चलाउन बक्स्याको छ. यस्का सन्तानवर्सन्तान-सम्म जो षोसमोस गरि गुठि मास्नामा पस्ला. तसलाइ पंचमहापातक लागला. सम्वत् १८६५ साल मिति भाद्र वदि २ रोज २ शुभम्."

श्री ५ गीर्वाणयुद्धविक्रम शाहले वि.सं. १८६५ मा सल्यानकोटकी माईलाई नगरा चढाई

---

५. यस विषयको अभिलेख माथि गइसकेको छ ।
६. 'इतिहास-प्रकाश' अङ्क १ को ३६ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख छापिएको छ ।

सो नगरा थामे दमाईलाई सुम्पेको कुरा यस अभिलेखबाट थाहा पाइन्छ । यो ताम्रपत्र पनि थामे दमाईलाई नै सम्बोधन गरी लेखिएको हो । आफूले चढाएको नगरा बजाउने र तत्सम्बद्ध अरू पूजा आदिको कुरा चलाउन वि.सं. १८६६ मा श्री ५ गीर्वाणयुद्धविक्रम शाहले "नगरा गुठी" नै कायम गरी यो ताम्रपत्र गरिदिइएको हो । "वादित्रगोष्ठी" को उल्लेख लिच्छवि-कालका अभिलेखमा पनि आएको छ ।[७] बाजा बजाउन सिकाउने, जात्रा पर्व आदि अवसरमा बाजा बजाउने आदि काम वादित्रगोष्ठीले गर्दथ्यो । सो परम्परा शाहकालसम्म पनि केही अंशमा कायमै थियो भन्ने कुरा यस अभिलेखबाट देखिएको छ ।



७. 'लिच्छविकालका अभिलेख' पृ. २८३, २८७

[ १५५ संख्या ]

# गोरखाको ललितत्रिपुरसुन्दरीको अभिलेख

गोरखा, राजदरबार, गोरखनाथ गुफामा रहेको एक ठूलो घण्टामा यो अभिलेख कुँदिएको छ। यसमा वि.सं. १८६९ दिइएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीनिधिरसगजनिशाकरसंमिते वैक्रमशके मार्गशीर्षमासे कृष्णपक्षे द्वादश्यां चन्द्रवासरे श्रीमन्महाराजाधिराज श्री ५ माहाराजरणबहादूरशाहराज्ञी श्री ५ ललितत्रिपुरसुन्दरीदेवी श्रीमत्समस्तसामन्तमौलिमणिमरीचिनीराजितपदारविन्दश्रीमन्महाराजाधि–

२. राजश्री ५ महाराजगीर्वाणयुद्धविक्रमशाहदेवं पुत्रमणिं स्वोत्सङ्गे निधाय मन्त्रिवृन्दनायकश्रीभीमसेनामात्यसम्पादितनिखिलसदुपकरणानुमतिसंपूर्णप्रमोदोत्साहनिर्भरात्मना श्रीगोरक्षनाथप्रीतये घण्टामिमामतिसुन्दररवाभिरामां समर्पितवती तदनेन कर्मणा श्रीगोरक्षनाथः समीप्सितं

३. पूर(य)तु शुभम् ।। टहल गर्न्या सुवेदार कोकील

## अनुवाद

कल्याण होस् । वि.सं. १८६९ मार्ग कृष्ण द्वादशी सोमवार श्री ५ महाराजाधिराज रणबहादुर शाहका महारानी श्री ५ ललितत्रिपुरसुन्दरीदेवीले सारा सामन्त राजाहरूका शिरपेचका मणिका चहकले पाउ झलमल्ल भएका श्री ५ महाराजाधिराज गीर्वाणयुद्धविक्रम

शाहदेव पुत्ररत्नलाई काखमा राखी मन्त्रीहरूमा श्रेष्ठ भएका श्रीभीमसेन थापा काजीले सारा असल सामग्रीहरू तयार पारिदिएका हुँदा खुशी भई श्रीगोरखनाथलाई प्रसन्न तुल्याउन रमाइलो आवाज भएको यो राम्रो घण्टा चढाउनुभयो। यस कामले श्रीगोरखनाथले चिताएको पूरा गरून्। शुभ होस्।

व्याख्या–

श्री ५ गीर्वाणयुद्धविक्रम शाह गद्दीमा राखिंदा डेढ बर्षका बालक थिए।[१] यस कारण उनलाई गद्दीमा राख्दा गरिएको वि.सं. १८५५ को पशुपतिको प्रसिद्ध ताम्रपत्रमा "यो जान्या बुझन्या नहुन्ज्यालसम्म कर्ता ज्येष्ठ रानिले राजा श्रीगीर्वाणयुद्धविक्रम शाहलाई काषमा राषि नायबि गर्नाको अषतियार बक्स्यां" भनी "नायबी"को व्यवस्था गरिएको थियो।[२] त्यस व्यवस्थाअनुसार राजराजेश्वरीदेवी, सुवर्णप्रभादेवीहरूले नायबी चलाएको कुराको चर्चा माथि गरिसकेको छ। वि.सं. १८६५ को नक्सालको अभिलेखबाट त्यस बेलासम्म सुवर्णप्रभादेवीको हातमा नै नायबी रहेको थियो;[३] ललितत्रिपुरसुन्दरीदेवीको उदय त्यस बेलासम्म राम्ररी भइसकेको थिएन भन्ने संकेत पाइन्छ। त्यसको केही समयपछि ललितत्रिपुरसुन्दरीदेवीको उदय हुन्छ। त्यसपछि करीब बीस वर्ष भने जस्तै ललितत्रिपुरसुन्दरीदेवीले नायबी चलाइन्।[४] उनी अनुकूल भएकी हुनाले भीमसेन थापालाई आफ्नो शक्ति बढाउन निकै मद्दत मिलेथ्यो।

वि.सं. १८६९ मा गोरखनाथलाई घण्टा चढाई कुँदाइएको यस अभिलेखबाट यस बेला ललितत्रिपुरसुन्दरीदेवीको हातमा नायबी राम्ररी आइसकेको थियो भन्ने थाहा पाइन्छ। यहाँ ललितत्रिपुरसुन्दरीदेवीले राजा गीर्वाणयुद्धविक्रम शाहलाई काखमा राखी, मन्त्री भीमसेन थापाको प्रबन्धअनुसार राज्यसञ्चालन गरिरहेको भन्ने आशयको कुरा परेको छ। यसरी यस बेला राजा, रानी र मन्त्री तीन शक्तिका रूपमा देखापरिसकेको कुराको झलक यस अभिलेखबाट पनि पाइन्छ। यस कुराको स्पष्ट वर्णन माथि गएको वि.सं. १८६८ को वाग्वतीको स्तम्भलेखमै परिसकेको छ।

---

१. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १५३

२. पशुपतिको उक्त अभिलेख माथि गइसकेको छ।

३. नक्सालको उक्त अभिलेखमा सुवर्णप्रभादेवीलाई 'अग्रचमहिषी, सिंहासनाध्यासिनी' भनिएको छ तथा 'यत्पालिते राज्ये' पनि भनिएको छ। यसबाट यसताका नायबी सुवर्णप्रभा देवीले पाएकी थिइन् भन्ने देखिन्छ। उक्त अभिलेख माथि गइसकेको छ।

४. ललितत्रिपुरसुन्दरीदेवी वि.सं. १८८८ चैत्रसम्म जीवित थिइन्। 'नेपालको संक्षिप्त इतिहास' पृ. १८३

महारानी ललितत्रिपुरसुन्दरीदेवी धार्मिक प्रवृत्तिकी थिइन् । यस कारण उनीबाट अनेक लोकोपकारी कृतिहरू राखिएको हामी पाउँछौं । तिनमा त्रिपुरेश्वर महादेवको मन्दिर, वाग्मतीको पुल, सुनधारा, धरोहरा आदि उल्लेखनीय छन् ।[५] गोरखनाथलाई खुशी तुल्याउन चढाइएको यो ठूलो घण्टाले पनि ललितत्रिपुरसुन्दरीदेवीलाई अलिकता संझाइरहनेछ ।



५. 'नेपालको संक्षिप्त इतिहास' पृ. १८२–१८३

[ १५६ संख्या ]

# गोरखाको अभिलेख

गोरखा-दरबारबाट पूर्वतिर अलि तल ओह्लेपछि हनूमान्भञ्ज्याङमा पुगिन्छ। त्यहीँ रहेको कोशचिह्नरूपको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यसमा वि.सं. १८६९ दिइएको छ।

'गोरखाको ऐतिहासिक सामग्री'को २८ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीसम्वत् १८६९ साल मिति
२. मार्गसिर शुद्धि ११ रोज २ काठमाडौ
३. दरबार श्रीहनुमानढोकाबेषि गो-
४. र्षादरबार श्रीहनुमानजिका था-
५. नसम्म पक्का कोस-२६

व्याख्या-

नेपालको एकीकरणको सिलसिलामा वि.सं. १८२५मा काठमाडौँ विजय गरिएपछि श्री ५ पृथ्वीनारायण शाहले काठमाडौँलाई एकीकृत नेपालको राजधानी घोषित गरे।[१] त्यसपछि

१. 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश' पृ. ८७७-८८०

हनुमान्ढोका राजदरबार नेपालको केन्द्र बन्यो । अनि हनुमान्ढोकादेखि विभिन्न सदरमुकामको दूरी नापी कोशचिह्नस्वरूप शिलालेख कुँदाइराख्ने चलन चल्यो । विशेष गरी भीमसेन थापाको कार्यकालदेखि यस्ता कोशचिह्नरूपका शिलालेख कुँदाई राख्ने चलन चलेथ्यो । यस्ता कोश-चिह्नरूपका अनेक अभिलेख पाइएका छन् ।[2] तिनमध्ये नमूनाको रूपमा गोरखाको यो अभिलेख यसमा समावेश गरिएको हो । यस अभिलेखबाट हनूमान्ढोकादरबारदेखि गोरखा-दरबारसम्मको दूरी त्यसवेला २६ कोश मानिएको रहेछ भन्ने थाहा पाइन्छ । बोर्लाङभेकमा आफ्नो दरबार बनाएपछि भीमसेन थापाले काठमाडौँबाट धुंकोट भई गोरखा जाने मूल बाटोमा केही परिवर्तन गरे । त्यसअनुसार हनूमान्ढोकाबाट गोरखा-दरबारसम्मको दूरी २४ कोश मात्र रहेको थियो । यो कुरा गोरखा-दरबार रहेको कोशचिह्नरूपको अर्को शिलापत्रबाट थाहा पाइन्छ । विचारार्थ सो अभिलेख यहाँ उद्धृत गरिन्छ–

"१. सम्वत् १८८५ भा–
२. द्र सुदि ६ रोज ७
३. हनुमान्ढोकादे–
४. षि गोर्षादरबारस–
५. म्म तललो बाटो को–
६. स—— २४

तात्कालिक प्रशासनसम्बन्धी कुरा बुझ्न यस्ता अभिलेखबाट पनि अलिकता मद्दत पाइन्छ । यस कारण यस्ता अभिलेखको पनि अलिकता उपयोगिता रहेको छ ।



२. पाल्पा आदि ठाउँमा पनि यस्ता कोशचिह्नरूपमा अभिलेख पाइएका छन् ।

[ १५७ संख्या ]

# गोरखाको राधावल्लभ अर्ज्यालको अभिलेख

गोरखा, पोखरीथोकनिर राधावल्लभेश्वरनामक एक शिवमन्दिर रहेको छ। सोही मन्दिर-सँगै रहेको घण्टामा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८६९ दिइएको छ।

'गोरखाको ऐतिहासिक सामग्री' को २८ पृष्ठमा तुलसीराम वैद्य र धनवज्र वज्राचार्यद्वारा यो छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः। परेशं परात्मानमीशं महेशं शिवेशं गिरीशं निशेशं फणी-
शम्। स्वभूषाकरं बिभ्रतं विश्वसारं जगच्छङ्करं शङ्करं तं नमामि ॥१॥
श्रीराधावल्लभोऽर्ज्यालिकुलजनिरभवद्यस्य चासीदयोध्या पत्न्यग्रा सत्यरूपा
तदनु वसुमती वल्लभाऽतीव भर्त्तुः॥ तार्त्तीयीकी ततोऽन्या ज-
२. गति कुलवतीति प्रसिद्धेन्दुमत्या ख्याता भूमौ कनिष्ठा कृतसहगमनाः पत्न्य
एता अभूवन्॥२॥संवत् साङ्कषडष्टभू १८६९ मितगते शाकेऽब्धिवह्न्यम्बुधै
१७३४ माघे मासि सिते कवावहितिथौ षड्विंश ऋक्षे ववे। सिद्धौ राज-
पुरोहितेन गिरिजाजानेः परप्रीतये राधावल्लभशर्मणा सुकृतिना घण्टार्पितेयं
शुभा॥३॥ शुभमस्तु॥

## अनुवाद

श्रीगणेशलाई नमस्कार। ठूला ईश्वर, ठूला आत्मस्वरूप भएका महेश, शिवेश, गिरीश,

चन्द्रमा सर्प अलङ्कार रूपमा धारण गर्ने भएका, विश्वका सार भएका, संसारको कल्याण गर्ने ती शङ्करलाई नमस्कार गर्दछु ।

अर्ज्याल कुलमा जन्मेका श्रीराधावल्लभ हुनुभयो । उहाँका पत्नीहरू अयोध्या, सत्यरूपा, अनि पतिको मन परेकी काहिँली वसुमती, अनि कुलवती र कान्छी इन्दुमती हुनुभयो । उहाँहरू सती हुनुभयो ।

वि.सं. १८६९, शकसंवत् १७३४ माघ शुक्ल पञ्चमी शुक्रवार उत्तरभाद्र नक्षत्र सिद्धि-योग ववकरणको दिन धर्मात्मा राजपुरोहित राधावल्लभ शर्माले महादेवलाई प्रसन्न पार्न यो असल घण्टा चढाउनुभएको हो ।

व्याख्या–

राधावल्लभ अर्ज्यालले राधावल्लभेश्वरनामक महादेव स्थापना गरी, घण्टा चढाई यो अभिलेख कुँदन लाएका हुन् । यो राधावल्लभ अर्ज्याल प्रसिद्ध कवि राजपुरोहित शक्तिवल्लभ[१] अर्ज्यालका भाइ हुन् ।[२] शक्तिवल्लभपछि यिनी राजपुरोहित नियुक्त गरिएका थिए । यिनीहरू गोरखामा राज्यस्थापना गर्नामा द्रव्य शाहलाई मद्दत गर्ने नारायणदास अर्ज्यालका वंशज हुन् । महादेवप्रति राधावल्लभ अर्ज्यालको विशेष भक्ति रहेको देखिन्छ । पशुपतिको अभिलेखमा उनमा "शिवार्चापरः" भन्ने विशेषण लाइएको छ ।[३] यसै हुँदा राधावल्लभ अर्ज्यालले गोरखा पोखरीथोकनिर आफ्नो नाममा महादेवस्थापना गरेका थिए । त्यसको लागि

---

१. शक्तिवल्लभ अर्ज्यालका जयरत्नाकर नाटक आदि अनेक ग्रन्थहरू प्राप्त भएका छन् । तर शक्तिवल्लभ अर्ज्यालका अरू कृति भने अलि कम पाइएको छ । शक्तिवल्लभ अर्ज्यालले पशुपतिनाथलाई घण्टा चढाएका थिए । उक्त घण्टाको अभिलेख यस प्रकारको छ–
"श्रीसंवत् १८४६ वैशाखशुक्लतृतीयायां श्रीपशुपतिप्रीतये श्रीमहाराजपुरोहितशक्तिवल्लभभट्टाचार्येण समर्पितेयं घण्टा, चिताइ गर्न्या देवपाटनको वैद्य पुरंद्रसिं दांगि ढाल्न्या गजेन्द्र जैसि शुभम् धार्नी ३६"
नयराज पन्त 'जयरत्नाकर नाटकको उपोद्घात' पृ. ४

२. पशुपतिको राधावल्लभ अर्ज्यालको अभिलेखमा उक्त कुरा परेको छ । सो अभिलेख तल दिइएको छ ।

३. यो अभिलेख तल दिइएको छ ।

तीनतले नेपाली शैलीको मन्दिर बनाउन लाएका थिए। उक्त मन्दिर त्यति ठूलो होइन तापनि केही अंशमा आकर्षक रहेको छ। दुइ वेदी माथि उठाई मन्दिर बनाइएको छ। यस मन्दिरमा तेलिया ईंट र काठको प्रयोग भएको छ। मूल ढोका दक्षिणतिर रहेको छ। ढोकामा दुइतिर सिंहमूर्ति राखिएका छन्। तीनै तलामा चारैतिर काठका झ्यालहरू रहेका छन्। फिँगटीका छाना रहेका छन्। हाल यो मन्दिर जीर्ण अवस्थामा रहेको छ। यसको गजुरभाग र माथिल्लो भाग भग्न रहेका छन्।

यी राधावल्लभेश्वरको स्थापना पाञ्चायनसिद्धान्तअनुसार भएको छ। बीचमा शिवलिङ्ग रहेको छ; दक्षिण-पश्चिम कुनामा गणेशमूर्ति स्थापना गरिएको छ; पश्चिम उत्तर कुनामा कालीमूर्ति रहेको छ; उत्तरपूर्व कुनामा चतुर्भुज गरुडनारायणमूर्ति रहेको छ; पूर्वदक्षिण कुनामा चाहिँ सूर्यमूर्ति राखिएको छ। मन्दिरको बाहिर आँगनमा पनि अनेक देवता स्थापना गरिएका छन्। तिनमा अष्टभुजा भगवती (दक्षिणकालिका) र त्रिशूल, बञ्चरो, कमण्डलु र अक्षमाला लिएका कामदेवमूर्ति उल्लेखनीय छन्।

पशुपतिनाथको भित्रपट्टिको दक्षिण ढोका चाँदीले बनाउने धर्मकर्म पनि राधावल्लभ अर्ज्याललले गरेथे।[४] उनले उक्त ढोका बनाउने काम र गोरखामा यी महादेव स्थापना गर्ने कामको संकल्प आफ्नो जीवनको अन्तिम समयमा गरेको देखिन्छ। यसो हुँदा आफ्ना संकल्प सर्वात्मना पूर्ण भएको उनले देख्न पाएनन्। वि.सं. १८६९ वैशाख शुक्ल एकादशीको दिन पशुपति आर्यघाटमा यी राधावल्लभ अर्ज्यालको मृत्यु भएको थियो।[५]

उनका साथ अयोध्या, सत्यरूपा, वसुमती, कुलमती र इन्दुमती यी पाँच पत्नीहरू सती गएथे। घण्टाको यो अभिलेख राधावल्लभको मृत्यु भइसकेपछि कुँदाइएको हुनाले यस अभिलेखमा उनका उक्त पाँच जना पत्नीहरू सती गएको उल्लेख परेको छ।

राजपुरोहित जस्तो उच्च पदमा पुगेका राधावल्लभ अर्ज्याललाई उनको यस कृतिले पछिसम्म केही संभाइराख्नेछ।

४. पशुपतिको सो अभिलेख तल दिइएको छ।

५. तल दिइएको पशुपतिको अभिलेखबाट उक्त कुरा थाहा पाइन्छ।

[ १५८ संख्या ]

# पचलीको लक्ष्मीदेवीको अभिलेख

पचलीभैरवको मन्दिरबाट वाग्मतीको घाटतिर ओर्ल्दा दायाँपट्टि ठूलो लक्ष्मीश्वरको मन्दिर रहेको छ। त्यहाँ मन्दिरको संगै पश्चिमपट्टि रहेको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यहाँ वि.सं. १८७० दिइएको छ।

'अभिलेखसंग्रह' बाह्रौँ भागका १२–१५ पृष्ठमा संशोधन-मण्डलद्वारा यो प्रकाशित भएको छ। 'पूर्णिमा' ६ पूर्णाङ्कका ५५–६७ पृष्ठमा नयनाथ पौडेलद्वारा पनि अनुवाद र व्याख्या-सहित यो छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ।। यद्भ्रूभंगविजृम्भणाज्जगदिदं जन्मादिभाग्जायते यत्पा-
दाम्बुजसेवनाद्भुवि चतुर्वर्गान्विताः प्राणिनः ।। जायन्ते, तमजं

२. विभुं त्रिनयनं श्रीपार्वतीवल्लभं वंदे दैवतवृन्दवन्दितपदं लक्ष्मीश्वराख्यं
शिवम् ।।१।। श्रीमत्पाटलिपुत्रपत्तनपरैकप्रान्तवर्ती वरो ग्रामः क–

३. श्चन गुर्मिआ इति भुवि ख्यातोस्ति तत्स्वाम्यभूत् ।। श्रीमानत्र गणेशदत्त इति
सन्नामोपनामान्वितो वौंडोद्वा इति काश्यपान्वयजनिर्नानागु–

४. णालंकृतः ।।२।। तत्पुत्री द्विजदेवभक्तिनिरता सर्वैर्गुणैः शोभिता प्रारब्धस्य
वशात्प्रिया रणबहादूरस्य भूमीभृतः ।। रूपेणानुपमा मनोर–

५. मतनुः सोमानना माननाक्रन्मान्यस्य जनस्य शीलजलधिर्लक्ष्मीरितीहोदिता
।।३।। श्रीसंवन्नवषड्वसुक्षितिमिते मासे तपस्ये सिताष्टम्यां सौम्य–

६. दिने बवे मृगशिरस्यायुष्मति श्रीमती ।। लक्ष्मीदेव्यमुमीश्वरं सुरवरं लक्ष्मी-

श्वराख्यं प्रतिष्ठाप्यैवार्चयदीश्वराधिकमुदे प्रीणय्य देवद्विजान् ।।४।। संव-
७. द्व्योमनगाष्टभूपरिमिते श्रीकार्तिके पाण्डुरे पक्षे विश्वतिथौ वणिक्करणकेऽ-
जांघ्रौ गुरोर्वासरे ।। व्याघाते पुनरेतदीश्वरगृहाग्र्यं सर्वतो वेश्मनो
८. निर्मित्यं खननादिकं कृतवती लक्ष्मीश्वतुर्दिक्ष्वपि ।।५।। संवद्व्योमाद्रिनागा-
वनिमितिकलिते मार्गकृष्णद्वितीयायुक्ते सौम्यस्य वारे गरकरण-
९. युते धातृभे शंभुयोगे ।। श्रीमत्पञ्चायनार्चार्चनभजनधिया स्थापितान्यावशि-
ष्टादित्यानां स्थापनाय व्यधित भुवि शिलान्यासनं
१०. सैव (ल)क्ष्मीः।।६।। यावद्भूमिरियं विभाति भगवान् भास्वान् सदा वासरा-
न्निस्तन्द्रो रचयत्यसौ कुमुदिनीनाथोपि यावन्निशाः ।। यावद्राम-
११. कथास्ति तावदनिशं वाणीविलासस्तुता लक्ष्मीनामनृपस्त्रियात्र विहिता
कीर्तिर्वरीवृत्यताम् ।।७।। क्षेत्रस्य विनियोगोस्य नि-
१२. त्ये नैमित्तिकेर्चने ।। उत्पन्नधान्यानुसारि भाषयालिख्य दर्श्यते ।।८।। ।।
स्वस्ति श्रीसम्वत् १८६९ साल फाल्गुण शुक्लाष्टमी
१३ बुधवारका दिन श्रीसाहिला नानीसाहेव लक्ष्मीदेवीले वाग्वतीका तीरमा
स्थापना गऱ्याका लक्ष्मीश्वरका नित्य नैमित्तिक पूजा
१४. र देवालय चौघरा घाटका संभार मर्मत गर्नाकन लुभुका ग्रंबल बिसिडोल
षेतमध्ये षेत २।६० ठिमिका ग्रंबल सरस्वतीषेल-
१५. मध्ये पाषो षेत १।४० जम्मा षेत ४।० संकल्प गरी गुठि चह्राञा इन षेत-
का बाली घ्युषानीका ग्रामदानीले सर्कारबा-
१६. ट बक्स्याका तावापत्रमा लेषियाबमोजिमका पर्व पर्व र नित्य नैमित्तिक
पूजालाइ चाहिन्या सराजाम पूजा ग-
१७. र्न्या ब्राह्मण १ गुठिषेतको सबूत तल्लास गराइ बालो घ्युषानी गैह्र तहसील
गरी चाहिन्या षर्चलाइ समयमा बिक्री ग-
१८. रि षरीद गर्न्या पूजा गैह्रको सराजाम पुऱ्याउन्या गुठियार जना एक भारु
बढार गर्ना जना १ लक्ष्मीश्वरको टहलुवा जना १ नित्य वि-
१९. ल्वपत्र फूल पहुचाउन्या माली जना १ चौघराको सुसार गर्न्या जना २
नित्य नैमित्तिक पूजा आरतीमा बाजा बजाउन्या

२०. कुसल्या जना ७ नगरा बजाउन्या दमाइ १ जम्मा जना १५ ले तावापत्रमा लेषियाबमोजीम षानगी एलै आमदानी–

२१. ा षाई लक्ष्मीश्वरको टहल आफु आफुलाई लाग्याको एकचित्त गरि रुजू भै गर्नु. गुठियारले वर्ष दिनको नित्य नैमित्ति–

२२. क पूजागेर्‌द्‌ फाल्गुण शुक्लाऽष्टमीका दिन वर्षबन्धन शिवरात्रिका प्रहर चार्का पूजा ४ भोलिपल्ट फकीर फुकरा षु–

२३. वाउनु वैसाष ज्येष्ठ दुइ महीनामा जलधारा चह्राउनु भरि चौमासा रुद्रि दिनप्रति आवर्त एक एक गर्नु भ–

२४. रिकार्तिक महिना दीपदान वर्षप्रति देवालय चौघरामा चुनं लगाउनालाई चाहिन्या (स)राजाम गैह्र समय–

२५. मा षरीद गरी तावापत्रमा लेख्यामाफीक कत्ती नघटाइ लाउनु. साल पुग्या-पछी गुठीयारले षेतको बालीको आमदा–

२६. नी षर्च बुझी बाकी रह्याको भलामानिस् साक्षी राषी बहिमा लेषी जगेरा राषनु. जगेरामध्ये देवालय चौघरा

२७. घाट प्रषाल भत्क्या चुह्यामा बनाउनु. दैवाधि पऱ्याका समयमा गुठी चला-उनु लेख्याबमोजीममा घटा–

२८. ई लोभमा पऱ्या पंचमहापातक लाग्ला यथोक्त गरी काम गर्नामा पऱ्या पंच महायज्ञको पुण्य होला ॥

२९. तपसील् ॥ लुभुका षेत् २।६० कुत् चावल मुरी ६०।० तेमध्ये षर्च रुपैया– १२७।।।ऽ।।१ नित्य नैमित्तिक पूजाके दर–

३०. ≡।।१ ताके जम्मा दिन्न ३६० के जम्मा रु ८०=।। शिवरात्रीके ४ प्रह-रका पूजा ४ के र भोली(प)ल्ट फकीर फुकरा षुवाना–

३१. के रु १६≡।।।२ वर्षबन्धनके रु १०।।=।।।३ वैशाष ज्येष्ठ मैह्नाभरि जल चह्राउन्या ब्राह्मणके रु–।। भरि

३२. चौमासा रुद्रिप्रति आवृत्ति १ के दर– ताके रु ७।। कार्तिक मैह्नाभर दीप-दानके रु ३।– गहनाके रु ५ चु–

३३. न लगाउनाके रु ३ प्रतिवर्षका होम पूजा गैह्रका पात तोरण पंच पल्ल–

बके–।।—। वर्षप्रतिका १२ मैह्ना

३४. का रुमाल १२ के रु ।।।० लुभुषेतको गहु मुरि १८ दर ८ ताके रु ४५ घीउषानि ३० चार्दाम ठेकि रु १ऽ। नित्य नैमित्ति–

३५. क पूजालाई लाग्याको तपसील गहु मुरि १८ दर ८ ताके रु ४५ घीउषानि रु ३० मध्ये रु २२ ।।ऽ।।१ चावल मुरि १८ दर

३६. ६ ताके रु ६० बाकी घीउषानि रु. ७=।३ दारुवाको रु ८= चार्दाम ठेकि रु. १ऽ। गहु. चावल मुरि ४२ तेमध्ये

३७. षर्च पुजाहारि भट्टके मुरि ८ पुजा सुसान्याके मुरि ४ गुठियारके मुरि ५।१० मालिके मुरि ३।१० कुसुल्या जना ७

३८. के मुरि १७।१० नगार्चि जना १ के मुरि ३।१० बाकि रु १६।—।।३ मोहि-नाईक्याके दाज्या पाथि ज्म्माबाहेक लिनु दर्फ ठि–

३९. मि सरस्वतिषेल षेत १।४० ताके धान कुत मुरि ३५।० तेमध्ये षर्च चौघ-रामा काम गर्न्या जना २ के मुरि १८। चो–

४०. क पिढि घाट बढान्र्या कुसल्या जना १ के मुरि ५।० बाकी धान मुरि १२ दर १४ ताके १७=।१ मध्ये षर्च नगारा मोर्ह्लाके

४१. छाला मसाला रु १। बाकी १५।।।=।१ साउन्या फागुको रु १। बाकी रु १७= दाज्या पाथि ज्माबाहेक १।१५ ज–

४२. म्मा जंगेरा ३३।। स्वदत्तां वा परदत्तां यो हरेच्च वसुन्धराम् ।। षष्टिर्वर्ष-सहस्राणि विष्ठायां जायते क्रिमिः ।।१।। शुभम्

## अनुवाद

श्रीगणेशलाई नमस्कार । जसको आँखिभुइँको कर्काइमात्रले यस संसारका सृष्टि स्थिति प्रलय हुन्छन् । जसको चरणकमलको सेवा गर्नाले प्राणीहरू धर्म अर्थ काम मोक्ष पाउँछन् । अनादि, तीन नेत्र भएका, पार्वतीका पति, देवताहरूले ढोगिएका ती परमेश्वर लक्ष्मीश्वर महादेवलाई नमस्कार गर्दछु । ।।१।।

पटना शहरदेखि अलि दर रहेको जिल्लामा गुमिआ नाउँ गरेको गाउँ छ। त्यस गाउँका

मालिक काश्यप गोत्रमा जन्मेका, गुरुणी गणेशदत्त बाँडीद्वा हुनुहुन्थ्यो ॥२॥

उहाँ गणेशदत्तकी छोरी ब्राह्मण र देवताको भक्ति गर्ने, गुणी, राम्री, चन्द्रमा जस्तै मुख भएकी, मान्नुपर्ने मानिसहरूको मान गर्ने, असल स्वभाव भएकी लक्ष्मीदेवी भाग्यले राजा रणबहादुर शाहकी प्यारी हुनुभयो ॥३॥

वि.सं. १८६९ फाल्गुन शुक्ल अष्टमी बुधवार मृगशिरानक्षत्र आयुष्मान् योग बवकरण भएको दिन उहाँ लक्ष्मीदेवीले, देवता र ब्राह्मणहरूलाई खुशी पारेर परमेश्वरलाई अत्यन्त प्रसन्न पार्ने लक्ष्मीश्वर महादेवको स्थापना गरी पूजा गर्नुभयो ॥४॥

वि.सं. १८७० कार्तिक शुक्ल एकादशी बृहस्पतिवार पूर्वभाद्र नक्षत्र व्याघात योग वणिक् करण भएको दिन महादेवको मन्दिरको वरिपरि धर्मशाला बनाउनाको लागि लक्ष्मीदेवीले चारै दिशामा जग खन्न लाउनुभयो ॥५॥

वि.सं. १८७० मार्ग कृष्ण द्वितीया बुधवार रोहिणीनक्षत्र शिवयोग गरकरण भएको दिन श्रीपञ्चायनको पूजा र भजन गर्ने विचारले स्थापना गर्न बाँकी रहेका अरू देवताहरूको स्थापनाको लागि लक्ष्मीदेवीले शिलान्यास गर्नुभयो ॥६॥

जबसम्म पृथिवी रहिरहन्छिन्; दिउँसो सूर्य उदाइरहन्छन्; राति चन्द्रमा उदाइरहन्छन्; जबसम्म रामचन्द्रको कथा चलिरहन्छ; तबसम्म नानीसाहेब लक्ष्मीदेवीले बनाउन लाएको, वाणीविलासले स्तुति गरिएको कीर्ति रहिरहोस् ॥७॥

यी देवताको नित्य नैमित्तिक पूजाको लागि राखिएको जग्गाको कुतबाट आउने धान-अनुसारको खर्च भाषामा लेखी देखाइन्छ ॥८॥

व्याख्या–

श्री ५ रणबहादुर शाहका नानीसाहेब लक्ष्मीदेवीले पचली वाग्मतीको तीरमा "लक्ष्मीश्वर" महादेवको स्थापना गरी वि.सं. १८७० मा यो अभिलेख कुँदाइएको हो। "लक्ष्मीश्वर" महादेवको लागि भव्य मन्दिर बनाउनाको साथै चौघरा पनि बनाइएको थियो; साथै त्यस बेला घाट पनि बनाइएको थियो। लक्ष्मीश्वर महादेवको नित्य र नैमित्तिक पूजाको लागि आवश्यक गुठी आदिको राम्रो प्रबन्ध गरिएको कुराको पनि यस अभिलेखमा वर्णन परेको छ। पूजा गर्ने ब्राह्मण, सुसारे, माली, बाजा बजाउने कुसले नगार्ची आदिको समेत चाहिँदो बन्दोवस्तको उल्लेख यस अभिलेखमा परेको छ।

यस अभिलेखबाट श्री ५ रणबहादुर शाहकी नानीसाहेब लक्ष्मीदेवीको परिचय पनि हामी पाउँछौं। लक्ष्मीदेवी पटना शहरदेखि अलि पर रहेको एक जिल्लाको गुमिजा भन्ने गाउँका गणेशदत्त बौडीढाकी छोरी हुन्। उनी श्री ५ रणबहादुर शाहकी नानीसाहेब हुन पुगेकी थिइन्। यस अभिलेखमा लक्ष्मीदेवीलाई "श्रीसाहिला नानीसाहेब" भनिएको छ। यसबाट श्री ५ रणबहादुर शाहका अरू पनि नानीसाहेब रहेछन् भन्ने संकेत पाइन्छ। यस अभिलेखको संस्कृतभाषामा भाग्यले गर्दा श्री ५ रणबहादुर शाहका नानीसाहेब हुन पुगेकी रूपवती भनी लक्ष्मीदेवीको वर्णन गरिएको छ। श्री५ रणबहादुर शाहका महारानी, रानी र नानीसाहेबको वर्णन गर्दा भाषावंशावलीकारले पनि एकजना पटनावाला नानीसाहेबको उल्लेख गरेका छन्। "स्वामीज्यूले भन्या पाटन चौकोटमा फेरी विवाह गन्या. पटनाबाट ल्यायाकी रानी विवाह नगरी दर्बार लगी राख्या" भनी वंशावलीकारले जुन लेखेका छन्; त्यसले यी नानीसाहेब लक्ष्मीदेवीलाई नै लक्ष्य गरिएको हो भन्ने स्पष्ट छ।[१]

तात्कालिक राजकाजमा नानीसाहेब लक्ष्मीदेवीको कुनै हात रहेको थाहा पाइएको छैन। तर लक्ष्मीश्वरमन्दिरले गर्दा लक्ष्मीदेवीलाई चिरस्मरणीय बनाएको छ। आफ्नो नाउँमा वा आफ्ना प्रिय व्यक्तिको नाउँमा महादेव स्थापना गर्ने चलन हाम्रो यहाँ लिच्छविकालदेखि नै प्रचलित थियो।[२] त्यसै परम्पराअनुसार लक्ष्मीदेवीले आफ्नो नाउँमा "लक्ष्मीश्वर" स्थापना गराएकी हुन्। यसै गरी ललितत्रिपुरसुन्दरीदेवीले पनि आफ्नो नाउँमा प्रसिद्ध "त्रिपुरेश्वर" स्थापना गराएकी थिइन्।[३] श्री ५ रणबहादुर शाहकी मन परेकी नानीसाहेब बन्न पुगेकी हुँदा लक्ष्मीदेवी आर्थिक दृष्टिले सम्पन्न हुनु स्वाभाविक थियो। यसो हुँदा लक्ष्मीश्वर महादेवको लागि भव्यमन्दिर बनाउनाको साथै मन्दिरको चारैतिर "चौघरा" आदि बनाइएका थिए। यसरी शाहकालको उल्लेखनीय शिवमन्दिरहरूमा यो पनि पर्न आएको छ।

यस अभिलेखको एक अर्को विशेषता पनि रहेको छ। त्यो हो; यस अभिलेखको संस्कृतभागमा रहेको रचनाप्रौढता। यस अभिलेखको संस्कृतभागको रचना तात्कालिक प्रख्यात विद्वान् पं. वाणीविलास पाँडेले गरेका हुन्। पं. वाणीविलास पाँडेले रचेका पाँच अभिलेखमध्ये एक यो पनि हो।[४]

---

१. नयनाथ पौडेल 'पचलीको लक्ष्मीदेवीको वि.सं. १८७० को अभिलेख र त्यसको ऐतिहासिक व्याख्या' पूर्णिमा ६ पूर्णाङ्क, पृ. ५६

२. 'लिच्छविकालका अभिलेख' पृ. ५०, ५५, ६२, ८३

३. ललितत्रिपुरसुन्दरीदेवीको त्रिपुरेश्वरको अभिलेख 'शाहकालका अभिलेख' दोस्रो भागमा समावेश गरिएको छ।

४. पूर्णिमा ६ पूर्णाङ्क, पृ. ५५

[ १५९ संख्या ]

# पशुपतिको राधावल्लभ अर्ज्यालको अभिलेख

पशुपतिनाथको मन्दिरको दक्षिणतिरको भित्री ढोकामा यो अभिलेख कुँदिएको छ। यसमा वि. सं. १८७० दिइएको छ।

'इतिहास-प्रकाश' अङ्क २, भाग २ को ३१७ पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ। 'श्री ५ पृथ्वीनारायण शाहको उपदेश'का ५०२–५०४ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः ॥ सदमलमकरन्दे योगिचेतोमिलिन्दे स्मरणकरमुकुन्दे सच्चिदानन्दकन्दे । कृतजगदभिनन्दे यस्य पादारविन्दे पशुपतिमभिवन्दे वत्सले भक्तवृन्दे ॥१॥ श्रीसंव१८६९न्नवषड्वसुक्षितिमिते राधे नवम्यां सिते भौमे हेमसमन्वितं पशुपतिप्रीत्यै कपाटादिकं ॥ निर्मातुं रजतेन दक्षिणगतं मुद्रासहस्राणि षट् राधावल्लभ उत्ससर्ज मतिमानर्ज्यालवंशोद्भवः ॥२॥ भ्राता (पण्डित)शक्तिवल्लभधरादे-

२. वस्य युक्तो वरैर्दारैःपंचभिरेषु सद्‌गुणयुताऽयोध्याभिधाऽऽद्या ततः॥रूपा सत्यपुराक्षरद्वययुता तन्मध्यमा प्रेयसी भर्तुः श्रीवसुमत्यथो कुलवती चान्येन्दुमत्याह्वया॥३॥आर्याक्षेत्रगतः पुरोहितमणिर्गोर्षेशभूमीपते राधावल्लभभूसुरः सुकृतिनां श्रेयान् शिवार्चापरः॥पत्नीभिः सहगामिनीभिरनिशं विभ्राजितः पञ्चभी राढे विभ्वतिथौ सिते गुरुदिने गीर्वाणलोकं गतः॥४॥ श्रीप्रद्युम्नबुधस्तथा-

३. सिंबस्न्याद् गुरौ भक्तिमान् सेनानीः शिवपूर्ववर्णसहितो नारायणाचार्यकः । कर्मण्यत्र नियोजितास्त्रय इमे संकल्पितेनामुनाद्रव्येणैव कपाटकाद्यनुपमं सिद्धं यथोक्तं व्यधुः ॥५॥ संवद्व्योमनगाहिभू १८७० परिमिते शाके शराग्न्यद्रिभू १७३५ संबद्धे मकरस्थिते दिनकरे शुक्लेहितिथ्यां बुधे ॥ एतत्तैर्विनिवेदितं वितरितुं मत्पुण्यतः स्वस्थितिः स्यादित्यर्थयते शिवं गुरुसुतो वाणीविलासो बुधः ॥६॥

४. तोला ५७००

## अनुवाद

श्रीगणेशलाई नमस्कार । जसका पाउरूपी कमल स्वच्छ सत् कुरा नै मकरन्द (फूलको धूलो) भएको, योगीहरूका मन नै भंवरा भएको, सच्चिदानन्दको कन्दस्वरूप भएको, संसारले ढोगिएको, भक्तहरूलाई माया गर्ने रहेको छ; उहाँ पशुपतिनाथलाई ढोग्दछु ।

वि.सं. १८६६ वैशाख शुक्ल नवमी मङ्गलवारको दिन बुद्धिमान् राधावल्लभ अर्ज्यालले पशुपतिलाई प्रसन्न पार्न (मन्दिरभित्र) दक्षिणतिर सुनले सिंगारेको चाँदीको ढोका बनाउन छ हजार रुपैयाँ संकल्प गर्नु भयो ।

उहाँ राधावल्लभ विद्वान् शक्तिवल्लभका भाइ हुनुहुन्थ्यो । उहाँका पाँच असल पत्नीहरू हुनुभयो, तिनमा जेठी असल गुण भएकी अयोध्या, माहिली सत्यरूपा, अनि पतिको मन परेकी वसुमती, अनि कुलवती र कान्छी इन्दुमती हुनुभयो । गोरखाका राजाका पुरोहित उहाँ राधावल्लभ धर्मात्माहरूमा श्रेष्ठ हुनुहुन्थ्यो; पशुपतिको उपासना गर्नु हुन्थ्यो । (वि.सं.१८६९) वैशाख शुक्ल एकादशी बृहस्पतिवारका दिन आर्याघाटमा उहाँ मुक्त हुनुभयो । उहाँका पाँच जना गृहिणीहरू सती जानुभयो ।

उहाँले संकल्प गरेर जानुभएको पशुपतिनाथको मन्दिरभित्र चाँदीको ढोका बनाउने काममा पण्डित प्रद्युम्न, गुरुभक्त सेनापति बखतसिंह बस्न्यात, शिवनारायण आचार्य ती तीन जना खटिनुभयो । राधावल्लभले संकल्प गरेर गएको धनले उहाँहरूले भने जस्तो राम्रो ढोका तयार पार्नु भयो ।

वि.सं. १८७० शकसंवत् १७३५ माघ शुक्ल पञ्चमी बुधवारको दिन उहाँहरूले पशुपति-

लाई चाँदीको त्यो ढोका चढाउनुभयो । मेरा पुण्यले सपत्नीक राधावल्लभको स्वर्गवास होस् भनी गुरुपुत्र वाणीविलास पण्डित पशुपतिनाथसंग प्रार्थना गर्दछन् ।

तोला–५७०० ।

**व्याख्या–**

पशुपतिनाथ प्राचीनकालदेखि नै नेपालका अधिपति देवताका रूपमा संमानित, पूजित छन् । यस कारण पशुपतिनाथको वरपर लिच्छविकालदेखिका नै कृतिहरू रहेको हामी पाउँछौं ।[१] पशुपतिनाथको वर्तमान मन्दिर भने मल्लकाल र शाहकालका कलात्मक कृतिहरूले सिंगारिएको छ । यहाँ मल्लकाल र शाहकालमा श्रद्धालु राजा र प्रजाले चढाएका अनेक कृति रहेका छन् । पशुपतिनाथ मन्दिरका भित्री जुन चार चाँदीका ढोकाहरू छन्; ती चारै ढोकाहरू शाहकालका देन हुन् । चाँदीका ती चार ढोका एकै समयमा एकै जनाले बनाइएका होइनन्; चारै ढोका भिन्न भिन्न व्यक्तिले भिन्न भिन्न समयमा बनाइएका हुन् । तर यस प्रसङ्गमा एउटा कुरा विचारणीय रहेको छ । ती चारै ढोका नेपाल–अंग्रेज–युद्ध हुने लागेको बेलामा अर्थात् वि.सं. १८७०-७१ मा बनाइएका हुन् ।

पशुपतिनाथ-मन्दिरका भित्री ती चार ढोका बनाउने कामको शुरुवात गर्ने पहिला व्यक्ति राजपुरोहित राधावल्लभ अर्ज्याल हुन् । यी राधावल्लभ अर्ज्याल प्रसिद्ध कवि राजपुरोहित शक्तिवल्लभ अर्ज्यालका भाइ हुन् । शक्तिवल्लभ अर्ज्यालपछि यी राधावल्लभ अर्ज्याल राजपुरोहित बनाइएका थिए । आफ्नो अन्तिम समयमा वि.सं.१८६९ वैशाख शुक्ल नवमीमा राधावल्लभ अर्ज्यालले उक्त चाँदीको ढोका बनाउन ६ हजार रुपैंया संकल्प गरेका थिए । त्यसको २ दिनपछि त आर्यघाटमा राधावल्लभ अर्ज्यालको देहान्त भयो । उनका साथ अयोध्या आदि पाँच जना पत्नीहरू सती गए । यसरी राधावल्लभ अर्ज्यालले आफ्नो जीवनकालमा आफ्नो संकल्प पूरा भएको हेर्न पाएनन् । अनि उक्त कार्यको अभिभारा सुम्पिएका प्रद्युम्न पण्डित आदि तीन जना उहाँका हितैषीहरूले उक्त संकल्पलाई साकार पारे । वि.सं. १८७० माघमा चाँदीको उक्त ढोका पशुपतिनाथलाई अर्पण गरियो । त्यसै सिलसिलामा यो अभिलेख कुँदाइएको हो ।

यसरी यस अभिलेखले एक जना धर्मात्मा राजपुरोहितको संझना दिलाई रहेको छ । यस अभिलेखको एक अर्को विशेषता पनि रहेको छ । यस अभिलेखको रचना तात्कालिक प्रसिद्ध विद्वान् वाणीविलास पाँडेले गरेका हुन् । वाणीविलास पाँडेले रचेका अहिलेसम्म प्राप्त पाँच अभिलेखमध्ये एक यो हो । शक्तिवल्लभ, राधावल्लभ अर्ज्यालहरूसँग वाणीविलासको विद्या-सम्बन्ध पनि रहेको थियो । यसैले यस अभिलेखमा वाणीविलासले आफूलाई "गुरुपुत्र" भन्ने विशेषण लाएका छन् ।

---

१. 'लिच्छविकालका अभिलेख' पृ. ६२, ८८, ४२६, ४२९, ५४८–६२

[ १६० संख्या ]

# नुबाकोट्को अभिलेख

नुवाकोट भैरवमन्दिरको भित्री खटको छानामा यो अभिलेख कुँदिएको छ। यसमा विक्रमसंवत् १८७१ दिइएको छ।

'प्राचीन नेपाल' अङ्क १३ को ३९ पृष्ठमा शङ्करमान राजवंशीद्वारा यो प्रकाशित भएको छ। 'नुवाकोटको ऐतिहासिक रूपरेखा' सामग्रीखण्डको ४८ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. श्रीमद्गीर्वाणयुद्धेन नृपेणाराधिता परा। प्रसन्ना भैरवी देवी युद्धे दत्तां जयं सदा। स्वस्ति श्रीसम्वत् १८७१ साल मिति आषाढ वदि ११ रोज ३ श्रीभैरवी प्रिति सुवर्ण छाना श्रीमन्महाराजाधिराज गिर्वाणयुद्धविक्रम साह विजयराजे श्रीजर्णेल भिमसेन थापामार्फत धामि भाजुनरसिं शुभम् ॥

## संस्कृतभागको अनुवाद

राजा श्रीगीर्वाणयुद्धविक्रम शाहले आराधना गरिएकी देवी भैरवीले प्रसन्न भई लडाईंमा सधैं जितबाजी देऊन्।

व्याख्या–

नेपाल-अंग्रेजयुद्ध शुरू हुनुभन्दा केही महीनाअघि जनरल भीमसेन थापाले नुवाकोटकी भैरवीको भित्री खटमा सुनको छाना हाली यो अभिलेख कुँदन लाइएको हो। यो अभिलेख सानो छ तापनि तात्कालिक अवस्थाको झलिकता संकेत यसबाट पाउन सकिन्छ। यस अभि-

लेखमा "प्रसन्ना भैरवी देवी युद्धे दसां जयं सदा = भैरवी देवीले प्रसन्न भई लडाईंमा जितबाजी देऊन्" भन्ने कामना व्यक्त गरिएको छ। यसबाट यो अभिलेख राखिएताका कुनै ठूलो लडाईं हुने संभावना देखिइसकेको थियो; त्यसमा ईश्वरी शक्तिले साथ देओस् भनी चाहेको थियो भन्ने थाहा पाइन्छ। हुनत वीर नेपालीहरूले यस ताका लडाईं त निकै गर्दै नै आइरहेका थिए; यसो हुँदा त्यस्तो कामना गर्नु सामान्य कुरा हो; यसमा विशेष खोतल्नुपर्ने आवश्यकता छैन जस्तो देखिन्छ। तैपनि जनरल बनेर राष्ट्रको सर्वेसर्वा हुन पुगेका भीमसेन थापाको हृदयले यस वेला भविष्यमा आउन लागेको खतराको अनुभव गरेको झलिकता संकेत भने यस अभिलेखले अवश्य पनि दिन्छ। हुन पनि यसको केही महीनापछि अंग्रेजी सैन्यले युद्धको घोषणा नै नगर्दै नेपालमा आक्रमण गरेथ्यो।[१] पछि विधिवत् युद्धको घोषणा नै गरियो।[२] जसको परिणामस्वरूप कालीपारका प्रदेश नेपालले गुमाउनुपरेथ्यो।[३]

यो अभिलेख वि.सं. १८७१ आषाढको हो। यसभन्दा एक महीना जति अघि बुटवलको कुरालाई लिई नेपाली र अंग्रेजी सैन्यको बीचमा सानो तर भविष्यमा हुने ठूलो युद्धको बीजरूपको एक मुठभेट भइसकेको थियो। वि.सं १८७० को अन्त्यतिर बुटवल जम्मै २५ दिनभित्र छोड भन्ने आशयको पत्र कम्पनीसरकारले नेपालसरकारलाई लेखेथ्यो। साथै सो समयभित्र बुटवल नछोडे बलैसंग पनि बुटवल दख्खल गर्नू भन्ने आदेश कम्पनीसरकारले गोरखपुरका मेजिष्ट्रेटलाई दियो। तदनुसार कम्पनीको फौज आई बुटवल दख्खल गऱ्यो। यसपछि वि.सं. १८७१ ज्येष्ठमा नेपाली फौजले अंग्रेजी फौजलाई धपाई बुटवल फेरि दख्खल गऱ्यो। यस काण्डमा कम्पनीका केही सिपाही मारिए। यसपछि लडाईं हुने निश्चित जस्तै भएथ्यो।[४]

यस घटनाको एक महीनापछि भीमसेन थापाले यो अभिलेख कुँदाउन लाएका हुन्। सानो यस अभिलेखमा 'भैरवी देवीले प्रसन्न भई लडाईंमा जितबाजी देऊन्' भन्ने कामना गरिएको हुँदा अब नेपाल-अंग्रेज युद्ध हुने निश्चित भयो भन्ने आभास भीमसेन थापाहरूले पाइसकेका थिए भन्ने संकेत पाइन्छ।

卐

---

१. 'नेपालको संक्षिप्त इतिहास' पृ. १६४
२. 'नेपालको संक्षिप्त इतिहास पृ. १६१
३. 'नेपालको संक्षिप्त इतिहास' पृ. १७९
४. 'नेपालको संक्षिप्त इतिहास' पृ. १६०

[ १६१ संख्या ]

# पशुपतिको अमरसिंह थापाको अभिलेख

पशुपतिनाथको मन्दिरको उत्तरपट्टिको भित्री ढोकाको तोरणमा यो अभिलेख कुँदिएको छ। यहाँ विक्रमसंवत् १८७१ दिइएको छ।

'इतिहास-प्रकाश' अङ्क २, भाग ३ को ३१४ पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ।

## मूलपाठ

१. श्रीगणेशाय नमः॥ स्वस्ति श्रीसम्वत् १८७१ श्रीशाके १७३६ आश्विनमासे शुक्लपक्षे तिथौ १० वासरे १ श्रीमन्महाराजाधिराज श्री३गीर्वाणयुद्ध-विक्रमभूपतिसेवकात्रेयगोत्रोत्पन्नश्रीअमरसिं–

२. हथापाभिधेयेन श्रीधर्मदेवीतिविख्यातया धर्मपत्न्या श्रीरणध्वजनामधेयेनैत-त्सत्कर्मकरणाग्रसरेण प्रख्यातपुत्रेण सह एतद्रौप्यकपाटं सतोरणं निर्माय श्रीसाम्बशिवपशुपतिप्रितये श्रीरणध्वजसं–

३. ज्ञकपुत्रद्वारा समर्पितम्॥ अथैतत्पत्नीपुत्रपौत्राणां नामान्यभिधीयन्ते मृगा-वती ज्येष्ठपत्नी शूरवीरो हि यत्सुतः॥ रुद्रावती मध्यमा च जगद्वीरस्तु तत्सुतः॥१॥

४. ततोऽनु धर्मदेवीति ख्याता भर्तृपरायणा॥ श्रेष्ठा सर्वगुणोपेता पार्वतीव महेशितुः॥२॥ यस्यां जाता महात्मानः शौर्यौदार्यदयान्विताः॥ पुत्रास्तेषु गुणैर्ज्येष्ठो

५. नामतः श्रीरणध्वजः ।। रणभीमस्ततोनु श्रीरणजोर इति स्मृतः ।।३।। भक्तवीरो रामदासो नरसिंह इति क्रमात् ।। कनिष्ठा लालवत्यस्या अर्जु–
६. नः प्रथमः सुतः ।।४।। कनीयानथ भूपालः दशैते वीरवत्तराः ।। आख्यायन्ते तथा पौत्रा रिपुमर्दनपूर्वकाः ।।५।। गम्भीरो बदलश्चैव तथा मात–
७. वरः स्मृतः ।। गर्जसिंहस्तथा चोक्तोक्षरसिंहः सुदर्शनः ।। उजीरसिंहस्तदनु रणदीपस्तथापरः ।। रणजंग इति ख्यातो द–
८. श चैते यथाक्रमात् ।।७।।

## अनुवाद

श्रीगणेशलाई नमस्कार । कल्याण होस् । वि.सं. १८७१ शकसंवत् १७३६ आश्विन शुक्ल दशमी आदित्यवार, श्री ५ महाराजाधिराज गीर्वाणयुद्धविक्रम शाहका सेवक, आत्रेय गोत्रमा पैदा भएका श्रीअमरसिंह थापाले नाउँ चलेकी धर्मपत्नी श्रीधर्मदेव र यो असल काम गर्न अघि सरेका प्रख्यात छोरा श्रीरणध्वज थापासहित भई यो चाँदीका छापा र तोरण बनाएर पार्वतीसहित पशुपतिनाथलाई खुशी तुल्याउन छोरा श्रीरणध्वज थापामार्फत चढाए । अब यिनका जहान छोरा नातिहरूको नामोल्लेख गरिन्छ ।

जेठी पत्नी मृगावती हुन्; जसका छोरा शूरवीर थापा भए । माहिली पत्नी रुद्रावती हुन्; जसका छोरा जगद्वीर भए । त्यसपछि अर्की पत्नी धर्मदेवी हुन्; उनी पतिव्रता असल सबै गुणले युक्त भएकी, महादेवकी पार्वती जस्तै थिइन् । जसका शूरा, उदार, दयालु ठूलठूला छोराहरू भए । तिनमा जेठा गुणी श्रीरणध्वज हुन् । त्यसपछि रणभीम, रणजोर, भक्तवीर, रामदास, नरसिंह क्रमैसँग भए । कान्छी पत्नी लालवती हुन्; यिनका जेठा छोरा अर्जुन र कान्छा छोरा भूपाल थिए । यी दशै छोराहरू वीर थिए ।

अब नातिहरूको नामोल्लेख गरिन्छ । रिपुमर्दन, गम्भीर, बदल, मातवर, गर्जसिंह अक्षरसिंह सुदर्शन, उजीरसिंह, रणदीप, रणजंग यी दश जना नातिहरू क्रमैसँग भए ।

व्याख्या–

शाहकालका प्रख्यात भारादारहरूमा बूढा काजी अमरसिंह थापा पनि एक हुन् । करीब पचास वर्ष जति भने जस्तै राष्ट्रको लागि अमरसिंह थापाले लामो सेवा प्रदान गरेका थिए ।

यसबीच उनी एक टक्कारसँग देश र नरेशप्रति बफादार रहे। वि.सं. १८२५मा कान्तिपुर-विजयपछि भरखरको १७ वर्षको उमेरमै उनी सरदार बनाइएका थिए।[१] त्यसपछि शुरुमा केही दशक सरदारका रूपमा र पछि काजीका रूपमा अमरसिंह थापाले अनेक युद्धमा आफ्नो बहादुरी र कार्यकुशलता देखाए।[२] विशेष गरी नेपाल-अंग्रेज-युद्धले अमरसिंह थापालाई प्रख्यात बनायो।

आफू वीर हृदयका भएका हुँदा आफ्ना छोरा नातिहरूलाई पनि वीर बनाउन अमरसिंह थापा निकै मात्रामा सफल भएथे। अमरसिंह थापाका दश जना छोराहरू थिए। तिनमा दुइ तीन जनाबाहेक अरू एकसेएक वीर भई निस्केथे। विशेष गरी धर्मदेवीतर्फबाट जन्मेका उनका छोराहरूले तात्कालिक राजकाजमा र लडाईंको मैदानमा प्रतिष्ठा कमाएका थिए। धर्मदेवी-तर्फबाट जन्मेका छोराहरूमा जेठा रणध्वज थापा थिए। भीमसेन थापाको कार्यकालमा उनी कारोबारी काजीका रूपमा शक्तिशाली बनेका थिए।[३] बूढाकाजी अमरसिंह थापाको भीमसेन थापासँग त्यति ठ्याक मिलेको थिएन। तर छोरा रणध्वज थापा भने भीमसेन थापाका विश्वासपात्र सहायक बन्न पुगेका थिए। धर्मदेवीतर्फका अरू छोराहरू रणजोर थापा, रामदास थापा, भक्तवीर थापा पनि नेपाल अंग्रेजयुद्ध ताका ठूलठूला पदमा थिए। रणजोर थापा र राम दास थापा त प्रायः गरी बाबु अमरसिंह थापाको मातहतमा सुदूर पश्चिममा नै रहेथे।[४] भक्तवीर थापा भने नेपाल-अंग्रेज युद्ध ताका पूर्वमा थिए। पूर्व हान्न आएका मेजर पेटरको मातहतको सैन्य-लाई धपाउने काम थिनै भक्तवीर थापाको मातहतको नेपाली सैन्यले गरेथ्यो।[५] अर्का छोरा अर्जुन थापा र भूपाल थापाहरूले नेपाल-अंग्रेज-युद्धपछि लाहोरमा पुगी ठूलो सन्मान पाएथे।[६] अमरसिंह थापाका नाति रिपुमर्दन थापा पनि केही प्रसिद्ध नै रहेको देखिएको छ।

पशुपतिनाथ-मन्दिरको उत्तरपट्टिको भित्री ढोका चाँदीको बनाउन लाई अमरसिंह थापाले

---

१. 'नेपालको संक्षिप्त इतिहास' पृ. १६३

२. 'नेपालको संक्षिप्त इतिहास' पृ. ६३
यस विषयको चर्चा माथि पनि ठाउँ–ठाउँमा गरिएको छ।

३. महेशराज पन्त 'नेपाल अंग्रेज युद्धको तयारी' पूर्णिमा २ पूर्णाङ्क, पृ. ७०

४. सूर्यविक्रम ज्ञवाली 'अमरसिंह थापा' पृ. १८१
महेशराज पन्त 'अमरसिंह थापाका छोरा र अक्टरलोनीका छोराले मितेरी लाएथे' पूर्णिमा ६ पूर्णाङ्क पृ. ४८–६४

५. 'नेपालको संक्षिप्त इतिहास' पृ. १६२, १७१

६. दिनेशराज पन्त 'लाहोरमा नेपाली वीरहरू पूर्णिमा ५ पूर्णाङ्क, पृ. ६३–७०

यो अभिलेख कुँद्न लाएका हुन् । यस वेला अमरसिंह थापा सुदूर पश्चिममा थिए । राजदरबारमा कारोबारी काजीका रूपमा रहेका छोरा रणध्वज थापामार्फत चाँदीको ढोका वि.सं. १८७१ को विजयादशमीको दिन पशुपतिनाथलाई चढाइएको हो । ठीक यसै वेला उता सुदूर पश्चिममा युद्धको घोषणा नै नगरी अंग्रेजी सैन्य लड्न नेपाल पसिसकेको थियो ।[७]

अमरसिंह थापालाई संझाउने उनका अनेक कृतिहरू पाइन्छन् ।[८] तर पशुपतिनाथलाई चाँदीको ढोका चढाई कुँदाइएको यस अभिलेखको अलि बेग्लै महत्त्व रहेको छ । एक त यो अमरसिंह थापाको अन्तिम कृति हो भन्न सकिन्छ । अर्को कुरा यस अभिलेखमा उनका छोरा नातिहरूको समेत उल्लेख परेको छ । अमरसिंह थापा आफू मात्र वीर भएका नभई उनले आफ्ना सन्तानमा समेत वीर-परम्परा कायम गरेको झलक यस अभिलेखबाट पाइन्छ । यस अभिलेखमा अमरसिंह थापाका दश छोरा दश नातिहरूमा 'वीर' भन्ने जुन विशेषण लाइएको छ; त्यो सार्थक रहेको छ ।



७. 'नेपालको संक्षिप्त इतिहास' पृ. १६४

८. अमरसिंह थापाका कृतिलाई दर्शाउने केही अभिलेख माथि गइसकेका छन् ।

[ १६२ संख्या ]

# पशुपतिको विलासवतीको अभिलेख

पशुपतिनाथ-मन्दिरको पूर्वपट्टिको भित्री ढोकाको तोरणमा यो अभिलेख कुँदिएको छ । यहाँ वि.सं. १८७१ दिइएको छ ।

'इतिहास-प्रकाश' अङ्क २, भाग ३ को ३१३ पृष्ठमा योगी नरहरिनाथद्वारा यो अभिलेख छापिएको छ ।

## मूलपाठ

१. स्वस्ति श्रीसम्वत् १८७१ साल माघ शुदि ११ रोज २ मा श्रीपशुपतिनाथ प्रीति गरि श्रीमहाराजा रणबहादूर साहका पुत्री श्रीमहाराजा गीर्वाणयुद्ध-विक्रम साहका

२. ज्येष्ठभगिनी श्रीमैजासाहेब विलासवतीदेवीले चाँदिको तोरण कोटाल-समेत ढोका चढायाको हो. चाँदि तोला ७१३७।५। टहरमूर्तिमा जलप सार–

३. नाके सुन तोला ११।७ मार्फत कपर्दार भोटु पाँडे.

व्याख्या–

नेपाल-अंग्रेज-युद्धताका पशुपतिनाथ-मन्दिरका भित्री चारै ढोकाको जीर्णोद्धार कार्य भिन्नाभिन्न व्यक्तिबाट सम्पन्न भएथ्यो भन्ने चर्चा माथि गरिसकेको छ । ती चार चाँदीका ढोकामध्ये पूर्वपट्टिको ढोका वि.सं. १८७१ माघमा मैयाँसाहेब विलासवतीदेवीले बनाउन लाएकी हुन् । त्यसै अवसरमा यो अभिलेख कुँदाइएको हो । यस अभिलेखबाट विलासवती-

देवीको परिचय हामी पाउँछौं। यिनी श्री ५ पृथ्वीनारायण शाहकी छोरी विलासकुमारी होइनन्; श्री ५ रणबहादुर शाहकी छोरी, श्री ५ गीर्वाणयुद्धविक्रम शाहकी दिदी यिनी हुन्। पद्मकुमारीदेवी(श्री ५ पृथ्वीनारायण शाहकी छोरी) आदि कति शाहवंशज मैयाँसाहेबहरू तात्कालिक राजकाजमा समेत चल्तापूर्जा भएको हामी पाउँछौं।[१] तर यी मैयाँसाहेब विलासदेवीको चाहिं राजकाजमा त्यस्तो कुनै स्थान रहेको उल्लेख पाइँदैन। पशुपतिनाथलाई भव्य चाँदीको ढोका चढाई कुँदाइएको यस अभिलेखले चाहिं मैयाँसाहेब विलासवतीको संझना पछिसम्म केही दिलाइरहने स्पष्ट छ।



१. 'पाश्चालीशासनपद्धतिको ऐतिहासिक विवेचना' पृ. २१६

[ १६३ संख्या ]

# देवीघाटको फौद्वीर रानाको अभिलेख

नुवाकोट देवीघाट बजारको चौघरे सत्तलको भित्तामा टाँसिएको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यसमा विक्रमसंवत् १८७२ दिइएको छ।

'नुवाकोटको ऐतिहासिक रूपरेखा' सामग्रीखण्डको ४६ पृष्ठमा धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठद्वारा यो छापिएको छ।

## मूलपाठ

१. श्रीभैरव्यै नमः। नेत्रागाष्टमहीतविक्रमशके चैत्रे वलक्षे विधौ, तिष्ये शम्भु-तिथौ त्रिशूल-

२. गिरिजाश्रीगण्डकीरोधसि गोर्षाभूपतिमन्त्रिबंधुतनयश्रीफौदवीराभिधेनागा-

३. रं परभैरवीपरिसरे सद्भक्तितो निर्मितम्॥ ॥ अथ देशभाषा॥ ॥ सम्वत् १८-

४. ७२ साल मिति चैत्र शुक्लका तिष्यनक्षत्रले र सोमवारले युक्त भयाका

५. अष्टमिका दिन त्रिशूलगण्डकीका तिरविषे श्रीभैरवीका नजीकमा

६. श्रीगोर्षेश महाराजाका काजी बंधु रानाका पुत्र श्रीकाजी फौदवीर रानाले

७. भक्तिपूर्वक चौघरे गरि सत्तल बनाऔं। यस पौवाको गुठिके आम्बोटघा षेत मुरि ६० ऐ पिप्पल्या षेत

८. मुरि ४० जम्मा १०० राष्यौं. यस जगाका उपजनिले वर्षबंधन लेषावमो-जीम गुठि चलाउनु. चैत्र शुक्ल ८ का दिन पौवा—

९. मा होम गर्नाके धान मुरि २ देविजात्राका पूजा र रांगो बोका सराजाम गैह्रके धान मुरि ९।१० भोज खुवाउन्या सराजामके

१०. धान मुरि ४ झ्याल थाममा लाउना र जात्राका रात १ चण्डिपूर्ण्या रात १ माघ्यासंक्रान्ति रात १ मा दलुमा बाति बा–

११. लनसमेतके तेलके धान मुरि २।१० चण्डिपूर्न्या १ माघसंकान्तिका पुजाके धान मुरि १ नित्य सालीकमा अा–

१२. रति बालनाके घिउ धर्नि २ के धान मुरि २ नित्यपूजालाई चन्दन अक्षताके धान मुरि २ पौवालिके धान मुरि

१३. १० पौवा विग्रदा बनाउनानिमित्य सालिना जगेराके धान मुरि ४।१० यस काममा गुठियारले लेष्याबमोजिम गु–

१४. ठि नचलाया श्रीभैरवीको कुदृष्टि होला ।। स्वदत्तं परदत्तं वा यो हरति वसुंधरा, षष्टोवर्षसहस्राणि विष्टायां

१५. जायते कृमि ।। यस गुठिमा जसले बिगार्नामा पसला तसलाइ पंचमहापातक लागला ।। शुभम्

१६. नवाकोट ठुलिख्यासि लवहुको षेत हो। फौदवीर राना, ज्वाला नन्दा त्रिविर् राना बुद्धिमती षड्विर राना हेमता सरवरसिं राना लक्षिमा रनविर राना बुकिला

व्याख्या–

त्रिशूली र तादीको सङ्गमस्थल देवीघाट नेपालका प्रसिद्ध तीर्थस्थलमध्ये पर्दछ। नुवाकोटकी देवी भैरवीको जात्रा हुने घाट हुँदा यस तीर्थस्थलले 'देवीघाट' भन्ने संज्ञा पाएको देखिन्छ। चैत्र शुक्ल पूर्णिमाको दिन यहाँ ठूलो जात्रा लाग्छ।[१] टाढा टाढाका पनि यात्रीहरू यस मेलामा उपस्थित रहन्छन्। उक्त ''देवीजात्रा''मा भाग लिन आउने यात्रीहरूको लागि सुबिधा होस् भनी फौदवीर रानाले चौघरे सत्तल बनाई यो अभिलेख कुँदन लाएका हुन्। पुगिसरी आएकाहरूले जनतालाई सुबिधा होस् भनी पाटी पौवा आदि बनाइदिने चलन हाम्रो

१. 'नुवाकोटको ऐतिहासिक रूपरेखा' पृ. १०९–११३

यहाँ प्राचीन कालदेखि नै प्रचलित थियो । त्यसै परम्पराको अनुसरण फौदवीर रानाले गरेका हुन् ।

फौदवीर राना काजी बन्धु रानाका छोरा हुन् । काजी बन्धु राना श्री ५ रणबहादुर शाहको पालामा निकै प्रख्यात रहेथे । उनी श्री ५ रणबहादुर शाहका विश्वासपात्र पनि बनेका थिए ।[२] बन्धु रानाका छ छोराहरू भएथे । तिरमा फौदवीर राना काँहिला हुन् ।[३] जेठा छोरा शूरवीर रानाले मनकामना माईको मन्दिरमा सुनका छापा बनाई वि.सं. १८५९मा कुँदाइएको अभिलेख माथि गइसकेको छ । यसरी बन्धु रानाका छोराहरू कृति राख्ने खालका भारादार देखिएका छन् । यस अभिलेखमा फौदवीर रानालाई काजी भनिएको छ । नेपाल-अंग्रेज युद्ध थामिएको लगत्तैपछि यो कृति राखिएको हुनाले काजी फौदवीर रानाले पनि नेपाल-अंग्रेज युद्धमा भाग लिएको अनुमान हुन्छ । तर फौदवीर राना काजी भए पनि त्यति प्रसिद्धचाहिं हुन सकेको देखिँदैन । जे होस्; देवीघाटमा रहेको यस कृतिले काजी फौदवीर रानाको केही संझना गराइराख्ने स्पष्ट छ ।



---

२. 'त्रिरत्नसौन्दर्यगाथा' पृ. १६१

३. माथि गएको मनकामना माईस्थानको शूरवीर रानाको अभिलेखबाट उक्त कुरा थाहा पाइन्छ ।

[ १६४ संख्या ]

# वैतडी देवलहाटको अभिलेख

बैतडी देवलघाटमा पिप्पलको वृक्षमनि रहेको शिलापत्रमा यो अभिलेख कुँदिएको छ। यसको अलिकता भाग फुटेको छ। यहाँ शकसंवत् १७३७ (वि.सं. १८७२) दिइएको छ।

'अभिलेख-संग्रह' बाह्रौं भागका १५-१६ पृष्ठमा संशोधन-मण्डलद्वारा यो प्रकाशित भएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीशाके १७३७ चैत्र सुक्ल १५ रोज

२. १ मा श्रीगणनाथमा लडाईमा श्रीहस्तद-

३. ल साह पऱ्या. उनका पत्नि सहगमन भयो. ये-

४. स पिपलको वृक्षमनि कृयाकर्म श्रीरुद्रवीर

५. - - - - - - बाट भयो. श्रीहस्तदल साह प्रिति म

६. - - - - - - श्रीरुद्रवीर साहले येहि साल आ-

७. - - - - - - - बनाया. शुभम्

व्याख्या-

नेपाल-अंग्रेज युद्धमा अनेक नेपाली वीरहरूले आफ्नो ज्यान गुमाएथे। तिनमा ठूलठूला भारदारहरू पनि परेका छन्। नेपाल-अंग्रेज युद्धमा वीरगति पाउने त्यस्ता भारदारहरूमा भक्ति थापापछि हस्तदल शाहको नाउँ आउँछ। हस्तदल शाह चौ. बम शाहका भाइ हुन्।[१]

१. महेशराज पन्त 'वि.सं. १८७१-७२ को नेपाल-अंग्रेज युद्धमा नेपालले हार्नामा एउटा ठूलो कारण' पूर्णिमा १ पूर्णाङ्क, पृ. ५२

बम शाह गोरखाका राजा पृथ्वीपति शाहका पनाति हुन् ।[२] पृथ्वीपति शाहले पूर्वतिर बढ्न अनेक उद्योग गरेथे । त्यस प्रसङ्गमा उनका छोराहरू एकसेएक चल्तापूर्जा भई निस्केथे । यस कुराको चर्चा माथि गरिसकेको छ । यही परम्पराले बम शाहहरूलाई पनि चल्तापूर्जा बनायो । बम शाहले पश्चिमतिरको लडाइँ, भोटसँगको लडाइँ, चीनसँगको लडाइँ आदि लडाइँमा बहादुरी देखाएथे । नेपाल-अंग्रेजयुद्ध भएताका डोटी, कुमाउँ, गढवालमेकको रक्षाको अभिभारा चौ. बम शाहले बोकेका थिए ।[३] उनका भाइ हस्तदल शाह उनको मातहतमा थिए । दाजु बम शाह जस्तै हस्तदल शाहले पनि अनेक युद्धमा भाग लिएथे । हस्तदल शाहकै मातहतमा अमरसिंह थापाहरूले गढवाल विजय गरेका थिए ।[४]

नेपाल-अंग्रेज युद्ध हुँदा हस्तदल शाह कुमाउँमा नियुक्त थिए । दुइ हजार फौज लिई गार्डनरले कुमाउँमा आक्रमण गर्दा बम शाहको आज्ञाले अंग्रेजी सैन्यलाई रोक्न अगाडि बढ्नेमा यी हस्तदल शाह प्रमुख थिए ।[५] उनको साथमा सात सय फौज मात्र थियो । तर वि.सं. १८७१ वैशाख १३ गते गणनाथमा लडाइँ जोरिँदा हस्तदल शाहले वीरतापूर्वक लडे । गणनाथको यसै लडाइँमा उनले वीरगति पाए । उनकी पत्नी सती गइन् । उनका भाइ रुद्र-वीर शाहले उनको क्रियाकर्म गरे । बैतडी देवलहाटको रूखमनि हस्तदल शाहको क्रियाकर्म गरिएको थियो । उक्त कुराको संभनाको लागि एक शिलापत्रमा यो अभिलेख कुँदाइएको हो । यस अभिलेखको तल्लो भाग खण्डित हुँदा कुरा अलि अस्पष्ट छ । तर उक्त स्थलमा स्मारकको रूपमा देवल आदि केही बनाइएको बुझिन्छ ।

जे होस्; एक वीर नेपालीको संभना यस सानो अभिलेखले पछिसम्म दिलाइरहने कुरा स्पष्ट छ । यसै हुँदा यस अभिलेखलाई यस संकलनमा समावेश गरिएको हो ।



२. तोत्रराज पाण्डे र नयराज पन्त 'नेपालको संक्षिप्त इतिहास' पृ. १६२
३. 'नेपालको संक्षिप्त इतिहास' पृ. १६२
४. 'नेपालको संक्षिप्त इतिहास' पृ. १७५
५. 'नेपालको संक्षिप्त इतिहास' पृ. १७४

# अनुक्रमणिका (इन्डेक्स)